**प्रोवाच** = बताउनुभयो

**वाक्यार्थ–** जुन माताको शरीरबाट कपिलमुनि जन्मनुभएको थियो उहाँको नै यस प्रकारको भक्तियोग सुन्ने इच्छा बुझेर प्रेमभावपरिपूर्ण हुनुभएका कपिलदेवले तत्त्वप्रतिपादन गर्ने सांख्यदर्शन, भक्तियोगको विस्तार र योग पनि आफ्नी आमालाई बताउनुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**देवानां गुणलिङ्गानामानुश्रविककर्मणाम्।**
**सत्त्व एवैकमनसो वृत्तिः स्वाभाविकी तु या॥ ३२॥**
**अनिमित्ता भागवती भक्तिः सिद्धेर्गरीयसी।**
**जरयत्याशु या कोशं निगीर्णमनलो यथा॥ ३३॥**

**पदार्थ–**

**एकमनसः** = भगवान्मा एकाग्र चित्त भएका मानिसका
**आनुश्रविककर्मणाम्** = वेदविहित कर्ममा लागेका
**गुणलिङ्गानाम्** = विषयहरूको ज्ञान गराउने
**देवानां** = इन्द्रियहरूको
**सत्त्वे एव** = सत्त्वमूर्ति श्रीहरिमा मात्र
**या** = जुन
**स्वाभाविकी** = स्वाभाविक
**वृत्तिः तु** = प्रवृत्ति हो (त्यही नै)
**भागवती** = भगवान्को
**अनिमित्ता** = अहैतुकी
**भक्तिः** = भक्ति हो (यो भक्ति)
**सिद्धेः** = मोक्षभन्दा पनि
**गरीयसी** = श्रेष्ठ छ
**या** = जुन भक्तिले
**यथा** = जसरी
**अनलः** = जठराग्निले
**निगीर्णम्** = भोजन गरिएको अन्नलाई (पचाउने काम गर्छ, त्यसै गरी)
**कोशं** = लिङ्ग शरीरलाई
**आशु** = तत्काल
**जरयति** = नाश गर्दछ

**वाक्यार्थ–** जसको चित्त भगवान्मा एकाग्र भएको छ त्यस्ता मानिसको वेदविहित कर्महरूमा लागेका विषयहरूको ज्ञान गराउने ती इन्द्रियहरूको सत्त्वमूर्ति श्रीहरिका प्रति जुन स्वाभाविक प्रवृत्ति हो त्यही नै भगवान्को अहैतुकी भक्ति हो। यो मोक्षभन्दा पनि श्रेष्ठ छ। किनभने जसरी खाएको अन्नलाई जठराग्निले पचाउँछ त्यसै गरी अहैतुकी भक्तिले कर्मसंस्कारहरूको भण्डाररूप लिङ्गशरीरलाई तत्काल नाश गरिदिन्छ।

**विवरण–** महर्षि भगवान् कपिलले आफ्नी आमा देवहूतिलाई अहैतुकी भक्तिको स्वरूप बताउनुभएको छ। उहाँले बताउनुभएअनुसार शुद्ध भएको मनको वृत्ति संसारका अरू कुनै पनि पदार्थतिर नलागीकन विना कारण केवल सत्त्वमूर्ति भगवान्मा मात्र लागिरहनु अहैतुकी भक्ति हो। अहैतुकी भक्तिलाई निष्काम भक्ति वा निर्गुण भक्ति पनि भनिएको छ। गुण शब्दको अर्थ हुन्छ– इन्द्रियको कुनै विषय। इन्द्रियको कुनै पनि विषय वा सांसारिक कुनै अनात्म पदार्थलाई प्राप्त गर्ने उद्देश्यले गरिएको भक्तिलाई सगुण भक्ति या सकाम भक्ति भनिन्छ भने संसारका कुनै पनि

विषयलाई प्राप्त गर्ने इच्छा मनमा नराखीकन केवल भगवान्‌लाई प्राप्त गर्ने इच्छाले भगवान्‌मा गरिएको अखण्ड प्रेमलाई नै अहैतुकी भक्ति भनिन्छ। यो अहैतुकी भक्तिले जीवका अन्नमय, प्राणमय, मनोमय, विज्ञानमय र आनन्दमय यी पाँच कोशलाई पनि भस्मसात् गरिदिन्छ। यसर्थ अहैतुकी भक्तिलाई मुक्तिभन्दा श्रेष्ठ भनिएको छ। किनभने अहैतुकी भक्ति नभईकन ज्ञान अथवा मोक्ष संभव छैन। भगवान्‌मा यस प्रकारको अहैतुकी भक्ति भएपछि भक्तले मोक्ष नचाहे तापनि उसलाई स्वतः नै मोक्ष प्राप्त हुन्छ। यसर्थ ज्ञान अथवा मोक्षको पनि जननी भएकाले भक्तिलाई ज्ञान अथवा मोक्षभन्दा पनि उत्तम मानिएको हो।

माथिका श्लोकमा आएका **गुणलिङ्गानाम्** र **आनुश्रविककर्मणाम्** यी दुई पद देव शब्दका विशेषण हुन्। **गुणा विषया लिङ्ग्यन्ते ज्ञायन्ते यैः ते गुणलिङ्गाः** अर्थात् जसबाट विषयहरूको ज्ञान हुन्छ ती इन्द्रियहरूलाई गुणलिङ्ग भनिएको हो। उदाहरणका लागि रूपको ज्ञान गर्नका लागि चक्षुरिन्द्रियको आवश्यकता पर्दछ। यहाँ गुण भनेर रूपलाई लिनुपर्छ। त्यो रूप जसबाट जानिन्छ त्यसलाई गुणलिङ्ग भनिन्छ। आँखाद्वारा रूपको ज्ञान हुने भएकाले आँखा गुणलिङ्ग हो। यसै गरी कानद्वारा शब्दको ज्ञान गर्दा गुण भनेर शब्दलाई लिनुपर्छ र गुणलिङ्ग भनेर कानलाई लिनुपर्छ। यहाँ देव भनेर इन्द्रिय र इन्द्रियहरूका अधिष्ठाता देवता भन्ने बुझ्नुपर्छ। यस प्रकार **देवानाम् गुणलिङ्गानाम्**को अर्थ हुन्छ— विषयद्वारा जानिने इन्द्रिय र इन्द्रियका अधिष्ठाता देवताहरू। यस्तै देवानाम्‌को अर्को विशेषण आएको छ— **आनुश्रविककर्मणाम्**। **गुरोरुच्चारणमनुश्रूयत इति अनुश्रवो वेदस्तद्विहितमानुश्रविकम्, तदेव कर्म येषाम् तेषाम् आनुश्रविककर्मणाम्**। कुनै पनि साधकले भगवान्‌लाई प्राप्त गर्ने उद्देश्यले वैदिक कर्म गर्दछ भने उसका सम्पूर्ण इन्द्रियहरू शुद्ध हुन्छन्। अर्थात् आँखाद्वारा शास्त्रनिषिद्ध रूप आदिको दर्शन नगरेर भगवान्‌कै रूपको दर्शन गरेपछि आँखा पवित्र हुन्छन्। यसै गरी कानद्वारा भगवान्‌का कथाको श्रवण गरेपछि कान पवित्र हुन्छन्। यस्ता वेदविहित कर्म गर्ने इन्द्रियहरूको भन्ने अर्थ **आनुश्रविककर्मणाम् देवानाम्** यस पदावलीको हुन्छ।

भगवान्‌को गुण श्रवण गर्दागर्दै पग्लिएको चित्त निरन्तर परमात्मामा लागिरहनु नै भक्ति हो। सकाम भक्तिमा सर्वदा चित्त नलाग्ने हुँदा त्यो वास्तविक भक्ति होइन। यस प्रकारको सहज स्वाभाविक भक्तिलाई शाण्डिल्यले परानुरक्ति भनेका छन्, जसले लिङ्गशरीरलाई तत्काल नाश गर्दछ। यहाँ वर्णन गरिएको भक्ति साध्य भक्ति अर्थात् प्रेमा भक्ति हो। साधन भक्तिद्वारा साध्यभक्ति जन्मिन्छ— **भक्त्या सञ्जातया भक्त्या** (भागवत ११। ३। ३१)। साध्य भक्ति तत्त्वज्ञ र जीवन्मुक्त महापुरुषहरूद्वारा स्वतः हुन जाने भक्ति हो। मुक्तहरूले पनि भक्तिमा मस्ती लिन्छन्। स्वरूपानन्दलाई प्राप्त गरेका मुक्तहरू पनि ब्रह्मतत्त्वमा नै सेव्य र सेवकभावको कल्पना गरेर नयाँ प्रकारले भक्तिको आस्वाद लिन्छन्। त्यसैले यहाँ भक्तिलाई **सिद्धेः गरीयसी** अर्थात् मुक्तिभन्दा श्रेष्ठ भनिएको हो।

**नैकात्मतां मे स्पृहयन्ति केचिन्-**

**मत्पादसेवाभिरता मदीहाः।**

**येऽन्योन्यतो भागवताः प्रसज्य**

**सभाजयन्ते मम पौरुषाणि ॥ ३४ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ये** = जो | **प्रसज्य** = मिलेर | **भागवताः** = भक्तहरू |
| **मत्पादसेवाभिरताः** = मेरो चरणसेवामा लागेका | **मम** = मेरा | **मे** = ममा |
| **मदीहाः** = मेरै प्रसन्नताको लागि सम्पूर्ण कार्यहरू गर्ने (भक्तहरू छन् तिनीहरू) | **पौरुषाणि** = पराक्रमसम्बन्धी कथाहरूको | **एकात्मतां** = लीन हुन (सायुज्य मोक्ष प्राप्त गर्न) पनि |
| **अन्योन्यतः** = परस्पर | **सभाजयन्ते** = चर्चा गर्दछन् | **न स्पृहयन्ति** = चाहँदैनन् |
| | **ते** = त्यस्ता | |
| | **केचित्** = कुनै | |

**वाक्यार्थ–** मेरो चरणसेवामा लागेका एवं मैरै प्रसन्नताको लागि सम्पूर्ण कार्यहरू गर्ने जो भक्तहरू परस्पर मिलेर मेरा पराक्रमका कथाहरूको चर्चा गर्दछन् तीमध्ये केही भक्तहरू त ममा लीन हुन (सायुज्य मोक्ष प्राप्त गर्न) पनि चाहँदैनन्।

**पश्यन्ति ते मे रुचिराण्यम्ब सन्तः**

**प्रसन्नवक्त्रारुणलोचनानि ।**

**रूपाणि दिव्यानि वरप्रदानि**

**साकं वाचं स्पृहणीयां वदन्ति ॥ ३५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अम्ब** = हे माता | हसिलो अनुहार र तेजिला आँखाहरू र | **पश्यन्ति** = दर्शन गर्दछन् र |
| **सन्तः** = ती भक्तहरू | **वरप्रदानि** = वरप्रदायक | **साकं** = साथसाथै (ती भक्तहरू) |
| **मे** = मेरा | **दिव्यानि** = प्रकाशमान | **स्पृहणीयां** = मिठा |
| **रुचिराणि** = सुन्दर | **रूपाणि** = (मेरा) रूपहरूको | **वाचं** = वचनहरू |
| **प्रसन्नवक्त्रारुणलोचनानि** = | | **वदन्ति** = बोल्दछन् |

**वाक्यार्थ–** हे माता ! ती भक्तहरू मेरो सुन्दर हसिलो अनुहार, तेजिला आँखाहरू र वर दिने प्रकाशमान मेरा रूपहरूको दर्शन गर्दछन् र यसका साथै मेरा ती रूपहरूसँग मिठो बोलीमा कुरा पनि गर्दछन्।

**तैर्दर्शनीयावयवैरुदार-**

**विलासहासेक्षितवामसूक्तैः ।**

**हृतात्मनो हृतप्राणांश्च भक्ति-**
**रनिच्छतो मे गतिमण्वीं प्रयुङ्क्ते ॥ ३६ ॥**

पदार्थ–

**दर्शनीयावयवैः** = दर्शन गर्न योग्य अङ्गहरू भएका
**च** = तथा
**उदारविलासहासेक्षितवामसूक्तैः** = उदार हासविलास, मनोहर हेराइ र सुमधुर बोलीयुक्त
**तैः** = ती रूपहरूद्वारा
**हृतात्मनः** = मन हरण गरिएका
**हृतप्राणान्** = इन्द्रिय हरण गरिएका (भक्तहरूद्वारा
**मे** = मप्रति गरिएको
**भक्तिः** = भक्तिले
**अनिच्छतः** = मोक्षको इच्छा नराखे पनि
**अण्वीं** = अत्यन्त सूक्ष्म
**गतिम्** = जीव र ब्रह्मको एकतारूप परमपद
**प्रयुङ्क्ते** = प्राप्त गराउँछ

**वाक्यार्थ–** दर्शन गर्न योग्य अङ्गहरू भएका तथा उदार हासविलास, मनोहर हेराइ र सुमधुर बोलीयुक्त ती रूपहरूले आकर्षित भई मन र इन्द्रियहरूलाई केही वास्ता नगर्ने भइसकेका ती भक्तहरूले मप्रति गरिएको भक्तिले मोक्षको इच्छा नराखे पनि अत्यन्त सूक्ष्म एवं जीव र ब्रह्मको एकतारूप परमपद प्राप्त गराउँछ।

**अथो विभूतिं मम मायाविनस्ता-**
**मैश्वर्यमष्टाङ्गमनुप्रवृत्तम् ।**
**श्रियं भागवतीं वास्पृहयन्ति भद्रां**
**परस्य मे तेऽश्नुवते तु लोके ॥ ३७ ॥**

पदार्थ–

**अथो** = अविद्याको निवृत्ति भइसकेपछि
**ते** = ती भक्तहरूले
**मायाविनः** = मायापति भएका
**मम** = मेरो
**विभूतिं** = सत्य आदि लोकमा प्राप्त भोग
**वा** = अथवा
**अनुप्रवृत्तम्** = भक्ति भएपछि स्वतः प्राप्त हुने
**अष्टाङ्गम्** = अणिमा आदि आठ अङ्गले सहित भएको
**ऐश्वर्यम्** = सिद्धि एवं
**भागवतीं** = भगवान्को वैकुण्ठ लोकमा प्राप्त हुने
**ताम्** = त्यो
**भद्रां** = कल्याणकारी
**श्रियं** = सुखको (समेत)
**अस्पृहयन्ति** = इच्छा गर्दैनन् (तर पनि)
**परस्य** = परमात्मास्वरूप
**मे** = मेरो
**लोके** = लोकमा
**तु** = आएपछि यी सबै ऐश्वर्यहरू स्वतः नै
**अश्नुवते** = प्राप्त गर्दछन्

**वाक्यार्थ–** अविद्याको निवृत्ति भइसकेपछि ती भक्तहरूले मायापति मेरो सत्य आदि लोकमा प्राप्त भोग अथवा भक्ति भएपछि स्वतः प्राप्त हुने अणिमा आदि आठ अङ्गले सहित भएको सिद्धि

एवं भगवान्‌को वैकुण्ठ लोकमा पाइने त्यो कल्याणकारी सुखको पनि इच्छा गर्दैनन्। तर पनि परमात्मास्वरूप मेरो लोकमा आएपछि उनीहरूले यी सबै कुराहरू स्वतः नै प्राप्त गर्दछन्।

**न कर्हिचिन्मत्पराः शान्तरूपे**
**नङ्क्ष्यन्ति नो मेऽनिमिषो लेढि हेतिः।**
**येषामहं प्रिय आत्मा सुतश्च**
**सखा गुरुः सुहृदो दैवमिष्टम्॥ ३८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **येषाम्** = जसको लागि | **च** = एवं | **कर्हिचित्** = कहिल्यै पनि |
| **अहं** = म | **इष्टम्** = हितकारी | **न नङ्क्ष्यन्ति** = रहित हुँदैनन् र |
| **प्रियः** = प्रिय | **दैवम्** = भाग्य बनेको छु | (तिनीहरूलाई) |
| **आत्मा** = आत्मरूप | **मत्पराः** = मेरै आश्रयमा रहेका | **मे** = मेरो |
| **सुतः** = छोरा | ती भक्तजनहरू | **अनिमिषः** = कालरूपी |
| **सखा** = मित्र | **शान्तरूपे** = शान्त | **हेतिः** = शस्त्रले |
| **गुरुः** = गुरु | वैकुण्ठधाममा पुगेपछि दिव्य | **न लेढि** = प्रहार गर्न सक्दैन |
| **सुहृदः** = शुभेच्छुकहरू | भोगबाट | |

**वाक्यार्थ–** जसका लागि म नै प्रिय, आत्मरूप, छोरा, मित्र, गुरु, शुभेच्छुक एवं हितकारी भाग्य बनेको छु, मेरै आश्रयमा रहेका ती भक्तजनहरू शान्त वैकुण्ठधाममा पुगेपछि दिव्य भोगबाट कहिल्यै पनि रहित हुँदैनन् र तिनीहरूलाई मेरो कालरूपी शस्त्रले प्रहार गर्न सक्दैन।

**इमं लोकं तथैवामुमात्मानमुभयायिनम्।**
**आत्मानमनु ये चेह ये रायः पशवो गृहाः॥ ३९॥**
**विसृज्य सर्वानन्यांश्च मामेवं विश्वतोमुखम्।**
**भजन्त्यनन्यया भक्त्या तान् मृत्योरतिपारये॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ये** = जसले | **उभयायिनम्** = दुबै लोकमा | सम्बन्ध राख्ने |
| **इमं** = यो | सँगसँगै जाने | **ये** = जुन |
| **लोकं** = मर्त्यलोक | **आत्मानम्** = लिङ्गशरीर तथा | **रायः** = धनसम्पत्ति |
| **तथा एव** = त्यसै गरी | **इह** = यस लोकमा | **पशवः** = पशुहरू |
| **अमुम्** = परलोक र | **आत्मानम् अनु** = शरीरसँग | **गृहाः** = घरहरू |

**च** = पनि (छन्)
**तान्** = ती
**अन्यान्** = अन्य
**सर्वान्** = सबै पदार्थलाई
**विसृज्य** = त्यागेर
**एवं** = यसप्रकारले
**विश्वतोमुखम्** = विश्वव्यापी
**माम्** = मलाई
**अनन्यया** = अनन्य
**भक्त्या** = भक्तिद्वारा
**भजन्ति** = भजन गर्दछन्
**तान्** = ती भक्तहरूलाई (म)
**मृत्योः** = जन्ममरणरूपी संसारबाट
**अतिपारये** = पार गराउँछु

**वाक्यार्थ–** जसले यो मर्त्यलोक, परलोक र यी दुबै लोकमा सँगसँगै जाने लिङ्गशरीर तथा शरीरसँग सम्बन्ध राख्ने यस लोकका धनसम्पत्ति, पशु, घर आदि र अन्य सबै पदार्थलाई त्यागेर विश्वव्यापी मलाई अनन्य भक्तिद्वारा भजन गर्दछन् ती भक्तहरूलाई म जन्ममरणरूपी संसारबाट पार गराउँछु।

**नान्यत्र मद्भगवतः प्रधानपुरुषेश्वरात्।**
**आत्मनः सर्वभूतानां भयं तीव्रं निवर्तते॥ ४१॥**

पदार्थ–

**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूमा
**आत्मनः** = आत्मारूपले विराजमान
**प्रधानपुरुषेश्वरात्** = प्रकृति र पुरुषको पनि ईश्वर भएका
**मद्भगवतः** = म परमात्मादेखि
**अन्यत्र** = अन्यत्र आश्रित रहने (जीवात्मालाई)
**तीव्रं** = अत्यन्त ठुलो
**भयं** = भयबाट (कहिल्यै)
**न निवर्तते** = छुट्कारा मिल्दैन

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूमा आत्मारूपले विराजमान प्रकृति र पुरुषको पनि ईश्वर म परमात्मादेखि अन्यत्र आश्रित रहेर जीवात्मालाई अत्यन्त ठुलो भयबाट कहिल्यै छुट्कारा मिल्दैन।

**मद्भयाद् वाति वातोऽयं सूर्यस्तपति मद्भयात्।**
**वर्षतीन्द्रो दहत्यग्निर्मृत्युश्चरति मद्भयात्॥ ४२॥**

पदार्थ–

**मद्भयात्** = म परमात्माको डरले
**अयं** = यो
**वातः** = वायु
**वाति** = बहन्छ
**मद्भयात्** = म परमात्माको डरले
**सूर्यः** = सूर्यले
**तपति** = प्रकाश दिन्छ
**मद्भयात्** = म परमात्माको डरले
**इन्द्रः** = इन्द्र
**वर्षति** = वर्षा गराउँछन्
**अग्निः** = आगोले
**दहति** = डढाउँछ र
**मृत्युः** = मृत्यु
**चरति** = आफ्नो काममा प्रवृत्त हुन्छ

**वाक्यार्थ–** म परमात्माको नै डरले वायु बहन्छ, सूर्यले प्रकाश दिन्छ, इन्द्रले वर्षा गराउँछन्, आगोले डढाउँछ र मृत्यु आफ्नो काममा प्रवृत्त हुन्छ।

**ज्ञानवैराग्ययुक्तेन भक्तियोगेन योगिनः।**
**क्षेमाय पादमूलं मे प्रविशन्त्यकुतोभयम्॥ ४३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **योगिनः** = योगीहरू | **क्षेमाय** = मोक्ष प्राप्त गर्नका लागि | **पादमूलं** = चरणकमलको |
| **ज्ञानवैराग्ययुक्तेन** = ज्ञान र वैराग्यले सहित भएको | **मे** = मेरो | **प्रविशन्ति** = आश्रय लिन्छन् |
| **भक्तियोगेन** = भक्तियोगद्वारा | **अकुतोभयम्** = भयरहित | |

**वाक्यार्थ–** योगीहरू ज्ञान र वैराग्यले सहित भएको भक्तियोगद्वारा मोक्ष प्राप्त गर्नका लागि मेरो भयरहित चरणकमलको आश्रय लिन्छन्।

**एतावानेव लोकेऽस्मिन् पुंसां निःश्रेयसोदयः।**
**तीव्रेण भक्तियोगेन मनो मय्यर्पितं स्थिरम्॥ ४४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तीव्रेण** = अत्यन्त ठुलो | **मनः** = चित्त | **लोके** = मर्त्यलोकमा |
| **भक्तियोगेन** = भक्तियोगद्वारा | **स्थिरम्** = स्थिर हुन्छ | **पुंसां** = मानिसहरूका लागि |
| **मयि** = म परमात्मामा | **एतावान् एव** = यही नै | **निःश्रेयसोदयः** = परमकल्याणको उदय हो |
| **अर्पितं** = अर्पण गरिएको | **अस्मिन्** = यस | |

**वाक्यार्थ–** तीव्र भक्तियोगद्वारा म परमात्मामा अर्पण गरिएको चित्त स्थिर हुन्छ। यही नै यस मर्त्यलोकमा मानिसहरूका लागि परमकल्याणको उदय हो।

**विवरण– निःशेषेण श्रेयः** अर्थात् पूरा-पूरा कल्याणलाई निःश्रेयस भनिन्छ। शास्त्रकारहरूले मोक्षलाई निःश्रेयस भनेका छन् किनभने त्यसमा नै दुःखको पूर्णतया निवृत्ति र अनन्त आनन्दको प्राप्ति हुन्छ। यही परम कल्याण हो। तीव्र भक्तियोगद्वारा जब मन परमात्मामा स्थिर हुन्छ तब उसको हृदयभित्र परमात्मतत्त्वको प्राकट्य हुन्छ। आफ्नो र परमात्माको यो एकत्वज्ञानद्वारा ऊ परम कल्याणरूप मोक्षलाई प्राप्त गर्दछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**
**कापिलेयोपाख्याने पञ्चविंशोऽध्यायः॥ २५॥**

# अथ षड्विंशोऽध्यायः

## महत् आदि भिन्न-भिन्न तत्त्वहरूको उत्पत्तिको वर्णन

**श्रीभगवानुवाच** (भगवान् कपिलले भन्नुभयो)

**अथ ते सम्प्रवक्ष्यामि तत्त्वानां लक्षणं पृथक्।**
**यद् विदित्वा विमुच्येत पुरुषः प्राकृतैर्गुणैः॥ १॥**

पदार्थ–

**अथ** = अब म
**ते** = तपाईंलाई
**तत्त्वानां** = प्रकृति आदि तत्त्वहरूको
**पृथक्** = छुट्टाछुट्टै
**लक्षणं** = लक्षण
**सम्प्रवक्ष्यामि** = बताउँछु
**यत्** = जसलाई
**विदित्वा** = जानेर
**पुरुषः** = जीवात्मा
**प्राकृतैः** = प्रकृतिका
**गुणैः** = गुणहरूबाट
**विमुच्येत** = मुक्त हुन्छ

**वाक्यार्थ–** हे आमा! अब म तपाईंलाई प्रकृति आदि तत्त्वहरूको छुट्टाछुट्टै लक्षण बताउँछु जसलाई जानेर जीवात्मा प्रकृतिका गुणहरूबाट मुक्त हुन्छ।

**ज्ञानं निःश्रेयसार्थाय पुरुषस्यात्मदर्शनम्।**
**यदाहुर्वर्णये तत् ते हृदयग्रन्थिभेदनम्॥ २॥**

पदार्थ–

**यत्** = जुन
**हृदयग्रन्थिभेदनम्** = हृदयग्रन्थिलाई भेदन गर्ने
**आत्मदर्शनम्** = आत्मदर्शनरूप
**ज्ञानं** = ज्ञानलाई
**पुरुषस्य** = मानिसको
**निःश्रेयसार्थाय** = मोक्ष प्राप्त गराउने साधन हो भनेर
**आहुः** = विद्वान्हरू भन्दछन्
**तत्** = त्यही ज्ञान (म)
**ते** = तपाईंलाई
**वर्णये** = बताउँछु

**वाक्यार्थ–** आत्मदर्शनरूप जुन ज्ञानलाई विद्वान्हरू हृदयग्रन्थिलाई भेदन गर्न सक्ने र मानिसलाई मोक्ष प्राप्त गराउने ज्ञान भन्दछन् म त्यही ज्ञान तपाईंलाई बताउँछु।

**अनादिरात्मा पुरुषो निर्गुणः प्रकृतेः परः।**
**प्रत्यग्धामा स्वयंज्योतिर्विश्वं येन समन्वितम्॥ ३॥**

पदार्थ–

**येन** = जसद्वारा
**विश्वं** = यो सम्पूर्ण संसार
**समन्वितम्** = व्याप्त भएर प्रकाशित भएको छ त्यो
**अनादिः** = अनादि
**आत्मा** = आत्मा

| | | |
|---|---|---|
| **पुरुषः** = पुरुष हो (त्यो पुरुष) | **परः** = पर छ र | **स्वयंज्योतिः** = स्वयंप्रकाश छ |
| **निर्गुणः** = निर्गुण छ र | **प्रत्यग्धामा** = अन्तःकरणमा | |
| **प्रकृतेः** = प्रकृतिभन्दा पनि | अनुभव हुने किसिमको | |

**वाक्यार्थ–** यो संसार जसबाट व्याप्त भएर प्रकाशित भएको छ त्यो अनादि आत्मा नै पुरुष हो। त्यो पुरुष निर्गुण, प्रकृतिभन्दा पर, अन्तःकरणमा अनुभव हुने र स्वयंप्रकाश छ।

**विवरण–** उत्पत्ति हुने वस्तुलाई सादि भनिन्छ। जसको अन्त्य हुन्छ त्यसलाई सान्त भनिन्छ। आत्माको उत्पत्ति नहुने हुनाले आत्मालाई अनादि भनिन्छ।

आत्मा प्रकृतिभन्दा पर छ। आत्माजस्तै प्रकृति पनि अनादि हो। प्रकृति अनादि भए पनि ज्ञानद्वारा प्रकृतिको नाश हुने हुनाले प्रकृति सान्त हो। यसैले प्रकृति अनादि भए पनि नित्य होइन। आत्माको नाश कहिल्यै पनि नहुने हुनाले आत्मा प्रकृतिभन्दा पर छ।

यस श्लोकमा आत्मालाई **स्वयंज्योति** भनिएको छ। स्वयंज्योतिको अर्थ हुन्छ– स्वप्रकाश। आत्मा स्वप्रकाश हो। आत्मालाई छाडेर अन्य वस्तुलाई प्रकाशित गर्नका लागि आत्मप्रकाशको आवश्यकता पर्दछ। कठोपनिषद् (२।२।१५)मा भनिएको छ– **तमेव भान्तमनुभाति सर्वं, तस्य भासा सर्वमिदं विभाति** अर्थात्, आत्मा स्वयंप्रकाशरूप छ, त्यसैको प्रकाशबाट नै अन्य सम्पूर्ण पदार्थहरू प्रकाशित हुन्छन्। बृहदारण्यकोपनिषद् (४। ३। १–६)को ज्योति–ब्राह्मणमा राजा जनकले 'दिनमा कसको प्रकाशले पदार्थहरू प्रकाशित हुन्छन्' भनी प्रश्न गर्दा याज्ञवल्क्य भन्नुहुन्छ– सूर्यको प्रकाशद्वारा पदार्थहरू प्रकाशित हुन्छन्। फेरि राजा जनकले रातमा सूर्यको अभावमा कसको प्रकाशद्वारा पदार्थहरू प्रकाशित हुन्छन् भनी प्रश्न गर्दा चन्द्रमाको प्रकाशद्वारा प्रकाशित हुन्छन् भनी याज्ञवल्क्यले उत्तर दिनुभएको छ। सूर्य र चन्द्रमा दुबैको प्रकाशका अभावमा कसको प्रकाशले पदार्थहरू प्रकाशित हुन्छन् भनी जनकले प्रश्न गर्दा याज्ञवल्क्यले अग्निको प्रकाशले प्रकाशित हुन्छन् भन्नुभएको छ। सूर्य, चन्द्र र अग्निको अभावमा वाणीको प्रकाशद्वारा पदार्थहरू प्रकाशित हुने र सूर्य, चन्द्र, अग्नि वा वाणीको पनि अभावमा पदार्थहरू आत्मप्रकाशद्वारा प्रकाशित हुन्छन् भनी उत्तर दिनुभएको छ। यस प्रसङ्गबाट पनि आत्माको स्वयंप्रकाशकत्व सिद्ध हुन्छ। जसरी चिनीले अरू पदार्थहरूलाई गुलियो बनाउन सहयोग गर्दछ तर चिनी आफैँमा गुलियो हुने भएकाले यसलाई गुलियो बनाउनका लागि अरू कुनै वस्तुको आवश्यकता पर्दैन त्यसै गरी आत्माको प्रकाशद्वारा संसारका अन्य वस्तुहरू प्रकाशित हुन्छन् तर आत्मा स्वयंप्रकाशित भएकाले यसलाई प्रकाशित गराउनका लागि अरू प्रकाशको आवश्यकता पर्दैन।

प्रति उपसर्गपूर्वक अञ्च् धातुबाट क्विप् प्रत्यय भई प्रत्यक् शब्द बन्दछ। **प्रति अन्तः अञ्चतीति प्रत्यक्** अर्थात् हरेक प्राणीमा भित्रै बसेर गति दिने वस्तु वा आत्मा नै प्रत्यक् हो। यस्तै प्रत्यक्को अर्को परिभाषा हो– **प्रति प्रातिलोम्येन असज्जडदुःखरूपाहङ्कारविलक्षणतया सच्चिदानन्दरूपेण भासते इति प्रत्यक्**। यस परिभाषाबाट अहङ्कार र आत्मामा भिन्नता छ भन्ने कुरा स्पष्ट हुन्छ। असत्को उल्टो सत्, जडको उल्टो चित् र दुःखको उल्टो आनन्द हो। अहङ्कार असत् हो भने आत्मा सत् हो। अहङ्कार जड हो भने आत्मा चित् हो, अहङ्कार दुःखरूप हो भने

आत्मा आनन्दरूप हो। यसर्थ असत्, जड र दुःखरूप अहङ्कारदेखि आत्मा अत्यन्त भिन्न हुने भएकाले आत्मालाई प्रत्यक् भनिएको हो। यस्तै धाम शब्दको अर्थ हुन्छ आश्रय अर्थात् वासस्थान। प्रत्यक् शब्दले असत्, जड, दुःखदेखि भिन्न सत् चित्, आनन्दलाई पनि जनाउने भएकाले **प्रत्यग्धामा** भन्नाले सत्, चित् र आनन्दको वासस्थानका रूपमा रहेको आत्मा भन्ने बुझिन्छ।

वेदान्त शास्त्रअनुसार ब्रह्मतत्त्व, अविद्या, यी दुईको संयोग, त्यसबाट उत्पन्न हुने जीव र ईश्वर अनि जीवेश्वरको परस्पर भेद गरी यी ६ चीजहरू अनादि हुन्। विशुद्ध चित् अर्थात् ब्रह्मतत्त्व नै आफूभन्दा अभिन्न अविद्याको कारणले यी सबै रूपमा प्रकट हुने भएकाले वस्तुतः अनादि तत्त्व ब्रह्मतत्त्व नै हो। छान्दोग्योपनिषद् (६। २। १)मा भनिएको छ– **सदेव सोम्येदमग्र आसीत्**। अर्थात् सृष्टि हुनुभन्दा पहिले एकमात्र ब्रह्मतत्त्व नै थियो। आत्मा अर्थात् ब्रह्मतत्त्व निर्गुण, प्रकृतिभन्दा पर अनि सर्वव्यापक छ। त्यो 'प्रत्यग्धामा' अर्थात् शुद्ध अन्तःकरणमा प्रकट हुन्छ, अनि स्वयं ज्योतिः अर्थात् स्वयंप्रकाश छ। केनोपनिषद् (१। ४-८)मा पनि सम्पूर्ण इन्द्रियले जसलाई भेट्दैनन्, तर जसको कारणले सम्पूर्ण इन्द्रियहरू प्रकाशित भई कर्म गर्दछन् त्यस्तो आत्मालाई स्वयंप्रकाश भनिएको छ।

**स एष प्रकृतिं सूक्ष्मां दैवीं गुणमयीं विभुः।**
**यदृच्छयैवोपगतामभ्यपद्यत लीलया॥ ४॥**

पदार्थ–

**सः** = त्यो
**विभुः** = सर्वव्यापक रूप
**एषः** = यी परमात्माले
**एव** = नै
**गुणमयीं** = सत्त्व, रज, र तम गुणले युक्त भएकी
**लीलया** = लीलाद्वारा
**उपगताम्** = प्राप्त भएकी
**दैवीं** = आफ्नै शक्तिरूपा
**सूक्ष्मां** = सूक्ष्म
**प्रकृतिं** = प्रकृतिलाई
**यदृच्छया** = स्वेच्छाले
**अभ्यपद्यत** = स्वीकार गर्नुभयो

**वाक्यार्थ–** त्यो सर्वव्यापक रूप परमात्माले नै सत्त्व, रज, र तम गुणले सहित भएकी लीलाद्वारा प्राप्त भएकी आफ्नै शक्तिरूपा सूक्ष्म प्रकृतिलाई स्वेच्छाले स्वीकार गर्नुभयो।

**गुणैर्विचित्राः सृजतीं सरूपाः प्रकृतिं प्रजाः।**
**विलोक्य मुमुहे सद्यः स इह ज्ञानगूहया॥ ५॥**

पदार्थ–

**गुणैः** = गुणहरूद्वारा
**सरूपाः** = आफूजस्तै
**विचित्राः** = भिन्न-भिन्न प्रकारका
**प्रजाः** = प्राणीहरूको
**सृजतीं** = सृष्टि गरिरहेकी
**प्रकृतिं** = प्रकृतिलाई
**विलोक्य** = देखेर
**सः** = त्यस जीवात्माले
**इह** = यस संसारमा
**ज्ञानगूहया** = स्वरूपलाई ढाकिदिने प्रकृतिको वशमा

परेकाले
**सद्यः** = तत्कालै
**मुमुहे** = आफ्नो ब्रह्मस्वरूपलाई बिर्सियो

**वाक्यार्थ–** गुणहरूद्वारा आफूजस्तै भिन्न-भिन्न प्रकारका प्राणीहरू सृष्टि गरिरहेकी प्रकृतिलाई देखेर त्यस जीवात्माले यस संसारमा स्वरूपलाई ढाकिदिने प्रकृतिको वशमा परेकाले तत्कालै आफ्नो ब्रह्मस्वरूपलाई बिर्सियो।

**एवं पराभिध्यानेन कर्तृत्वं प्रकृतेः पुमान्।**
**कर्मसु क्रियमाणेषु गुणैरात्मनि मन्यते ॥ ६ ॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**पुमान्** = पुरुषले
**पराभिध्यानेन** = आफूभन्दा भिन्न प्रकृतिलाई नै आफ्नो स्वरूप ठान्नाले
**प्रकृतेः** = प्रकृतिका
**गुणैः** = गुणहरूद्वारा
**कर्मसु** = कर्महरू
**क्रियमाणेषु** = गरिँदा
**आत्मनि** = आत्मामा
**कर्तृत्वं** = कर्तृत्व रहेको
**मन्यते** = मान्दछ

**वाक्यार्थ–** यसप्रकार आफूभन्दा भिन्न प्रकृतिलाई नै आफ्नो स्वरूप ठान्नाले पुरुषले प्रकृतिका गुणहरूद्वारा गरिएका कर्मको कर्ता आफू नै भएको मान्न लाग्दछ।

**तदस्य संसृतिर्बन्धः पारतन्त्र्यं च तत्कृतम्।**
**भवत्यकर्तुरीशस्य साक्षिणो निर्वृतात्मनः ॥ ७ ॥**

**पदार्थ–**

**तत्** = त्यही कर्तृत्वको अभिमानले गर्दा
**अस्य** = यिनै
**निर्वृतात्मनः** = आनन्दरूप
**साक्षिणः** = साक्षी एवं
**अकर्तुः** = अकर्ता
**ईशस्य** = ईश्वरको (पनि)
**बन्धः** = बन्धन हुन्छ र
**तत्कृतम्** = त्यस बन्धनबाट उत्पन्न हुने
**पारतन्त्र्यं** = पराधीनता एवं
**संसृतिः** = जन्म-मरण आदिद्वारा ग्रस्त
**च** = पनि
**भवति** = हुन्छ

**वाक्यार्थ–** त्यही कर्तृत्वको अभिमानले गर्दा आनन्दस्वरूप, साक्षीस्वरूप, अकर्ता त्यही ईश्वर बन्धनमा पर्छ र त्यस बन्धनबाट उत्पन्न हुने परतन्त्रता एवं जन्म-मरण आदिद्वारा ग्रस्त हुन्छ।

**कार्यकारणकर्तृत्वे कारणं प्रकृतिं विदुः।**
**भोक्तृत्वे सुखदुःखानां पुरुषं प्रकृतेः परम् ॥ ८ ॥**

**पदार्थ–**

**कार्यकारणकर्तृत्वे** = कार्यरूप शरीर, कारणरूप इन्द्रिय तथा कर्तारूप इन्द्रियका अधिष्ठाता देवतामा (पुरुष आफ्नोपनको जुन आरोप गर्दछ विद्वान्हरू त्यसको)
**कारणं** = कारण
**प्रकृतिं** = प्रकृतिलाई
**विदुः** = मान्दछन्

**सुखदुःखानां** = सुख र दुःखको
**भोक्तृत्वे** = भोगमा भने
**प्रकृतेः** = प्रकृतिदेखि
**परम्** = पर रहेको
**पुरुषं** = पुरुषलाई कारण मान्दछन्

**वाक्यार्थ–** कार्यरूप शरीर, कारणरूप इन्द्रिय तथा कर्तारूप इन्द्रियका अधिष्ठाता देवतामा पुरुष आफ्नोपनको जुन आरोप गर्दछ विद्वान्‌हरू त्यसको कारण प्रकृतिलाई मान्दछन्। सुख र दुःखको भोगमा भने प्रकृतिदेखि पर रहेको पुरुषलाई उनीहरू कारण मान्दछन्।

**विवरण–** प्रकृतिका आवरण र विक्षेप दुई किसिमका शक्ति छन्। ती दुई शक्तिरूपमा देखा पर्ने प्रकृतिलाई अविद्या वा माया भनिन्छ। जीवहरूलाई आफ्नो सच्चा स्वरूपको ज्ञान गर्न नदिई आफ्नो स्वरूपलाई छोपिदिने शक्तिलाई आवरण शक्ति भनिन्छ भने आश्रयलाई मोहित नगराई व्यष्टि समष्टि सूक्ष्म शरीरदेखि लिएर ब्रह्माण्डपर्यन्तको जगत्प्रपञ्च प्रकट गराउने शक्तिलाई विक्षेप शक्ति भनिन्छ। यी दुबै शक्तियुक्त प्रकृतिलाई शुद्ध सत्त्व प्रधान हुँदा माया र मलिन सत्त्व प्रधान हुँदा अविद्या भनिन्छ। मायासँग मिलेको चेतनलाई ईश्वर भनिन्छ भने अविद्यामा मिलेको चेतनलाई जीव भनिन्छ। जीवहरू आफ्नो प्रकृति अविद्याद्वारा मोहित हुन्छन् भने ईश्वर आफ्नो प्रकृति मायाद्वारा सृष्टि आदि गर्दछ। अज्ञानकै कारणले जीव जन्ममृत्युको चक्रमा पर्छ भने सर्वज्ञत्वादि सम्पन्न मायाशक्तिको कारणले ईश्वर दुबैथरी प्रकृतिलाई वशमा गर्दछ।

जीव आफ्नो अज्ञानको कारणले नै विवश भई सुख-दुःख आदि भोगमा परेको हो। त्यसमा पनि कर्तृत्वमा र भोक्तृत्वमा क्रमशः प्रकृति र पुरुषको प्राधान्य हुन्छ भनी श्लोकले बताएको छ। यद्यपि म कर्म गर्छु र म फल भोग्छु भन्ने कर्तृत्व र भोक्तृत्व अंश दुबै म अर्थात् एउटै चेतनाले गरेको अनुभव हुन्छ तर पनि म काम गर्छु भन्दा प्रकृतिको अंश अनि म भोग गर्छु भन्दा पुरुषको अंश प्रधान रहन्छ। जसरी घटाकाशमा घैंटो आकाशको उपाधि हो त्यसै गरी अविद्या जीवको उपाधि हो। त्यसैले जीव उपाधियुक्त अर्थात् अविद्याद्वारा उपहित छ। कर्म जड हो त्यस्तै उपाधि अविद्या पनि जड भएकाले त्यसको कर्तृत्वसँग सम्बन्ध रहेको हो, तर भोग भने कुनै चेतनले मात्र गर्न सक्छ। रूखमा फलेको फल, नदीको पानी आदि सबै पदार्थ कुनै भोक्ता चेतनको अपेक्षामा छन्। जडमा पनि स्वभाववशात् कर्म त हुन सक्छन्– जस्तै नदी बग्नु आदि। तर भोग अनिवार्यतः चेतनको अपेक्षा गर्दछ, अतः भोक्तृत्वमा पुरुष प्रधान हुन्छ। यस प्रसङ्गमा कपिलले जीव र ईश्वर दुबै अविद्या र मायामा परेका ब्रह्मका प्रतिबिम्ब हुन् भनी बताउनुभएको छ।

**देवहूतिरुवाच** (देवहूतिले भन्नुभयो)

**प्रकृतेः पुरुषस्यापि लक्षणं पुरुषोत्तम।**
**ब्रूहि कारणयोरस्य सदसच्च यदात्मकम्॥ ९॥**

पदार्थ–

**पुरुषोत्तम** = हे पुरुषोत्तम
**सदसत्** = स्थूल सूक्ष्म कार्य
**यदात्मकम्** = जसको स्वरूप

| | | |
|---|---|---|
| भएको छ (त्यस्ता) | **प्रकृतेः** = प्रकृति र | **लक्षणं** = लक्षण |
| **अस्य** = यो जगत्को | **पुरुषस्य** = पुरुषको | **ब्रूहि** = बताउनुहोस् |
| **कारणयोः** = कारण भएका | **च अपि** = पनि | |

**वाक्यार्थ–** हे पुरुषोत्तम ! स्थूलसूक्ष्मरूप कार्य जसको स्वरूप हो त्यस्तो यो जगत्को कारण भएका प्रकृति र पुरुषको लक्षण बताउनुहोस्।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**यत् तत् त्रिगुणमव्यक्तं नित्यं सदसदात्मकम्।**

**प्रधानं प्रकृतिं प्राहुरविशेषं विशेषवत्॥ १०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यत्** = जो | छ र जो | **तत्** = त्यस तत्त्वलाई नै |
| **त्रिगुणम्** = त्रिगुणात्मक | **अविशेषं** = निर्विशेष भएर पनि | **प्रकृतिं** = प्रकृति |
| **अव्यक्तं** = सूक्ष्म एवं | **विशेषवत्** = सम्पूर्ण विशेष | **प्राहुः** = भन्दछन् |
| **नित्यं** = उत्पत्तिविनाशरहित र | धर्मको आश्रय र | |
| **सदसदात्मकम्** = कार्यकारणरूप | **प्रधानं** = प्रधान तत्त्व छ | |

**वाक्यार्थ–** जो त्रिगुणात्मक, सूक्ष्म, उत्पत्तिविनाशरहित र कार्यकारणरूप छ र जो निर्विशेष भएर पनि सम्पूर्ण विशेष धर्मको आश्रय र प्रधान छ त्यस तत्त्वलाई नै प्रकृति भन्दछन्।

**पञ्चभिः पञ्चभिर्ब्रह्म चतुर्भिर्दशभिस्तथा।**

**एतच्चतुर्विंशतिकं गणं प्राधानिकं विदुः॥ ११॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पञ्चभिः** = पाँचओटा महाभूत | गरी दश इन्द्रियसमेतका | **प्राधानिकं** = प्रकृतिको कार्यरूप |
| **पञ्चभिः** = पाँच तन्मात्रा | **एतत्** = यी | **ब्रह्म** = ब्रह्म |
| **चतुर्भिः** = चार अन्तःकरण | **चतुर्विंशतिकं** = चौबीस ओटा | **विदुः** = भन्दछन् |
| **तथा** = त्यसै गरी | तत्त्वको | |
| **दशभिः** = ज्ञानेन्द्रिय र कर्मेन्द्रिय | **गणं** = समूहलाई | |

**वाक्यार्थ–** पाँचओटा महाभूत, पाँच तन्मात्रा, चार अन्तःकरण, पाँच ज्ञानेन्द्रिय र पाँच कर्मेन्द्रिय गरी चौबीसओटा तत्त्वको समूहलाई प्रकृतिको कार्यरूप ब्रह्म भन्दछन्।

**महाभूतानि पञ्चैव भूरापोऽग्निर्मरुन्नभः।**

**तन्मात्राणि च तावन्ति गन्धादीनि मतानि मे॥ १२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **महाभूतानि** = महाभूत भनेका | **नभः** = आकाश गरी | **तन्मात्राणि** = तन्मात्रा |
| **भूः** = पृथिवी | **पञ्च** = पाँच ओटा | **च** = पनि |
| **आपः** = जल | **एव** = नै (छन्) | **तावन्ति** = पाँच ओटा छन् भनेर |
| **अग्निः** = तेज | **गन्धादीनि** = गन्ध, रस, रूप, | **मे** = मद्वारा |
| **मरुत्** = वायु | स्पर्श र शब्द गरी | **मतानि** = मानिएका छन् |

**वाक्यार्थ–** पृथिवी, जल, तेज, वायु र आकाश गरी यी पाँचओटा महाभूत हुन् भने गन्ध, रस, रूप, स्पर्श र शब्द गरी पाँचओटा चाहिँ तन्मात्रा हुन्।

**इन्द्रियाणि दश श्रोत्रं त्वग्दृग्रसननासिकाः।**
**वाक्करौ चरणौ मेढ्रं पायुर्दशम उच्यते ॥ १३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **इन्द्रियाणि** = इन्द्रियहरू | जिब्रो, आँखा, नाक | **दशमः** = दशौँ |
| **दश** = दशओटा छन् | **वाक्करौ** = वाणी, हात | **पायुः** = मलद्वार |
| **श्रोत्रं** = कान | **चरणौ** = गोडा | **उच्यते** = भनिन्छ |
| **त्वग्दृग्रसननासिकाः** = छाला, | **मेढ्रं** = मूत्रद्वार | |

**वाक्यार्थ–** इन्द्रियहरू दशओटा छन्। तिनीहरू कान, छाला, जिब्रो, आँखा, नाक, वाणी, हात, गोडा, मूत्रद्वार र मलद्वार गरी दशओटा छन्।

**मनो बुद्धिरहङ्कारश्चित्तमित्यन्तरात्मकम्।**
**चतुर्धा लक्ष्यते भेदो वृत्त्या लक्षणरूपया ॥ १४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अन्तरात्मकम्** = अन्तःकरण | **मनः** = मन | **चतुर्धा** = चार |
| (एउटै भए पनि) | **बुद्धिः** = बुद्धि | **भेदः** = प्रकारको |
| **लक्षणरूपया** = विविध लक्षण | **अहङ्कारः** = अहङ्कार र | **लक्ष्यते** = मानिन्छ |
| भएका | **चित्तम्** = चित्त | |
| **वृत्त्या** = वृत्तिले गर्दा | **इति** = यस प्रकारले | |

**वाक्यार्थ–** अन्तःकरण एउटै भए पनि विविध लक्षण भएको वृत्तिले गर्दा मन, बुद्धि, अहङ्कार र चित्त गरी चार प्रकारको मानिन्छ।

**विवरण–** करण भनेको साधन हो। जीवात्माले विषयको ज्ञान गर्ने बाहिरी साधन इन्द्रियहरू हुन् भने ज्ञानका भित्री साधनलाई अन्तःकरण भनिन्छ। अन्तःकरण एउटै भए पनि विभिन्न वृत्तिहरूका कारणले यसलाई बहुरूप मानिन्छ। सङ्कल्प-विकल्प अर्थात् गरूँ कि नगरूँ भन्ने वृत्ति मनको हो।

त्यसमा निश्चय प्रदान गर्ने काम बुद्धिवृत्तिको हो। जन्मजन्मान्तरीय अनुभवको संस्कार चित्तवृत्तिमा रहन्छ भने अहं भन्ने काम अहङ्कारवृत्तिको हो। वास्तवमा एउटै अन्तःकरण सङ्कल्प-विकल्प गर्दा मन, निश्चय गर्दा बुद्धि, चिन्तन र संस्कार स्थापना गर्दा चित्त, अनि अभिमान गर्दा अहङ्कारको रूपमा परिलक्षित हुन्छ। चारथरी वृत्तिद्वारा अन्तःकरणका चार रूप हुने भए तापनि सूक्ष्म शरीरका सत्र कलाहरूको गणना गर्ने क्रममा मन र बुद्धिलाई मात्र गनी क्रमशः चित्त र अहङ्कारलाई यी दुबैमा समावेश गरिएको पनि पाइन्छ।

**एतावानेव सङ्ख्यातो ब्रह्मणः सगुणस्य ह।**
**सन्निवेशो मया प्रोक्तो यः कालः पञ्चविंशकः ॥ १५ ॥**

**पदार्थ–**

**मया** = मद्वारा
**सगुणस्य** = सगुण
**ब्रह्मणः** = ब्रह्मको
**सन्निवेशः** = अवस्थाविशेषको भेद
**एतावान् एव** = यत्ति मात्रै
**सङ्ख्यातः** = गणना गरियो
**यः** = जो
**कालः** = काल हो त्यो
**ह** = चाहिँ
**पञ्चविंशकः** = पच्चीसौँ तत्त्व हो
**प्रोक्तः** = भनिएको छ

**वाक्यार्थ–** सगुण ब्रह्मको अवस्थाविशेषको भेद यति नै हो, यही नै मैले गणना गरेँ। यीदेखि भिन्न काल चाहिँ पच्चीसौँ तत्त्व हो।

**प्रभावं पौरुषं प्राहुः कालमेके यतो भयम्।**
**अहङ्कारविमूढस्य कर्तुः प्रकृतिमीयुषः ॥ १६ ॥**

**पदार्थ–**

**एके** = केही मुनिहरू
**कालम्** = काललाई
**पौरुषं** = पुरुषको
**प्रभावं** = शक्ति (हो भनेर)
**प्राहुः** = भन्दछन्
**यतः** = जसबाट
**प्रकृतिम्** = अविद्यालाई
**ईयुषः** = स्वीकार गरेको
**अहङ्कारविमूढस्य** = अहङ्कारग्रस्त
**कर्तुः** = आफूलाई कर्ता मान्ने जीवात्माले
**भयम्** = भय (प्राप्त गर्दछ)

**वाक्यार्थ–** केही मुनिहरू काललाई पुरुषको शक्ति हो भनेर भन्दछन् जसबाट अविद्यालाई स्वीकार गरेको अहङ्कारग्रस्त आफूलाई कर्ता मान्ने जीवात्माले भय प्राप्त गर्दछ।

**प्रकृतेर्गुणसाम्यस्य निर्विशेषस्य मानवि।**
**चेष्टा यतः स भगवान् काल इत्युपलक्षितः ॥ १७ ॥**

**पदार्थ–**

**मानवि** = हे मनुपुत्री देवहूति
**यतः** = जसको प्रेरणाबाट
**गुणसाम्यस्य** = तीन गुणको

साम्यावस्थारूप
**निर्विशेषस्य** = आकाररहित
**प्रकृतेः** = प्रकृतिको
**चेष्टा** = गति देखिन्छ
**सः** = तिनै
**भगवान्** = भगवान्
**कालः** = काल हुनुहुन्छ
**इति** = भनेर
**उपलक्षितः** = भनिन्छ

**वाक्यार्थ–** हे मनुपुत्री देवहूति ! जसको प्रेरणाबाट तीन गुणको साम्यावस्थारूप आकाररहित प्रकृतिमा गति उत्पन्न हुन्छ, तिनै भगवान्लाई नै काल भनिन्छ।

**अन्तः पुरुषरूपेण कालरूपेण यो बहिः।**
**समन्वेत्येष सत्त्वानां भगवानात्ममायया ॥ १८ ॥**

**पदार्थ–**

**यः** = जो
**एषः** = यी कालरूप
**भगवान्** = भगवान्
**आत्ममायया** = आफ्नो
मायाद्वारा
**सत्त्वानां** = प्राणीहरूको
**अन्तः** = अन्तःकरणभित्र
**पुरुषरूपेण** = पुरुषरूपले र
**बहिः** = बाहिर
**कालरूपेण** = कालरूपले
**समन्वेति** = प्राप्त हुनुहुन्छ

**वाक्यार्थ–** यिनै कालरूप भगवान् आफ्नो मायाले प्राणीहरूको अन्तःकरणभित्र पुरुषरूपले र बाहिर कालरूपले प्राप्त हुनुहुन्छ।

**दैवात् क्षुभितधर्मिण्यां स्वस्यां योनौ परः पुमान्।**
**आधत्त वीर्यं सासूत महत्तत्त्वं हिरण्मयम् ॥ १९ ॥**

**पदार्थ–**

**परः** = परम
**पुमान्** = पुरुषले
**दैवात्** = अदृष्टको सहयोगले
**क्षुभितधर्मिण्यां** = सत्त्व, रज, तम नाम गरेका विविध गुणले युक्त
**स्वस्यां** = आफ्नो
**योनौ** = उत्पत्तिको कारण भएको प्रकृतिमा
**वीर्यं** = वीर्यरूप चैतन्य
**आधत्त** = स्थापित गर्नुभयो
(त्यसपछि)
**सा** = तिनै प्रकृतिले
**हिरण्मयम्** = प्रकाशयुक्त
**महत्तत्त्वं** = महत्तत्त्वलाई
**असूत** = जन्माइन्

**वाक्यार्थ–** परम पुरुष परमात्माले अदृष्टको सहयोगले सत्त्व, रज, तम नाम गरेका विविध गुणले युक्त आफ्नो उत्पत्तिको कारण भएको प्रकृतिमा वीर्यरूप चैतन्य स्थापित गर्नुभयो। त्यसपछि तिनै प्रकृतिले प्रकाशयुक्त महत्तत्त्वलाई जन्माइन्।

**विश्वमात्मगतं व्यञ्जन् कूटस्थो जगदङ्कुरः।**
**स्वतेजसापिबत् तीव्रमात्मप्रस्वापनं तमः ॥ २० ॥**

**पदार्थ–**

**कूटस्थः** = विकाररहित (भएको)
**जगदङ्कुरः** = जगत्को
अङ्कुररूप महत्तत्त्वले

**आत्मगतं** = आफूमा सूक्ष्मरूपले रहेको
**विश्वम्** = प्रपञ्चलाई
**व्यञ्जन्** = प्रकट गराउनका लागि
**आत्मप्रस्वापनं** = आफूलाई ढाक्ने
**तीव्रम्** = प्रलयकालीन
**तमः** = अन्धकारलाई
**स्वतेजसा** = आफ्नो तेजले
**अपिबत्** = पियो (समाप्त गऱ्यो)

**वाक्यार्थ–** विकाररहित, जगत्को कारणरूप महत्तत्त्वले आफूमा सूक्ष्मरूपले रहेको प्रपञ्चलाई प्रकट गराउनका लागि आफूलाई ढाक्ने प्रलयकालीन अन्धकारलाई आफ्नै तेजले समाप्त गऱ्यो।

**यत् तत् सत्त्वगुणं स्वच्छं शान्तं भगवतः पदम्।**
**यदाहुर्वासुदेवाख्यं चित्तं तन्महदात्मकम्॥ २१॥**

पदार्थ–

**यत्** = जो
**सत्त्वगुणं** = सत्त्वगुण
**स्वच्छं** = स्वच्छ
**शान्तं** = शान्त
**भगवतः** = भगवान्को
**पदम्** = उपलब्धिस्थान हो
**तत्** = त्यही नै
**चित्तं** = चित्त हो
**यत्** = जुन
**महदात्मकम्** = महत्तत्त्व हो
**तत्** = त्यसैलाई नै
**वासुदेवाख्यं** = वासुदेव भनेर
**आहुः** = भनिन्छ

**वाक्यार्थ–** जो सत्त्वगुणमय, स्वच्छ, शान्त एवं भगवान्को उपलब्धिको स्थानरूप चित्त हो त्यही नै महत्तत्त्व हो र त्यसैलाई वासुदेव भनिन्छ।

**विवरण–** अधिभूत महत्तत्त्व नै अध्यात्म चित्त हो। मन, बुद्धि, चित्त, अहङ्कार यी चारथरी अन्तःकरणका पनि भिन्न-भिन्न स्वरूप र देवताहरू शास्त्रमा बताइएका छन्। अहङ्कारको कारण जुन महत्तत्त्व हो त्यही अध्यात्म चित्त हो र त्यसको अधिष्ठाता क्षेत्रज्ञ जीव हो भने उपास्यदेव वासुदेव हुन्। महत्तत्त्वबाट उत्पन्न हुने सात्त्विक, राजस र तामस समष्टि अहङ्कारका अधिष्ठाता रुद्र हुन् भने उपास्यदेव सङ्कर्षण हुन्। त्यसै गरी सात्त्विक अहङ्कारबाट उत्पन्न मनका अधिष्ठाता चन्द्रमा र उपास्यदेव अनिरुद्ध हुन् भने राजस अहङ्कारबाट उत्पन्न बुद्धितत्त्वका अधिष्ठाता ब्रह्मा र उपास्यदेव प्रद्युम्न हुन्।

**स्वच्छत्वमविकारित्वं शान्तत्वमिति चेतसः।**
**वृत्तिभिर्लक्षणं प्रोक्तं यथापां प्रकृतिः परा॥ २२॥**

पदार्थ–

**यथा** = जसरी
**अपां** = पानीको
**परा** = आफ्नो
**प्रकृतिः** = स्वभाव
**स्वच्छत्वम्** = स्वच्छ हुनु
**अविकारित्वं** = विकाररहित हुनु
**शान्तत्वम्** = शान्त हुनु (हो त्यसै गरी)
**इति** = यिनै
**वृत्तिभिः** = अवस्थाहरूद्वारा
**चेतसः** = चित्तको
**लक्षणं** = लक्षण

**प्रोक्तं** = बताइएको छ

**वाक्यार्थ–** जसरी पृथ्वी आदि अन्य पदार्थहरूसँग संसर्ग हुनुभन्दा पहिला पानी स्वच्छ, विकाररहित एवं शान्त हुन्छ त्यसै गरी स्वच्छ हुनु, विकाररहित हुनु र शान्त हुनु यी अवस्थाहरूद्वारा चित्तको लक्षण बताइएको छ।

**महत्तत्त्वाद् विकुर्वाणाद् भगवद्वीर्यसम्भवात्।**
**क्रियाशक्तिरहङ्कारस्त्रिविधः समपद्यत ॥ २३ ॥**
**वैकारिकस्तैजसश्च तामसश्च यतो भवः।**
**मनसश्चेन्द्रियाणां च भूतानां महतामपि ॥ २४ ॥**

**पदार्थ–**

**भगवद्वीर्यसम्भवात्** = परमात्माको चित्शक्तिबाट उत्पन्न भएको
**विकुर्वाणात्** = विकारमा प्राप्त हुने
**महत्तत्त्वात्** = महत्तत्त्वबाट
**त्रिविधः** = तीन प्रकारको
**क्रियाशक्तिः** = क्रियाशक्ति भएको
**अहङ्कारः** = अहङ्कार
**समपद्यत** = उत्पन्न भयो (त्यो अहङ्कार)
**वैकारिकः** = सात्त्विक
**तैजसः** = राजस
**तामसः** = तामस गरी (तीन प्रकारको छ)
**च** = र
**यतः** = जसबाट
**मनसः** = मन
**इन्द्रियाणां** = पञ्च ज्ञानेन्द्रिय र पञ्च कर्मेन्द्रिय र
**महताम् भूतानां** = पञ्च महाभूतहरूको
**च अपि** = पनि
**भवः** = उत्पत्ति भयो

**वाक्यार्थ–** परमात्माको चित्शक्तिबाट उत्पन्न भएको विकारमा प्राप्त हुने महत्तत्त्वबाट तीन प्रकारको क्रियाशक्ति भएको अहङ्कार उत्पन्न भयो। त्यो अहङ्कार सात्त्विक, राजस र तामस गरी तीन प्रकारको छ। जसबाट मन, पञ्च ज्ञानेन्द्रिय, पञ्चकर्मेन्द्रिय एवं पञ्च महाभूतहरूको समेत उत्पत्ति भयो।

**विवरण–** परमात्माको मायाशक्तिबाट महत्तत्त्वको क्रमले संसारको सृष्टि भएको हो। प्रलयकाल समाप्त भएपछि जब जीवका अदृष्टहरूले परमात्मालाई क्षुब्ध गर्दछन् त्यसपछि सृष्टिका लागि प्रेरित हुनुभएका परमात्माले आफ्नो मायाशक्तिको सहारा लिनुहुन्छ। माया स्वतः जड छ, तर जब त्यसमा चित्स्वरूप परमात्माको चिदंश स्थापित हुन्छ तब मायामा विकार देखिन थाल्दछ। सृष्टितिर उन्मुख मायाबाट सबभन्दा पहिले महत्तत्त्व उत्पन्न हुन्छ।

वेदान्तसिद्धान्तअनुसार जीवात्मा, परमात्मा, जीव र ईश्वरको भेद, विशुद्ध ज्ञान, अविद्या अनि अविद्या र ज्ञानको सम्बन्ध यी ६ वस्तुहरू अनादि हुन्। त्यसकारण माया अनादि पदार्थ भएकाले यसको उत्पत्ति हुँदैन। जब मायाबाट महत्तत्त्वको उत्पत्ति हुन्छ तब सत्त्वगुण प्रधान एवं

तेजोमय भएकाले महत्तत्त्वले प्रलयकालीन अन्धकारलाई नष्ट गर्दछ। सृष्टि अभिव्यक्त नहुनु नै अन्धकार हो। जब गुणक्षोभद्वारा सृष्टि व्यक्त हुने क्रम सुरु हुन्छ तब सबभन्दा पहिले महत्तत्त्व उत्पन्न हुन्छ। त्यसकारण सबभन्दा पहिलो कार्य भएकाले महत्तत्त्वले अन्धकार पियो अर्थात् सृष्टिलाई प्रकट हुने अवस्थातिर उन्मुख गरायो भन्न खोजिएको हो।

सत्त्वप्रधान महत्तत्त्वबाट रजःप्रधान अहङ्कारको उत्पत्ति हुन्छ। रजःप्रधान भए तापनि अहङ्कार त्रिगुणात्मक भएकाले त्यसका सात्त्विक, राजस र तामस तीन अंशहरू छन्। सात्त्विक अहङ्कार मनस्तत्त्वको कारण हो भने राजस अहङ्कार बुद्धितत्त्व, प्राण र इन्द्रियहरूको कारण हो, त्यसै गरी तामस अहङ्कार पञ्च तन्मात्राहरूको कारण हो।

**सहस्रशिरसं साक्षाद् यमनन्तं प्रचक्षते।**

**सङ्कर्षणाख्यं पुरुषं भूतेन्द्रियमनोमयम्॥ २५॥**

**पदार्थ–**

**भूतेन्द्रियमनोमयम्** = भूत, इन्द्रिय र मनरूप अहङ्कार नै
**सहस्रशिरसं** = हजार शिर भएका
**सङ्कर्षणाख्यं** = सङ्कर्षण नाम गरेका देवता हुनुहुन्छ
**यम्** = जसलाई
**साक्षात्** = साक्षात्
**अनन्तं** = अनन्त
**पुरुषं** = पुरुष
**प्रचक्षते** = भनिन्छ

**वाक्यार्थ–** भूत, इन्द्रिय र मनरूप अहङ्कारको समष्टि रूपलाई नै हजार शिर भएका साक्षात् सङ्कर्षण नाम गरेका अनन्त पुरुष भनिन्छ।

**कर्तृत्वं करणत्वं च कार्यत्वं चेति लक्षणम्।**

**शान्तघोरविमूढत्वमिति वा स्यादहङ्कृतेः॥ २६॥**

**पदार्थ–**

**कर्तृत्वं** = देवतारूपले कर्ता हुनु
**करणत्वं** = इन्द्रियरूपले करण हुनु
**च** = र
**कार्यत्वं** = पञ्चमहाभूत आदि रूपले कार्य हुनु
**इति** = यो नै
**अहङ्कृतेः** = अहङ्कारको
**लक्षणम्** = लक्षण हो
**वा** = अथवा
**शान्तघोरविमूढत्वम्** = सत्त्वगुणले शान्त, रजोगुणले घोर र तमोगुणले विमूढ
**इति** = यो (पनि)
**स्यात्** = अहङ्कारको लक्षण हो

**वाक्यार्थ–** देवतारूपले कर्ता, इन्द्रियरूपले करण र पञ्चमहाभूत आदि रूपले कार्यका रूपमा प्रकट हुनु अहङ्कारको लक्षण हो। यस्तै अहङ्कार सत्त्वगुणले शान्त, रजोगुणले घोर र तमोगुणले विमूढ हुन्छ भन्ने पनि लक्षण हुन्छ।

**वैकारिकाद् विकुर्वाणान्मनस्तत्त्वमजायत।**

**यत्सङ्कल्पविकल्पाभ्यां वर्तते कामसम्भवः॥ २७॥**

**पदार्थ–**
(उपर्युक्त तीन प्रकारका अहङ्कारमध्ये)
**वैकारिकाद्** = सात्त्विक अहङ्कार
**विकुर्वाणात्** = विकृत भएपछि
**मनस्तत्त्वम्** = मन नाम गरेको तत्त्व
**अजायत** = जन्मियो
**यत्सङ्कल्पविकल्पाभ्यां** = जसको सङ्कल्प र विकल्पबाट
**कामसम्भवः** = कामनारूप वृत्तिको उत्पत्ति
**वर्तते** = हुन्छ

**वाक्यार्थ–** उपर्युक्त तीन प्रकारका अहङ्कारमध्ये सात्त्विक अहङ्कारमा विकार आएपछि मन जन्मियो। जसको सङ्कल्प र विकल्पबाट कामनारूप वृत्तिको उत्पत्ति हुन्छ।

**यद् विदुर्ह्यनिरुद्धाख्यं हृषीकाणामधीश्वरम्।**
**शारदेन्दीवरश्यामं संराध्यं योगिभिः शनैः॥ २८॥**

**पदार्थ–**
**यत्** = यो मनस्तत्त्व नै
**हृषीकाणाम्** = इन्द्रियहरूका
**अधीश्वरम्** = अधिष्ठाता
**अनिरुद्धाख्यं** = अनिरुद्धको नामले प्रसिद्ध हुनुहुन्छ
**शारदेन्दीवरश्यामं** = शरद्काल-को कमलजस्तै नीलो वर्ण भएका उहाँ
**योगिभिः** = योगीजनद्वारा
**शनैः** = बिस्तारै
**संराध्यं** = आराधना गर्न योग्य हुनुहुन्छ भन्ने (विद्वान्हरू)
**विदुः** = मान्दछन्

**वाक्यार्थ–** जुन मनस्तत्त्व इन्द्रियहरूका अधिष्ठाता अनिरुद्धको नामले प्रसिद्ध हुनुहुन्छ। शरद्कालको कमलजस्तै नीलो वर्ण भएका उहाँ योगीजनद्वारा बिस्तारै आराधना गर्न योग्य हुनुहुन्छ।

**तैजसात्तु विकुर्वाणाद् बुद्धितत्त्वमभूत् सति।**
**द्रव्यस्फुरणविज्ञानमिन्द्रियाणामनुग्रहः॥ २९॥**

**पदार्थ–**
**सति** = हे माता देवहूति
**तैजसात्तु** = राजसी अहङ्कारमा
**विकुर्वाणाद्** = विकार भएपछि
**बुद्धितत्त्वम्** = बुद्धि नाम गरेको तत्त्व
**अभूत्** = उत्पन्न भयो (जसले)
**द्रव्यस्फुरणविज्ञानम्** = द्रव्य आदिको ज्ञान गर्नका लागि
**इन्द्रियाणाम्** = इन्द्रियहरूको
**अनुग्रहः** = सहयोग गर्ने गर्दछ

**वाक्यार्थ–** हे माता देवहूति! राजसी अहङ्कारमा विकार भएपछि बुद्धि नाम गरेको तत्त्व उत्पन्न भयो। द्रव्य आदिको ज्ञान गर्नका लागि इन्द्रियहरूको सहयोग गर्ने तत्त्वलाई नै बुद्धि भनिन्छ।

**संशयोऽथ विपर्यासो निश्चयः स्मृतिरेव च।**
**स्वाप इत्युच्यते बुद्धेर्लक्षणं वृत्तितः पृथक्॥ ३०॥**

पदार्थ–

**अथ** = यस्तै
**वृत्तितः** = वृत्तिको भेदबाट हुने
**संशयः** = संशयात्मक ज्ञान
**विपर्यासः** = मिथ्याज्ञान
**निश्चयः** = यथार्थज्ञान
**स्मृतिः** = स्मरणात्मक ज्ञान
**एव च** = र
**स्वापः** = निद्रा
**इति** = यी
**बुद्धेः** = बुद्धिका
**पृथक्** = भिन्नभिन्न
**लक्षणं** = लक्षण
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** यस्तै वृत्तिको भेदबाट हुने संशयात्मक ज्ञान, मिथ्याज्ञान, यथार्थज्ञान, स्मरणात्मक ज्ञान र निद्रा यी बुद्धिका भिन्नभिन्न लक्षण हुन् भनिन्छ।

**तैजसानीन्द्रियाण्येव क्रियाज्ञानविभागशः।**
**प्राणस्य हि क्रियाशक्तिर्बुद्धेर्विज्ञानशक्तिता॥ ३१॥**

पदार्थ–

**तैजसानि** = राजसी अहङ्कारबाट नै उत्पन्न भएका
**इन्द्रियाणि एव** = इन्द्रियहरू नै
**क्रियाज्ञानविभागशः** = कर्म गर्ने र ज्ञान गर्ने भनी गरिएको विभाजनअनुसार (कर्मेन्द्रिय र ज्ञानेन्द्रिय गरी इन्द्रिय दुई प्रकारका छन्)
**हि** = निश्चय नै
**प्राणस्य** = प्राणको
**क्रियाशक्तिः** = क्रिया गर्ने शक्ति र
**बुद्धेः** = बुद्धिको
**विज्ञानशक्तिता** = ज्ञान गर्ने शक्ति (दुबै राजसी अहङ्कारबाट उत्पन्न भएका हुन्)

**वाक्यार्थ–** इन्द्रियहरू राजसी अहङ्कारबाट नै उत्पन्न भएका हुन्। कर्म गर्ने र ज्ञान गर्ने भनी गरिएको विभाजनअनुसार कर्मेन्द्रिय र ज्ञानेन्द्रिय गरी इन्द्रिय दुई प्रकारका छन्। प्राणको क्रिया गर्ने शक्ति र बुद्धिको ज्ञान गर्ने शक्ति दुबै राजसी अहङ्कारबाट उत्पन्न भएका हुन्।

**तामसाच्च विकुर्वाणाद् भगवद्वीर्यचोदितात्।**
**शब्दमात्रमभूत् तस्मान्नभः श्रोत्रं तु शब्दगम्॥ ३२॥**

पदार्थ–

**भगवद्वीर्यचोदितात्** = भगवान्को चित्शक्तिद्वारा प्रेरित
**तामसात्** = तामस अहङ्कारमा
**विकुर्वाणात्** = विकार आएपछि
**शब्दमात्रम्** = शब्दतन्मात्रा
**अभूत्** = उत्पन्न भयो
**तस्मात्** = त्यही शब्दतन्मात्राबाट
**नभः** = आकाश (र)
**शब्दगम्** = शब्दग्रहण गर्ने
**श्रोत्रं** = श्रवणेन्द्रिय
**च** = पनि (उत्पन्न भए)

**वाक्यार्थ–** भगवान्को चित्शक्तिद्वारा प्रेरित तामस अहङ्कारमा विकार आएपछि शब्दतन्मात्रा उत्पन्न भयो। शब्दतन्मात्राबाट आकाश र शब्दग्रहण गर्ने श्रवणेन्द्रिय उत्पन्न भए।

**अर्थाश्रयत्वं शब्दस्य द्रष्टुर्लिङ्गत्वमेव च।**

**तन्मात्रत्वं च नभसो लक्षणं कवयो विदुः॥ ३३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अर्थाश्रयत्वं** = विषयलाई प्रकाशित गर्नु | **च** = र | **लक्षणं** = लक्षण हुन् भनेर |
| **द्रष्टुः** = सामुन्ने नरहेका व्यक्तिको | **नभसः** = आकाशको | **कवयः** = ज्ञानी पुरुषहरू |
| **लिङ्गत्वम्** = ज्ञान गराइदिनु | **तन्मात्रत्वं** = सूक्ष्म रूप हुनु | **विदुः** = जान्दछन् |
| | **च एव** = पनि | |
| | **शब्दस्य** = शब्दका | |

**वाक्यार्थ–** विषयलाई प्रकाशित गर्नु, सामुन्ने नरहेका व्यक्तिको ज्ञान गराइदिनु र आकाशको सूक्ष्म रूप हुनु पनि शब्दका लक्षण हुन् भनेर ज्ञानी पुरुषहरू जान्दछन्।

**भूतानां छिद्रदातृत्वं बहिरन्तरमेव च।**

**प्राणेन्द्रियात्मधिष्ण्यत्वं नभसो वृत्तिलक्षणम्॥ ३४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भूतानां** = पृथिवी आदि अन्य महाभूतहरूका लागि | **अन्तरम्** = भित्र रहनु | **च** = पनि |
| **छिद्रदातृत्वं** = स्थान प्रदान गर्नु | **एव** = तथा | **नभसः** = आकाशको |
| **बहिः** = शरीरको बाहिर | **प्राणेन्द्रियात्मधिष्ण्यत्वं** = प्राण, इन्द्रिय र मनको आश्रय हुनु | **वृत्तिलक्षणम्** = कार्यरूप लक्षण हो |

**वाक्यार्थ–** पृथिवी आदि अन्य महाभूतहरूलाई स्थान प्रदान गर्नु, शरीरभन्दा बाहिर र भित्र रहनु तथा प्राण, इन्द्रिय र मनको आश्रय हुनु पनि आकाशको कार्यरूप लक्षण हो।

**नभसः शब्दतन्मात्रात् कालगत्या विकुर्वतः।**

**स्पर्शोऽभवत् ततो वायुस्त्वक् स्पर्शस्य च सङ्ग्रहः॥ ३५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कालगत्या** = कालको गतिले | **स्पर्शः** = स्पर्शतन्मात्रा | **स्पर्शस्य** = स्पर्शको |
| **विकुर्वतः** = विकृत हुने | **अभवत्** = उत्पन्न भयो | **सङ्ग्रहः** = ज्ञान गराउने |
| **शब्दतन्मात्रात्** = शब्दतन्मात्रात्मक | **ततः** = त्यस स्पर्शतन्मात्राबाट | **त्वक्** = त्वगिन्द्रिय |
| **नभसः** = आकाशबाट | **वायुः** = वायु उत्पन्न भयो त्यसपछि | **च** = पनि (उत्पन्न भयो) |

**वाक्यार्थ–** कालको गतिबाट विकृत हुने शब्दतन्मात्रात्मक आकाशबाट स्पर्शतन्मात्रा उत्पन्न भयो। स्पर्शतन्मात्राबाट वायु उत्पन्न भयो। त्यसपछि स्पर्शको ज्ञान गर्ने त्वगिन्द्रिय पनि उत्पन्न भयो।

**मृदुत्वं कठिनत्वं च शैत्यमुष्णत्वमेव च ।**

**एतत् स्पर्शस्य स्पर्शत्वं तन्मात्रत्वं नभस्वतः ॥ ३६ ॥**

**पदार्थ–**

**मृदुत्वं** = कोमलता
**कठिनत्वं** = कठोरपना
**शैत्यम्** = शीतलता र
**उष्णत्वम्** = तातोपना
**च** = पनि
**एतत्** = यो नै
**स्पर्शस्य** = स्पर्शतन्मात्राको
**स्पर्शत्वं** = लक्षण हो त्यसै गरी
**नभस्वतः** = वायुको
**तन्मात्रत्वं** = सूक्ष्मरूप हुनु
**च** = पनि (स्पर्शतन्मात्राको लक्षण हो)

**वाक्यार्थ–** कोमलता, कठोरपना तथा शीतलता र तातोपना नै स्पर्शतन्मात्राको लक्षण हो। त्यसै गरी वायुको सूक्ष्मरूप हुनु पनि स्पर्शतन्मात्राको लक्षण हो।

**चालनं व्यूहनं प्राप्तिर्नेतृत्वं द्रव्यशब्दयोः ।**

**सर्वेन्द्रियाणामात्मत्वं वायोः कर्माभिलक्षणम् ॥ ३७ ॥**

**पदार्थ–**

**चालनं** = वृक्ष आदिलाई हल्लाउनु
**व्यूहनं** = विभाजन गर्नु
**प्राप्तिः** = छुट्टिएका द्रव्यलाई एकै ठाउँमा मिलाउनु
**द्रव्यशब्दयोः** = द्रव्य र शब्दलाई
**नेतृत्वं** = एक स्थानबाट अर्को स्थानमा पुऱ्याउनु र
**सर्वेन्द्रियाणाम्** = सम्पूर्ण इन्द्रियहरूलाई
**आत्मत्वं** = प्राणरूप भई धारण गर्नु आदि
**वायोः** = वायुका
**कर्माभिलक्षणम्** = कार्यका आधारमा गरिएका लक्षण हुन्

**वाक्यार्थ–** वृक्ष आदिलाई हल्लाउनु, विभाजन गर्नु, छुट्टिएका द्रव्यलाई एकै ठाउँमा मिलाउनु, द्रव्य र शब्दलाई एक स्थानबाट अर्को स्थानमा पुऱ्याउनु र सम्पूर्ण इन्द्रियहरूलाई प्राणरूप भई धारण गर्नु आदि वायुका कार्यका आधारमा गरिएका लक्षण हुन्।

**वायोश्च स्पर्शतन्मात्राद्रूपं दैवेरितादभूत् ।**

**समुत्थितं ततस्तेजश्चक्षू रूपोपलम्भनम् ॥ ३८ ॥**

**पदार्थ–**

**दैवेरिताद्** = अदृष्टबाट प्रेरित
**स्पर्शतन्मात्रात्** = स्पर्शतन्मात्रात्मक
**वायोः** = वायु विकृत भएपछि
**रूपं** = रूपतन्मात्रा
**अभूत्** = उत्पन्न भयो
**ततः** = त्यस रूपतन्मात्राबाट
**तेजः** = अग्नि
**समुत्थितं** = उत्पन्न भयो (अनि)
**रूपोपलम्भनम्** = रूपको ज्ञान गराउने
**चक्षुः** = चक्षु इन्द्रिय
**च** = पनि (उत्पन्न भयो)

**वाक्यार्थ–** अदृष्टबाट प्रेरित स्पर्शतन्मात्रात्मक वायुमा विकार हुँदा रूपतन्मात्रा उत्पन्न भयो। यसै

रूपतन्मात्राबाट अग्नि र रूपको ज्ञान गराउने चक्षु इन्द्रिय पनि उत्पन्न भए।

**द्रव्याकृतित्वं गुणता व्यक्तिसंस्थात्वमेव च।**
**तेजस्त्वं तेजसः साध्वि रूपमात्रस्य वृत्तयः॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **साध्वि** = हे साध्वी देवहूति | **व्यक्तिसंस्थात्वम्** = द्रव्यको परिणाम रूपले रहनु | **च** = र (गरी) |
| **द्रव्याकृतित्वं** = द्रव्यमा आकार दिनु | **तेजसः** = तेजको | **एव** = यी चार नै |
| **गुणता** = द्रव्यमा आश्रित भएर रहनु | **तेजस्त्वं** = असाधारण गुणका रूपमा रहनु | **रूपमात्रस्य** = रूपतन्मात्राका |
| | | **वृत्तयः** = लक्षणहरू हुन् |

**वाक्यार्थ–** हे साध्वी देवहूति ! द्रव्यमा आकार दिनु, द्रव्यमा आश्रित भएर रहनु, द्रव्यको परिणामरूपले रहनु र तेजको असाधारण गुणका रूपमा रहनु यी चार रूपतन्मात्राका स्वाभाविक लक्षणहरू हुन्।

**द्योतनं पचनं पानमदनं हिममर्दनम्।**
**तेजसो वृत्तयस्त्वेताः शोषणं क्षुत्तृडेव च॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **द्योतनं** = वस्तुलाई प्रकाशित गर्नु | **पानमदनं** = पिउनु र खानु | **एताः एव** = यी नै |
| **पचनं** = पकाउनु | **हिममर्दनम्** = चिसोपना हटाउनु | **तेजसः** = तेजका |
| **क्षुत्तृट्** = भोक र प्यास पैदा गर्नु (तिनलाई मेट्नको लागि) | **शोषणं** = पानी सुकाउनु | **वृत्तयः** = लक्षणहरू हुन् |
| | **च** = पनि | |

**वाक्यार्थ–** वस्तुलाई प्रकाशित गर्नु, पकाउनु, भोक र प्यास पैदा गर्नु, भोकप्यास मेट्नका लागि खानु र पिउनु, चिसोपना हटाउनु र पानी सुकाउनु यी नै तेजका लक्षणहरू हुन्।

**रूपमात्राद् विकुर्वाणात् तेजसो दैवचोदितात्।**
**रसमात्रमभूत् तस्मादम्भो जिह्वा रसग्रहः॥ ४१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **दैवचोदितात्** = ईश्वरीय प्रेरणाबाट | **विकुर्वाणात्** = विकार आएपछि | **अम्भः** = जल उत्पन्न भयो र |
| **रूपमात्रात्** = रूपतन्मात्रामय | **रसमात्रम्** = रसतन्मात्रा | **रसग्रहः** = रसको ज्ञान गराउने |
| **तेजसः** = तेजमा | **अभूत्** = उत्पन्न भयो | **जिह्वा** = रसनेन्द्रिय (उत्पन्न भयो) |
| | **तस्मात्** = त्यस रसतन्मात्राबाट | |

**वाक्यार्थ–** ईश्वरीय प्रेरणाबाट रूपतन्मात्रामय तेजमा विकार आएपछि रसतन्मात्रा उत्पन्न भयो।

रसतन्मात्राबाट जल उत्पन्न भयो र रसको ज्ञान गराउने रसनेन्द्रिय उत्पन्न भयो।

**कषायो मधुरस्तिक्तः कट्वम्ल इति नैकधा।**
**भौतिकानां विकारेण रस एको विभिद्यते॥ ४२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एकः** = एउटै | **विकारेण** = विकारबाट | **इति** = यसप्रकार |
| **मधुरः** = गुलियो | **कषायः** = टर्रो | **नैकधा** = अनेक प्रकारले |
| **रसः** = रस (नै) | **तिक्तः** = तितो | **विभिद्यते** = विभाजित भयो |
| **भौतिकानां** = भौतिक द्रव्यहरूको | **कट्वम्ल** = पिरो र अमिलो | |

**वाक्यार्थ–** एउटै गुलियो रस नै विविध भौतिक द्रव्यहरूको विकारबाट टर्रो, तितो, पिरो र अमिलो गरी अनेक प्रकारले विभाजित भयो।

**क्लेदनं पिण्डनं तृप्तिः प्राणनाप्यायनोन्दनम्।**
**तापापनोदो भूयस्त्वमम्भसो वृत्तयस्त्विमाः॥ ४३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **क्लेदनं** = भिजाउनु | प्यास मेट्नु र कोमल बनाउनु | **तु** = नै |
| **पिण्डनं** = जोड्नु | **तापापनोदः** = ताप नष्ट गर्नु | **अम्भसः** = जलका |
| **तृप्तिः** = तृप्ति दिनु | **भूयस्त्वम्** = बढिरहनु | **वृत्तयः** = लक्षणहरू हुन् |
| **प्राणनाप्यायनोन्दनम्** = बचाउनु, | **इमाः** = यिनीहरू | |

**वाक्यार्थ–** भिजाउनु, जोड्नु, तृप्ति दिनु, बचाउनु, प्यास मेट्नु, कोमल बनाउनु, ताप नष्ट गर्नु र बढिरहनु जलका लक्षणहरू हुन्।

**रसमात्राद् विकुर्वाणादम्भसो दैवचोदितात्।**
**गन्धमात्रमभूत् तस्मात् पृथ्वी घ्राणस्तु गन्धगः॥ ४४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **दैवचोदितात्** = ईश्वरीय | **गन्धमात्रम्** = गन्धतन्मात्रा | त्यसपछि |
| सङ्कल्पबाट प्रेरित | **अभूत्** = उत्पन्न भयो | **गन्धगः** = गन्धको ज्ञान गर्ने |
| **रसमात्रात्** = रसतन्मात्रारूप | **तस्मात्** = गन्धतन्मात्राबाट | **घ्राणः** = घ्राणेन्द्रिय (उत्पन्न |
| **अम्भसः** = जलमा | **तु** = चाहिँ | भयो) |
| **विकुर्वाणात्** = विकार आएपछि | **पृथ्वी** = पृथिवी उत्पन्न भयो | |

**वाक्यार्थ–** ईश्वरीय सङ्कल्पबाट रसतन्मात्रारूप जलमा विकार आएपछि गन्धतन्मात्रा उत्पन्न भयो। गन्धतन्मात्राबाट चाहिँ पृथिवी र गन्धको ज्ञान गर्ने घ्राणेन्द्रिय उत्पन्न भयो।

**करम्भपूतिसौरभ्यशान्तोग्राम्लादिभिः पृथक् ।**
**द्रव्यावयववैषम्याद् गन्ध एको विभिद्यते ॥ ४५ ॥**

पदार्थ–

**एकः** = एउटै
**गन्धः** = गन्ध नै
**द्रव्यावयववैषम्यात्** = सम्बन्धित द्रव्यहरूको विभिन्नताको कारणले
**करम्भपूतिसौरभ्यशान्तोग्राम्लादिभिः** = मिश्रित गन्ध, दुर्गन्ध, सुगन्ध, शान्तगन्ध, उग्रगन्ध अम्लगन्ध इत्यादि रूपमा
**पृथक्** = विभिन्न प्रकारले
**विभिद्यते** = विभाजित हुन्छ

**वाक्यार्थ–** एउटै गन्ध नै सम्बन्धित द्रव्यहरूको विभिन्नताको कारणले मिश्रित गन्ध, दुर्गन्ध, सुगन्ध, शान्तगन्ध, उग्रगन्ध, अम्ल गन्ध इत्यादिको रूपमा विभिन्न प्रकारले विभाजित हुन्छ।

**भावनं ब्रह्मणः स्थानं धारणं सद्विशेषणम् ।**
**सर्वसत्त्वगुणोद्भेदः पृथिवीवृत्तिलक्षणम् ॥ ४६ ॥**

पदार्थ–

**ब्रह्मणः** = निराकार ब्रह्मलाई
**भावनं** = साकार गराउनु
**स्थानं** = स्वतन्त्र रूपमा रहन सक्नु
**धारणं** = विभिन्न वस्तुलाई धारण गर्नु
**सद्विशेषणम्** = भिन्न-भिन्न रूपमा भेद देखाउनु
**सर्वसत्त्वगुणोद्भेदः** = सम्पूर्ण प्राणीहरूको गुणमा भेद देखाउनु
**पृथिवीवृत्तिलक्षणम्** = पृथिवीका स्वाभाविक लक्षणहरू हुन्

**वाक्यार्थ–** निराकार ब्रह्मलाई साकार गराउनु, अन्य वस्तुको आश्रयविना स्वतन्त्र रूपमा रहन सक्नु, विभिन्न वस्तुलाई धारण गर्नु, भिन्न-भिन्न रूपमा भेद देखाउनु र सम्पूर्ण प्राणीहरूको गुणमा भेद देखाउनु पृथिवीका स्वाभाविक लक्षणहरू हुन्।

**नभोगुणविशेषोऽर्थो यस्य तच्छ्रोत्रमुच्यते ।**
**वायोर्गुणविशेषोऽर्थो यस्य तत् स्पर्शनं विदुः ॥ ४७ ॥**

पदार्थ–

**नभोगुणविशेषः** = आकाशको विशेष गुण शब्द
**यस्य** = जसको
**अर्थः** = विषय हो
**तत्** = त्यसलाई
**श्रोत्रम्** = श्रोत्रेन्द्रिय
**उच्यते** = भनिन्छ
**वायोः** = वायुको
**गुणविशेषः** = विशेष गुण स्पर्श
**यस्य** = जसको
**अर्थः** = विषय हो
**तत्** = त्यसलाई
**स्पर्शनं** = त्वगिन्द्रिय
**विदुः** = भन्दछन्

**वाक्यार्थ–** आकाशको विशेष गुणका रूपमा रहेको शब्दलाई विषय गर्ने इन्द्रियलाई श्रोत्रेन्द्रिय

(कान) भनिन्छ। वायुको विशेष गुण स्पर्शलाई विषय गर्ने इन्द्रियलाई त्वगिन्द्रिय (छाला) भन्दछन्।

**तेजोगुणविशेषोऽर्थो यस्य तच्चक्षुरुच्यते।**
**अम्भोगुणविशेषोऽर्थो यस्य तद्रसनं विदुः॥**
**भूमेर्गुणविशेषोऽर्थो यस्य स घ्राण उच्यते॥ ४८॥**

पदार्थ–

**तेजोगुणविशेषः** = तेजको विशेष गुण रूप
**यस्य** = जसको
**अर्थः** = विषय हो
**तत्** = त्यसलाई
**चक्षुः** = चक्षुरिन्द्रिय (आँखा)
**उच्यते** = भनिन्छ
**अम्भोगुणविशेषः** = जलको विशेषगुण रस
**यस्य** = जसको
**अर्थः** = विषय हो
**तत्** = त्यसलाई
**रसनं** = रसनेन्द्रिय (जिब्रो)
**विदुः** = भन्दछन्
**भूमेः** = पृथिवीको
**गुणविशेषः** = विशेष गुण गन्ध
**यस्य** = जुन इन्द्रियको
**अर्थः** = विषय हो
**सः** = त्यसलाई
**घ्राण** = घ्राणेन्द्रिय (नाक)
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** तेजको विशेष गुणका रूपमा रहेको रूपलाई विषय गर्ने इन्द्रियलाई चक्षुरिन्द्रिय (आँखा) भनिन्छ। जलको विशेष गुण रसलाई विषय गर्ने इन्द्रियलाई रसनेन्द्रिय (जिब्रो) भन्दछन्। पृथिवीको विशेष गुण गन्धलाई विषय गर्ने इन्द्रियलाई घ्राणेन्द्रिय (नाक) भनिन्छ।

**परस्य दृश्यते धर्मो ह्यपरस्मिन् समन्वयात्।**
**अतो विशेषो भावानां भूमावेवोपलक्ष्यते॥ ४९॥**

पदार्थ–

**समन्वयात्** = कारणको गुण कार्यमा अनुगत हुने भएकाले
**परस्य** = आकाश आदि कारणरूप महाभूतहरूको
**धर्मः** = गुण
**अपरस्मिन्** = वायु आदि कार्यरूप भूतहरूमा
**दृश्यते** = देखिन्छ
**अतः** = त्यस कारण
**भावानां** = आकाश, वायु, तेज र जलको
**विशेषः** = शब्द, स्पर्श, रूप र रस यी गुणहरू पनि
**हि** = निश्चय नै
**भूमौ एव** = पृथिवीमा नै
**उपलक्ष्यते** = देखिन्छन्

**वाक्यार्थ–** कारणको गुण कार्यमा अनुगत हुने भएकाले आकाश आदि कारणरूप महाभूतको गुण वायु आदि कार्य भूतहरूमा देखिन्छ। त्यसकारण आकाश, वायु, तेज र जलका शब्द, स्पर्श, रूप र रस यी गुणहरू पनि पृथिवीमा नै देखिन्छन्।

**एतान्यसंहत्य यदा महदादीनि सप्त वै।**
**कालकर्मगुणोपेतो जगदादिरुपाविशत्॥ ५०॥**

**पदार्थ–**

**यदा** = जब
**एतानि** = माथि बताइएका यी
**महदादीनि** = महत्तत्त्व, अहङ्कार र पञ्चमहाभूत यी
**सप्त** = सातओटा तत्त्वहरू
**असंहत्य** = एक-अर्कामा मिल्न सकेनन् तब
**वै** = निश्चित रूपमा
**कालकर्मगुणोपेतः** = काल, अदृष्ट र सत्त्व आदि गुणले युक्त
**जगदादिः** = जगत्का सृष्टिकर्ता भगवान् (तिनमा)
**उपाविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** माथि बताइएका यी महत्तत्त्व, अहङ्कार र पञ्चमहाभूत सातओटा तत्त्वहरू एक-अर्कामा मिल्न नसकेको अवस्थामा काल, अदृष्ट र सत्त्व आदि गुणले युक्त जगत्का सृष्टिकर्ता भगवान् तिनमा प्रवेश गर्नुभयो।

**ततस्तेनानुविद्धेभ्यो युक्तेभ्योऽण्डमचेतनम्।**
**उत्थितं पुरुषो यस्मादुदतिष्ठदसौ विराट्॥ ५१॥**

**पदार्थ–**

**ततः** = त्यसपछि
**तेन** = भगवान्को प्रवेश हुँदा
**अनुविद्धेभ्यः** = क्रियाशील भएका र
**युक्तेभ्यः** = परस्परमा मिलेका तत्त्वहरूबाट
**अचेतनम्** = चेतनारहित
**अण्डम्** = अण्ड
**उत्थितं** = उत्पन्न भयो
**यस्मात्** = जसबाट
**असौ** = यो
**विराट्** = विराट्
**पुरुषः** = पुरुष
**उदतिष्ठत्** = प्रकट भयो

**वाक्यार्थ–** त्यसपछि भगवान्को प्रवेश हुँदा क्रियाशील हुँदै परस्परमा मिलेका तत्त्वहरूबाट चेतनारहित आकृति उत्पन्न भयो। जसबाट यो विराट् पुरुष उत्पन्न भयो।

**एतदण्डं विशेषाख्यं क्रमवृद्धैर्दशोत्तरैः।**
**तोयादिभिः परिवृतं प्रधानेनावृतैर्बहिः।**
**यत्र लोकवितानोऽयं रूपं भगवतो हरेः॥ ५२॥**

**पदार्थ–**

**एतत्** = यो
**विशेषाख्यं** = विशेष नाम गरेको
**अण्डं** = अण्ड हो (जो)
**बहिः** = बाहिरी भागमा
**प्रधानेन** = प्रकृतिले
**आवृतैः** = ढाकिएका
**क्रमवृद्धैः** = क्रमशः
**दशोत्तरैः** = दश-दश गुणा बढी भएका
**तोयादिभिः** = जल, तेज, वायु, आकाश तथा महत्तत्त्वबाट
**परिवृतं** = ढाकिएको छ
**यत्र** = जहाँ
**हरेः** = नारायण
**भगवतः** = भगवान्को
**रूपं** = स्वरूपभूत
**अयं** = यो
**लोकवितानः** = चौध भुवनको विस्तार रहेको छ

**वाक्यार्थ–** यो विशेष नाम गरेको अण्ड हो। यस अण्डको बाहिरी भाग प्रकृतिले ढाकिएका क्रमशः दश-दश गुणा बढी भएका जल, तेज, वायु, आकाश तथा महत्तत्त्वबाट ढाकिएको छ अनि जुन अण्डमा नारायण भगवान्को स्वरूपभूत यो चौध भुवनको विस्तार रहेको छ।

**हिरण्मयादण्डकोशादुत्थाय सलिलेशयात्।**
**तमाविश्य महादेवो बहुधा निर्बिभेद खम्॥ ५३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सलिलेशयात्** = जलमा रहेको | **तम्** = त्यसै अण्ड (विराट्)भित्र | **बहुधा** = विभिन्न इन्द्रियहरूको |
| **हिरण्मयाद्** = प्रकाशमय | **आविश्य** = प्रवेश गरी | अधिष्ठानको रूपमा |
| **अण्डकोशात्** = अण्डकोशबाट | **महादेवः** = परमेश्वरले | **निर्बिभेद** = अलग-अलग |
| **उत्थाय** = उठेर | **खम्** = आकाशलाई | बनाउनुभयो |

**वाक्यार्थ–** जलमा रहेको प्रकाशमय अण्डकोशबाट उठेर पुनः त्यहीँभित्र प्रवेश गरी परमेश्वरले आकाशलाई विभिन्न इन्द्रियहरूको अधिष्ठानको रूपमा अलग-अलग बनाउनुभयो।

**निरभिद्यतास्य प्रथमं मुखं वाणी ततोऽभवत्।**
**वाण्या वह्निरथो नासे प्राणोतो घ्राण एतयोः॥ ५४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रथमं** = पहिले | **अभवत्** = उत्पन्न भयो | भए |
| **अस्य** = विराट्को | **वाण्याः** = वाणीबाट | **एतयोः** = नाकका दुई छिद्रबाट |
| **मुखं** = मुख | **वह्निः** = (वाणीका अधिष्ठाता | **प्राणोतः** = प्राणयुक्त |
| **निरभिद्यत** = उत्पन्न भयो | देवता) अग्नि उत्पन्न भए | **घ्राणः** = घ्राणेन्द्रिय उत्पन्न भयो |
| **ततः** = त्यसपछि | **अथ** = त्यसपछि | |
| **वाणी** = वाणी | **नासे** = नाकका दुई छिद्र उत्पन्न | |

**वाक्यार्थ–** पहिले विराट्को मुख उत्पन्न भयो। त्यसपछि वाणी उत्पन्न भयो। वाणीबाट वाणीका अधिष्ठाता देवता अग्नि उत्पन्न भए। त्यसपछि नाकका दुई छिद्र उत्पन्न भए। नाकका छिद्रहरूबाट प्राणयुक्त घ्राणेन्द्रिय उत्पन्न भयो।

**घ्राणाद् वायुरभिद्येतामक्षिणी चक्षुरेतयोः।**
**तस्मात् सूर्यो न्यभिद्येतां कर्णौ श्रोत्रं ततो दिशः॥ ५५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **घ्राणात्** = घ्राणेन्द्रियबाट | (त्यसको अधिष्ठाता देवता) | **वायुः** = वायु उत्पन्न भए |

(त्यसपछि)
**अक्षिणी** = नेत्रगोलक
**अभिद्येताम्** = उत्पन्न भए
**एतयोः** = यिनीहरूबाट
**चक्षुः** = चक्षुरिन्द्रिय उत्पन्न भयो
**तस्मात्** = त्यसबाट
**सूर्यः** = सूर्य उत्पन्न भए
(त्यसपछि)
**कर्णौ** = दुईओटा कान
**न्यभिद्येतां** = उत्पन्न भए
**ततः** = ती कानबाट
**श्रोत्रं** = श्रोत्रेन्द्रिय (र त्यसबाट)
**दिशः** = दिग्देवता उत्पन्न भए

**वाक्यार्थ—** घ्राणेन्द्रियबाट त्यसको अधिष्ठाता देवता वायु उत्पन्न भए। त्यसपछि नेत्रगोलक उत्पन्न भए। यिनीहरूबाट चक्षुरिन्द्रिय उत्पन्न भयो। त्यसबाट सूर्य उत्पन्न भए। त्यसपछि दुईओटा कान उत्पन्न भए। ती कानबाट श्रोत्रेन्द्रिय र त्यसबाट दिग्देवता उत्पन्न भए।

**निर्बिभेद विराजस्त्वग् रोमश्मश्र्वादयस्ततः।**
**तत ओषधयश्चासन् शिश्नं निर्बिभिदे ततः॥ ५६॥**
**रेतस्तस्मादाप आसन् निरभिद्यत वै गुदम्।**
**गुदादपानोऽपानाच्च मृत्युर्लोकभयङ्करः॥ ५७॥**

**पदार्थ—**
**विराजः** = विराट् पुरुषको
**त्वक्** = त्वगिन्द्रिय
**निर्बिभेद** = उत्पन्न भयो
(त्यसबाट)
**रोमश्मश्र्वादयः** = रौँ, केश र दारी उत्पन्न भए
**ततः** = त्यसपछि
**ओषधयः** = औषधीहरू
**च** = पनि
**आसन्** = उत्पन्न भए
**ततः** = त्यसपछि
**शिश्नं** = मूत्रद्वार
**निर्बिभिदे** = उत्पन्न भयो
**ततः** = त्यसपछि
**रेतः** = वीर्य (र)
**तस्मात्** = त्यसबाट
**आपः** = जल
**आसन्** = उत्पन्न भयो
**वै** = त्यसपछि
**गुदम्** = मलद्वार
**निरभिद्यत** = उत्पन्न भयो
**गुदात्** = मलद्वारबाट
**अपानः** = अपानवायु (उत्पन्न भयो)
**अपानात्** = अपानवायुबाट
**लोकभयङ्करः** = लोकलाई भय दिने
**मृत्युः** = काल उत्पन्न भयो

**वाक्यार्थ—** त्यसपछि विराट् पुरुषको त्वगिन्द्रिय उत्पन्न भयो। त्यसबाट रौँ, केश र दारी उत्पन्न भए। त्यसपछि क्रमशः औषधी, मूत्रद्वार, वीर्य, जल र मलद्वार उत्पन्न भए। मलद्वारबाट अपानवायु उत्पन्न भयो। अपानवायुबाट लोकका निम्ति डरलाग्दो काल उत्पन्न भयो।

**हस्तौ च निरभिद्येतां बलं ताभ्यां ततः स्वराट्।**
**पादौ च निरभिद्येतां गतिस्ताभ्यां ततो हरिः॥ ५८॥**

पदार्थ–

(त्यसपछि)
**हस्तौ** = दुई हात
**निरभिद्येतां** = उत्पन्न भए
**ताभ्यां** = ती दुई हातबाट
**बलं** = बल उत्पन्न भयो
**ततः** = त्यसपछि
**स्वराट्** = (हातका अधिष्ठाता देवता) इन्द्र उत्पन्न भए
**ततः** = त्यसपछि
**पादौ** = दुई गोडा
**निरभिद्येतां** = उत्पन्न भए
**ताभ्यां** = तिनबाट
**गतिः** = गमनक्रिया
**च** = र (त्यसपछि)
**हरिः** = गमनक्रियाका अधिष्ठाता देवता हरि उत्पन्न हुनुभयो

**वाक्यार्थ–** त्यसपछि दुई हात उत्पन्न भए। ती दुई हातबाट बल उत्पन्न भयो। त्यसपछि हातका अधिष्ठाता देवता इन्द्र उत्पन्न भए। त्यसपछि गोडा उत्पन्न भए। तिनबाट गमनक्रिया र त्यसपछि गमनक्रियाका अधिष्ठाता देवता हरि उत्पन्न हुनुभयो।

**नाड्योऽस्य निरभिद्यन्त ताभ्यो लोहितमाभृतम्।**
**नद्यस्ततः समभवन्नुदरं निरभिद्यत ॥ ५९ ॥**

पदार्थ–

(त्यसपछि)
**अस्य** = विराट् पुरुषका
**नाड्यः** = नाडीहरू
**निरभिद्यन्त** = उत्पन्न भए
**ताभ्यः** = ती नाडीहरूबाट
**लोहितम्** = रगत
**आभृतम्** = उत्पन्न भयो
**ततः** = त्यसपछि
**नद्यः** = नदीहरू
**समभवन्** = उत्पन्न भए
(त्यसपछि)
**उदरं** = पेट
**निरभिद्यत** = उत्पन्न भयो

**वाक्यार्थ–** त्यसपछि विराट्पुरुषबाट नाडीहरू उत्पन्न भए। नाडीहरूबाट रगत उत्पन्न भयो। त्यसपछि नदीहरू उत्पन्न भए। त्यसपछि पेट उत्पन्न भयो।

**क्षुत्पिपासे ततः स्यातां समुद्रस्त्वेतयोरभूत्।**
**अथास्य हृदयं भिन्नं हृदयान्मन उत्थितम् ॥ ६० ॥**

पदार्थ–

**ततः** = त्यसपछि
**क्षुत्पिपासे** = भोक र प्यास
**स्यातां** = उत्पन्न भए
**एतयोः** = यिनबाट
**समुद्रः तु** = भोक र प्यासका अधिष्ठाता समुद्र देवता
**अभूत्** = उत्पन्न भए
**अथ** = त्यसपछि
**अस्य** = विराट्को
**हृदयं** = हृदय
**भिन्नं** = उत्पन्न भयो
**हृदयात्** = हृदयबाट
**मनः** = मन
**उत्थितम्** = उत्पन्न भयो

**वाक्यार्थ–** त्यसपछि भोक र प्यास उत्पन्न भए। यिनबाट भोक र प्यासका अधिष्ठाता देवता समुद्र उत्पन्न भए। त्यसपछि विराट्को हृदय उत्पन्न भयो। हृदयबाट मन उत्पन्न भयो।

**मनसश्चन्द्रमा जातो बुद्धिर्बुद्धेर्गिरां पतिः।**
**अहङ्कारस्ततो रुद्रश्चित्तं चैत्यस्ततोऽभवत्॥ ६१॥**

**पदार्थ—**

(त्यसपछि)
**मनसः** = मनबाट
**चन्द्रमा** = चन्द्रमा
**जातः** = उत्पन्न भए (त्यसपछि)
**बुद्धिः** = बुद्धि उत्पन्न भयो
**बुद्धेः** = बुद्धिको उत्पत्तिपछि त्यसका अधिष्ठाता
**गिरां पतिः** = ब्रह्माजी उत्पन्न हुनुभयो
**ततः** = त्यसपछि
**अहङ्कारः** = अहङ्कार उत्पन्न भयो
**ततः** = त्यसपछि
**रुद्रः** = अहङ्कारका अधिष्ठाता देवता रुद्र उत्पन्न हुनुभयो
(त्यसपछि)
**चित्तं** = चित्त उत्पन्न भयो
(त्यसपछि)
**चैत्यः** = चित्तका अधिष्ठाता क्षेत्रज्ञ (वासुदेव)
**अभवत्** = उत्पन्न हुनुभयो

**वाक्यार्थ—** त्यसपछि मनबाट चन्द्रमा उत्पन्न भए। त्यसपछि बुद्धि उत्पन्न भयो र त्यसका अधिष्ठाता देवता ब्रह्माजी उत्पन्न हुनुभयो। त्यसपछि अहङ्कार उत्पन्न भयो। त्यसपछि अहङ्कारका अधिष्ठाता देवता रुद्र उत्पन्न हुनुभयो। त्यसपछि चित्त उत्पन्न भयो। त्यसपछि चित्तका अधिष्ठाता क्षेत्रज्ञ वासुदेव उत्पन्न हुनुभयो।

**एते ह्यभ्युत्थिता देवा नैवास्योत्थापनेऽशकन्।**
**पुनराविविशुः खानि तमुत्थापयितुं क्रमात्॥ ६२॥**

**पदार्थ—**

**एते** = यी
**अभ्युत्थिताः** = उत्पन्न भएका
**देवाः** = देवताहरू
**अस्य** = विराट् पुरुषको
**उत्थापने** = जागरणमा
**हि** = निश्चय नै
**न एव अशकन्** = समर्थ भएनन्
**पुनः** = त्यसपछि फेरि
**क्रमात्** = क्रमैसँग
**खानि** = इन्द्रियहरूले
**तम्** = विराट्लाई
**उत्थापयितुं** = ब्युँझाउन
**आविविशुः** = आ-आफ्नो उत्पत्तिस्थानमा प्रवेश गरे

**वाक्यार्थ—** यी उत्पन्न भएका देवताहरूले विराट् पुरुषलाई ब्युँझाउन सकेनन्। त्यसपछि फेरि क्रमैसँग इन्द्रियहरूले विराट्लाई ब्युँझाउन आ-आफ्नो उत्पत्तिस्थानमा प्रवेश गरे।

**वह्निर्वाचा मुखं भेजे नोदतिष्ठत् तदा विराट्।**
**घ्राणेन नासिके वायुर्नोदतिष्ठत् तदा विराट्॥ ६३॥**

**पदार्थ—**

**वह्निः** = अग्निले
**वाचा** = वाणीका साथ
**मुखं** = मुखमा
**भेजे** = प्रवेश गरे
**तदा** = त्यति खेर
**विराट्** = विराट् पुरुष

**न उदतिष्ठत्** = उठेन
**वायुः** = घ्राणेन्द्रियका अधिष्ठाता देवता
**घ्राणेन** = घ्राणेन्द्रियको साथमा
**नासिके** = नासिकामा प्रवेश गरे
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट्पुरुष
**न उदतिष्ठत्** = ब्युँझिएन

**वाक्यार्थ–** अग्निले वाणीका साथ मुखमा प्रवेश गरे। तर पनि विराट् पुरुष उठेन। घ्राणेन्द्रियका अधिष्ठाता देवता घ्राणेन्द्रियको साथमा नासिकामा प्रवेश गरे। त्यस समयमा पनि विराट्पुरुष ब्युँझिएन।

**अक्षिणी चक्षुषादित्यो नोदतिष्ठत् तदा विराट्।**
**श्रोत्रेण कर्णौ च दिशो नोदतिष्ठत् तदा विराट्॥ ६४॥**

**पदार्थ–**
**आदित्यः** = सूर्य
**चक्षुषा** = चक्षु इन्द्रियको माध्यमबाट
**अक्षिणी** = नेत्रगोलकमा प्रवेश गरे
**तदा** = त्यति खेर पनि
**विराट्** = विराट्
**न उदतिष्ठत्** = उठेन
**दिशः** = दिग्देवताहरू
**श्रोत्रेण** = श्रोत्रेन्द्रियको माध्यमबाट
**कर्णौ** = कानमा प्रवेश गरे
**तदा च** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन

**वाक्यार्थ–** सूर्य चक्षु इन्द्रियको माध्यमबाट अक्षिगोलकमा प्रवेश गरे, तर पनि विराट् उठेन। दिग्देवताहरू श्रोत्रेन्द्रियको माध्यमबाट कानमा प्रवेश गरे, त्यस समयमा पनि विराट् पुरुष उठेन।

**त्वचं रोमभिरोषध्यो नोदतिष्ठत् तदा विराट्।**
**रेतसा शिश्नमापस्तु नोदतिष्ठत् तदा विराट्॥ ६५॥**

**पदार्थ–**
**ओषध्यः** = त्वगिन्द्रियका अधिष्ठाता देवताहरू
**रोमभिः** = रौँहरूद्वारा
**त्वचं** = त्वगिन्द्रियमा प्रवेश गरे
**तदा** = तर पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = ब्युँझिएन
**आपः** = जलदेवता
**रेतसा** = मूत्रेन्द्रियको माध्यमले
**शिश्नम्** = लिङ्गमा प्रविष्ट भए
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**तु** = त
**न उदतिष्ठत्** = उठेन

**वाक्यार्थ–** त्वगिन्द्रियका अधिष्ठाता देवताहरू रौँहरूद्वारा त्वगिन्द्रियमा प्रवेश गरे, तर पनि विराट् पुरुष ब्युँझिएन। जलदेवता मूत्रेन्द्रियको माध्यमले लिङ्गमा प्रविष्ट भए, त्यस समयमा पनि विराट् पुरुष उठेन।

**गुदं मृत्युरपानेन नोदतिष्ठत् तदा विराट्।**
**हस्ताविन्द्रो बलेनैव नोदतिष्ठत् तदा विराट्॥ ६६॥**

पदार्थ–

**मृत्युः** = कालदेवता
**अपानेन** = अपानवायुको साथमा
**गुदं** = गुदद्वारमा प्रवेश गरे
**तदा** = त्यस वेला पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन
**इन्द्रः** = इन्द्र
**बलेन** = बलको माध्यमले
**हस्तौ** = हातहरूमा प्रवेश गरे
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**न एव उदतिष्ठत्** = उठेन

**वाक्यार्थ–** कालदेवता अपानवायुको साथमा गुदद्वारमा प्रवेश गरे, त्यस वेला पनि विराट् पुरुष उठेन। इन्द्र बलको माध्यमले हातहरूमा प्रवेश गरे, त्यस समयमा पनि विराट् पुरुष उठेन।

**विष्णुर्गत्यैव चरणौ नोदतिष्ठत् तदा विराट्।**
**नाडीर्नद्यो लोहितेन नोदतिष्ठत् तदा विराट्॥ ६७॥**

पदार्थ–

**विष्णुः** = विष्णु
**गत्या एव** = गतिको रूपमा
**चरणौ** = गोडाहरूमा प्रवेश गर्नुभयो
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन
**नद्यः** = नदीहरू
**लोहितेन** = रगतको रूपमा
**नाडीः** = नाडीहरूमा प्रविष्ट भए
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन

**वाक्यार्थ–** विष्णु गतिको रूपमा गोडाहरूमा प्रवेश गर्नुभयो, त्यस समयमा पनि विराट् पुरुष उठेन। नदीहरू रगतको रूपमा नाडीहरूमा प्रविष्ट भए, त्यस समयमा पनि विराट् पुरुष उठेन।

**क्षुत्तृड्भ्यामुदरं सिन्धुर्नोदतिष्ठत् तदा विराट्।**
**हृदयं मनसा चन्द्रो नोदतिष्ठत् तदा विराट्॥ ६८॥**

पदार्थ–

**सिन्धुः** = समुद्र
**क्षुत्तृड्भ्याम्** = भोक र प्यासको माध्यमबाट
**उदरं** = पेटमा प्रवेश गरे
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन
**चन्द्रः** = चन्द्रमा
**मनसा** = मनको माध्यमबाट
**हृदयं** = हृदयमा प्रविष्ट भए
**तदा** = त्यस समयमा पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन

**वाक्यार्थ–** समुद्र भोक र प्यासको माध्यमबाट पेटमा प्रवेश गरे, त्यस समयमा पनि विराट् पुरुष उठेन। चन्द्रमा मनको माध्यमबाट हृदयमा प्रविष्ट भए, त्यस समयमा पनि विराट् पुरुष उठेन।

**बुद्ध्या ब्रह्मापि हृदयं नोदतिष्ठत् तदा विराट्।**
**रुद्रोऽभिमत्या हृदयं नोदतिष्ठत् तदा विराट्॥ ६९॥**

पदार्थ–

**ब्रह्मा** = ब्रह्माजी
**अपि** = पनि
**बुद्ध्या** = बुद्धिको माध्यमबाट
**हृदयं** = विराट्को हृदयमा प्रविष्ट हुनुभयो
**तदा** = ब्रह्माजीको प्रवेश भइसकेपछि पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन
**रुद्रः** = रुद्र देवता पनि
**अभिमत्या** = अहङ्कारको माध्यमबाट
**हृदयं** = हृदयमा प्रवेश गर्नुभयो
**तदा** = रुद्रको प्रवेशपछि पनि
**विराट्** = विराट् पुरुष
**न उदतिष्ठत्** = उठेन

**वाक्यार्थ–** ब्रह्माजी पनि बुद्धिको माध्यमबाट विराट्को हृदयमा प्रविष्ट हुनुभयो। ब्रह्माजीको प्रवेश भइसकेपछि पनि विराट् पुरुष उठेन। रुद्र देवता पनि अहङ्कारको माध्यमबाट हृदयमा प्रवेश गर्नुभयो। रुद्रको प्रवेशपछि पनि विराट् पुरुष उठेन।

**चित्तेन हृदयं चैत्यः क्षेत्रज्ञः प्राविशद् यदा।**
**विराट् तदैव पुरुषः सलिलादुदतिष्ठत ॥ ७० ॥**

पदार्थ–

**यदा** = जब
**चैत्यः** = चेतनासहित
**क्षेत्रज्ञः** = भगवान् नारायण
**चित्तेन** = चित्तको माध्यमबाट
**हृदयं** = हृदयमा
**प्राविशद्** = प्रवेश गर्नुभयो
**तदा एव** = त्यही समयमा नै
**विराट्** = विराट्
**पुरुषः** = पुरुष
**सलिलात्** = जलबाट
**उदतिष्ठत** = उठ्यो

**वाक्यार्थ–** जब चेतनासहित भगवान् नारायण चित्तको माध्यमबाट हृदयमा प्रवेश गर्नुभयो, त्यसै समयमा विराट् पुरुष जलबाट जुरुक्क उठ्यो।

**यथा प्रसुप्तं पुरुषं प्राणेन्द्रियमनोधियः।**
**प्रभवन्ति विना येन नोत्थापयितुमोजसा ॥ ७१ ॥**

पदार्थ–

**यथा** = जसरी
**येन विना** = चैतन्य नभईकन
**प्राणेन्द्रियमनोधियः** = प्राण, इन्द्रिय, मन र बुद्धि आदिले
**प्रसुप्तं** = सुतिरहेको
**पुरुषं** = जीवात्मालाई
**उत्थापयितुम्** = ब्युँझाउन
**ओजसा** = आफ्नो बलले मात्र
**न भवन्ति** = सक्दैनन् (त्यसै गरी भगवान्को सहायताविना अरू देवताले सुतिरहेका विराट् पुरुषलाई ब्युँझाउन सकेनन्)

**वाक्यार्थ–** जसरी प्राण, इन्द्रिय, मन र बुद्धिले चैतन्य नभईकन सुतिरहेको जीवात्मालाई आफ्नो बलले मात्र ब्युँझाउन सक्दैनन् त्यसै गरी भगवान्को सहायताविना अन्य देवताले विराट् पुरुषलाई ब्युँझाउन सकेनन्।

**तमस्मिन् प्रत्यगात्मानं धिया योगप्रवृत्तया ।**
**भक्त्या विरक्त्या ज्ञानेन विविच्यात्मनि चिन्तयेत् ॥ ७२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भक्त्या** = भक्ति | **ज्ञानेन** = ज्ञानद्वारा | **आत्मनि** = शरीरमा रहेको |
| **विरक्त्या** = वैराग्य र | **प्रत्यगात्मानं** = सम्पूर्ण | **विविच्य** = जानेर |
| **योगप्रवृत्तया** = योगले सहित | प्राणीहरूको हृदयमा विराजमान | **चिन्तयेत्** = (निरन्तर |
| भएको | **तम्** = त्यस्तो परमात्मालाई | परमात्माको) ध्यान गरोस् |
| **धिया** = बुद्धिबाट उत्पन्न | **अस्मिन्** = यसै | |

**वाक्यार्थ–** भक्ति वैराग्य र योगले सहित भएको बुद्धिबाट उत्पन्न ज्ञानद्वारा सम्पूर्ण प्राणीहरूको हृदयमा विराजमान परमात्मालाई यसै शरीरमा रहेको जानेर निरन्तर परमात्माको ध्यान गरोस् ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**
**कापिलेये तत्त्वसमाम्नाये षड्विंशोऽध्यायः ॥ २६ ॥**

# अथ सप्तविंशोऽध्यायः

## प्रकृतिपुरुषको विवेकबाट मोक्षप्राप्तिको वर्णन

**श्रीभगवानुवाच** (श्रीभगवान् कपिलले भन्नुभयो)

**प्रकृतिस्थोऽपि पुरुषो नाज्यते प्राकृतैर्गुणैः।**
**अविकारादकर्तृत्वान्निर्गुणत्वाज्जलार्कवत्॥ १॥**

**पदार्थ–**

**पुरुषः** = त्यो आत्मा
**प्रकृतिस्थः** = प्रकृतिको कार्यरूप देह आदिमा बसेर
**अपि** = पनि
**अविकारात्** = रागद्वेष आदि विकार नहुने हुनाले
**अकर्तृत्वात्** = कर्तृत्वभावले रहित हुनाले (एवं)
**निर्गुणत्वात्** = प्रकृतिका गुणरहित हुनाले
**जलार्कवत्** = तलाउमा प्रतिबिम्बित सूर्यझैँ
**प्राकृतैः** = प्रकृतिबाट उत्पन्न भएका
**गुणैः** = पुण्य, पाप एवं सुखदुःख आदि गुणबाट
**न अज्यते** = लिप्त हुँदैन

**वाक्यार्थ–** हे आमा ! त्यो आत्मा प्रकृतिको कार्यरूप देह आदिमा बसेर पनि रागद्वेष आदि विकार, कर्तृत्वभाव र प्रकृतिका गुणबाट रहित हुनाले तलाउमा प्रतिबिम्बित सूर्यझैँ प्रकृतिबाट उत्पन्न भएका पुण्य, पाप एवं सुखदुःख आदि गुणबाट लिप्त हुँदैन।

**विवरण–** आत्मामा जब सत्त्व, रज, तम आदि गुणहरूको सम्बन्ध हुन्छ तब आत्मा अकर्ता, अभोक्ता भएर पनि कर्ता, भोक्ता बन्दछ। यसैलाई विकार भनिएको छ। तर व्यवहारकालमा कर्ता-भोक्ता हुँदाहुँदै पनि आत्मा स्वरूपतः चाहिँ अकर्ता र निर्गुण नै हो। यस्तो सम्बन्धलाई औपाधिक सम्बन्ध भन्दछन्। जसरी जलमा परेको सूर्य जल हल्लिँदा हल्लिने र टुक्रिने देखिन्छ तर खास गरी सूर्यमा ती विकारहरू छैनन् त्यसै गरी आत्मा पनि अन्तःकरणका धर्महरूबाट कर्ता-भोक्ता हुँदा पनि वास्तवमा ती विकारहरूले आत्मालाई छुन सक्दैनन्। किनभने जसरी जल हल्लिँदा जलरूप उपाधिको कारणले खडा भएको सूर्यको प्रतिबिम्बमात्र हल्लिएको हो, बिम्बभूत सूर्य हल्लिएको होइन, त्यसै गरी अन्तःकरणरूप उपाधिबाट खडा भएको जीवात्मा नै गुणहरूद्वारा प्रभावित भएको हो, आत्मा प्रभावित भएको होइन।

**स एष यर्हि प्रकृतेर्गुणेष्वभिविषज्जते।**
**अहङ्क्रियाविमूढात्मा कर्तास्मीत्यभिमन्यते॥ २॥**

**पदार्थ–**

**सः एषः** = त्यो आत्मा
**यर्हि** = जब
**प्रकृतेः** = प्रकृतिका

**गुणेषु** = विषयहरूमा
**अभिविषज्जते** = लिप्त हुन्छ
(त्यस वेला)
**अहङ्क्रियाविमूढात्मा** =
अहङ्कारले आफूलाई बिर्सिएर
**कर्ता** = म काम गर्नेवाला
**अस्मि इति** = हुँ भन्ने
**अभिमन्यते** = अभिमान गर्दछ

**वाक्यार्थ–** त्यो दोषरहित आत्मा जब प्रकृतिका कार्यरूप शरीर आदि विषयमा लिप्त हुन्छ त्यस वेला अहङ्कारले आफूलाई बिर्सिएर म काम गर्नेवाला हुँ भन्ने अभिमान गर्दछ।

**तेन संसारपदवीमवशोऽभ्येत्यनिर्वृतः।**
**प्रासङ्गिकैः कर्मदोषैः सदसन्मिश्रयोनिषु॥ ३॥**

**पदार्थ–**

**तेन** = त्यस्तो अभिमान गर्नाले
**प्रासङ्गिकैः** = देह आदिसँगको
सम्बन्धले प्राप्त भएका
**कर्मदोषैः** = पुण्यपापरूप कर्मका
दोषहरूद्वारा
**अवशः** = पराधीन र
**अनिर्वृतः** = दोषहरूद्वारा मुक्त
नभएको (जीवात्मा
**सदसन्मिश्रयोनिषु** = राम्रा-नराम्रा
(देव, मनुष्य र पशु आदि)
योनिमा उत्पन्न भएर
**संसारपदवीम्** = संसारमार्गमा
**अभ्येति** = भड्किरहन्छ

**वाक्यार्थ–** त्यस्तो प्रकारको अभिमान गर्नाले देह आदिसँगको सम्बन्धले प्राप्त भएका पुण्यपापरूप कर्मका दोषद्वारा पराधीन र दोषहरूद्वारा मुक्त नभएको जीवात्मा देव, मनुष्य र पशु आदि राम्रा-नराम्रा योनिमा उत्पन्न भएर संसारमार्गमा भड्किरहन्छ।

**अर्थे ह्यविद्यमानेऽपि संसृतिर्न निवर्तते।**
**ध्यायतो विषयानस्य स्वप्नेऽनर्थागमो यथा॥ ४॥**

**पदार्थ–**

**अर्थे** = (आत्मामा) जन्म-मरण
आदि क्रिया
**अविद्यमाने अपि** = नहुने भए
तापनि
**यथा** = जसरी
**स्वप्ने** = स्वप्न अवस्थामा प्राप्त
हुने
**अनर्थागमः** = दुःख आदि
(जाग्रत् अवस्थामा नआई
हट्दैनन्)
**हि** = त्यसै गरी
**विषयान्** = शब्द, स्पर्श आदि
विषयलाई
**ध्यायतः** = चिन्तन गरिरहेको
**अस्य** = त्यस जीवात्माको
**संसृतिः** = जन्म, मरण आदि
क्रिया (तत्त्वज्ञान नहुँदासम्म)
**न निवर्तते** = निवृत्त हुँदैनन्

**वाक्यार्थ–** जन्म-मरण आदि क्रिया आत्मामा नहुने भए तापनि जसरी स्वप्न अवस्थामा प्राप्त हुने दुःख आदि जाग्रत् अवस्थामा नआई हट्दैनन् त्यसै गरी शब्द, स्पर्श आदि विषयमा चित्त लगाएको त्यो जीवात्माको जन्म, मरण आदि क्रिया तत्त्वज्ञान नहुँदासम्म निवृत्त हुँदैनन्।

**अत एव शनैश्चित्तं प्रसक्तमसतां पथि।**

**भक्तियोगेन तीव्रेण विरक्त्या च नयेद् वशम्॥ ५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अतः एव** = त्यसकारण | **चित्तं** = चित्तलाई | **च** = पनि |
| **असतां** = दुष्ट इन्द्रियहरूको | **तीव्रेण** = तीव्र | **शनैः** = बिस्तारै |
| **पथि** = निर्देशनमा | **भक्तियोगेन** = भक्तियोग | **वशम्** = वशमा |
| **प्रसक्तम्** = लागेको | **विरक्त्या** = वैराग्यद्वारा | **नयेत्** = लैजानुपर्छ (लिनुपर्छ) |

**वाक्यार्थ–** त्यसकारण दुष्ट इन्द्रियहरूको निर्देशनमा लागेको चित्तलाई तीव्र भक्तियोग र वैराग्यद्वारा बिस्तारै वशमा लिनुपर्छ।

**यमादिभिर्योगपथैरभ्यसन् श्रद्धयान्वितः।**

**मयि भावेन सत्येन मत्कथाश्रवणेन च॥ ६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यमादिभिः** = यम, नियम आदि | **मयि** = भगवान्मा | **भावेन** = भक्तिभावले र |
| **योगपथैः** = योगमार्गद्वारा | **श्रद्धयान्वितः** = श्रद्धालु भएर | **मत्कथाश्रवणेन** = मेरा |
| **अभ्यसन्** = चित्तलाई एकाग्र | **च** = पनि | कथाश्रवण गर्नाले |
| बनाउने अभ्यास गर्दै | **सत्येन** = सच्चा | (जीवले मलाई प्राप्त गर्दछ) |

**वाक्यार्थ–** यम, नियम आदि योगमार्गद्वारा चित्तलाई एकाग्र बनाउने अभ्यास गर्दै भगवान्प्रति श्रद्धालु भएर सच्चा भक्तिभावले मेरा कथाश्रवण निरन्तर गरेपछि मात्र जीवले मलाई प्राप्त गर्दछ।

**सर्वभूतसमत्वेन निर्वैरेणाप्रसङ्गतः।**

**ब्रह्मचर्येण मौनेन स्वधर्मेण बलीयसा॥ ७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सर्वभूतसमत्वेन** = सम्पूर्ण | **अप्रसङ्गतः** = स्त्री, पुत्र आदिमा | **बलीयसा** = दृढतापूर्वक |
| प्राणीहरूमा समभाव राखेर | अनासक्त भएर | **स्वधर्मेण** = आफ्नो वर्णाश्रम |
| **निर्वैरेण** = कसैसँग पनि शत्रुता | **ब्रह्मचर्येण** = ब्रह्मचर्यव्रत एवं | धर्मको पालन गरेपछि (जीवले |
| नगरी | **मौनेन** = मौनव्रत पालन गरेर | मलाई प्राप्त गर्दछ) |

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूमा समभाव एवं मित्रभाव राखेर, स्त्री, पुत्र आदिमा अनासक्त भएर, ब्रह्मचर्यव्रत एवं मौनव्रत पालन गरेर दृढतापूर्वक आफ्नो वर्णाश्रम धर्मको पालन गरेपछि बल्ल जीवले मलाई प्राप्त गर्दछ।

**यदृच्छयोपलब्धेन सन्तुष्टो मितभुङ् मुनिः ।**
**विविक्तशरणः शान्तो मैत्रः करुण आत्मवान् ॥ ८ ॥**

**पदार्थ–**

**यदृच्छया** = प्रारब्ध कर्मअनुसार **उपलब्धेन** = प्राप्त भएका वस्तुहरूमा **सन्तुष्टः** = सन्तुष्ट हुने **मितभुक्** = प्राणधारण गर्नका लागि परिमित भोजन गर्ने **मुनिः** = मननशील **विविक्तशरणः** = एकान्तवासी **शान्तः** = शान्त भएर **मैत्रः** = सम्पूर्ण प्राणीहरूमा मैत्रीभाव राख्ने **करुणः** = दयावान् र **आत्मवान्** = आत्मचिन्तन गर्ने व्यक्तिले (परमात्मालाई प्राप्त गर्दछ)

**वाक्यार्थ–** प्रारब्ध कर्मअनुसार प्राप्त भएका वस्तुहरूमा सन्तुष्ट हुने, प्राणधारण गर्नका लागि परिमित भोजन गर्ने, मननशील, एकान्तवासी, शान्त, सम्पूर्ण प्राणीहरूमा मैत्रीभाव राख्ने एवं दयावान् भई आत्मचिन्तन गर्ने व्यक्तिले परमात्मालाई प्राप्त गर्दछ।

**सानुबन्धे च देहेऽस्मिन्नकुर्वन्नसदाग्रहम् ।**
**ज्ञानेन दृष्टतत्त्वेन प्रकृतेः पुरुषस्य च ॥ ९ ॥**

**पदार्थ–**

**प्रकृतेः** = प्रकृति र **पुरुषस्य** = पुरुष **च** = दुबैको **दृष्टतत्त्वेन** = यथार्थ स्वरूप देखाउने **ज्ञानेन** = ज्ञानद्वारा **सानुबन्धे** = स्त्री, पुत्र आदिसँग सम्बन्धित भएको **अस्मिन्** = यस **देहे** = शरीरमा **असदाग्रहम् च** = मिथ्या अभिमान पनि **अकुर्वन्** = नगरीकन (जीवनयापन गर्ने जीवले मलाई प्राप्त गर्दछ)

**वाक्यार्थ–** प्रकृति र आत्मा दुबैको यथार्थ ज्ञानद्वारा स्त्री, पुत्र आदिसँग सम्बन्धित भएको शरीरमा मिथ्या अभिमान नगरीकन जीवनयापन गर्नाले जीवले मलाई प्राप्त गर्दछ।

**निवृत्तबुद्ध्यवस्थानो दूरीभूतान्यदर्शनः ।**
**उपलभ्यात्मनात्मानं चक्षुषेवार्कमात्मदृक् ॥ १० ॥**

**पदार्थ–**

**निवृत्तबुद्ध्यवस्थानः** = बुद्धिका जाग्रत्, स्वप्न र सुषुप्ति अवस्थाबाट अलग भएको **दूरीभूतान्यदर्शनः** = भगवान्‌देखि अतिरिक्त केही नदेख्ने **आत्मदृक्** = आत्मदर्शी मुनि **चक्षुषा** = चक्षुरिन्द्रियले **अर्कम् इव** = सूर्यलाई देखेजस्तै गरी **आत्मना** = शुद्ध अन्तःकरणद्वारा **आत्मानं** = आफ्नो स्वरूपलाई **उपलभ्य** = साक्षात्कार गरेर (मुक्त हुन्छ)

**वाक्यार्थ–** बुद्धिका वृत्तिरूप जाग्रत्, स्वप्न र सुषुप्ति तीन अवस्थाबाट अलग भएको, चारैतिर भगवान्देखि अतिरिक्त केही नदेख्ने आत्मदर्शी मुनि चक्षुरिन्द्रियले सूर्यलाई देखेजस्तै गरी शुद्ध अन्तःकरणको माध्यमले आफ्नो स्वरूपलाई साक्षात्कार गरेर मुक्त हुन्छ।

**विवरण–** जाग्रत्, स्वप्न र सुषुप्ति यी बुद्धिका तीन अवस्था हुन्। जाग्रत् अवस्था बुद्धिको सत्त्वगुणको अवस्था हो। यसैले जाग्रत् कालमा इन्द्रियहरूद्वारा पदार्थहरूको स्पष्टरूपले प्रतीति हुन्छ। स्वप्न बुद्धिको रजोगुणको अवस्था हो। रजोगुणमा चाञ्चल्य बढी हुने हुनाले स्वप्नावस्थामा पदार्थहरूको भान स्पष्ट रूपले हुँदैन। सुषुप्ति अवस्था बुद्धिको तमोगुणको अवस्था भएको हुनाले सुषुप्तिमा कुनै पनि पदार्थको भान हुँदैन। बुद्धिका उक्त तीन अवस्थाहरूको मिथ्यात्वको निश्चय नभईकन आत्माको यथार्थ ज्ञान सम्भव छैन। यी तीन अवस्थामध्ये एउटा अवस्थामा अन्य अवस्थाको अभाव हुन्छ। जाग्रत्मा जाग्रत् छ तर स्वप्न र सुषुप्ति रहँदैनन्। त्यसै गरी स्वप्नमा जाग्रत् र सुषुप्ति हुँदैनन्। यस्तै सुषुप्तिमा सुषुप्ति रहन्छ तर जाग्रत् र स्वप्न रहँदैनन्। त्यस्तै समाधि यस्तो अवस्था हो जसमा जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै अवस्थाको अभाव हुन्छ। अतः जाग्रत्, स्वप्न र सुषुप्ति यी बुद्धिका तीन अवस्थाहरू परस्पर व्यभिचरित हुनाले मिथ्या हुन्। सम्पूर्ण विश्वब्रह्माण्ड नै यी तीन अवस्थाभित्र पर्ने हुँदा जसले यी तीन अवस्थाहरूको मिथ्यात्वको निश्चय गरेको छ उसका लागि संसारको सर्वथा अत्यन्ताभाव हुन्छ र त्यस्तो व्यक्तिलाई नै यहाँ **दूरीभूतान्यदर्शन** भनिएको हो। अर्थात् जो **निवृत्तबुद्ध्यवस्थान** हुन्छ त्यही नै **दूरीभूतान्यदर्शन** हुन्छ। जसले जाग्रत्, स्वप्न र सुषुप्ति बुद्धिका यी तीन अवस्थाहरूको मिथ्यात्वलाई निश्चय गरेको छ उसको दृष्टिमा आत्मालाई छाडेर अरू कुनै पनि पदार्थ सत्यरूपमा भासित हुँदैनन्। अतः त्यस्तो व्यक्तिलाई **दूरीभूतान्यदर्शन** भनिएको हो।

भक्ति, वैराग्य आदि विभिन्न साधनहरूद्वारा जब प्रकृतिभन्दा भिन्नै रूपमा आत्मतत्त्वको ज्ञान हुन्छ तब मनुष्य बुद्धिका यी तीन अवस्थाहरूदेखि पर हुन्छ। यी तीन अवस्थाभन्दा पर मनुष्य 'तुरीय' अवस्थामा स्थित रहन्छ, जसमा ऊ आफ्नो ज्ञानदृष्टिले सबैलाई आत्मा देख्छ र उसको अन्यदर्शन अर्थात् तिमी, म, त्यो भन्ने भेद हट्छ।

अब **उपलभ्यात्मनात्मानं चक्षुषेवार्कमात्मदृक्** यस अंशको व्याख्या गरौँ। चक्षुषा अर्कम् इव आत्मना आत्मानम् उपलभ्य अर्थात् आँखाले सूर्यलाई र आत्माले आत्मालाई प्राप्त गरेर भन्ने यस पद्यांशको सामान्यार्थ हो। सामान्यतः कुनै वस्तुले आफैँलाई प्राप्त गर्दा कर्मकर्तृभावविरोध पर्दछ। अर्थात् एउटै वस्तु एकै समयमा कर्ता र कर्म दुबै बन्न सक्दैन। यसैलाई कर्मकर्तृभावविरोध भनिन्छ। आत्माले आत्मालाई प्राप्त गर्दछ भन्दा प्राप्त गर्ने आत्मा कर्ता हुन्छ भने प्राप्त गरिने आत्मा कर्म हुन्छ। वेदान्तसिद्धान्तअनुसार आत्मा एउटै छ यसैले आत्माले आत्मालाई प्राप्त गर्छ भन्दा एउटै आत्मा कर्ता र कर्म दुबै बन्ने स्थिति देखिन्छ। यसैले यहाँ कर्मकर्तृभावविरोधको स्थिति रहेको छ। यसको समाधान यसरी गर्नुपर्छ– अवच्छेदक भिन्न भएपछि एउटै वस्तु पनि कर्ता र कर्म दुबै बन्न सक्दछ। आँखाले सूर्यलाई हेरिन्छ। यहाँ आँखा भनेको चक्षुगोलक अवच्छिन्न तेज नै हो। आकाशको सूर्य पनि आकाशीय पिण्डावच्छिन्न तेज हो। वास्तवमा दुबै

तेज नै हुन्। तर चक्षुरिन्द्रिय र सूर्यका कारण तिनीहरू भिन्न देखिएका छन्। यस्तै जान्ने आत्मा जीवात्मा हो। अहङ्कारावच्छिन्न आत्मालाई जीवात्मा भनिन्छ। जानिने आत्मा शुद्ध आत्मा हो। अहङ्कारावच्छिन्न जीवात्माले यस्तो शुद्ध आत्मालाई प्राप्त गर्दछ।

**मुक्तलिङ्गं सदाभासमसति प्रतिपद्यते।**
**सतो बन्धुमसच्चक्षुः सर्वानुस्यूतमद्वयम्॥ ११॥**

**पदार्थ–**

(यसपछि जीवले)
**मुक्तलिङ्गं** = शरीर आदि उपाधिबाट अलग
**असति** = मिथ्याभूत अहङ्कार आदिमा पनि
**सदाभासम्** = सत्‌रूपले देखा पर्ने
**सतः** = कारणरूप प्रकृतिको
**बन्धुम्** = अधिष्ठान
**असच्चक्षुः** = असत् जगत्‌को प्रकाशक एवं
**सर्वानुस्यूतम्** = कार्यकारणरूप सम्पूर्ण जगत्‌मा व्याप्त
**अद्वयम्** = अद्वैत परब्रह्म परमात्मालाई
**प्रतिपद्यते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** यसपछि जीवले शरीर आदि उपाधिबाट अलग मिथ्याभूत अहङ्कार आदिमा पनि सत्‌रूपले देखा पर्ने कारणरूप प्रकृतिको अधिष्ठान, असत् जगत्‌को प्रकाशक एवं सम्पूर्ण कार्यकारणरूप जगत्‌मा व्याप्त अद्वैत परब्रह्म परमात्मालाई प्राप्त गर्दछ।

**यथा जलस्थ आभासः स्थलस्थेनावदृश्यते।**
**स्वाभासेन तथा सूर्यो जलस्थेन दिवि स्थितः॥ १२॥**
**एवं त्रिवृदहङ्कारो भूतेन्द्रियमनोमयैः।**
**स्वाभासैर्लक्षितोऽनेन सदाभासेन सत्यदृक्॥ १३॥**

**पदार्थ–**

**यथा** = जसरी
**जलस्थ** = तलाउमा रहेको
**आभासः** = सूर्यको प्रतिबिम्ब
**स्थलस्थेन** = भित्ता आदिमा देखिएको
**स्वाभासेन** = आफ्नो छायाको सम्बन्धबाट
**अवदृश्यते** = जानिन्छ र
**तथा** = त्यसै गरी
**जलस्थेन** = जलमा रहेको सूर्यप्रतिबिम्बबाट
**दिवि** = आकाशमा
**स्थितः** = रहेको
**सूर्यः** = सूर्यको ज्ञान हुन्छ
**एवं** = यसै गरी
**भूतेन्द्रियमनोमयैः** = शरीर, इन्द्रिय र मनमा परेको
**स्वाभासैः** = आफ्नो आभासबाट
**त्रिवृदहङ्कारः** = सत्त्व, रज, तम गरी तीन प्रकारको (अहङ्कार लक्षित हुन्छ र फेरि)
**अनेन** = अहङ्कारमा परेको
**सदाभासेन** = ब्रह्मको प्रतिबिम्बद्वारा
**सत्यदृक्** = नित्य परब्रह्म परमात्मा
**लक्षितः** = जानिनुहुन्छ

**वाक्यार्थ–** जसरी तलाउमा रहेको सूर्यको प्रतिबिम्ब भित्ता आदिमा देखिएको आफ्नो छायाको सम्बन्धबाट जानिन्छ र त्यसै गरी जलमा रहेको सूर्यप्रतिबिम्बबाट आकाशमा रहेको सूर्यको ज्ञान हुन्छ। त्यसै गरी शरीर, इन्द्रिय र मनमा परेको आफ्नो आभासबाट सत्त्व, रज, तम गरी तीन प्रकारको अहङ्कार लक्षित हुन्छ र फेरि अहङ्कारमा परेको ब्रह्मको प्रतिबिम्बद्वारा नित्य परब्रह्म परमात्मा जानिनुहुन्छ।

**विवरण–** भित्तामा सूर्यको प्रतिबिम्ब कसरी देखिन्छ भन्दा आकाशमा रहेको सूर्यको प्रतिबिम्ब जलमा पर्दछ र जलमा परेको सूर्यको प्रतिबिम्ब भित्तामा पर्दछ। उक्त प्रतिबिम्ब सूर्यको प्रतिबिम्ब मात्र नभएर प्रतिबिम्बको पनि प्रतिबिम्ब हो। यहाँ भित्तामा परेको प्रतिबिम्बको प्रतिबिम्बले जलमा परेको प्रतिबिम्बको सङ्केत गरिदियो अर्थात्, भित्तामा देखापरेको सूर्यको प्रतिबिम्बको प्रतिबिम्बद्वारा जलमा परेको सूर्यको प्रतिबिम्बलाई जान्न सकिन्छ। यस्तै जलमा परेको सूर्यको प्रतिबिम्बद्वारा आकाशमा रहेको बिम्बभूत सूर्यको ज्ञान हुन्छ। यस्तै आत्माको प्रतिबिम्ब अहङ्कारमा पर्दछ र अहङ्कारको प्रतिबिम्ब देह, इन्द्रिय आदिमा पर्दछ। यसैले देह, इन्द्रिय आदिमा परेको अहङ्कारको प्रतिबिम्बबाट अहङ्कारको ज्ञान हुन्छ र अहङ्कारमा परेको आत्माको प्रतिबिम्बबाट बिम्बरूप आत्माको ज्ञान हुन्छ।

आत्मालाई छोडेर संसारका सम्पूर्ण पदार्थहरू जड छन्। यसैले ती पदार्थहरूमा चैतन्यको गन्धमात्र पनि सम्भव छैन। तर शरीर, इन्द्रिय र मन आदि जड पदार्थहरू पनि चेतन जस्ता देखिन्छन्। यहाँ ती शरीर, इन्द्रिय र मन आदि पदार्थहरूमा चैतन्य कहाँबाट आयो ? जसका कारण ती पदार्थहरू चेतन जस्ता देखिएका छन्, यो प्रश्न उठ्न सक्छ। वस्तुतः शरीर, इन्द्रिय र मनले अहङ्कारबाट चैतन्य प्राप्त गरेकाले तिनीहरू चेतनशील देखिएका हुन्। यसैले ती मन र इन्द्रियहरूद्वारा विषयको ग्रहण भइरहेको छ। अहङ्कारको आभास नभईकन विषयको ग्रहण सम्भव छैन। जुन अहङ्कारको आभासलाई प्राप्त गरेर इन्द्रिय र मनद्वारा विषयको ग्रहण भएको थियो त्यो अहङ्कारमा देखा परेको आत्माको प्रतिबिम्बद्वारा शुद्ध आत्माको ज्ञान हुन्छ।

**भूतसूक्ष्मेन्द्रियमनोबुद्ध्यादिष्विह निद्रया।**
**लीनेष्वसति यस्तत्र विनिद्रो निरहङ्क्रियः॥ १४॥**

**पदार्थ–**

**इह** = यो सुषुप्ति अवस्थामा
**निद्रया** = निद्राको कारणले
**भूतसूक्ष्मेन्द्रियमनोबुद्ध्यादिषु** = शब्द आदि तन्मात्रा, इन्द्रिय, मन, बुद्धि र अहङ्कार आदि
**असति** = असत्तुल्य अव्याकृतमा
**लीनेषु** = लीन भएपछि
**तत्र** = त्यस समयमा
**यः** = जो (आत्मा)
**विनिद्रः** = जागा रहन्छ र त्यो
**निरहङ्क्रियः** = अहङ्काररहित हुन्छ

**वाक्यार्थ–** सुषुप्ति अवस्थामा निद्राको कारणले शब्द आदि तन्मात्रा, इन्द्रिय, मन, बुद्धि र

अहङ्कार आदि असत्तुल्य अव्याकृतमा लीन भएपछि त्यस समयमा जो आत्मा जागा रहन्छ र त्यो अहङ्काररहित पनि हुन्छ।

**विवरण–** सुषुप्तिको समयमा आत्मा शब्दादि भूत, इन्द्रिय र मन-बुद्धि, अव्याकृतमा लीन भएपछि स्वयंप्रकाशरूपले जागिरहेको हुन्छ र सर्वथा अहङ्कारशून्य हुन्छ। भएको वस्तु आत्मा मात्र हो। आत्मादेखि अतिरिक्त संसारका सम्पूर्ण पदार्थहरू मिथ्या हुन्। आत्मा निर्विकार, अत्यन्त परिपूर्ण र अहङ्कारशून्य छ भन्ने कुरा सुषुप्ति अवस्थाको विचारद्वारा स्पष्ट रूपले जान्न सकिन्छ। सुषुप्ति अवस्थामा जीव ब्रह्मरूपले अवस्थित हुन्छ। प्रमातृत्व, कर्तृत्व र भोक्तृत्वभावलाई जीवभाव भनिन्छ। सुषुप्ति अवस्थामा अन्तःकरण गएर अविद्यामा लीन हुने हुनाले सुषुप्तिमा अन्तःकरण रहँदैन। अन्तःकरण धर्मी हो भने प्रमातृत्व, कर्तृत्व र भोक्तृत्वभाव उसका धर्म हुन्। सुषुप्ति अवस्थामा धर्मी अन्तःकरणको अभाव भएपछि उसका धर्म प्रमातृत्व, कर्तृत्व र भोक्तृत्वभावको पनि अभाव स्वतः सिद्ध हुन्छ। कर्तृत्व र भोक्तृत्वभाव नै संसार हो। जबसम्म आत्माले म धर्म र अधर्मको कर्ता हुँ र धर्म र अधर्मको फल सुख, दुःखको भोक्ता हुँ भन्ने मान्दछ तबसम्म उसका लागि जन्म र मृत्युको प्रवाह चली नै रहन्छ। जब म धर्म र अधर्मको कर्ता पनि होइन, त्यसको फल सुख र दुःखको भोक्ता पनि होइन भन्ने निश्चय हुन्छ तब उसको जन्म र मृत्युको प्रवाह छुट्दछ। यस प्रकार सुषुप्ति अवस्थामा आत्मा प्रमातृत्व, कर्तृत्व र भोक्तृत्वभावले रहित भएको हुनाले सुषुप्तिमा जीव वस्तुतः ब्रह्मभावमा प्राप्त हुन्छ।

**मन्यमानस्तदात्मानमनष्टो नष्टवन्मृषा।**
**नष्टेऽहङ्करणे द्रष्टा नष्टवित्त इवातुरः॥ १५॥**

**पदार्थ–**

**तदा** = सुषुप्ति अवस्थामा
**अहङ्करणे नष्टे** = अहङ्कार नाश भएपछि
**नष्टवित्तः** = सम्पत्ति हराएको मानिस
**आतुरः इव** = आफैँ नष्ट भएजस्तो गरी व्याकुल बनेजस्तै
**अनष्टः** = आफू नष्ट नभएर पनि
**द्रष्टा** = द्रष्टाले
**मृषा** = भ्रमको कारणले
**आत्मानम्** = आफूलाई
**नष्टवत्** = नष्ट भएकोझैँ
**मन्यमानः** = मान्दछ

**वाक्यार्थ–** सुषुप्ति अवस्थामा अहङ्कार नाश भएपछि सम्पत्ति हराएको मानिस आफैँ नष्ट भएजस्तो गरी व्याकुल बनेजस्तै नष्ट नभएर पनि भ्रमको कारणले द्रष्टाले आफूलाई नष्ट भएको रूपमा मान्दछ।

**एवं प्रत्यवमृश्यासावात्मानं प्रतिपद्यते।**
**साहङ्कारस्य द्रव्यस्य योऽवस्थानमनुग्रहः॥ १६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एवं** = यो कुरालाई | **द्रव्यस्य** = कार्यकारणसंघातरूप जगत्को | **अवस्थानम्** = आश्रयरूप हुनुहुन्छ, त्यस्ता |
| **प्रत्यवमृश्य** = विचार गरेर | **यः** = जो | **आत्मानं** = परमात्मालाई |
| **असौ** = विवेकी व्यक्तिले | **अनुग्रहः** = प्रकाशक र | **प्रतिपद्यते** = जान्दछ |
| **साहङ्कारस्य** = अहङ्कारले सहित | | |

**वाक्यार्थ–** यो कुरालाई विचार गरेर विवेकी व्यक्तिले अहङ्कारले सहित भएको कार्यकारणसंघातरूप जगत्को प्रकाशक र आश्रयरूप परमतत्त्वको रूपमा व्याप्त परमात्मालाई जान्दछ।

**विवरण–**सुषुप्ति अर्थात् गाढा निद्राको समयमा मनुष्यको लागि सम्पूर्ण संसार, शरीर, इन्द्रिय, मन र बुद्धिसमेत अविद्यामा लीन भएको हुन्छ। त्यस समयमा 'म हुँ' भन्ने अहङ्कार समेत लीन हुन्छ। तर ज्ञानस्वरूप आत्मतत्त्वले त्यस अवस्थालाई पनि प्रकाशित गरिरहन्छ। 'म यति समयसम्म ढुक्क भएर सुतेँ र केही पनि जानिनँ' भन्ने सुतेर उठेको जुन व्यक्तिको भनाइ छ त्यसबाट उसले गाढा निद्राको समयमा आफूलाई चाहिँ जानेकै रहेछ भन्ने थाहा हुन्छ। 'सपना नदेखेको वेलामा आनन्दले सुतेको म नै ब्युँझिएको म हुँ' भन्ने परामर्शज्ञानबाट केही नजान्दा पनि आफूलाई जानेको थियो भनी बुझ्नुपर्छ। यसलाई श्लोकले **प्रत्यवमृश्य** यो पदले सङ्केत गरेको छ। आत्मा सुषुप्ति अवस्थामा पनि रहने भए जाग्रत् र स्वप्नमा झैँ किन स्पष्ट प्रतीत नभएको हो त ? यसको उत्तर हो– जाग्रत् र स्वप्नमा त आत्मा अहङ्कार र इन्द्रियको माध्यमले जगत्को प्रकाशन गर्ने हुँदा प्रकाशक रूपले स्पष्ट प्रतीत हुन्छ तर सुषुप्तिमा प्रकाशका विषय सबै लुप्त हुन्छन्, केवल प्रकाश मात्र रहन्छ। जसरी अँध्यारोमा आकाशमा पारिएको बत्तीको प्रकाश कुनै पनि प्रकाश्य विषय नभएकाले स्पष्ट हुँदैन अथवा देखिँदैन तर जमिनमा, अन्य पदार्थमा पार्दा देखिन्छ, त्यसै गरी सुषुप्तिमा पनि आत्माद्वारा प्रकाश्य अन्य कुनै विषय नरहने हुनाले आत्माको स्पष्ट प्रतीति हुँदैन। वस्तुतः आत्मा अहङ्कार आदि समस्त पदार्थको आधार र प्रकाशक समेत हो।

**देवहूतिरुवाच** (देवहूतिले भन्नुभयो)

**पुरुषं प्रकृतिर्ब्रह्मन् न विमुञ्चति कर्हिचित्।**
**अन्योन्यापाश्रयत्वाच्च नित्यत्वादनयोः प्रभो ॥ १७ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्रह्मन्** = ब्रह्मरूप | एकअर्काको आश्रयमा रहने र | **प्रकृतिः** = प्रकृतिले |
| **प्रभो** = हे प्रभु | **नित्यत्वात्** = नित्य भएकाले | **पुरुषं** = पुरुषलाई |
| **अनयोः** = प्रकृति र पुरुष दुबै | **च** = पनि | **न विमुञ्चति** = छोड्दिन |
| **अन्योन्यापाश्रयत्वात्** = | **कर्हिचित्** = कहिल्यै पनि | |

**वाक्यार्थ–** ब्रह्मरूप हे प्रभु ! प्रकृति र पुरुष दुबै एकअर्काको आश्रयमा रहने भएकाले र दुबै

नित्य भएकाले कहिल्यै पनि प्रकृतिले पुरुषलाई छोड्दिन।

**विवरण–** प्रकृतिभन्दा भिन्न अनि अहङ्कार आदि समस्त जगत्को प्रकाशक आत्माको वर्णन सुनिसकेपछि देवहूतिले यी दुईको विवेक सम्भव छैन कि भनी शङ्का गर्नुहुन्छ। प्रकृति अर्थात् अविद्या र पुरुष अर्थात् आत्मा दुबै अनादि हुन् अनि प्रकृति पुरुषकी नित्य शक्ति हुन्। यी दुबैको सम्बन्धसमेत अनादि नै हो। पुरुषको सत्ता र चैतन्यरूपतालाई नलिई प्रकृति नै सिद्ध हुन नसक्ने हुनाले र मायाशक्तिलाई नलिई निर्गुण पुरुषको पनि जगत्को रूपमा अभिव्यक्ति सम्भव नहुने हुनाले यी दुबै एक-अर्कामा नित्य आश्रित छन्। यस कारण कसरी प्रकृति र पुरुषबीचको भेदज्ञान सम्भव छ र भनी देवहूतिले यहाँ शङ्का गर्नुभएको हो।

**यथा गन्धस्य भूमेश्च न भावो व्यतिरेकतः।**
**अपां रसस्य च यथा तथा बुद्धेः परस्य च॥ १८॥**

पदार्थ–

**यथा** = जसरी
**गन्धस्य** = गन्ध
**भूमेः** = पृथिवीको तथा
**च** = र
**रसस्य** = रस
**च** = र
**अपां** = जलको
**व्यतिरेकतः** = अलग-अलग
**न भावः** = स्थिति हुन सक्दैन
**तथा** = त्यसै गरी
**बुद्धेः** = प्रकृति
**परस्य** = पुरुषको पनि
**च** = पनि (अलग-अलग स्थिति सम्भव छैन)

**वाक्यार्थ–** जसरी गन्ध र पृथिवीको तथा रस र जलको अलग-अलग स्थिति हुँदैन त्यसै गरी प्रकृति र पुरुषको पनि अलग-अलग स्थिति सम्भव छैन।

**अकर्तुः कर्मबन्धोऽयं पुरुषस्य यदाश्रयः।**
**गुणेषु सत्सु प्रकृतेः कैवल्यं तेष्वतः कथम्॥ १९॥**

पदार्थ–

**यदाश्रयः** = जुन प्रकृतिको आश्रयबाट
**अकर्तुः** = अकर्ता
**पुरुषस्य** = पुरुषको
**अयं** = यो
**कर्मबन्धः** = कर्मबन्धन (रहन्छ)
**अतः** = त्यसैले
**प्रकृतेः** = प्रकृतिका
**तेषु** = ती
**गुणेषु** = गुणहरू
**सत्सु** = रहिरहँदा (पुरुषको)
**कैवल्यं** = मोक्ष
**कथम्** = कसरी हुन्छ

**वाक्यार्थ–** प्रकृतिको आश्रयबाट अकर्ता पुरुष कर्मबन्धनमा रहिरहन्छ। त्यसैले प्रकृतिका ती गुणहरू रहिरहँदा पुरुषको मोक्ष कसरी हुन्छ ?

**क्वचित् तत्त्वावमर्शेन निवृत्तं भयमुल्बणम् ।**
**अनिवृत्तनिमित्तत्वात् पुनः प्रत्यवतिष्ठते ॥ २० ॥**

**पदार्थ–**

**तत्त्वावमर्शेन** = आत्मतत्त्वको विचार गर्नाले
**क्वचित्** = कहिलेकाहीँ (यो संसारबन्धनको)
**उल्बणम्** = तीव्र
**भयम्** = भय
**निवृत्तं** = हटे पनि
**अनिवृत्तनिमित्तत्वात्** = कारणरूप प्रकृतिका गुणहरूको नाश नहुन्जेल (त्यो भय)
**पुनः** = फेरि
**प्रत्यवतिष्ठते** = उपस्थित भइरहन्छ

**वाक्यार्थ–** आत्मतत्त्वको विचार गर्नाले कहिलेकाहीँ यो संसारबन्धनको तीव्र भय हटे पनि कारणरूप प्रकृतिका गुणहरूको नाश नहुन्जेल त्यो भय फेरि उपस्थित भइरहन्छ।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**अनिमित्तनिमित्तेन स्वधर्मेणामलात्मना ।**
**तीव्रया मयि भक्त्या च श्रुतसम्भृतया चिरम् ॥ २१ ॥**
**ज्ञानेन दृष्टतत्त्वेन वैराग्येण बलीयसा ।**
**तपोयुक्तेन योगेन तीव्रेणात्मसमाधिना ॥ २२ ॥**
**प्रकृतिः पुरुषस्येह दह्यमाना त्वहर्निशम् ।**
**तिरोभवित्री शनकैरग्नेर्योनिरिवारणिः ॥ २३ ॥**

**पदार्थ–**

(हे माता देवहूति)
**अनिमित्तनिमित्तेन** = कुनै आशा नगरीकन
**स्वधर्मेण** = आफ्नो वर्णाश्रम धर्मद्वारा
**अमलात्मना** = अन्तःकरण शुद्ध भएपछि
**चिरम्** = धेरै समयसम्म
**मयि** = मेरो
**श्रुतसम्भृतया** = कथाश्रवणबाट बढेको
**तीव्रया** = तीव्र
**भक्त्या** = भक्ति
**दृष्टतत्त्वेन** = प्रकृति र पुरुषको वास्तविकता बताउने
**ज्ञानेन** = ज्ञान
**बलीयसा** = अत्यन्त दृढ
**वैराग्येण** = वैराग्य
**तपोयुक्तेन** = यम, नियम आदि अष्टाङ्गले सहित भएको
**योगेन** = योग र
**तीव्रेण** = तीव्र
**आत्मसमाधिना** = आत्मसमाधिबाट
**च** = पनि
**अहर्निशम्** = दिनरात
**दह्यमाना** = शक्ति क्षीण हुँदै गएकी
**पुरुषस्य** = पुरुषलाई मोहित पार्ने

**प्रकृतिः** = अविद्या
**अग्नेः** = आगोलाई
**योनिः** = उत्पन्न गराउने
**अरणिः** = काठ
**इव** = आगोद्वारा डढेजस्तै
**शनकैः** = साधन गर्दागर्दै
**इह** = यही जन्ममा
**तु** = नै
**तिरोभवित्री** = नष्ट हुन्छे

**वाक्यार्थ–** हे माता देवहूति ! कुनै आशा नगरीकन पालन गरिएको आफ्नो वर्णाश्रम धर्मद्वारा अन्तःकरण शुद्ध भएपछि धेरै समयसम्म मेरो कथाश्रवणबाट बढेको तीव्र भक्ति, प्रकृति र पुरुषको वास्तविकता बताउने ज्ञान, अत्यन्त दृढ वैराग्य, यमनियम आदि अष्टाङ्गले सहित भएको योग अनि तीव्र आत्मसमाधिबाट दिनरात शक्ति क्षीण हुँदै गएकी एवं पुरुषलाई मोहित पार्ने अविद्या आगोलाई उत्पन्न गराउने काठ आगोद्वारा डढेजस्तै साधन गर्दागर्दै यही जन्ममा नै नष्ट हुन्छे।

**भुक्तभोगा परित्यक्ता दृष्टदोषा च नित्यशः।**
**नेश्वरस्याशुभं धत्ते स्वे महिम्नि स्थितस्य च॥ २४॥**

पदार्थ–
**नित्यशः** = सधैँ
**दृष्टदोषा** = दोषमात्रै देखिने भएकाले
**भुक्तभोगा** = भोग गरेर
**परित्यक्ता** = त्याग गरिएकी प्रकृतिले
**स्वे** = आफ्नो
**महिम्नि** = परमानन्दस्वरूपमा
**स्थितस्य** = स्थित भएका
**ईश्वरस्य** = पुरुषको
**अशुभं** = नराम्रो
**न धत्ते** = गर्न सक्दिन

**वाक्यार्थ–** सधैँ दोषमात्रै देखिनाले भोग गरेर त्याग गरिएकी प्रकृतिले आफ्नो परमानन्दस्वरूपमा स्थित भई बन्धनमुक्त भएका पुरुषको नराम्रो गर्न सक्दिन।

**यथा ह्यप्रतिबुद्धस्य प्रस्वापो बह्वनर्थभृत्।**
**स एव प्रतिबुद्धस्य न वै मोहाय कल्पते॥ २५॥**
**एवं विदिततत्त्वस्य प्रकृतिर्मयि मानसम्।**
**युञ्जतो नापकुरुत आत्मारामस्य कर्हिचित्॥ २६॥**

पदार्थ–
**यथा हि** = जसरी
**अप्रतिबुद्धस्य** = निदाएको मानिसलाई
**प्रस्वापः** = सपनाले
**बह्वनर्थभृत्** = विभिन्न प्रकारका दुःख कष्ट दिन्छ तर
**सः एव** = त्यही सपनाले
**प्रतिबुद्धस्य** = जाग्रत् अवस्थामा प्राप्त भएको मानिसलाई
**वै** = निश्चय नै
**मोहाय** = मोहित पार्न
**न कल्पते** = सक्दैन
**एवं** = त्यसै गरी
**विदिततत्त्वस्य** = प्रकृति र पुरुषको यथार्थज्ञान गरेको
**मयि** = म परमात्मामा
**मानसम्** = चित्त
**युञ्जतः** = लगाएको
**आत्मारामस्य** = आफैँमा रमाउने व्यक्तिलाई
**प्रकृतिः** = प्रकृतिले

**कर्हिचित्** = कसै गरी पनि
**न अपकुरुते** = मोहित पार्न सक्दिन

**वाक्यार्थ–** जसरी निदाएको मानिसलाई सपनाले विभिन्न प्रकारका दुःख कष्ट दिन्छ तर त्यही सपनाले जाग्रत् अवस्थामा प्राप्त भएको मानिसलाई निश्चय नै मोहित पार्न सक्दैन त्यसै गरी प्रकृति र पुरुषको यथार्थज्ञान गरेको म परमात्मामा चित्त लगाएको एवं आफैँमा रमाउने मानिसलाई प्रकृतिले कसै गरेर पनि मोहित पार्न सक्दिन।

**यदैवमध्यात्मरतः कालेन बहुजन्मना ।**
**सर्वत्र जातवैराग्य आब्रह्मभुवनान्मुनिः ॥ २७ ॥**
**मद्भक्तः प्रतिबुद्धार्थो मत्प्रसादेन भूयसा ।**
**निःश्रेयसं स्वसंस्थानं कैवल्याख्यं मदाश्रयम् ॥ २८ ॥**

**पदार्थ–**

**यदा** = जब मानिस
**एवम्** = यसरी
**बहुजन्मना कालेन** = अनेकौँ जन्मसम्म
**अध्यात्मरतः** = आत्मचिन्तनमा निमग्न रहन्छ तब
**मुनिः** = त्यो विवेकी मनुष्यले
**आब्रह्मभुवनात्** = यस लोकदेखि ब्रह्मलोकसम्मका
**सर्वत्र** = सबै प्रकारका भोगमा
**जातवैराग्यः** = वैराग्य उत्पन्न भएको
**मद्भक्तः** = त्यो मेरो भक्तले
**भूयसा** = बारम्बार प्राप्त हुने
**मत्प्रसादेन** = मेरो कृपाप्रसादले
**प्रतिबुद्धार्थः** = परमतत्त्वलाई जानेर
**कैवल्याख्यं** = कैवल्यसंज्ञक
**स्वसंस्थानं** = स्वस्वरूपभूत (देहादिदेखि अतिरिक्त)
**मदाश्रयम्** = मेरै रूप भएको
**निःश्रेयसं** = निरतिशय आनन्दलाई (प्राप्त गर्दछ)

**वाक्यार्थ–** जब मानिस यसरी अनेकौँ जन्मसम्म आत्मचिन्तनमा निमग्न रहन्छ तब त्यो विवेकी मानिस यस लोकदेखि ब्रह्मलोकसम्मका सबै प्रकारका भोगमा वैराग्ययुक्त भएको हुन्छ। त्यो मेरो भक्तले बारम्बार प्राप्त हुने मेरो कृपाप्रसादले परमतत्त्वलाई जानेर कैवल्यसंज्ञक स्वस्वरूपभूत देह आदिदेखि अतिरिक्त मेरै रूप भएको निरतिशय आनन्दलाई प्राप्त गर्दछ।

**प्राप्नोतीहाञ्जसा धीरः स्वदृशा छिन्नसंशयः ।**
**यद् गत्वा न निवर्तेत योगी लिङ्गाद् विनिर्गमे ॥ २९ ॥**

**पदार्थ–**

**स्वदृशा** = स्वरूपज्ञानबाट
**छिन्नसंशयः** = सम्पूर्ण संशयहरू नष्ट भएको
**धीरः** = धैर्यशाली मेरो भक्तले
**इह** = यही शरीरमा हुँदा नै
**अञ्जसा** = सजिलै (त्यो कैवल्य पदलाई)
**प्राप्नोति** = प्राप्त गर्दछ
**लिङ्गाद्** = सूक्ष्मशरीरबाट
**विनिर्गमे** = अलग भएको
**योगी** = योगी
**यत्** = जुन ठाउँमा

**गत्वा** = गइसकेपछि
**न निवर्तेत** = फर्केर आउँदैन

**वाक्यार्थ–** स्वरूपज्ञानबाट सम्पूर्ण संशयहरू नष्ट भएपछि धैर्यशाली मेरो भक्तले यही शरीरमा हुँदा नै साक्षात् रूपमा त्यस कैवल्य पदलाई प्राप्त गर्दछ। यसरी सूक्ष्मशरीरबाट अलग भएको योगी आफू पुगिसकेको ठाउँबाट फर्केर आउँदैन।

**टिप्पणी–** अनुभवपूर्ण स्वरूपज्ञान भइसकेकाले योगी पुनः सूक्ष्म र स्थूल शरीरमा तादात्म्याध्यास गर्दैन भन्ने अर्थमा फर्केर आउँदैन भनिएको हो।

**यदा न योगोपचितासु चेतो**
**मायासु सिद्धस्य विषज्जतेऽङ्ग।**
**अनन्यहेतुष्वथ मे गतिः स्याद्**
**आत्यन्तिकी यत्र न मृत्युहासः॥ ३०॥**

पदार्थ–

**अङ्ग** = हे माता
**यदा** = जुन समयमा
**सिद्धस्य** = सिद्ध योगीजनको
**चेतः** = चित्त
**योगोपचितासु** = योगको फलरूप मानिने
**अनन्यहेतुषु** = योगबाट मात्र प्राप्त हुने
**मायासु** = अणिमा आदि सिद्धिहरूमा
**न विषज्जते** = अल्झिँदैन
**अथ** = त्यस समयमा
**आत्यन्तिकी** = परमपुरुषार्थरूप
**मे** = मेरो
**गतिः** = स्वरूपलाई
**स्याद्** = प्राप्त गर्दछ
**यत्र** = जहाँ
**मृत्युहासः** = मृत्युको तागत
**न** = चल्दैन

**वाक्यार्थ–** हे माता ! जुन समयमा सिद्ध योगीजनको चित्त योगको फलरूप मानिने अणिमा आदि सिद्धिहरूमा अल्झिँदैन त्यस समयमा त्यो सिद्ध व्यक्तिले परमपुरुषार्थरूप मेरो स्वरूपलाई प्राप्त गर्दछ, जहाँ मृत्युको तागत चल्दैन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**
**कापिलेयोपाख्याने सप्तविंशोऽध्यायः॥ २७॥**

# अथ अष्टाविंशोऽध्यायः

## अष्टाङ्गयोगको विधि

**श्रीभगवानुवाच** (श्रीभगवान् कपिलले भन्नुभयो)

**योगस्य लक्षणं वक्ष्ये सबीजस्य नृपात्मजे।**
**मनो येनैव विधिना प्रसन्नं याति सत्पथम्॥ १॥**

पदार्थ—

| | | |
|---|---|---|
| **नृपात्मजे** = राजपुत्री हे माता देवहूति | **लक्षणं** = लक्षण | **प्रसन्नं** = शुद्ध भएर |
| **सबीजस्य** = सबीज (ध्येयस्वरूपको आलम्बनले युक्त भएको) | **वक्ष्ये** = भन्दछु | **सत्पथम्** = परमात्मप्राप्तिको मार्गमा |
| **योगस्य** = योगको | **येन** = यही | **याति** = प्रवृत्त हुन्छ |
| | **विधिना** = विधिद्वारा | |
| | **एव** = मात्र | |
| | **मनः** = मन | |

**वाक्यार्थ—** हे माता देवहूति ! सबीज वा ध्येयस्वरूपको आलम्बनले युक्त भएको योगको लक्षण भन्दछु। यही विधिद्वारा मात्र मन शुद्ध भएर परमात्मा प्राप्तिको मार्गमा प्रवृत्त हुन्छ।

**स्वधर्माचरणं शक्त्या विधर्माच्च निवर्तनम्।**
**दैवाल्लब्धेन सन्तोष आत्मविच्चरणार्चनम्॥ २॥**

पदार्थ—

| | | |
|---|---|---|
| **शक्त्या** = यथाशक्ति | **दैवात्** = प्रारब्धअनुसार | आत्मज्ञानी महापुरुषहरूको चरणसेवा गर्नु |
| **स्वधर्माचरणं** = आफ्नो वर्णाश्रम धर्मको अनुष्ठान गर्नु | **लब्धेन** = प्राप्त भएको वस्तुमा | **च** = पनि (योगका नियम हुन्) |
| **विधर्मात्** = विरुद्ध धर्मबाट | **सन्तोषः** = सन्तुष्ट हुनु एवं | |
| **निवर्तनम्** = टाढा रहनु | **आत्मविच्चरणार्चनम्** = | |

**वाक्यार्थ—** यथाशक्ति आफ्नो वर्णाश्रम धर्मको अनुष्ठान गर्नु, अन्य विरुद्ध धर्मबाट टाढा रहनु, प्रारब्धअनुसार प्राप्त भएको वस्तुमा सन्तुष्ट हुनु एवं आत्मज्ञानी महापुरुषहरूको चरणसेवा गर्नु आदि योगका नियम हुन्।

**ग्राम्यधर्मनिवृत्तिश्च मोक्षधर्मरतिस्तथा।**
**मितमेध्यादनं शश्वद्विविक्तक्षेमसेवनम्॥ ३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ग्राम्यधर्मनिवृत्तिः** = विषयवासनालाई बढाउने कर्मदेखि टाढा रहनु **तथा** = त्यसै गरी **मोक्षधर्मरतिः** = मोक्षधर्ममा प्रेम | गर्नु **मितमेध्यादनं** = थोरै तर शुद्ध भोजन गर्नु **शश्वद्विविक्तक्षेमसेवनम्** = सधैँ भगवान्‌को भजनमा विघ्नबाधा | नआउने एकान्त स्थलमा रहनु **च** = पनि (योगका साधनहरू हुन्) |

**वाक्यार्थ–** विषयवासनालाई बढाउने कर्मदेखि टाढा रहनु, मोक्षधर्ममा प्रेम गर्नु, थोरै तर शुद्ध भोजन गर्नु र भगवान्‌को भजनमा विघ्नबाधा नआउने एकान्त स्थलमा सधैँ रहनु आदि योगका साधनहरू हुन्।

**अहिंसा सत्यमस्तेयं यावदर्थपरिग्रहः।**
**ब्रह्मचर्यं तपः शौचं स्वाध्यायः पुरुषार्चनम्॥ ४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अहिंसा** = हिंसा नगर्नु **सत्यम्** = सत्य बोल्नु **अस्तेयं** = चोरी नगर्नु **यावदर्थपरिग्रहः** = देह-निर्वाहको लागि मात्र वस्तुहरूको संग्रह | गर्नु **ब्रह्मचर्यं** = ब्रह्मचर्य व्रतको पालन गर्नु **तपः** = तपस्या गर्नु **शौचं** = शुद्ध आचरण गर्नु | **स्वाध्यायः** = वेदाध्ययन गर्नु **पुरुषार्चनम्** = भगवान् नारायणको पूजा गर्नु (आदि योगका साधनहरू हुन्) |

**वाक्यार्थ–** हिंसा नगर्नु, सत्य बोल्नु, चोरी नगर्नु, देह-निर्वाहको लागि मात्र वस्तुहरूको संग्रह गर्नु, ब्रह्मचर्य व्रतको पालन गर्नु, तपस्या गर्नु, शुद्ध आचरण गर्नु, वेदाध्ययन गर्नु, भगवान् नारायणको पूजा गर्नु आदि योगका साधनहरू हुन्।

**मौनं सदासनजयस्थैर्यं प्राणजयः शनैः।**
**प्रत्याहारश्चेन्द्रियाणां विषयान्मनसा हृदि॥ ५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मौनं** = वाणी संयमित गर्नु **सदासनजयस्थैर्यं** = पद्मासन आदि उत्तम आसनको अभ्यासले स्थिरतापूर्वक रहनु **शनैः** = बिस्तारै-बिस्तारै | **प्राणजयः** = प्राणायामद्वारा प्राणवायुलाई वशमा राख्नु **इन्द्रियाणां** = इन्द्रियहरूलाई **मनसा** = मनको **विषयात्** = विषयबाट हटाई | **हृदि** = हृदयमा **प्रत्याहारः** = संलग्न गराउनु **च** = पनि (योगका साधनहरू हुन्) |

**वाक्यार्थ–** वाणी संयमित गर्नु, नित्य पद्मासन आदि उत्तम आसनको अभ्यासले स्थिरतापूर्वक रहनु, बिस्तारै-बिस्तारै प्राणायामद्वारा प्राणवायुलाई वशमा राख्नु, इन्द्रियहरूलाई मनको विषयबाट

हटाई हृदयमा संलग्न गराउनु पनि योगका साधनहरू हुन्।

**स्वधिष्ण्यानामेकदेशे मनसा प्राणधारणम्।**
**वैकुण्ठलीलाभिध्यानं समाधानं तथात्मनः॥ ६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **स्वधिष्ण्यानाम्** = प्राण रहने | गर्नु | **आत्मनः** = अन्तःकरणलाई |
| मूलाधार आदि स्थानहरूमध्ये | **वैकुण्ठलीलाभिध्यानं** = भगवान् | **समाधानं** = परमात्मामा लगाउनु |
| **एकदेशे** = कुनै एक ठाउँमा | श्रीहरिका लीलाकथाहरूको | आदि (योगका लक्षणहरू हुन्) |
| **मनसा** = मनले सहित भएको | निरन्तर स्मरण गर्नु | |
| **प्राणधारणम्** = प्राणलाई स्थिर | **तथा** = त्यसै गरी | |

**वाक्यार्थ–** प्राण रहने मूलाधार आदि स्थानहरूमध्ये कुनै एक ठाउँमा मात्र मन सहित प्राणलाई स्थिर गर्नु, भगवान् श्रीहरिका लीलाकथाहरूको निरन्तर स्मरण गर्नु, अन्तःकरणलाई परमात्मामा मात्रै लगाउनु आदि योगका लक्षणहरू हुन्।

**एतैरन्यैश्च पथिभिर्मनो दुष्टमसत्पथम्।**
**बुद्ध्या युञ्जीत शनकैर्जितप्राणो ह्यतन्द्रितः॥ ७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **हि** = निश्चय नै | **च** = र | दौडिएको |
| **जितप्राणः** = प्राणवायुलाई | **अन्यैः** = यसभन्दा बाहेकका | **दुष्टम्** = दुष्ट |
| वशमा राखेको | व्रत, दान आदि | **मनः** = मनलाई |
| **अतन्द्रितः** = आलस्यभावलाई | **पथिभिः** = विभिन्न | **शनकैः** = बिस्तारै-बिस्तारै |
| त्यागेको व्यक्तिले | उपायहरूद्वारा | **बुद्ध्या** = बुद्धिको माध्यमले |
| **एतैः** = यी पूर्वोक्त नियम | **असत्पथम्** = विषयतिर | **युञ्जीत** = आत्मामा लगाओस् |

**वाक्यार्थ–** प्राणवायुलाई वशमा राखेको र आलस्यभावलाई त्यागेको व्यक्तिले यी पूर्वोक्त नियम र यसभन्दा बाहेकका व्रत, दान आदि विभिन्न उपायहरूद्वारा विषयतिर दौडिएको दुष्ट मनलाई बिस्तारै-बिस्तारै बुद्धिको माध्यमले आत्मामा लगाओस्।

**शुचौ देशे प्रतिष्ठाप्य विजितासन आसनम्।**
**तस्मिन् स्वस्ति समासीन ऋजुकायः समभ्यसेत्॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विजितासनः** = एउटै आसनमा | **शुचौ** = पवित्र | **आसनम्** = आसन |
| निरन्तर बस्न सक्ने व्यक्तिले | **देशे** = ठाउँमा | **प्रतिष्ठाप्य** = ओछ्याएर |

| | | |
|---|---|---|
| **तस्मिन्** = त्यहाँ | **ऋजुकायः** = शरीरलाई सीधा | अभ्यास गरोस् |
| **स्वस्ति** = स्वस्तिक आसनमा | बनाएर | |
| **समासीनः** = बसेर | **समभ्यसेत्** = प्राणायामको | |

**वाक्यार्थ–** एउटै आसनमा निरन्तर बस्न सक्ने व्यक्तिले पवित्र ठाउँमा आसन ओछ्याई त्यहाँ स्वस्तिक आसनमा बसेर शरीरलाई सीधा बनाएर प्राणायामको अभ्यास गरोस्।

**प्राणस्य शोधयेन्मार्गं पूरकुम्भकरेचकैः।**
**प्रतिकूलेन वा चित्तं यथा स्थिरमचञ्चलम्॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पूरकुम्भकरेचकैः** = पूरक, | **वा** = अथवा | **यथा** = जसबाट |
| कुम्भक र रेचक प्राणायामबाट | **प्राणस्य** = प्राणको | **चित्तं** = चित्त |
| **प्रतिकूलेन** = रेचक, कुम्भक र | **मार्गं** = मार्गलाई | **स्थिरम्** = स्थिर र |
| पूरक यस्तो उल्टो प्रकारबाट | **शोधयेत्** = शोधन गरोस् | **अचञ्चलम्** = विक्षेपरहित रहन्छ |

**वाक्यार्थ–** पूरक, कुम्भक र रेचक प्राणायामको माध्यमबाट अथवा रेचक, कुम्भक र पूरक यस्तो उल्टो प्रकारबाट प्राणको मार्गलाई शोधन गरोस् जसबाट चित्त स्थिर र विक्षेपरहित रहन्छ।

**मनोऽचिरात् स्याद् विरजं जितश्वासस्य योगिनः।**
**वाय्वग्निभ्यां यथा लोहं ध्मातं त्यजति वै मलम्॥ १०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यथा** = जसरी | **मलम्** = विकारलाई | **मनः** = मन |
| **वाय्वग्निभ्यां** = हावा र | **त्यजति** = त्याग्दछ | **अचिरात्** = छिटै |
| आगोद्वारा | **जितश्वासस्य** = प्राणलाई | **वै** = नै |
| **ध्मातं** = पोलेर शोधित गरिएको | वशीभूत बनाएको | **विरजं** = निर्मल |
| **लोहं** = फलामले | **योगिनः** = योगीको | **स्यात्** = हुन्छ |

**वाक्यार्थ–** जसरी हावा र आगोद्वारा पोलेर शोधित गरिएको फलामले विकारलाई त्याग्दछ त्यसै गरी प्राणलाई आफ्नो अधीनमा बनाउने योगीको मन छिटै निर्मल हुन्छ।

**प्राणायामैर्दहेद् दोषान् धारणाभिश्च किल्बिषान्।**
**प्रत्याहारेण संसर्गान् ध्यानेनानीश्वरान् गुणान्॥ ११॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्राणायामैः** = प्राणायामहरूद्वारा | **धारणाभिः** = धारणाद्वारा | **प्रत्याहारेण** = प्रत्याहारद्वारा |
| **दोषान्** = वात, पित्त आदि रोग | **किल्बिषान्** = पापहरू | **संसर्गान्** = विषय-सम्बन्धजन्य |

दोष
**ध्यानेन** = ध्यानद्वारा
**अनीश्वरान् गुणान्** = राग, द्वेष इत्यादि दुर्गुणहरूलाई
**च** = पनि
**दहेत्** = नष्ट गराओस्

**वाक्यार्थ–** प्राणायामहरूद्वारा वात, पित्त आदि रोग, धारणाद्वारा पापहरू, प्रत्याहारद्वारा विषयसँग हुने सम्बन्धजन्य दोष र ध्यानद्वारा राग, द्वेष इत्यादि दुर्गुणहरूलाई नष्ट गराओस्।

**यदा मनः स्वं विरजं योगेन सुसमाहितम्।**
**काष्ठां भगवतो ध्यायेत् स्वनासाग्रावलोकनः॥ १२॥**

**पदार्थ–**
**योगेन** = योगद्वारा
**यदा** = जब
**स्वं** = आफ्नो
**मनः** = मन
**विरजं** = निर्मल र
**सुसमाहितम्** = एकाग्र हुन्छ तब
**स्वनासाग्रावलोकनः** = आफ्नो नाकको अग्रभागमा मात्र दृष्टि केन्द्रित गरी
**भगवतः** = भगवान्‌को
**काष्ठां** = स्वरूपको
**ध्यायेत्** = ध्यान गरोस्

**वाक्यार्थ–** योगद्वारा जब आफ्नो मन निर्मल र एकाग्र हुन्छ तब आफ्नो नाकको अग्रभागमा मात्र दृष्टि केन्द्रित गरी भगवान्‌को स्वरूपको ध्यान गरोस्।

**प्रसन्नवदनाम्भोजं पद्मगर्भारुणेक्षणम्।**
**नीलोत्पलदलश्यामं शङ्खचक्रगदाधरम्॥ १३॥**

**पदार्थ–**
**प्रसन्नवदनाम्भोजं** = आनन्दले प्रफुल्लित मुखकमल भएका
**पद्मगर्भारुणेक्षणम्** = कमलको कोश जस्तै सुन्दर आँखा र
**नीलोत्पलदलश्यामं** = नीलकमल फूलझैं नीलो वर्ण भएका
**शङ्खचक्रगदाधरम्** = शङ्ख, चक्र र गदा हातमा धारण गर्नुहुने (भगवान्‌को ध्यान गर्नुपर्दछ)

**वाक्यार्थ–** आनन्दले प्रफुल्लित मुखकमल भएका, कमलको कोश जस्तै सुन्दर आँखा र नीलकमल फूलझैं नीलो वर्ण भएका, शङ्ख, चक्र र गदा हातमा धारण गर्नुहुने भगवान्‌को ध्यान गर्नुपर्दछ।

**लसत्पङ्कजकिञ्जल्कपीतकौशेयवाससम्।**
**श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभामुक्तकन्धरम्॥ १४॥**

**पदार्थ–**
**लसत्पङ्कजकिञ्जल्कपीतकौशेयवाससम्** = कमलको केशर जस्तै पहेँलो रेशमी वस्त्र लगाउनुभएका
**श्रीवत्सवक्षसं** = छातीमा श्रीवत्स चिह्न र
**भ्राजत्कौस्तुभामुक्तकन्धरम्** = गलामा चम्किरहेको कौस्तुभमणि धारण गर्नुभएका (भगवान्‌को ध्यान गर्नुपर्छ)

**वाक्यार्थ–** कमलको केशर जस्तै पहेँलो रेशमी वस्त्र लगाउनुभएका, छातीमा श्रीवत्स चिह्न र गलामा चम्किरहेको कौस्तुभमणि धारण गर्नुभएका भगवान्को ध्यान गर्नुपर्छ।

**मत्तद्विरेफकलया परीतं वनमालया।**

**परार्ध्यहारवलयकिरीटाङ्गदनूपुरम्॥ १५॥**

पदार्थ–

**मत्तद्विरेफकलया** = मदमत्त भमराको मधुर ध्वनिले युक्त
**वनमालया** = वनमालाद्वारा
**परीतं** = शरीर ढाक्नुभएका
**परार्ध्यहारवलयकिरीटाङ्गद-नूपुरम्** = बहुमूल्य हार, बाला, मुकुट, बाजुबन्द र पाउजुले सिँगारिएनुभएका (भगवान्को ध्यान गर्नुपर्छ)

**वाक्यार्थ–** मदमत्त भमराको मधुर ध्वनिले युक्त भएको वनमालाद्वारा शरीर ढाक्नुभएका, बहुमूल्य हार, बाला, मुकुट, बाजुबन्द र पाउजुले सिँगारिनुभएका भगवान्को ध्यान गर्नुपर्छ।

**काञ्चीगुणोल्लसच्छ्रोणिं हृदयाम्भोजविष्टरम्।**

**दर्शनीयतमं शान्तं मनोनयनवर्धनम्॥ १६॥**

पदार्थ–

**काञ्चीगुणोल्लसच्छ्रोणिं** = कम्मरमा सुवर्ण आदि आभूषणद्वारा बनेको पेटीले सजिनुभएका
**हृदयाम्भोजविष्टरम्** = भक्तहरूको हृदयकमलरूप आसनमा रहनुभएका
**दर्शनीयतमं** = दर्शन गर्न योग्य
**शान्तं** = शान्त एवं
**मनोनयनवर्धनम्** = मन र आँखालाई आनन्दित पार्नुहुने (भगवान्को ध्यान गर्नुपर्दछ)

**वाक्यार्थ–** कम्मरमा सुवर्ण आदि आभूषणले बनेको पेटीद्वारा सजिनुभएका, भक्तहरूको हृदयकमलरूप आसनमा रहनुभएका, दर्शन गर्न योग्य, शान्त एवं मन र आँखालाई आनन्दित पार्नुहुने भगवान्को ध्यान गर्नुपर्दछ।

**अपीच्यदर्शनं शश्वत् सर्वलोकनमस्कृतम्।**

**सन्तं वयसि कैशोरे भृत्यानुग्रहकातरम्॥ १७॥**

पदार्थ–

**अपीच्यदर्शनं** = अत्यन्त सुन्दर स्वरूपले युक्त
**सर्वलोकनमस्कृतम्** = सम्पूर्ण प्राणीहरूद्वारा नमस्कार गरिनुभएका
**शश्वत्** = सधैँ
**कैशोरे** = किशोर
**वयसि** = अवस्थामा
**सन्तं** = रहनुभएका
**भृत्यानुग्रहकातरम्** = भक्तहरू-माथि कृपा गर्नको लागि आतुर हुनुहुने (भगवान्को ध्यान गर्नुपर्छ)

**वाक्यार्थ–** अत्यन्त सुन्दर स्वरूपले युक्त, सम्पूर्ण प्राणीहरूद्वारा नमस्कार गरिनुभएका, सधैं किशोर अवस्थामा रहनुभएका एवं भक्तहरूमाथि कृपा गर्नको लागि आतुर हुनुहुने भगवान्‌को ध्यान गर्नुपर्छ।

**कीर्तन्यतीर्थयशसं पुण्यश्लोकयशस्करम्।**
**ध्यायेद् देवं समग्राङ्गं यावन्न च्यवते मनः॥ १८॥**

पदार्थ–

**कीर्तन्यतीर्थयशसं** = प्रशंसनीय पवित्र यशयुक्त
**पुण्यश्लोकयशस्करम्** = परम यशस्वीहरूको यशलाई बढाउने
**समग्राङ्गं** = सम्पूर्ण सुन्दर अङ्गहरूले युक्त हुनुभएका
**देवं** = भगवान्‌को
**ध्यायेत्** = त्यति वेलासम्म ध्यान गरोस्
**यावत्** = जति वेलासम्म
**मनः** = मन
**न च्यवते** = भगवान्‌को ध्यानबाट फर्कंदैन

**वाक्यार्थ–** प्रशंसनीय पवित्र यशयुक्त, परम यशस्वीहरूको यशलाई बढाउने एवं सम्पूर्ण सुन्दर अङ्गहरूले युक्त हुनुभएका भगवान्‌को त्यति वेलासम्म ध्यान गरोस् जति वेलासम्म मन भगवान्‌को ध्यानबाट फर्कंदैन।

**स्थितं व्रजन्तमासीनं शयानं वा गुहाशयम्।**
**प्रेक्षणीयेहितं ध्यायेच्छुद्धभावेन चेतसा॥ १९॥**

पदार्थ–

**शुद्धभावेन** = निष्कामभावले युक्त
**चेतसा** = आफ्नो मनद्वारा
**गुहाशयम्** = हृदयमा विराजमान
**प्रेक्षणीयेहितं** = दर्शनीय लीला गर्नुहुने (भगवान्‌को)
**स्थितं** = उभिनुभएको
**व्रजन्तम्** = हिँड्दै गर्नुभएको
**आसीनं** = बसिरहनुभएको
**शयानं** = सुतिरहनुभएको
**वा** = अथवा (स्वरूपको)
**ध्यायेत्** = ध्यान गरोस्

**वाक्यार्थ–** निष्कामभावले युक्त आफ्नो मनले हृदयमा विराजमान, दर्शनीय लीला गर्नुहुने भगवान्‌को उभिनुभएको, हिँड्दै गर्नुभएको, बसिरहनुभएको अथवा सुतिरहनुभएको स्वरूपको ध्यान गरोस्।

**तस्मिँल्लब्धपदं चित्तं सर्वावयवसंस्थितम्।**
**विलक्ष्यैकत्र संयुज्यादङ्गे भगवतो मुनिः॥ २०॥**

पदार्थ–

**तस्मिन्** = भगवान्‌को विग्रहमा
**लब्धपदं** = स्थिर भएर
**सर्वावयवसंस्थितम्** = भगवान्‌का सम्पूर्ण अङ्गप्रत्यङ्गमा लागेको
**चित्तं** = मनलाई
**विलक्ष्य** = जानेर

**मुनिः** = योगीले (आफ्नो मनलाई)
**भगवतः** = भगवान्‌को
**एकत्र** = एक–एक
**अङ्गे** = अङ्गमा
**संयुञ्ज्याद्** = स्थिर गराओस्

**वाक्यार्थ–** योगीले जब भगवान्‌को विग्रहमा आफ्नो मन राम्रोसँग स्थिर भएको पाउँछ त्यसपछि उसले आफ्नो मनलाई भगवान्‌को एक–एक अङ्गमा स्थिर गराओस्।

**सञ्चिन्तयेद् भगवतश्चरणारविन्दं**
**वज्राङ्कुशध्वजसरोरुहलाञ्छनाढ्यम्।**
**उत्तुङ्गरक्तविलसन्नखचक्रवाल-**
**ज्योत्स्नाभिराहतमहद्धृदयान्धकारम्॥ २१॥**

**पदार्थ–**
**वज्राङ्कुशध्वजसरोरुहलाञ्छनाढ्यम्** = वज्र, अङ्कुश, ध्वजा, कमल आदिको चिह्नले युक्त
**उत्तुङ्गरक्तविलसन्नखचक्रवाल-ज्योत्स्नाभिः** = प्रकाशमय रातो रङ्गले सुशोभित लामा–लामा नखसमूहको कान्तिद्वारा
**आहतमहद्धृदयान्धकारम्** = आफ्नो ध्यान गर्ने भक्तहरूका हृदयको अन्धकारलाई नाश गर्ने
**भगवतः** = भगवान्‌का
**चरणारविन्दं** = चरणकमलको
**सञ्चिन्तयेत्** = ध्यान गरोस्

**वाक्यार्थ–** वज्र, अङ्कुश, ध्वजा, कमल आदिको चिह्नले युक्त एवं प्रकाशमय रातो रङ्गले सुशोभित लामा–लामा नखसमूहको कान्तिद्वारा आफ्नो ध्यान गर्ने भक्तहरूका हृदयको अन्धकारलाई नाश गर्ने भगवान्‌का चरणकमलको ध्यान गरोस्।

**यच्छौचनिःसृतसरित्प्रवरोदकेन**
**तीर्थेन मूर्ध्न्यधिकृतेन शिवः शिवोऽभूत्।**
**ध्यातुर्मनःशमलशैलनिसृष्टवज्रं**
**ध्यायेच्चिरं भगवतश्चरणारविन्दम्॥ २२॥**

**पदार्थ–**
**यच्छौचनिःसृतसरित्प्रवरोदकेन** = जुन चरणकमललाई प्रक्षालन गर्दै निस्केको पवित्र गङ्गाको जलरूप
**तीर्थेन** = संसारबाट तार्ने तीर्थलाई
**मूर्ध्नि** = शिरमा
**अधिकृतेन** = धारण गर्नाले
**शिवः** = महादेव पनि
**शिवः** = मङ्गलमय
**अभूत्** = हुनुभयो (यस्तो)
**ध्यातुः** = ध्यान गर्नेवाला भक्तका
**मनःशमलशैलनिसृष्टवज्रं** = चित्तमा रहेका पापका पर्वतलाई फोड्न छोडिएको वज्र समान भएका
**भगवतः** = भगवान्‌का

| | | |
|---|---|---|
| **चरणारविन्दम्** = चरणकमललाई | **चिरं** = लामो समयसम्म | **ध्यायेत्** = ध्यान गरोस् |

**वाक्यार्थ–** जुन चरणकमललाई प्रक्षालन गर्दै निस्केको पवित्र गङ्गाको जल संसारसागरबाट तार्ने तीर्थरूप छ, त्यो गङ्गाजल शिरमा धारण गरेर मात्र महादेव पनि मङ्गलमय हुनुभयो। ध्यान गर्नेवाला भक्तको चित्तमा रहेका पापका पर्वतहरूलाई फोड्न छोडिएका वज्रसमान भएका भगवान्‌का यस्ता चरणकमललाई लामो समयसम्म ध्यान गरोस्।

**जानुद्वयं जलजलोचनया जनन्या**
**लक्ष्म्याखिलस्य सुरवन्दितया विधातुः।**
**ऊर्वोर्निधाय करपल्लवरोचिषा यत्**
**संलालितं हृदि विभोरभवस्य कुर्यात्॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **जलजलोचनया** = कमलजस्तै आँखा भएकी | **लक्ष्म्या** = लक्ष्मीले | **करपल्लवरोचिषा** = प्रकाशमान करकमलले |
| **सुरवन्दितया** = देवताहरूद्वारा स्तुति गरिएकी | **अभवस्य** = जन्मरहित भएका | **संलालितं** = स्पर्श गर्दै सेवा गर्नुहुन्थ्यो (ती घुँडाको) |
| **अखिलस्य** = सम्पूर्ण जगत्‌को | **विभोः** = भगवान्‌का | **हृदि** = आफ्नो हृदयमा |
| **विधातुः** = सृष्टि गर्ने ब्रह्माजीकी | **यत्** = जुन | **कुर्यात्** = ध्यान गरोस् |
| **जनन्या** = आमा | **जानुद्वयं** = दुई घुँडालाई | |
| | **ऊर्वोः** = आफ्ना दुई जाँघमाथि | |
| | **निधाय** = राखेर | |

**वाक्यार्थ–** कमलजस्तै आँखा भएकी, सम्पूर्ण देवताहरूद्वारा स्तुतिगान गरिएकी एवं सम्पूर्ण जगत्‌को सृष्टि गर्ने ब्रह्माजीकी जननी लक्ष्मीले जन्मरहित भएका भगवान्‌का जुन दुई घुँडालाई आफ्ना दुई जाँघमाथि राखेर प्रकाशमान करकमलले स्पर्श गर्दै सेवा गर्नुहुन्थ्यो ती घुँडाको आफ्नो हृदयमा ध्यान गरोस्।

**ऊरू सुपर्णभुजयोरधिशोभमाना-**
**वोजोनिधी अतसिकाकुसुमावभासौ।**
**व्यालम्बिपीतवरवाससि वर्तमान-**
**काञ्चीकलापपरिरम्भिनितम्बबिम्बम्॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सुपर्णभुजयोः** = गरुडको काँधमाथि | **अधिशोभमानौ** = शोभायमान भएका | **अतसिकाकुसुमावभासौ** = आलसको फूलझैं |

नीलकान्तियुक्त
**ओजोनिधी** = शक्तिको केन्द्र भएको
**ऊरू** = भगवान्‌को उरूप्रदेशको ध्यान गरोस् (त्यसै गरी)
**व्यालम्बिपीतवरवाससि** = गोलीगाँठोसम्म लत्रिएको अत्यन्त सुन्दर पीताम्बरमा
**वर्तमानकाञ्चीकलापपरिरम्भि-नितम्बबिम्बम्** = सजाइएका मेखलाका झुत्ताहरूद्वारा आलिङ्गन गरिएको (भगवान्‌को) नितम्बबिम्बको (चिन्तन गरोस्)

**वाक्यार्थ–** गरुडको काँधमाथि शोभायमान भएका, आलसको फूलजस्तै नीलकान्तियुक्त एवं शक्तिको केन्द्र भएको भगवान्‌का उरूप्रदेशको ध्यान गरोस्। त्यसै गरी गोलीगाँठोसम्म लत्रिएको अत्यन्त सुन्दर पीताम्बरमा सजाइएका मेखलाका झुत्ताहरूद्वारा आलिङ्गन गरिएको भगवान्‌को नितम्बबिम्बको ध्यान गरोस्।

**नाभिह्रदं भुवनकोशगुहोदरस्थं**
**यत्रात्मयोनिधिषणाखिललोकपद्मम्।**
**व्यूढं हरिन्मणिवृषस्तनयोरमुष्य**
**ध्यायेद् द्वयं विशदहारमयूखगौरम्॥ २५॥**

**पदार्थ–**

**भुवनकोशगुहोदरस्थं** = सम्पूर्ण भुवनको उत्पत्तिको स्थान भएको भगवान्‌को उदरमा रहेको
**नाभिह्रदं** = नाभिसरोवरको ध्यान गरोस्
**यत्र** = जहाँबाट
**आत्मयोनिधिषणाखिल-लोकपद्मम्** = ब्रह्माजीको उत्पत्तिस्थान मानिएको सर्वलोकमय कमल
**व्यूढं** = उत्पन्न भएको थियो (त्यसै गरी)
**अमुष्य** = भगवान्‌को
**हरिन्मणिवृषस्तनयोः द्वयं** = उत्तम मरकतमणि जस्ता दुबै स्तनको
**ध्यायेत्** = ध्यान गरोस् जो
**विशदहारमयूखगौरम्** = निर्मल हारको प्रकाशबाट गोरो वर्णको देखिएका छन्

**वाक्यार्थ–** सम्पूर्ण भुवनहरूको उत्पत्तिको स्थान भएका भगवान्‌को उदरमा रहेको नाभिसरोवरको ध्यान गरोस् जहाँबाट ब्रह्माजीको उत्पत्तिस्थान मानिएको सर्वलोकमय कमल उत्पन्न भएको थियो। त्यसै गरी भगवान्‌का उत्तम मरकतमणि जस्ता दुबै स्तनको ध्यान गरोस् जो निर्मल हारको प्रकाशबाट गोरो वर्णका देखिएका छन्।

**वक्षोऽधिवासमृषभस्य महाविभूतेः**
**पुंसां मनोनयननिर्वृतिमादधानम्।**

**कण्ठं च कौस्तुभमणेरधिभूषणार्थं**
**कुर्यान्मनस्यखिललोकनमस्कृतस्य ॥ २६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **महाविभूतेः** = ऐश्वर्यशाली (लक्ष्मीजीको) **अधिवासम्** = निवासस्थान भएको **पुंसां** = ध्यान गर्ने भक्तहरूको **मनोनयननिर्वृतिम्** = मन र आँखालाई आनन्दित **आदधानम्** = तुल्याउने | **अखिललोकनमस्कृतस्य** = सम्पूर्ण लोकद्वारा नमस्कार गरिएका **ऋषभस्य** = भगवान् श्रीहरिको **वक्षः** = वक्षःस्थलको ध्यान गरोस् **कौस्तुभमणेः** = कौस्तुभमणिलाई नै | **अधिभूषणार्थं** = सुशोभित गर्नका लागि त्यस मणिलाई धारण गर्ने **कण्ठं** = कण्ठप्रदेशलाई **च** = पनि **मनसि** = मनमा **कुर्यात्** = ध्यान गरोस् |

**वाक्यार्थ–** ऐश्वर्यशाली लक्ष्मीजीको निवासस्थान भएको, ध्यान गर्ने भक्तहरूको मन र आँखालाई आनन्दित तुल्याउने एवं सम्पूर्ण लोकद्वारा नमस्कार गरिएको भगवान् श्रीहरिको वक्षःस्थलको ध्यान गरोस्। त्यसपछि कौस्तुभमणिलाई सुशोभित गर्नकै लागि त्यस मणिलाई धारण गर्ने कण्ठप्रदेशको पनि मनमा ध्यान गरोस्।

**बाहूंश्च मन्दरगिरेः परिवर्तनेन**
**निर्णिक्तबाहुवलयानधिलोकपालान्।**
**सञ्चिन्तयेद् दशशतारमसह्यतेजः**
**शङ्खं च तत्करसरोरुहराजहंसम्॥ २७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अधिलोकपालान्** = सम्पूर्ण लोकपालहरूको आश्रय भएका **मन्दरगिरेः** = मन्दर पर्वतलाई **परिवर्तनेन** = घुमाउँदा **निर्णिक्तबाहुवलयान्** = चम्किएका बालायुक्त | **बाहून्** = चार हातहरू एवं **असह्यतेजः** = सहन गर्न नसकिने तेजयुक्त **दशशतारम्** = हजारौं दाँतीहरू भएको सुदर्शनचक्र **च** = र | **तत्करसरोरुहराजहंसम्** = भगवान्को करकमलमा राजहंस समान शोभायमान भएको **शङ्खं** = शङ्खको **च** = पनि **सञ्चिन्तयेत्** = ध्यान गर्नू |

**वाक्यार्थ–** सम्पूर्ण लोकपालहरूको आश्रय भएका भगवान्का चार हातहरूको ध्यान गर्नू, जुन हातहरूमा लगाइएका बाला आदि आभूषणहरू समुद्रमन्थनको समयमा मन्दराचल पर्वतलाई घुमाउँदा निस्केको प्रकाशले चम्किएका छन्। त्यसै गरी असह्य तेजयुक्त एवं हजारौं दाँतीहरू

भएको सुदर्शनचक्र र भगवान्का करकमलमा राजहंससमान शोभायमान भएको शङ्खको पनि ध्यान गर्नू।

**कौमोदकीं भगवतो दयितां स्मरेत**
**दिग्धामरातिभटशोणितकर्दमेन।**
**मालां मधुव्रतवरूथगिरोपघुष्टां**
**चैत्यस्य तत्त्वममलं मणिमस्य कण्ठे॥ २८॥**

पदार्थ–

**अरातिभटशोणितकर्दमेन** = दैत्य सेनाहरूको रगतरूपी हिलोले
**दिग्धाम्** = लिप्त भएको
**भगवतः** = भगवान्को
**दयितां** = अत्यन्त प्रिय
**कौमोदकीं** = कौमोदकी गदाको
**स्मरेत** = स्मरण (ध्यान) गर्नू
**मधुव्रतवरूथगिरोपघुष्टां** = भ्रमरहरूको समूहबाट निस्केको ध्वनिले शब्दायमान
**मालां** = वनमालाको (ध्यान गर्नू, त्यसै गरी)
**कण्ठे** = घाँटीमा रहेको
**अमलं** = दोषरहित भएको
**चैत्यस्य** = जीवको
**तत्त्वम्** = तत्त्वस्वरूप मानिएको
**अस्य** = भगवान्को
**मणिम्** = कौस्तुभमणिको (पनि ध्यान गर्नू)

**वाक्यार्थ–** दैत्य सेनाहरूको रगतरूपी हिलोले लिप्त भएको भगवान्को अत्यन्त प्रिय कौमोदकी गदाको स्मरण गर्नू। भ्रमरहरूको समूहबाट निस्केको ध्वनिले शब्दायमान वनमालाको ध्यान गर्नू। त्यसै गरी घाँटीमा रहेको, दोषरहित भएको, जीवको तत्त्वस्वरूप मानिएको एवं भगवान्द्वारा लगाइएको कौस्तुभमणिको पनि ध्यान गरोस्।

**भृत्यानुकम्पितधियेह गृहीतमूर्तेः**
**सञ्चिन्तयेद् भगवतो वदनारविन्दम्।**
**यद् विस्फुरन्मकरकुण्डलवल्गितेन**
**विद्योतितामलकपोलमुदारनासम्॥ २९॥**

पदार्थ–

**भृत्यानुकम्पितधिया** = आफ्ना भक्तमाथि अनुकम्पा गर्नका लागि
**इह** = यस मर्त्यलोकमा
**गृहीतमूर्तेः** = अवतार ग्रहण गर्नुहुने
**भगवतः** = भगवान् नारायणका
**विस्फुरन्मकरकुण्डलवल्गितेन** = कानमा लगाइएका चम्किला कुण्डल हल्लिनाले
**विद्योतितामलकपोलम्** = अत्यन्त चम्किएका गाला भएको
**उदारनासम्** = अत्यन्त मनमोहक नासिकाले युक्त
**यत्** = जुन

| | | |
|---|---|---|
| **वदनारविन्दम्** = मुखकमल छ | (त्यसको पनि) | **सञ्चिन्तयेत्** = ध्यान गरोस् |

**वाक्यार्थ–** आफ्ना भक्तमाथि अनुकम्पा गर्नका लागि यस मर्त्यलोकमा अवतार ग्रहण गर्नुहुने भगवान् नारायणका कानमा लगाइएका चम्किला कुण्डल हल्लिनाले अत्यन्त चम्किएका गाला एवं अत्यन्त मनमोहक नासिका भएको जुन कमल जस्तै सुन्दर अनुहार छ त्यसको पनि ध्यान गरोस्।

**यच्छ्रीनिकेतमलिभिः परिसेव्यमानं**
**भूत्या स्वया कुटिलकुन्तलवृन्दजुष्टम्।**
**मीनद्वयाश्रयमधिक्षिपदब्जनेत्रं**
**ध्यायेन्मनोमयमतन्द्रित उल्लसद्भ्रु ॥ ३० ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कुटिलकुन्तलवृन्दजुष्टम्** = घुम्रिएको कपालको समूहद्वारा सुशोभित | **मीनद्वयाश्रयम्** = माछाको जोडी रहेको | **उल्लसद्भ्रु** = उन्नत आँखीभौँद्वारा सुशोभित |
| **स्वया** = आफ्नो | **श्रीनिकेतम्** = लक्ष्मीको आश्रय भएको कमलको | **मनोमयम्** = मनोहर |
| **भूत्या** = ऐश्वर्यद्वारा | **अधिक्षिपदब्जनेत्रं** = शोभालाई पनि तिरस्कार गर्न सक्ने कमलनयनद्वारा सुशोभित एवं | **यत्** = जुन मुखारविन्द छ (त्यसको) |
| **अलिभिः** = भमराहरूद्वारा | | **अतन्द्रितः** = सावधान भएर |
| **परिसेव्यमानं** = सेवित | | **ध्यायेत्** = ध्यान गर्नू |

**वाक्यार्थ–** घुम्रिएको कपालको समूहद्वारा सुशोभित भगवान्‌को मुखमण्डलले आफ्नो सौन्दर्यद्वारा भमराहरूद्वारा सेवित कमलको कोशलाई पनि तिरस्कार गरिरहेको छ र भगवान्‌का कमलसदृश ठूला एवं चञ्चल नेत्रले त्यसै कमलमाथि खेलिरहेका माछाको जोडीको शोभालाई पनि तिरस्कार गरिरहेका छन्। उन्नत आँखीभौँद्वारा सुशोभित भगवान्‌को त्यस्तो मनोहर अनुहारलाई मनमा राखेर सावधान भएर त्यसैको ध्यान गर्नू।

**तस्यावलोकमधिकं कृपयातिघोर-**
**तापत्रयोपशमनाय निसृष्टमक्ष्णोः।**
**स्निग्धस्मितानुगुणितं विपुलप्रसादं**
**ध्यायेच्चिरं विपुलभावनया गुहायाम्॥ ३१ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कृपया** = कृपा र | **अधिकं** = अत्यन्त | **विपुलप्रसादं** = ज्यादै प्रसन्नता |

दिने
**स्निग्धस्मितानुगुणितं** = स्नेहयुक्त मुस्कानद्वारा युक्त भएको
**अतिघोरतापत्रयोपशमनाय** = अत्यन्त डरलाग्दा आध्यात्मिक, आधिभौतिक र आधिदैविक यी तापत्रय नाश गर्नका लागि
**तस्य** = भगवान्को
**अक्ष्णोः** = आँखाबाट
**निसृष्टम्** = निक्लेको
**अवलोकम्** = हेराइलाई
**विपुलभावनया** = ज्यादै प्रेमभावका साथ
**चिरं** = लामो समयसम्म
**गुहायाम्** = हृदयरूपी गुफामा
**ध्यायेत्** = ध्यान गर्नू

**वाक्यार्थ–** आफ्नो हृदयरूपी गुफामा ज्यादै प्रेमभावका साथ लामो समयसम्म भगवान्का नेत्रका हेराइको ध्यान गर्नू, जुन हेराइ कृपा एवं ज्यादै प्रसन्नता दिने र स्नेहयुक्त मुस्कानद्वारा झन्-झन् सुन्दर हुन्छ र जुन हेराइ अत्यन्त डरलाग्दा आध्यात्मिक, आधिभौतिक र आधिदैविक तापको नाश गर्नका लागि प्रकट हुन्छ।

**हासं हरेरवनताखिललोकतीव्र-**
**शोकाश्रुसागरविशोषणमत्युदारम्।**
**सम्मोहनाय रचितं निजमाययास्य**
**भ्रूमण्डलं मुनिकृते मकरध्वजस्य॥ ३२॥**

**पदार्थ–**
**हरेः** = भगवान् श्रीहरिको
**अवनताखिललोकतीव्रशोकाश्रु-सागरविशोषणम्** = सम्पूर्ण भक्तजनको अश्रुसागरलाई छिटोभन्दा छिटो सुकाइदिएर सुख प्राप्त गराउने
**अत्युदारम्** = अत्यन्त उदार
**हासं** = मुस्कानलाई (ध्यान गर्नू)
**मुनिकृते** = मुनिको उपकारक र
**मकरध्वजस्य** = कामदेवलाई
**सम्मोहनाय** = मोहित गर्नको लागि
**निजमायया** = आफ्नो मायाद्वारा
**रचितं** = रचना गरिएको
**अस्य** = यहाँ भगवान्का
**भ्रूमण्डलं** = आँखीभौँको पनि (ध्यान गर्नू)

**वाक्यार्थ–** भगवान् श्रीहरिको सम्पूर्ण भक्तजनको अश्रुसागरलाई छिटोभन्दा छिटो सुकाइदिएर सुख प्राप्त गराउने अत्यन्त उदार मुस्कानको ध्यान गरोस्। मुनिलाई उपकार र कामदेवलाई मोहित गर्नको लागि आफ्नो मायाद्वारा रचना गरिएको भगवान्को आँखीभौँको पनि ध्यान गर्नू।

**ध्यानायनं प्रहसितं बहुलाधरोष्ठ-**
**भासारुणायिततनुद्विजकुन्दपङ्क्ति।**
**ध्यायेत् स्वदेहकुहरेऽवसितस्य विष्णो-**
**र्भक्त्यार्द्रयार्पितमना न पृथग्दिदृक्षेत्॥ ३३॥**

पदार्थ–

**स्वदेहकुहरे** = आफ्नो हृदयगुफामा
**अवसितस्य** = विराजमान
**विष्णोः** = भगवान् विष्णुको
**ध्यानायनं** = ध्यान गर्न योग्य
**बहुलाधरोष्ठभासारुणायिततनु-द्विजकुन्दपङ्क्ति** = माथिको र तल्लो ओठको अत्यधिक कान्तिका कारण कुन्द फूल जस्तै सेता छोटा-छोटा दाँतका लहरले युक्त
**प्रहसितं** = हाँसोको
**ध्यायेत्** = ध्यान गरोस् (यसरी)
**भक्त्यार्द्रया** = अत्यन्त प्रेमार्द्र भावले (भगवान्मा)
**अर्पितमनाः** = मन अर्पण गरेपछि
**पृथग्** = अन्य पदार्थलाई
**न दिदृक्षेत्** = देख्ने इच्छा नगर्नू

**वाक्यार्थ–** आफ्नो हृदयगुफामा विराजमान भगवान् विष्णुको हाँसोको ध्यान गर्नू, जुन हाँसो ध्यान गर्न योग्य छ र जुन हाँसो भगवान्को माथिको र तल्लो ओठको अत्यधिक कान्तिका कारण कुन्द फूल जस्तै सेता छोटा-छोटा दाँतका लहरले युक्त छ। यस प्रकार अत्यन्त प्रेमार्द्र भावले भगवान्मा मन अर्पण गरेर ध्यानमा रहेपछि अन्य पदार्थलाई देख्ने इच्छा नगर्नू।

**एवं हरौ भगवति प्रतिलब्धभावो**
**भक्त्या द्रवद्धृदय उत्पुलकः प्रमोदात्।**
**औत्कण्ठ्यबाष्पकलया मुहुरर्द्यमान-**
**स्तच्चापि चित्तबडिशं शनकैर्वियुङ्क्ते ॥ ३४ ॥**

पदार्थ–

**एवं** = यसरी (ध्यान गरिसकेपछि)
**भगवति** = भगवान्
**हरौ** = हरिमा
**प्रतिलब्धभावः** = अत्यन्त प्रेमभाव बढेको र
**भक्त्या** = भक्तिद्वारा
**द्रवद्धृदयः** = हृदय द्रवीभूत भएको एवं
**प्रमोदात्** = आनन्दले
**उत्पुलकः** = रोमाञ्चित भएको साधकले
**औत्कण्ठ्यबाष्पकलया** = उत्कण्ठाजन्य खुसीको अश्रुधाराद्वारा
**मुहुः** = बारम्बार
**अर्द्यमानः** = नुहाउँदै
**तत्** = त्यो
**चित्तबडिशं** = भगवत्प्राप्तिका लागि बल्छीजस्तै भएको चित्तलाई
**अपि च** = पनि
**शनकैः** = बिस्तारै-बिस्तारै
**वियुङ्क्ते** = ध्येय परमात्माबाट हटाउँछ

**वाक्यार्थ–** यसरी ध्यान गरिसकेपछि भगवान् श्रीहरिमा अत्यन्त प्रेम भाव बढेको र भक्तिद्वारा हृदय द्रवीभूत भएको एवं आनन्दले रोमाञ्चित भएको साधकले उत्कण्ठाजन्य खुसीको अश्रुधारामा बारम्बार नुहाउँदै भगवत्प्राप्तिका लागि बल्छीजस्तै भई भगवत्प्राप्तिका लागि साधन भएको चित्तलाई पनि बिस्तारै-बिस्तारै ध्येय परमात्माबाट हटाउँछ।

**मुक्ताश्रयं यर्हि निर्विषयं विरक्तं**
**निर्वाणमृच्छति मनः सहसा यथार्चिः।**
**आत्मानमत्र पुरुषोऽव्यवधानमेक-**
**मन्वीक्षते प्रतिनिवृत्तगुणप्रवाहः॥ ३५॥**

**पदार्थ–**

**यथा** = जसरी
**अर्चिः** = दियोको ज्वाला (तेल सकिएपछि आफ्नो कारणरूप तेजमा विलीन हुन्छ त्यसै गरी)
**यर्हि** = जब
**मुक्ताश्रयं** = आफ्नो आश्रय अहङ्कारलाई छोडेको
**निर्विषयं** = कुनै पनि विषयमा संलग्न नभएको
**विरक्तं** = विषयबाट टाढा रहेको
**मनः** = मन
**सहसा** = अचानक
**निर्वाणम्** = ब्रह्माकार भावमा
**ऋच्छति** = प्राप्त हुन्छ
**अत्र** = यस अवस्थामा
**पुरुषः** = जीवात्माले
**प्रतिनिवृत्तगुणप्रवाहः** = प्रकृतिका गुणको कारणले खडा भएका देह आदि उपाधिबाट निवृत्त भएपछि
**अव्यवधानम्** = ध्याता, ध्येय, ध्यान इत्यादि भावले रहित
**एकम्** = एक मात्र
**आत्मानम्** = परमात्मालाई
**अन्वीक्षते** = सर्वत्र देख्न थाल्दछ

**वाक्यार्थ–** जसरी दियोको ज्वाला तेल सकिएपछि आफ्नो कारणरूप तेजमा विलीन हुन्छ त्यसै गरी आफ्नो आश्रय अहङ्कारलाई छोडेको, कुनै पनि विषयमा संलग्न नभएको एवं विषयबाट टाढा रहेको मन अचानक ब्रह्माकार भावमा प्राप्त हुन्छ। त्यस अवस्थामा जीवात्माले प्रकृतिका गुणको कारणले खडा भएका देह आदि उपाधिबाट निवृत्त भएपछि ध्याता, ध्येय, ध्यान इत्यादि भावले रहित एक मात्र परमात्मालाई सर्वत्र देख्न थाल्दछ।

**विवरण–** ध्याता भनेको ध्यान गर्ने जीव हो, ध्येय परमात्मा हुन् र उनमा अनुराग राखी गरिने निरन्तर चिन्तन ध्यान हो। ध्यानकालमा यी तीनवटै चीज स्फुरित भएका हुन्छन्। त्यसैले ध्यानमा परमात्माको अखण्ड आनन्द अनुभव गर्न सकिन्न। भगवत्प्रेम र निरन्तर भगवच्चिन्तनबाट सूक्ष्म र विक्षेपरहित भएको चित्त बिस्तारै ध्याता, ध्यान र ध्येयबाट पनि निवृत्त भई आफ्नै स्वरूपमा शान्त हुन उन्मुख हुन्छ।

जसरी तेल सकिएपछि दियोको ज्वाला आफ्नो कारण तेज तत्त्वमा मिल्छ, त्यसै गरी अन्तःकरणको राग समाप्त भएपछि अन्तःकरण पनि त्रिपुटीबाट अलग बन्दछ र परमात्मामा मिल्दछ। शरीर आदि उपाधि हुँदा नै समस्त भेदव्यवहार चल्दछ। जब शरीर आदि उपाधिहरू प्रगाढ ध्यानबाट निवृत्त हुन्छन् तब पुरुष पनि त्रिपुटीबाट निवृत्त हुन्छ। यो व्यवधान अथवा अवरोध नभएको स्थिति हो जहाँ अन्तःकरण आफूभन्दा अलग ध्येय वस्तुको चिन्तन गर्न सक्रिय हुँदैन। यो समयमा अन्तःकरण आफ्नो मूलस्वरूप परमात्मतत्त्वमा गई लीन बन्दछ र त्रिपुटीको भान हराएर अखण्ड आनन्दस्वरूप ध्येय वस्तु मात्र स्फुरित हुन्छ। शरीर आदि उपाधिको प्रतीति

नष्ट भएपछि मात्र यो स्थिति आउँछ।

**सोऽप्येतया चरमया मनसो निवृत्त्या**
**तस्मिन् महिम्न्यवसितः सुखदुःखबाह्ये।**
**हेतुत्वमप्यसति कर्तरि दुःखयोर्यत्**
**स्वात्मन्विधत्त उपलब्धपरात्मकाष्ठः॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एतया** = यस किसिमको | **सः** = त्यो योगी | **यत्** = जो |
| योगाभ्यासबाट प्राप्त | **अपि** = पनि | **दुःखयोः** = सुखदुःखको |
| **मनसः** = मनको | **तस्मिन्** = त्यो परमपुरुषार्थभूत | **हेतुत्वम्** = भोक्तृत्व |
| **चरमया** = अविद्याले रहित | **सुखदुःखबाह्ये** = सुख र दुःखले | **स्वात्मन्** = आफैँमा (देखथ्यो |
| भएको चरम | रहित भएको | त्यो भोक्तृत्व) |
| **निवृत्त्या** = लयरूप निवृत्तिबाट | **महिम्नि** = परब्रह्म पदमा | **असति** = अविद्याजन्य |
| **उपलब्धपरात्मकाष्ठः** = परब्रह्म | **अवसितः** = प्राप्त हुन्छ | **कर्तरि** = अहङ्कारमा नै (छ भन्ने) |
| परमात्माको साक्षात्कार गरेको | **अपि** = र | **विधत्ते** = गर्दछ (देखदछ) |

**वाक्यार्थ–** योगाभ्यासबाट प्राप्त भएको मनको यस अविद्यारहित लयरूप चरम निवृत्तिद्वारा आफ्नो सुख-दुःखरहित ब्रह्मरूप महिमामा स्थित भएर परमात्मतत्त्वको साक्षात्कार गरिसकेपछि त्यो योगीले जुन सुख-दुःखको भोक्तृत्वलाई पहिला अज्ञानवश आफ्नै स्वरूपमा देखदथ्यो त्यसलाई अब अविद्याजन्य अहङ्कारमा नै देखदछ।

**विवरण–** वेदान्तसिद्धान्तअनुसार आत्मा ज्ञानरूप भएकाले ऊ ज्ञाता अथवा प्रमाता होइन, प्रमाता नभएकाले ऊ कर्ता होइन, कर्ता नभएकाले ऊ भोक्ता पनि होइन। जसले केही जान्दछ उसलाई प्रमाता भनिन्छ। जसले केही गर्दछ उसलाई कर्ता भनिन्छ। अनि जसले कुनै पनि पदार्थको भोग गर्दछ उसलाई भोक्ता भनिन्छ। यो प्रमातृत्व, कर्तृत्व र भोक्तृत्व आदि धर्महरू आत्मासँग सम्बन्धित नभएर अहङ्कारसँग सम्बन्धित धर्म हुन्। कुनै पनि वस्तुले आफ्नो असली धर्मलाई कुनै पनि परिस्थितिमा छाड्दैन। आगोको धर्म उष्णता हो र जलको धर्म चिसोपन हो। अतः अग्निले आफ्नो उष्णता र जलले चिसोपन छाड्दैनन्।

जसरी जपाकुसुमको सान्निध्यले जपाकुसुममा रहेको रातोपनको प्रतीति स्फटिकमा हुन्छ र स्फटिक स्वच्छ भए तापनि रातो देखिन्छ त्यसै गरी जाग्रत् र स्वप्न अवस्थामा अहङ्कार हुनाले अहङ्कारमा रहेका प्रमातृत्व, कर्तृत्व र भोक्तृत्वको प्रतीति आत्मामा हुन थाल्दछ। जसरी एकपटक जपाकुसुमलाई हटाएर स्फटिकको स्वच्छताको ज्ञान भएपछि फेरि जपाकुसुम अगाडि ल्याउँदा फेरि स्फटिक रातो देखिए तापनि जसलाई स्फटिकको स्वच्छताको ज्ञान भएको छ उसले

'वास्तवमा स्फटिक त स्वच्छ छ तर जपाकुसुमको सान्निध्यको कारणले जपाकुसुमको रातोपन स्फटिकमा देखिएको मात्र हो, वस्तुतः स्फटिक स्वच्छ नै छ' भन्दछ। त्यसै गरी जब मुमुक्षुले एक पटक ब्रह्माकार वृत्तिद्वारा अविद्याको निवृत्ति गरेर आत्मा अप्रमाता, अकर्ता र अभोक्ता हो भन्ने ज्ञान गर्दछ त्यसपछि फेरि प्रारब्धभोगको कारणले अविद्यालेशद्वारा फेरि पनि आत्मामा प्रमातृत्व आदि प्रतीति भए तापनि यी प्रमातृत्व, कर्तृत्व र भोक्तृत्व आदि धर्महरू अहङ्कारका धर्म हुन्, आत्मामा यी केवल प्रतीत मात्र भएका हुन् भन्ने कुरा उसले जान्दछ।

**देहं च तं न चरमः स्थितमुत्थितं वा**
**सिद्धो विपश्यति यतोऽध्यगमत् स्वरूपम्।**
**दैवादुपेतमथ दैववशादपेतं**
**वासो यथा परिकृतं मदिरामदान्धः॥ ३७॥**

**पदार्थ–**

**यथा** = जसरी
**मदिरामदान्धः** = मदिराको नशामा डुबेको मान्छेले
**परिकृतं** = कम्मर आदिमा बाँधिएको
**वासः** = कपडा (खसे पनि वास्ता गर्दैन)
**अथ** = त्यसरी नै
**चरमः** = चरम अवस्थामा पुगेको
**सिद्धः** = योगीले
**दैवात्** = प्रारब्धअनुसार
**स्थितम्** = आसनमा बसेको
**उत्थितं** = आसनबाट उठेको
**दैववशात्** = प्रारब्धकर्मअनुसार
**अपेतं** = अन्यत्र गएको अथवा
**उपेतम्** = पुनः प्राप्त भएको
**वा** = अथवा
**तं** = त्यस
**देहं** = शरीरलाई
**च** = पनि
**न विपश्यति** = वास्ता गर्दैन
**यतः** = किनभने (उसले)
**स्वरूपम्** = परब्रह्म परमात्माको स्वरूपलाई
**अध्यगमत्** = प्राप्त गरिसकेको हुन्छ

**वाक्यार्थ–** जसरी मदिराको नशामा डुबेको मान्छेले कम्मर आदिमा बाँधिएको कपडा खसे पनि वास्ता गर्दैन त्यसरी नै चरम अवस्थामा पुगेको योगीले प्रारब्धअनुसार आसनमा बसेको, आसनबाट उठेको अथवा प्रारब्धकर्मअनुसार अन्यत्र गएको अथवा पुनः प्राप्त भएको त्यस शरीरलाई पनि वास्ता गर्दैन, किनभने उसले परब्रह्म परमात्माको स्वरूपलाई प्राप्त गरिसकेको हुन्छ।

**देहोऽपि दैववशगः खलु कर्म यावत्**
**स्वारम्भकं प्रतिसमीक्षत एव सासुः।**

**तं सप्रपञ्चमधिरूढसमाधियोगः**
**स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः ॥ ३८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यावत्** = जति वेलासम्म | **अपि** = पनि | **सप्रपञ्चम्** = प्रपञ्चले सहित भएको |
| **स्वारम्भकं** = शरीरलाई उत्पन्न गराउने | **सासुः** = जीवित भएर | **स्वाप्नं** = स्वप्नजस्तै अयथार्थ |
| **कर्म** = प्रारब्ध कर्म (रहन्छ) | **एव** = नै | **तं** = त्यस देहलाई |
| **खलु** = त्यति वेलासम्म नै | **प्रतिसमीक्षते** = रहिरहन्छ | **पुनः** = फेरि |
| **दैववशगः** = प्रारब्ध संस्कारको वशमा परेको | **अधिरूढसमाधियोगः** = योगद्वारा समाधिमा स्थित भएको | **न भजते** = स्वीकार गर्दैन |
| **देहः** = शरीर | **प्रतिबुद्धवस्तुः** = आत्मतत्त्वको साक्षात्कार गरेको योगीले | |

**वाक्यार्थ–** जति वेलासम्म शरीरलाई उत्पन्न गराउने प्रारब्ध कर्म रहन्छ त्यति वेलासम्म प्रारब्ध संस्कारको वशमा परेको शरीर चाहिँ जीवित भएर नै रहिरहन्छ। योगद्वारा समाधिमा स्थित भएको हुनाले आत्मतत्त्वको साक्षात्कार गरेको योगीले प्रपञ्चले सहित भएको स्वप्नजस्तै अयथार्थ त्यस देहलाई फेरि स्वीकार गर्दैन।

**यथा पुत्राच्च वित्ताच्च पृथङ्मर्त्यः प्रतीयते ।**
**अप्यात्मत्वेनाभिमताद् देहादेः पुरुषस्तथा ॥ ३९ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यथा** = जसरी | **च** = पनि | **अभिमतात्** = मानिने |
| **मर्त्यः** = मरणधर्मा जीव | **पृथक्** = छुट्टै | **देहादेः** = देह, इन्द्रिय, अन्तःकरण आदिबाट |
| **पुत्रात्** = पुत्रदेखि | **प्रतीयते** = देखिन्छ | **अपि** = पनि |
| **च** = र | **तथा** = त्यसै गरी | **पुरुषः** = साक्षी पुरुष अलग छ |
| **वित्तात्** = धनदेखि | **आत्मत्वेन** = आत्मा भनेर | |

**वाक्यार्थ–** जसरी मरणधर्मा जीव पुत्र, धन आदिभन्दा छुट्टै देखिन्छ त्यसै गरी आत्मा भनेर मानिने देह, इन्द्रिय, अन्तःकरण आदिबाट पनि साक्षी पुरुष अलग छ।

**विवरण–** अविवेकी मनुष्यहरू आसक्तिले गर्दा छोरा, धन आदिमा आत्मबुद्धि गर्दछन्। वस्तुतः विचार गरेमा उसले छोरा, धन आदि वस्तुबाट आफूलाई भिन्न रहेको पाउँछ। यसै गरी मुमुक्षुले विचार गर्दा आत्मालाई पनि शरीरदेखि भिन्न रहेको पाउँछ। सामान्य मनुष्यहरूका लागि आत्मा र शरीर पृथक्-पृथक् वस्तु हुन् भन्ने बुझ्न गाह्रो छ। आत्मविचारको क्रममा सबभन्दा तल्लो स्तरका यी मानिसहरू **आत्मा वै जायते पुत्रः** भन्ने श्रुतिलाई प्रमाण मानी पुत्र नै आत्मा हो भन्ने आफ्नो

धारणालाई पुष्ट गर्दछन्। तर पुत्र र पत्नीदेखि आफू अलग हो भन्ने कुरा त सामान्य बुद्धिबाट पनि जान्न सकिन्छ। जसरी पुत्र आदिको मृत्यु हुँदा म पनि मरेँ भन्ने अनुभव भए पनि आफू पुत्रदेखि अलग हो भन्ने कुरा सामान्य मानिसलाई पनि थाहा हुन्छ, त्यसै गरी शरीरमा आत्मबुद्धि हुँदाहुँदै पनि शरीर आत्मा होइन भन्ने कुरा बुझ्नुपर्छ। 'जुन म बालककालमा आफ्नो पिताको काखमा बस्थेँ त्यही म अहिले पनातिहरूलाई खेलाइरहेको छु' भन्ने अनुभव हुन्छ। यदि शरीर आत्मा भएको भए बालकशरीर वृद्धशरीरमा परिवर्तन हुँदा आत्मा पनि अर्कै बन्नुपर्ने थियो। त्यसै गरी म देख्छु, म सुन्छु आदि अनुभवहरूबाट देख्ने र सुन्ने इन्द्रियहरूभन्दा आत्मतत्त्व भिन्न हो भन्ने थाहा हुन्छ।

यद्यपि यी सबै अवस्थाहरूमा अहं भनेर विषय गरिएको आत्मतत्त्वलाई नभईकन अहङ्कारलाई नै हो। अहङ्कार समेत शरीर र इन्द्रियभन्दा भिन्न छ भने आत्मतत्त्व जो शुद्ध अहं हो त्यो त झनै असङ्ग र अलग छ। अहङ्कारको मुख्य काम अपरिच्छिन्न र सर्वव्यापक आत्मतत्त्वलाई सानो क्षेत्रभित्र सीमित गरिदिनु हो। अहङ्कारबाट नै हरेक मनुष्यको सूक्ष्म शरीर र स्थूल शरीरको उत्पत्ति भएको हो। स्थूल शरीर भनेको हाडमासुले बनेको शरीर हो भने सूक्ष्म शरीर भनेको पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच प्राण अनि मन र बुद्धि गरी १७ वस्तुले बनेको शरीर हो। स्थूल शरीरको मृत्यु हुँदा पनि सूक्ष्म शरीर मर्दैन र त्यसैबाट पुनर्जन्मको चक्र चलिरहन्छ। यी दुई स्थूल र सूक्ष्म शरीर रहुन्जेल आत्मा सानो शरीरभित्र आफूलाई सीमित गर्न बाध्य हुन्छ। त्यही सीमित अनुभव नै अहङ्कार हो। सुषुप्ति अवस्थामा दुबै शरीरको भान हुँदैन, साक्षात् आत्मतत्त्वको मात्र अनुभव हुन्छ।

यस श्लोकमा आएको **देहादेः** यस पदको अर्थ माथि बताइएका स्थूल र सूक्ष्म दुबै शरीर हुन्। यी दुबै शरीर वास्तवमा आत्मा होइनन्। आत्मज्ञानीका लागि यी दुबै शरीर सपनामा देखिने शरीरजस्तै निःसार हुन्।

**यथोल्मुकाद् विस्फुलिङ्गाद् धूमाद् वापि स्वसम्भवात्।**
**अप्यात्मत्वेनाभिमताद् यथाग्निः पृथगुल्मुकात्॥ ४०॥**
**भूतेन्द्रियान्तःकरणात् प्रधानाज्जीवसंज्ञितात्।**
**आत्मा तथा पृथग् द्रष्टा भगवान् ब्रह्मसंज्ञितः॥ ४१॥**

पदार्थ–

**यथा** = जसरी
**उल्मुकाद्** = जल्दै गरेको काठबाट
**स्वसम्भवात्** = आफूबाट उत्पन्न भएको
**विस्फुलिङ्गात्** = झिल्काबाट
**धूमात्** = धुवाँबाट
**वा अपि** = पनि
**आत्मत्वेन** = आगो नै हो भनेर
**अभिमताद्** = मानिएको
**उल्मुकात्** = अगुल्टोबाट
**अपि** = पनि

**अग्निः** = आगो
**पृथक्** = भिन्नै छ
**तथा** = त्यसै गरी
**भूतेन्द्रियान्तःकरणात्** = भूत, इन्द्रिय र अन्तःकरणबाट
**प्रधानात्** = प्रकृतिबाट र
**जीवसंज्ञितात्** = जीव मानिएको अल्पज्ञत्वविशिष्ट चैतन्यबाट पनि
**भगवान्** = भगवान्
**द्रष्टा** = साक्षीरूप
**ब्रह्मसंज्ञितः** = ब्रह्म भनिने
**आत्मा** = परमात्मा पनि
**पृथक्** = भिन्नै हुनुहुन्छ

**वाक्यार्थ–** जसरी बल्दै गरेको काठ, आफूबाट उत्पन्न भएको झिल्का, धुवाँ र यही नै आगो हो भनेर मानिएको अगुल्टोबाट पनि आगो भिन्नै छ त्यसै गरी भूत, इन्द्रिय, अन्तःकरण, प्रकृति र जीव मानिएको अल्पज्ञत्वविशिष्ट चैतन्यबाट पनि भगवान् साक्षीरूप ब्रह्म वा परमात्मा भिन्नै हुनुहुन्छ।

**टिप्पणी–** यहाँ भूत, इन्द्रिय र अन्तःकरणलाई धुवाँ, प्रकृतिलाई काठ, जीवलाई झिल्का र परमात्मालाई आगोसँग तुलना गरिएको छ।

**सर्वभूतेषु चात्मानं सर्वभूतानि चात्मनि।**
**ईक्षेतानन्यभावेन भूतेष्विव तदात्मताम्॥ ४२॥**

**पदार्थ–**

**भूतेषु** = पञ्च महाभूतबाट बनेका सम्पूर्ण पदार्थहरूमा
**तदात्मताम्** = कारणरूपले पञ्च महाभूत नै
**इव** = रहेको जस्तै (स्वरूपको साक्षात्कार भएपछि)
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा
**आत्मानं** = आफूलाई
**च** = र
**आत्मनि** = आफूमा
**सर्वभूतानि** = सम्पूर्ण प्राणीहरूलाई
**अनन्यभावेन** = अभिन्नरूपले
**ईक्षेत** = रहेको देख्नू

**वाक्यार्थ–** पञ्च महाभूतबाट बनेका सम्पूर्ण पदार्थहरूमा कारणरूपले पञ्च महाभूत नै रहेको जस्तै स्वरूपको साक्षात्कार भएपछि सम्पूर्ण प्राणीहरूमा आफूलाई र आफूमा सम्पूर्ण प्राणीहरूलाई अभिन्नरूपले रहेको देख्नू।

**स्वयोनिषु यथा ज्योतिरेकं नाना प्रतीयते।**
**योनीनां गुणवैषम्यात् तथात्मा प्रकृतौ स्थितः॥ ४३॥**

**पदार्थ–**

**यथा** = जसरी
**एकं** = एउटै
**ज्योतिः** = अग्नि
**स्वयोनिषु** = आफ्नो कारणरूप तृण आदिमा
**नाना** = विभिन्न रूपले
**प्रतीयते** = देखिन्छ
**तथा** = त्यसै गरी
**गुणवैषम्यात्** = भिन्नभिन्न गुणका कारणले
**योनीनां** = मनुष्य, देव, गन्धर्व इत्यादि
**प्रकृतौ** = शरीरमा
**आत्मा** = परमात्मा पनि (विभिन्न रूपले)

**स्थितः** = रहेको छ

**वाक्यार्थ–** जसरी एउटै अग्नि आफ्नो कारणरूप तृण आदिमा विभिन्न रूपले देखिन्छ त्यसै गरी भिन्नभिन्न गुणका कारणले मनुष्य, देव, गन्धर्व इत्यादि शरीरमा परमात्मा पनि विभिन्न रूपले रहेको छ।

**तस्मादिमां स्वां प्रकृतिं दैवीं सदसदात्मिकाम्।**
**दुर्विभाव्यां पराभाव्य स्वरूपेणावतिष्ठते ॥ ४४ ॥**

**पदार्थ–**

**तस्मात्** = यसैले (मेरो भक्त)
**सदसदात्मिकाम्** = कार्यकारणरूपले अवस्थित
**स्वां** = आफैँलाई मोहमा पार्ने
**दैवीं** = परमात्माको शक्तिरूप
**दुर्विभाव्यां** = अचिन्त्य
**इमां** = यस
**प्रकृतिं** = प्रकृतिलाई
**पराभाव्य** = जितेर
**स्वरूपेण** = ब्रह्मस्वरूपमा
**अवतिष्ठते** = अवस्थित हुन्छ

**वाक्यार्थ–** यसैले मेरो भक्त कार्यकारणरूपले अवस्थित आफैँलाई मोहमा पार्ने परमात्माको शक्तिरूप अचिन्त्य यस प्रकृतिलाई जितेर ब्रह्मस्वरूपमा अवस्थित हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**
**कापिलेये साधनानुष्ठानं नामाष्टाविंशोऽध्यायः ॥ २८ ॥**

# अथ एकोनत्रिंशोऽध्यायः

## भक्तिको मर्म र कालको महिमा

**देवहूतिरुवाच** (देवहूतिले भन्नुभयो)

**लक्षणं महदादीनां प्रकृतेः पुरुषस्य च ।**

**स्वरूपं लक्ष्यतेऽमीषां येन तत्पारमार्थिकम् ॥ १ ॥**

**यथा साङ्ख्येषु कथितं यन्मूलं तत् प्रचक्षते ।**

**भक्तियोगस्य मे मार्गं ब्रूहि विस्तरशः प्रभो ॥ २ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रभो** = हे भगवान् | **कथितं** = बताइएको छ | **प्रचक्षते** = भनिन्छ |
| **प्रकृतेः** = प्रकृतिको | **येन** = जसद्वारा | **भक्तियोगस्य** = त्यस |
| **पुरुषस्य** = पुरुषको | **तत्पारमार्थिकम्** = तिनीहरूको | भक्तियोगको |
| **च** = र | परस्पर विभक्त | **तत्** = त्यो |
| **अमीषां** = यी | **स्वरूपं** = यथार्थ रूप | **मार्गं** = मार्ग |
| **महदादीनां** = महत्तत्त्व आदिको | **लक्ष्यते** = जानिन्छ (त्यो | **मे** = मलाई |
| **लक्षणं** = लक्षण | लक्षण हजुरले बताउनुभयो) | **विस्तरशः** = विस्तारपूर्वक |
| **साङ्ख्येषु** = सांख्य शास्त्रहरूमा | **यत्** = जसलाई | **ब्रूहि** = बताउनुहोस् |
| **यथा** = जस्तो प्रकारले | **मूलं** = भक्तियोगको मूल | |

**वाक्यार्थ–** हे भगवान् ! प्रकृति, पुरुष र महत्तत्त्व आदिको लक्षण सांख्य शास्त्रहरूमा जस्तो प्रकारले बताइएको छ, जसद्वारा तिनीहरूको परस्पर विभक्त यथार्थ रूप जानिन्छ त्यो लक्षण हजुरले बताउनुभयो। जसलाई भक्तियोगको मूल भनिन्छ त्यस भक्तियोगको मार्ग मलाई विस्तारपूर्वक बताउनुहोस्।

**विरागो येन पुरुषो भगवन् सर्वतो भवेत् ।**

**आचक्ष्व जीवलोकस्य विविधा मम संसृतीः ॥ ३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भगवन्** = हे कपिलदेव | **सर्वतः** = सबै कुराहरूबाट | **जीवलोकस्य** = मरणधर्मा |
| **येन** = जसको वर्णनद्वारा | **विरागः** = वैराग्यवान् | जीवका |
| **पुरुषः** = मुमुक्षु जीव | **भवेत्** = हुन्छ (त्यो) | **विविधाः** = अनेक प्रकारका |

| | | |
|---|---|---|
| **संसृतीः** = जन्म, मरण आदि गतिहरू | **मम** = मेरा लागि<br>**आचक्ष्व** = बताउनुहोस् | |

**वाक्यार्थ–** हे कपिलदेव ! जसको वर्णनद्वारा मुमुक्षु जीव सबै कुराहरूबाट वैराग्यवान् हुन्छ त्यस्ता मरणधर्मा जीवका अनेक प्रकारका जन्म, मरण आदि गतिहरू मेरा लागि बताउनुहोस्।

**कालस्येश्वररूपस्य परेषां च परस्य ते।**
**स्वरूपं बत कुर्वन्ति यद्धेतोः कुशलं जनाः॥ ४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **बत** = निश्चय नै<br>**यद्धेतोः** = जसको कारणबाट<br>**जनाः** = मानिसहरू<br>**कुशलं** = सत्कर्म<br>**कुर्वन्ति** = गर्दछन् (त्यस्तो) | **परेषां** = ब्रह्मा आदि देवताहरूको<br>**च** = पनि<br>**परस्य** = देवता भएका<br>**ईश्वररूपस्य** = ईश्वररूप | **ते** = हजुरको अंश भएको<br>**कालस्य** = कालको<br>**स्वरूपं** = स्वरूप (बताउनुहोस्) |

**वाक्यार्थ–** जसको कारणबाट मानिसहरू सत्कर्म गर्दछन् त्यस्तो ब्रह्मा आदि देवताहरूका पनि देवता भएका ईश्वररूप हजुरकै अंश भएको कालको स्वरूप बताउनुहोस्।

**लोकस्य मिथ्याभिमतेरचक्षुष-**
**श्चिरं प्रसुप्तस्य तमस्यनाश्रये।**
**श्रान्तस्य कर्मस्वनुविद्धया धिया**
**त्वमाविरासीः किल योगभास्करः॥ ५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मिथ्याभिमतेः** = देहादिमा अहं बुद्धि गरेका<br>**अचक्षुषः** = ज्ञानहीन<br>**अनाश्रये** = कुनै आश्रय नभएको<br>**तमसि** = अज्ञानरूप अन्धकारमय संसारमा<br>**चिरं** = लामो समयदेखि<br>**प्रसुप्तस्य** = सुतिरहेका | (फसिरहेका)<br>**कर्मसु** = प्रकृतिद्वारा गरिएका कर्महरूमा<br>**अनुविद्धया** = आसक्त<br>**धिया** = बुद्धिको कारणले<br>**श्रान्तस्य** = थकित भएका<br>**लोकस्य** = प्राणीहरूको कल्याणका लागि | **त्वम्** = हजुर<br>**किल** = निश्चय नै<br>**योगभास्करः** = योगप्रकाशक सूर्यको रूपमा<br>**आविरासीः** = प्रकट हुनुभएको छ |

**वाक्यार्थ–** देहादिमा अहं बुद्धि गरेका, ज्ञानहीन, कुनै आश्रय नभएको अज्ञानरूप अन्धकारमय कार्यभूत संसारमा लामो समयदेखि फसिरहेका एवं प्रकृतिद्वारा गरिएका कर्महरूमा आसक्त

बुद्धिको कारणले थकित भएका प्राणीहरूको कल्याणका लागि हजुर नै योगप्रकाशक सूर्यको रूपमा प्रकट हुनुभएको छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इति मातुर्वचः श्लक्ष्णं प्रतिनन्द्य महामुनिः।**
**आबभाषे कुरुश्रेष्ठ प्रीतस्तां करुणार्दितः॥ ६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कुरुश्रेष्ठ** = हे विदुरजी | **वचः** = वचनको | **महामुनिः** = महामुनि कपिल भगवान्ले |
| **इति** = यस्तो प्रकारको | **प्रतिनन्द्य** = सम्मान गरेर | **तां** = ती देवहूतिलाई |
| **मातुः** = आमाको | **करुणार्दितः** = दयाले द्रवीभूत र | **आबभाषे** = भन्नुभयो |
| **श्लक्ष्णं** = मधुर | **प्रीतः** = खुसी हुनुभएका | |

**वाक्यार्थ–** हे विदुरजी ! यस्तो प्रकारको आमाको मधुर वचनको सम्मान गरेर दयाले द्रवीभूत र खुसी हुनुभएका महामुनि कपिल भगवान्ले देवहूतिलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**भक्तियोगो बहुविधो मार्गैर्भामिनि भाव्यते।**
**स्वभावगुणमार्गेण पुंसां भावो विभिद्यते॥ ७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भामिनि** = हे प्रिय माता | **बहुविधः** = धेरै प्रकारको | **पुंसां** = जीवहरूको |
| **मार्गैः** = साधकको भावनाअनुसार | **भाव्यते** = हुन्छ, किनभने | **भावः** = भावना |
| **भक्तियोगः** = भक्तियोग | **स्वभावगुणमार्गेण** = स्वभाव र गुणका भेदले | **विभिद्यते** = भिन्न-भिन्न प्रकारको हुन्छ |

**वाक्यार्थ–** हे माता ! साधकको भावनाअनुसार भक्तियोग धेरै प्रकारको हुन्छ, किनभने स्वभाव र गुणका भेदले जीवहरूको भावना भिन्न-भिन्न प्रकारको हुन्छ।

**अभिसन्धाय यो हिंसां दम्भं मात्सर्यमेव वा।**
**संरम्भी भिन्नदृग्भावं मयि कुर्यात् स तामसः॥ ८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो व्यक्ति | **मात्सर्यम्** = मात्सर्यभाव | **भिन्नदृग्** = भेदबुद्धि राखी |
| **हिंसां** = हिंसा | **वा** = अथवा | **संरम्भी** = क्रोधी भएर |
| **दम्भं** = अभिमान | **अभिसन्धाय** = हृदयमा राखेर | **मयि** = ममा |

| | |
|---|---|
| **भावं** = भक्ति | **सः एव** = त्यो |
| **कुर्यात्** = गर्दछ | **तामसः** = मेरो तामस भक्त हो |

**वाक्यार्थ–** जो व्यक्ति हिंसा, अभिमान अथवा मात्सर्यभाव हृदयमा राखेर भेदबुद्धि राखी क्रोधी भएर ममा भक्ति गर्दछ त्यो मेरो तामस भक्त हो।

**विषयानभिसन्धाय यश ऐश्वर्यमेव वा।**

**अर्चादावर्चयेद् यो मां पृथग्भावः स राजसः॥ ९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो व्यक्ति | **वा** = र | **मां** = मलाई |
| **विषयान्** = विषय | **अभिसन्धाय** = चाहेर | **अर्चयेत्** = पूजा गर्दछ |
| **यशः** = यश | **अर्चादौ** = मेरो प्रतिमा आदिमा | **सः एव** = त्यही नै |
| **ऐश्वर्यम्** = ऐश्वर्य | **पृथग्भावः** = भेदबुद्धि गरेर | **राजसः** = मेरो राजस भक्त हो |

**वाक्यार्थ–** जो व्यक्ति विषय, यश र ऐश्वर्य चाहेर मेरो प्रतिमा आदिमा भेदबुद्धि गरेर मलाई पूजा गर्दछ त्यो मेरो राजस भक्त हो।

**कर्मनिर्हारमुद्दिश्य परस्मिन् वा तदर्पणम्।**

**यजेद् यष्टव्यमिति वा पृथग्भावः स सात्त्विकः॥ १०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कर्मनिर्हारम्** = पाप कर्मको प्रायश्चित्त | **तदर्पणम्** = कर्मफल अर्पण गर्नका लागि | **पृथग्भावः** = भेदबुद्धिले |
| **उद्दिश्य** = गर्नका लागि | **यष्टव्यम्** = यज्ञ गर्नुपर्छ | **यजेत्** = पूजा गर्दछ भने |
| **वा** = अथवा | **इति** = भन्ने विचार गरी | **सः** = त्यो व्यक्ति |
| **परस्मिन्** = परमात्मामा नै | **वा** = अथवा | **सात्त्विकः** = मेरो सात्त्विक भक्त हो |

**वाक्यार्थ–** पाप कर्मको प्रायश्चित्त गर्नका लागि या परमात्मामा नै कर्मफल अर्पण गर्नका लागि पूजा अथवा यज्ञ गर्नुपर्छ भन्ने विचार गरी भेदबुद्धिले पूजा गर्ने व्यक्ति मेरो सात्त्विक भक्त हो।

**मद्गुणश्रुतिमात्रेण मयि सर्वगुहाशये।**

**मनोगतिरविच्छिन्ना यथा गङ्गाम्भसोऽम्बुधौ॥ ११॥**

**लक्षणं भक्तियोगस्य निर्गुणस्य ह्युदाहृतम्।**

**अहैतुक्यव्यवहिता या भक्तिः पुरुषोत्तमे॥ १२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यथा** = जसरी | **पुरुषोत्तमे** = पुरुषोत्तम | **अहैतुकी** = निष्काम |
| **गङ्गाम्भसः** = गङ्गाको प्रवाह | **मयि** = म परमात्मामा | **भक्तिः** = भक्ति छ, त्यो भक्ति |
| **अम्बुधौ** = समुद्रतर्फ मात्र बहन्छ, त्यसै गरी | **मनोगतिः** = मनको गति | **हि** = नै |
| **मद्‌गुणश्रुतिमात्रेण** = मेरा गुणहरूको श्रवणमात्रले | **अविच्छिन्ना** = निरन्तर र | **निर्गुणस्य** = निर्गुण |
| **सर्वगुहाशये** = सर्वसाक्षी | **अव्यवहिता** = व्यवधानरहित रूपमा लागिरहने | **भक्तियोगस्य** = भक्तियोगको |
| | **या** = जुन | **लक्षणं** = लक्षण (हो भनी) |
| | | **उदाहृतम्** = बताइएको छ |

**वाक्यार्थ–** जसरी गङ्गाको प्रवाह समुद्रतर्फ मात्र बहन्छ त्यसै गरी मेरा गुणहरूको श्रवणमात्रले सर्वसाक्षी पुरुषोत्तम परमात्मामा मनको गति निरन्तर र व्यवधानरहित रूपमा लागिरहने जुन अहैतुकी भक्ति छ त्यो भक्ति नै निर्गुण भक्तियोगको लक्षण हो भनी बताइएको छ।

**विवरण–** संस्कृतको **भज सेवायाम्** धातुमा क्तिन् प्रत्ययको संयोजन भई भक्ति शब्द बन्दछ। यसको शाब्दिक अर्थ 'सेवा गर्नु' हुन्छ। यस सन्दर्भमा चाहिँ भक्ति शब्दले 'भगवान्प्रतिको प्रेम' भन्ने अर्थ दिएको छ। सांसारिक विषयवस्तुको आसक्तिलाई छोडेर अनन्यभावले भगवान्मा प्रेम गर्नु नै भक्ति हो।

भक्तिका सगुण र निर्गुण गरी दुई तह छन्। सगुण भक्ति भक्तिको प्रारम्भिक तह हो। यस तहको भक्तिमा भक्त भगवान्प्रति प्रेम त गर्दछ तर यसका साथसाथै उसले विभिन्न कामना पनि राखिरहेको हुन्छ। यसैले विभिन्न भाव, उद्देश्य वा कामना राखेर भगवान्प्रति प्रेम गरिने भएकाले यस तहको भक्तिलाई सगुण भक्ति भनिएको हो। सगुण भक्तिलाई नै नारद भक्तिसूत्रमा गौणी भक्ति भनिएको छ र यसका सात्त्विक, राजस र तामस गरी तीन प्रकार बताइएको छ (**गौणी त्रिधा गुणभेदादार्तादिभेदाद् वा**, नारदभक्तिसूत्र ५६)। यहाँ पनि सगुण भक्तिका सात्त्विक, राजस र तामस गरी तीन प्रकार रहेको उल्लेख गरिएको छ। यी तीन प्रकारका भक्तिको परिचय माथिका ८-१० श्लोकमा दिइएको छ।

निर्गुण भक्ति भक्तिको उच्च तह हो। यस तहको भक्तिमा भक्त कुनै पनि उद्देश्य वा कामनाविना भगवान्प्रति परमप्रेम गर्दछ (**सा त्वस्मिन् परमप्रेमरूपा**, नारदभक्तिसूत्र २)। यही परम प्रेमको कारण भगवान्मा ऊ यति तन्मय बन्दछ कि उसले आफू भगवान्भन्दा फरक रहेको समेत थाहा पाउँदैन। यस तहको भक्तिमा भक्त र भगवान्का बीच अभेद वा अद्वैतताको स्थिति रहन्छ (**तस्मिन् तज्जने भेदाभावात्**, नारदभक्तिसूत्र ४१)। यो स्थिति परमानन्द र आत्मतत्त्वको साक्षात्कारको स्थिति हो (**यस्य देवे परा भक्तिः यथा देवे तथा गुरौ, तस्यैते कथिता ह्यर्थाः प्रकाशन्ते महात्मनः**, श्वेताश्वतरोपनिषद् ६। २३)। यहाँ भगवान् कपिलदेवले पनि माता देवहूतिलाई **मद्‌गुणश्रुतिमात्रेण** (मेरा गुणहरूको श्रवणमात्रले), **सर्वगुहाशये मयि** (सर्वसाक्षी म भगवान्मा) र **अविच्छिन्ना मनोगतिः** (मनको गति व्यवधानरहित रूपमा लागिरहनु) यी तीन विशेषण अंशका माध्यमबाट जसरी गङ्गाजीको प्रवाह निरन्तर रूपमा समुद्रतर्फ बगिरहन्छ त्यसै

गरी मेरा गुणहरूको श्रवण मात्रले मनको गति सर्वसाक्षी भगवान् ममा निरन्तर व्यवधानरहित रूपमा लागिरहेको निष्काम भक्ति (प्रेम) नै निर्गुण भक्ति हो भनेर बताउनुभएको छ। यसैले निर्गुण भक्ति भनेको कुनै पनि कामना नराखी गरिएको भगवान्प्रतिको परम प्रेमका कारण उत्पन्न परमानन्दको अनुभूति, परमार्थतत्त्वको साक्षात्कार अथवा अद्वैतताको स्थिति हो भन्ने तथ्य स्पष्ट हुन्छ।

**सालोक्यसार्ष्टिसामीप्यसारूप्यैकत्वमप्युत।**
**दीयमानं न गृह्णन्ति विना मत्सेवनं जनाः॥ १३॥**

**पदार्थ–**

**जनाः** = त्यस्ता प्रकारका निर्गुण भक्तहरूले
**मत्सेवनं** = मेरो सेवा
**विना** = बाहेक
**दीयमानं** = मद्वारा नै दिइएका
**सालोक्यसार्ष्टिसामीप्यसारूप्यै-कत्वम्** = सालोक्य, सार्ष्टि, सामीप्य, सारूप्य, र एकत्व मुक्तिलाई
**अपि** = पनि
**न गृह्णन्ति** = ग्रहण गर्दैनन्

**वाक्यार्थ–** त्यस्ता प्रकारका निर्गुण भक्तहरूले मेरो सेवाबाहेक मद्वारा नै दिइएका सालोक्य, सार्ष्टि, सामीप्य, सारूप्य, र एकत्व मुक्तिलाई पनि ग्रहण गर्दैनन्।

**विवरण–** सगुण भगवान्का उपासकले प्राप्त गर्ने मोक्ष ५ प्रकारका हुन्छन्– सालोक्य, सार्ष्टि, सामीप्य, सारूप्य र सायुज्य। भगवान्को धाममा नित्य निवास गर्नुलाई सालोक्य मुक्ति भनिन्छ। भगवान्को बराबर ऐश्वर्यको भोग प्राप्त गर्नुलाई सार्ष्टि मोक्ष भनिन्छ। भगवान्को सामीप्य प्राप्त गर्नुलाई सामीप्य मोक्ष भनिन्छ। भगवान्को जस्तो रूपलाई प्राप्त गर्नुलाई सारूप्य मोक्ष भनिन्छ। त्यसै गरी भगवान्को विग्रहमा विलीन हुनुलाई सायुज्य मोक्ष भनिन्छ। यी पाँच प्रकारका मुक्तिहरू मनुष्यलोकमा नै ज्ञान उत्पन्न नभएका भक्तहरूका लागि हुन्। जसलाई भगवान्ले यही लोकमा नै बुद्धियोग प्रदान गर्नुहुन्न त्यस्ता भक्तहरू भगवल्लोकमा नै भगवत्सेवाद्वारा योग्यताअनुसार क्रमशः सालोक्य आदि क्रमले सायुज्य मोक्ष पाउन सक्दछन्। जसलाई निर्गुण भक्ति भनी बताइएको छ त्यस्तो साध्यभक्तिलाई प्राप्त गरेकाहरू त यहीँ ब्रह्मरूपतालाई प्राप्त गर्दछन्।

धर्म, अर्थ, काम, मोक्ष यी चार पुरुषार्थलाई भन्दा पनि भक्तिलाई उत्तम भनिएको छ। यसैले भगवान्को परम भक्तले मोक्ष पनि चाहँदैन भन्ने कुरामा यस श्लोकमा जोड दिइएको हो।

**स एव भक्तियोगाख्य आत्यन्तिक उदाहृतः।**
**येनातिव्रज्य त्रिगुणं मद्भावायोपपद्यते॥ १४॥**

**पदार्थ–**

**सः एव** = त्यही निर्गुण भक्ति नै
**आत्यन्तिकः** = सर्वोत्तम
**भक्तियोगाख्यः** = भक्तियोग हो भनेर
**उदाहृतः** = बताइन्छ
**येन** = जुन भक्तियोगद्वारा भक्त

| | | |
|---|---|---|
| **त्रिगुणं** = प्रकृतिका तीन गुणलाई | **अतिव्रज्य** = उछिनेर | हुनका लागि |
| | **मद्भावाय** = मेरो स्वरूपमा प्राप्त | **उपपद्यते** = तत्पर हुन्छ |

**वाक्यार्थ–** त्यही निर्गुण भक्तियोग नै सर्वोत्तम हो भनेर बताइन्छ। यही भक्तियोगद्वारा भक्त प्रकृतिका तीनै गुणलाई उछिनेर मेरो स्वरूपमा प्राप्त हुनका लागि तत्पर हुन्छ।

**निषेवितेनानिमित्तेन स्वधर्मेण महीयसा।**
**क्रियायोगेन शस्तेन नातिहिंस्रेण नित्यशः॥ १५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नित्यशः** = सधैँ | **शस्तेन** = निष्काम भावले | **क्रियायोगेन** = पूजाद्वारा |
| **अनिमित्तेन** = कुनै कामना नराखी | **महीयसा** = श्रद्धापूर्वक | (चित्त शुद्ध भएपछि भक्तले मलाई नै प्राप्त गर्दछ) |
| **न अतिहिंस्रेण** = हिंसाभाव त्यागी | **निषेवितेन** = पालन गरिएको | |
| | **स्वधर्मेण** = नित्य, नैमित्तिक आदि कर्म तथा | |

**वाक्यार्थ–** सधैँ कुनै कामना नराखी, हिंसाभाव त्यागी निष्काम भावले श्रद्धापूर्वक पालन गरिएको नित्य, नैमित्तिक प्रायश्चित्त आदि कर्म तथा पूजाद्वारा चित्त शुद्ध भएपछि भक्तले मलाई नै प्राप्त गर्दछ।

**मद्धिष्ण्यदर्शनस्पर्शपूजास्तुत्यभिवन्दनैः।**
**भूतेषु मद्भावनया सत्त्वेनासङ्गमेन च॥ १६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मद्धिष्ण्यदर्शनस्पर्शपूजास्तुत्यभिवन्दनैः** = मेरो प्रतिमाको दर्शन, स्पर्श, पूजा, स्तुति र वन्दना आदिबाट तथा | **भूतेषु** = सम्पूर्ण प्राणीहरूमा | **असङ्गमेन** = वैराग्यको माध्यमले |
| | **मद्भावनया** = मेरै भावना गरेर | (चित्त शुद्ध भएपछि भक्तले मलाई प्राप्त गर्दछ) |
| | **सत्त्वेन** = धैर्य | |
| | **च** = र | |

**वाक्यार्थ–** मेरो प्रतिमाको दर्शन, स्पर्श, पूजा, स्तुति र वन्दना आदिबाट तथा सम्पूर्ण प्राणीहरूमा मेरै भावना गरेर एवं धैर्य र वैराग्यको माध्यमले चित्त शुद्ध भएपछि भक्तले मलाई प्राप्त गर्दछ।

**महतां बहुमानेन दीनानामनुकम्पया।**
**मैत्र्या चैवात्मतुल्येषु यमेन नियमेन च॥ १७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **महतां** = महापुरुषहरूको | **दीनानाम्** = दुःखीहरूमाथि | **आत्मतुल्येषु** = समान स्थिति भएकाहरूसँगको |
| **बहुमानेन** = मानसम्मानले | **अनुकम्पया** = दयाभावले | |

| | | |
|---|---|---|
| **मैत्र्या** = मित्रताले<br>**च** = र<br>**यमेन** = अहिंसा आदि यम | **नियमेन** = शौच, सन्तोष आदि नियमबाट<br>**च एव** = पनि (चित्त शुद्ध | भएपछि भक्तले मलाई प्राप्त गर्दछ) |

**वाक्यार्थ–** महापुरुषहरूको मानसम्मान, दुःखीहरूमाथि दयाभाव, समान स्थिति भएकाहरूसँगको मित्रता, अहिंसा आदि यम र शौच, सन्तोष आदि नियमबाट पनि चित्त शुद्ध भएपछि भक्तले मलाई प्राप्त गर्दछ।

**टिप्पणी–** अहिंसा, सत्य, अस्तेय, ब्रह्मचर्य र अपरिग्रह यिनीहरूलाई यम भनिन्छ (योगसूत्र २। ३०) भने शौच, सन्तोष, तप, स्वाध्याय र ईश्वरप्रणिधानलाई नियम भनिन्छ (योगसूत्र २। ३२)।

**आध्यात्मिकानुश्रवणान्नामसङ्कीर्तनाच्च मे।**
**आर्जवेनार्यसङ्गेन निरहङ्क्रियया तथा॥ १८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **आध्यात्मिकानुश्रवणात्** = अध्यात्मपरक शास्त्रहरूको नित्य श्रवणबाट<br>**मे** = मेरो<br>**नामसङ्कीर्तनात्** = नामको कीर्तनबाट | **च** = र<br>**आर्जवेन** = मन र वाणीको सरलताबाट<br>**आर्यसङ्गेन** = सन्त महापुरुषहरूको सङ्गतबाट<br>**तथा** = र | **निरहङ्क्रियया** = देहादिमा आत्मबुद्धिको त्यागबाट पनि (चित्त शुद्ध भएपछि मात्र भक्तले मलाई प्राप्त गर्दछ) |

**वाक्यार्थ–** अध्यात्मपरक शास्त्रहरूको नित्य श्रवण, मेरो नामको कीर्तन, मन र वाणीको सरलता एवं सन्त महापुरुषहरूको सङ्गत र देहादिमा आत्मबुद्धिको त्यागबाट चित्त शुद्ध भएपछि भक्तले मलाई प्राप्त गर्दछ।

**मद्धर्मणो गुणैरेतैः परिसंशुद्ध आशयः।**
**पुरुषस्याञ्जसाभ्येति श्रुतमात्रगुणं हि माम्॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मद्धर्मणः** = मेरै लागि भनेर धर्मानुष्ठान गर्ने<br>**पुरुषस्य** = व्यक्तिको<br>**एतैः** = पूर्वोक्त<br>**गुणैः** = गुणद्वारा | **परिसंशुद्धः** = अत्यन्त निर्मल भएको<br>**आशयः** = मनले<br>**हि** = निश्चय नै<br>**श्रुतमात्रगुणं** = मेरा विविध | प्रशंसनीय गुणहरूको श्रवण मात्रै गर्नाले पनि<br>**माम्** = मलाई<br>**अञ्जसा** = अनायासै<br>**अभ्येति** = प्राप्त गर्दछ |

**वाक्यार्थ–** मेरै लागि भनेर धर्मानुष्ठान गर्ने व्यक्तिको पूर्वोक्त गुणद्वारा अत्यन्त निर्मल भएको

मनले मेरा विविध प्रशंसनीय गुणहरूको श्रवण मात्रै गर्नाले पनि मलाई सजिलै प्राप्त गर्दछ।

**यथा वातरथो घ्राणमावृङ्क्ते गन्ध आशयात्।**
**एवं योगरतं चेत आत्मानमविकारि यत्॥ २०॥**

पदार्थ–

**यथा** = जसरी
**वातरथः** = हावामा उडेर जाने
**गन्धः** = गन्ध
**आशयात्** = फूल आदि आफू रहेको ठाउँबाट
**घ्राणम्** = घ्राणेन्द्रियसम्म
**आवृङ्क्ते** = प्राप्त हुन्छ
**एवं** = त्यसै गरी
**योगरतं** = भक्तियोगमा लागेको
**यत्** = जुन
**अविकारि** = निर्मल
**चेतः** = चित्त पनि
**आत्मानम्** = परमात्मालाई (प्राप्त गर्दछ)

**वाक्यार्थ–** जसरी हावामा उडेर जाने गन्ध फूल आदि आफू रहेको ठाउँबाट घ्राणेन्द्रियसम्म पुग्छ त्यसै गरी भक्तियोगमा लागेको निर्मल चित्तले पनि परमात्मालाई प्राप्त गर्दछ।

**अहं सर्वेषु भूतेषु भूतात्मावस्थितः सदा।**
**तमवज्ञाय मां मर्त्यः कुरुतेऽर्चाविडम्बनम्॥ २१॥**

पदार्थ–

**अहं** = म
**सर्वेषु** = सम्पूर्ण
**भूतेषु** = प्राणीहरूमा
**भूतात्मा** = प्राणीको आत्मारूपले
**सदा** = सधैँ
**अवस्थितः** = बसेको छु
**तम्** = त्यसरी बसेको
**मां** = मलाई
**अवज्ञाय** = वास्ता नगर्ने
**मर्त्यः** = मरणधर्मा जीवले (मेरो प्रतिमामा)
**अर्चाविडम्बनम्** = पूजा गरेको स्वाङ्मात्र
**कुरुते** = गर्दछ

**वाक्यार्थ–** म सम्पूर्ण प्राणीहरूमा तिनको आत्मारूपले सधैँ बसेको छु। त्यसरी बसेको मलाई वास्ता नगर्ने मरणधर्मा जीवले मेरो प्रतिमामा पूजा गरेको स्वाङ्मात्र गर्दछ, वास्तविक पूजा गर्दैन।

**यो मां सर्वेषु भूतेषु सन्तमात्मानमीश्वरम्।**
**हित्वार्चां भजते मौढ्याद् भस्मन्येव जुहोति सः॥ २२॥**

पदार्थ–

**यः** = जसले
**सर्वेषु** = सम्पूर्ण
**भूतेषु** = प्राणीहरूमा
**सन्तम्** = साक्षीरूपले अवस्थित
**ईश्वरम्** = सबैको नियन्ता
**मां** = म
**आत्मानम्** = परमात्मालाई
**हित्वा** = उपेक्षा गरेर
**मौढ्यात्** = मूर्खताले गर्दा
**अर्चां** = मेरो प्रतिमाको मात्र
**भजते** = पूजा गर्दछ
**सः** = त्यो पुरुषले

**भस्मनि एव** = खरानीमा नै
**जुहोति** = हवन गरिरहेको हुन्छ

**वाक्यार्थ–** जसले सम्पूर्ण प्राणीहरूमा साक्षीरूपले अवस्थित सबैको नियन्ता म परमात्मालाई उपेक्षा गरेर मूर्खताले गर्दा मेरो प्रतिमाको मात्र पूजा गर्दछ उसले खरानीमा नै हवन गरेको जस्तो व्यर्थ कार्य गरिरहेको हुन्छ।

**द्विषतः परकाये मां मानिनो भिन्नदर्शिनः।**
**भूतेषु बद्धवैरस्य न मनः शान्तिमृच्छति॥ २३॥**

पदार्थ–
**परकाये** = अन्य प्राणीहरूमा अवस्थित
**मां** = म परमात्मालाई
**द्विषतः** = द्वेष गर्ने
**भिन्नदर्शिनः** = भेदबुद्धि भएका
**मानिनः** = अभिमानीहरू
**भूतेषु** = अन्य जीवहरूसँग
**बद्धवैरस्य** = शत्रुभाव राख्ने व्यक्तिको
**मनः** = मनले
**शान्तिम्** = शान्तिलाई
**न ऋच्छति** = प्राप्त गर्न सक्दैन

**वाक्यार्थ–** अन्य प्राणीहरूमा अवस्थित म परमात्मासँग द्वेष गर्ने भेदबुद्धि भएका अभिमानीहरू एवं अन्य जीवहरूसँग शत्रुभाव राख्ने व्यक्तिको मनले शान्ति प्राप्त गर्न सक्दैन।

**अहमुच्चावचैर्द्रव्यैः क्रिययोत्पन्नयानघे।**
**नैव तुष्येऽर्चितोऽर्चायां भूतग्रामावमानिनः॥ २४॥**

पदार्थ–
**अनघे** = हे निष्पाप माता
**उच्चावचैः** = राम्रा या नराम्रा
**द्रव्यैः** = सामग्रीहरूद्वारा
**उत्पन्नया** = सम्पन्न गरिएका
**क्रियया** = क्रियाद्वारा
**अर्चायां** = प्रतिमामा
**अर्चितः** = पूजा गरिएको
**अहम्** = म
**भूतग्रामावमानिनः** = अन्य जीवहरूको अपमान गर्ने (मानिसहरूप्रति)
**न एव तुष्ये** = खुसी हुन्नँ

**वाक्यार्थ–** हे निष्पाप माता! राम्रा या नराम्रा सामग्रीहरूद्वारा सम्पन्न गरिएका पूजाविधिद्वारा प्रतिमामा पूजित भए पनि त्यस्ता अन्य जीवहरूको अपमान गर्ने मानिसहरूप्रति म खुसी हुन्नँ।

**अर्चादावर्चयेत् तावदीश्वरं मां स्वकर्मकृत्।**
**यावन्न वेद स्वहृदि सर्वभूतेष्ववस्थितम्॥ २५॥**

पदार्थ–
**स्वकर्मकृत्** = स्वधर्मको अनुष्ठान गर्ने व्यक्तिले
**तावत्** = तबसम्म
**मां** = म
**ईश्वरं** = ईश्वरलाई
**अर्चादौ** = प्रतिमा आदिमा
**अर्चयेत्** = पूजा गरोस्
**यावत्** = जबसम्म
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा

| | | |
|---|---|---|
| **अवस्थितम्** = रहेका (परमात्मालाई) | **स्वहृदि** = आफ्नै हृदयमा (रहेको) | **न वेद** = अनुभव गर्दैन |

**वाक्यार्थ–** स्वधर्मको अनुष्ठान गर्ने व्यक्तिले तबसम्म म ईश्वरलाई प्रतिमा आदिमा पूजा गरोस् जबसम्म सम्पूर्ण प्राणीहरूमा रहेको परमात्मालाई उसले आफ्नै हृदयमा रहेको अनुभव गर्दैन।

**आत्मनश्च परस्यापि यः करोत्यन्तरोदरम्।**
**तस्य भिन्नदृशो मृत्युर्विदधे भयमुल्बणम्॥ २६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो व्यक्ति | **अन्तरा** = भेद | (म) |
| **आत्मनः** = आफ्नो | **करोति** = गर्दछ | **उल्बणम्** = ठुलो |
| **च** = र | **भिन्नदृशः** = आफू र अरूमा भेद देख्ने | **भयम्** = भय |
| **परस्य** = अरूको | **तस्य** = त्यस व्यक्तिका लागि | **विदधे** = उत्पन्न गराउँछु |
| **अपि** = पनि | **मृत्युः** = मृत्युको रूप लिएर | |
| **उदरम्** = शरीरप्रयुक्त | | |

**वाक्यार्थ–** जो व्यक्ति आफू र अरूको बीचमा शरीरप्रयुक्त भेद गर्दछ आफू र अरूमा भेद देख्ने त्यस व्यक्तिका लागि म मृत्युको रूप लिएर ठुलो भय उत्पन्न गराउँछु।

**अथ मां सर्वभूतेषु भूतात्मानं कृतालयम्।**
**अर्हयेद् दानमानाभ्यां मैत्र्याभिन्नेन चक्षुषा॥ २७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अथ** = त्यसैले | **भूतात्मानं** = सम्पूर्ण प्राणीहरूमा अन्तर्यामीको रूपमा रहेका | **मैत्र्या** = मित्रता र |
| **सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूका हृदयमा | **मां** = मलाई | **अभिन्नेन** = अभेद |
| **कृतालयम्** = वास गर्ने | **दानमानाभ्यां** = दान, मान | **चक्षुषा** = दृष्टिले |
| | | **अर्हयेत्** = पूजा गर्नू |

**वाक्यार्थ–** त्यसैले सम्पूर्ण प्राणीहरूका हृदयमा वास गर्ने र सम्पूर्ण प्राणीहरूमा अन्तर्यामीको रूपमा रहेको मलाई दान, मान, मित्रता र अभेद दृष्टिले पूजा गर्नू।

**जीवाः श्रेष्ठा ह्यजीवानां ततः प्राणभृतः शुभे।**
**ततः सचित्ताः प्रवरास्ततश्चेन्द्रियवृत्तयः॥ २८॥**
**तत्रापि स्पर्शवेदिभ्यः प्रवरा रसवेदिनः।**
**तेभ्यो गन्धविदः श्रेष्ठास्ततः शब्दविदो वराः॥ २९॥**

पदार्थ–

**शुभे** = हे कल्याणमयी माता
**हि** = निश्चय नै
**अजीवानां** = ढुङ्गा आदि जडभन्दा
**जीवाः** = वृक्ष आदि जीव
**श्रेष्ठा** = श्रेष्ठ छन्
**ततः** = ती वृक्ष आदि जीवभन्दा
**प्राणभृतः** = श्वास लिने प्राणीहरू श्रेष्ठ छन्
**ततः** = तीभन्दा
**सचित्ताः** = मनले युक्त भएका
**इन्द्रियवृत्तयः** = इन्द्रियवृत्तिद्वारा रूप, रस इत्यादिको ज्ञान गर्ने प्राणीहरू
**प्रवराः** = श्रेष्ठ छन्
**ततः** = त्यसपछि
**तत्र अपि** = इन्द्रियवृत्तिद्वारा ज्ञान गर्ने प्राणीहरूमध्ये पनि
**स्पर्शवेदिभ्यः** = केवल स्पर्शको मात्र ज्ञान गर्ने प्राणीहरूभन्दा
**रसवेदिनः** = रसको पनि ज्ञान गर्न सक्ने माछा आदि प्राणीहरू
**प्रवरा** = श्रेष्ठ छन्
**तेभ्यः** = रसको ग्रहण गर्न सक्ने प्राणीहरूभन्दा पनि
**गन्धविदः** = गन्धको समेत ज्ञान गर्न सक्ने भ्रमर आदि प्राणीहरू
**श्रेष्ठाः** = उत्कृष्ट छन्
**ततः** = गन्धको ज्ञान गर्न सक्ने प्राणीहरूभन्दा पनि
**शब्दविदः** = शब्दको समेत ज्ञान गर्न सक्ने सर्प आदि प्राणीहरू
**वराः** = श्रेष्ठ छन्

**वाक्यार्थ–** हे कल्याणमयी माता ! ढुङ्गा आदि जडभन्दा वृक्ष आदि जीव श्रेष्ठ छन्। वृक्ष आदि जीवभन्दा श्वास लिने प्राणीहरू श्रेष्ठ छन्। तीभन्दा मनले युक्त भएका इन्द्रियवृत्तिद्वारा रूप, रस इत्यादिको ज्ञान गर्ने प्राणीहरू श्रेष्ठ छन्। तिनीहरूमा पनि केवल स्पर्शको मात्र ज्ञान गर्न सक्ने प्राणीहरूभन्दा रसको समेत ज्ञान गर्न सक्ने माछा आदि प्राणीहरू श्रेष्ठ छन्। रसको ग्रहण गर्न सक्ने प्राणीहरूभन्दा गन्धको समेत ज्ञान गर्न सक्ने भ्रमर आदि उत्कृष्ट छन्। गन्धको ज्ञान गर्न सक्ने प्राणीहरूभन्दा पनि शब्दको समेत ज्ञान गर्न सक्ने सर्प आदि प्राणी श्रेष्ठ छन्।

**रूपभेदविदस्तत्र ततश्चोभयतोदतः।**
**तेषां बहुपदाः श्रेष्ठाश्चतुष्पादस्ततो द्विपात्॥ ३०॥**

पदार्थ–

**तत्र** = शब्दको ग्रहण गर्ने सर्प आदिभन्दा
**रूपभेदविदः** = रूपको समेत ज्ञान गर्न सक्ने काग आदि श्रेष्ठ छन्
**ततः** = रूप आदिको ज्ञान गर्न सक्ने काग आदिभन्दा
**च** = पनि
**उभयतोदतः** = तल र माथि दुबैतिर दाँत हुने प्राणी श्रेष्ठ छन्
**तेषां** = तिनीहरूमध्ये पनि
**बहुपदाः** = धेरै गोडा हुने प्राणीहरू श्रेष्ठ छन्
**ततः** = तिनीहरूभन्दा पनि
**चतुष्पादः** = चारओटा खट्टा हुने प्राणीहरू
**श्रेष्ठाः** = श्रेष्ठ छन् (ती प्राणीहरूभन्दा पनि)
**द्विपात्** = दुईओटा खुट्टा हुने मनुष्य (श्रेष्ठ छ)

**वाक्यार्थ–** शब्दको ग्रहण गर्ने सर्प आदिभन्दा रूपको समेत ज्ञान गर्न सक्ने काग आदि श्रेष्ठ छन्। रूप आदिको ज्ञान गर्न सक्ने काग आदिभन्दा पनि तल र माथि दुबैतिर दाँत हुने प्राणी श्रेष्ठ

छन्। तिनीहरूमध्ये पनि धेरै गोडा हुने प्राणीहरू श्रेष्ठ छन्। तिनीहरूभन्दा पनि चारओटा खुट्टा हुने प्राणीहरू श्रेष्ठ छन् र तिनीहरूभन्दा पनि दुईओटा खुट्टा हुने मनुष्य श्रेष्ठ छ।

**ततो वर्णाश्च चत्वारस्तेषां ब्राह्मण उत्तमः।**
**ब्राह्मणेष्वपि वेदज्ञो ह्यर्थज्ञोऽभ्यधिकस्ततः॥ ३१॥**

**पदार्थ–**

**ततः** = मनुष्यहरूमा
**चत्वारः** = चार
**वर्णाः** = वर्ण (ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र)हरू श्रेष्ठ छन्
**तेषां** = ती चार वर्णहरूमध्ये
**च** = पनि
**ब्राह्मणः** = ब्राह्मण
**उत्तमः** = श्रेष्ठ छ
**ब्राह्मणेषु** = ती ब्राह्मणहरूमध्ये
**अपि** = पनि
**वेदज्ञः** = वेद जान्ने श्रेष्ठ छन्
**ततः** = वेदज्ञहरूमध्ये पनि
**हि** = निश्चय नै
**अर्थज्ञः** = वेदको अर्थ बुझ्ने ब्राह्मण
**अभ्यधिकः** = श्रेष्ठ छ

**वाक्यार्थ–** मनुष्यहरूमा चार वर्ण (ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र) श्रेष्ठ छन्। ती चार वर्णहरूमध्ये पनि ब्राह्मण श्रेष्ठ छ। ती ब्राह्मणहरूमध्ये पनि वेद जान्ने श्रेष्ठ छन्। वेदज्ञहरूमध्ये पनि वेदको अर्थ बुझ्ने ब्राह्मण श्रेष्ठ छ।

**अर्थज्ञात् संशयच्छेत्ता ततः श्रेयान् स्वकर्मकृत्।**
**मुक्तसङ्गस्ततो भूयानदोग्धा धर्ममात्मनः॥ ३२॥**

**पदार्थ–**

**अर्थज्ञात्** = वेदको अर्थ मात्र जान्ने व्यक्तिभन्दा पनि
**संशयच्छेत्ता** = शङ्का निवारण गर्ने विद्वान् श्रेष्ठ हुन्छन्
**ततः** = तिनीहरूभन्दा पनि
**स्वकर्मकृत्** = आफ्नो वर्णाश्रमानुसार उचित कर्म गर्ने व्यक्ति
**श्रेयान्** = श्रेष्ठ छ
**ततः** = त्यसभन्दा पनि
**आत्मनः धर्मम्** = आफ्ना कर्तव्य कर्मबाट
**अदोग्धा** = फल आशा नगर्ने र
**मुक्तसङ्गः** = विषयहरूमा आसक्त नहुने व्यक्ति
**भूयान्** = श्रेष्ठ छ

**वाक्यार्थ–** वेदको अर्थ मात्र जान्ने व्यक्तिभन्दा पनि शङ्का निवारण गर्ने विद्वान् श्रेष्ठ हुन्छन्, तिनीहरूभन्दा पनि आफ्नो वर्णाश्रमानुसार उचित कर्म गर्ने व्यक्ति श्रेष्ठ छ। त्यसभन्दा पनि आफ्ना कर्तव्य कर्मबाट फल आशा नगर्ने र विषयहरूमा आसक्त नहुने व्यक्ति श्रेष्ठ छ।

**तस्मान्मय्यर्पिताशेषक्रियार्थात्मा निरन्तरः।**
**मय्यर्पितात्मनः पुंसो मयि सन्न्यस्तकर्मणः॥**

**न पश्यामि परं भूतमकर्तुः समदर्शनात्॥ ३३॥**

**पदार्थ–**

**तस्मात्** = आसक्तिरहित व्यक्तिभन्दा पनि
**मयि** = ममा
**अर्पिताशेषक्रियार्थात्मा** = सम्पूर्ण कर्म, कर्मफल तथा शरीर अर्पित गर्ने
**निरन्तरः** = सधैँ
**मयि** = ममा
**अर्पितात्मनः** = शरीर, मन, बुद्धि सबै अर्पण गरेको
**मयि** = ममा नै
**सन्न्यस्तकर्मणः** = कर्मफल पनि अर्पण गर्ने
**समदर्शनात्** = समदृष्टि राख्ने
**अकर्तुः** = कर्तृभावशून्य
**पुंसः** = व्यक्तिभन्दा
**परं** = श्रेष्ठ
**भूतम्** = अरू कुनै प्राणी
**न पश्यामि** = म देख्दिनँ

**वाक्यार्थ–** आसक्तिरहित व्यक्तिभन्दा पनि ममा सम्पूर्ण कर्म र कर्मफल अर्पित गर्ने, सधैँ ममा शरीर, मन, बुद्धि सबै अर्पण गरेको, समदृष्टि राख्ने एवं कर्तृभावशून्य व्यक्तिभन्दा श्रेष्ठ अरू कुनै प्राणी म देख्दिनँ।

**मनसैतानि भूतानि प्रणमेद् बहु मानयन्।**
**ईश्वरो जीवकलया प्रविष्टो भगवानिति॥ ३४॥**

**पदार्थ–**

**ईश्वरः** = सर्वान्तर्यामी
**भगवान्** = भगवान् नारायण
**जीवकलया** = जीवको रूपमा
**प्रविष्टः** = प्रविष्ट हुनुभएको छ
**इति** = यो विचार गरेर
**मनसा** = मनमनै
**एतानि** = यी
**भूतानि** = प्राणीहरूलाई
**बहु** = ज्यादै
**मानयन्** = आदरपूर्वक
**प्रणमेत्** = नमस्कार गरोस्

**वाक्यार्थ–** सम्पूर्ण प्राणीमा सर्वान्तर्यामी भगवान् नारायण जीवको रूपमा प्रविष्ट हुनुभएको छ। यो कुराको विचार गरेर मनमनै यी प्राणीहरूलाई ज्यादै आदरपूर्वक नमस्कार गरोस्।

**भक्तियोगश्च योगश्च मया मानव्युदीरितः।**
**ययोरेकतरेणैव पुरुषः पुरुषं व्रजेत्॥ ३५॥**

**पदार्थ–**

**मानवि** = हे मनुपुत्री
**भक्तियोगः** = भक्तियोग
**च** = र
**योगः** = अष्टाङ्ग योग
**च** = पनि
**मया** = मद्वारा
**उदीरितः** = बताइए
**ययोः** = यी दुई भक्तियोग र अष्टाङ्गयोगमध्ये
**एकतरेण एव** = कुनै एकको मात्र साधनले पनि
**पुरुषः** = जीवले
**पुरुषं** = परमात्मालाई
**व्रजेत्** = प्राप्त गर्न सक्छ

**वाक्यार्थ–** हे मनुपुत्री ! मैले भक्तियोग र अष्टाङ्ग योग पनि बताएँ। भक्तियोग र अष्टाङ्गयोगमध्ये

कुनै एकको मात्र साधनले पनि जीवले परमात्मालाई प्राप्त गर्न सक्दछ।

**विवरण–** अष्टाङ्गयोग र भक्तियोगको साधना पृथक् भए तापनि साध्य एउटै हो। २८ औं अध्यायमा अष्टाङ्ग योगको प्रसङ्ग बताइएको छ भने यहाँ २९ औं अध्यायमा भक्तियोगको प्रसङ्ग बताइएको छ। श्रीधरस्वामीका अनुसार यहाँ बताइएको सबीजयोग गीतामा बताइएको निर्बीजयोगभन्दा सरल छ। गीतामा चञ्चल र अस्थिर मन जता जान्छ त्यताबाट फर्काई निर्गुण आत्मतत्त्वमा लगाउने जुन प्रक्रिया बताइएको छ त्यो दुष्कर छ तर यहाँको परमानन्दमूर्ति भगवान्मा चित्त समाधान गर्ने भक्तिमिश्रित योग सरल छ। सबीज भन्नाले कुनै अवलम्बनले सहित भन्ने बुझिन्छ। भागवत शास्त्रले हरेक साधनापद्धतिमा भगवत्प्रेम वा भक्तिलाई मिसाएको छ। भागवतअनुसार भक्तिविनाको योग 'कुयोग' हो। **कुयोगिनां विदूरकाष्ठाय** अर्थात् भगवान् भक्तिहीन साधनाद्वारा नभेटिने हुनुहुन्छ भनी द्वितीयस्कन्धको चौधौं अध्यायमा उल्लेख गरिएको छ। यहाँ २८ औं अध्यायमा बताइएअनुसार अष्टाङ्गयोगको प्रारम्भिक चरणमा आसन, प्राणायाम, प्रत्याहार आदि साधनको अपेक्षा हुन्छ र पछि ध्यानद्वारा भगवत्प्रेमसँगै योगसाधना चल्दछ र अन्तिममा **स्वरूपेणावतिष्ठते** (भागवत ३। २८। ४४) अर्थात् ब्रह्मस्वरूपमा स्थित हुन्छ भने, २९ औं अध्यायमा बताइएअनुसार निर्गुण अहैतुकी भक्तिद्वारा अनि आनुषङ्गिक सर्वभूतदया, यम, नियम आदि साधनहरूको पालनासमेतबाट जीव **मद्भावायोपपद्यते** (भागवत ३। २९। १४) अर्थात् भगवद्भावलाई प्राप्त गर्दछ र सालोक्यादि पाँचथरी मुक्तिहरूलाई समेत रुचाउँदैन। यसरी अष्टाङ्गयोगको साधनामा यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान र समाधिको अभ्यासद्वारा भगवत्प्रेम पनि साथमा लिई ब्रह्मभाव प्राप्त हुन्छ भने भक्तियोगमा मुख्य रूपले भगवान्मा निष्काम भक्ति अनि यम, नियम आदि व्यावहारिक कर्तव्यहरूको पालनाबाट समेत भगवद्भाव प्राप्त हुन्छ। अष्टाङ्गयोग र भक्तियोगमा लक्ष्यमा पूर्ण समता पाइन्छ भने साधनामा अधिक अंशमा समानता भेटिन्छ।

**एतद् भगवतो रूपं ब्रह्मणः परमात्मनः।**
**परं प्रधानं पुरुषं दैवं कर्मविचेष्टितम्॥ ३६॥**

**पदार्थ–**

**प्रधानं** = प्रकृति र
**पुरुषं** = पुरुष एवं
**परं** = प्रकृति र पुरुषदेखि भिन्न
**कर्मविचेष्टितम्** = विविध
कर्महरूको मूल
**दैवं** = अदृष्ट
**एतत्** = यिनीहरू सबै
**परमात्मनः** = परमात्मरूप
**ब्रह्मणः** = परब्रह्म
**भगवतः** = परमेश्वरकै
**रूपं** = स्वरूप हुन्

**वाक्यार्थ–** प्रकृति र पुरुष एवं प्रकृति र पुरुषदेखि भिन्न विविध कर्महरूको मूलको रूपमा रहेको अदृष्ट यिनीहरू सबै परमात्मरूप परब्रह्म परमेश्वरकै स्वरूप हुन्।

**रूपभेदास्पदं दिव्यं काल इत्यभिधीयते।**
**भूतानां महदादीनां यतो भिन्नदृशां भयम्॥ ३७॥**

**पदार्थ–**
**रूपभेदास्पदं** = (जगत्का वस्तुहरूलाई) भिन्न-भिन्न रूप प्रदान गर्ने
**दिव्यं** = भगवान्को दिव्य रूपलाई
**कालः** = काल
**इति** = भनेर
**अभिधीयते** = बताइन्छ
**यतः** = जुन कालबाट
**महदादीनां** = महत्तत्त्व आदिमा अभिमान गर्ने
**भिन्नदृशां** = भेददृष्टि भएका
**भूतानां** = प्राणीहरूलाई
**भयम्** = जन्ममरणरूप भय (प्राप्त हुन्छ)

**वाक्यार्थ–** जगत्का वस्तुहरूलाई भिन्न-भिन्न रूप प्रदान गर्ने भगवान्को दिव्य रूपलाई काल भनेर बताइन्छ। जुन कालबाट महत्तत्त्व आदिमा अभिमान गर्ने भेददृष्टि भएका प्राणीहरूलाई जन्ममरणरूप भय प्राप्त हुन्छ।

**योऽन्तः प्रविश्य भूतानि भूतैरत्त्यखिलाश्रयः।**
**स विष्णवाख्योऽधियज्ञोऽसौ कालः कलयतां प्रभुः॥ ३८॥**

**पदार्थ–**
**यः** = जो काल
**अन्तः प्रविश्य** = प्राणीहरूको भित्र प्रवेश गरेर
**भूतैः** = पञ्चमहाभूतका विकारद्वारा
**भूतानि** = समस्त प्राणीहरूलाई
**अत्ति** = संहार गर्नुहुन्छ
**अखिलाश्रयः** = सम्पूर्ण जगत्को आश्रय
**विष्णवाख्यः** = विष्णु नामका
**सः** = उहाँ
**कालः** = कालरूप भगवान् नै
**अधियज्ञः** = यज्ञका फलदाता (हुनुहुन्छ)
**असौ** = उहाँ भगवान्
**कलयतां** = जगत्को शासन गर्ने ब्रह्मा आदिको पनि
**प्रभुः** = शासक हुनुहुन्छ

**वाक्यार्थ–** जो काल प्राणीहरूमा प्रवेश गरेर पञ्चमहाभूतका विकारद्वारा समस्त प्राणीहरूको संहार गर्नुहुन्छ, सम्पूर्ण जगत्को आश्रय विष्णु नाम भएका ती कालरूप भगवान् नै यज्ञका फलदाता हुनुहुन्छ। उहाँ भगवान् नै जगत्को शासन गर्ने ब्रह्मा आदिको पनि शासक हुनुहुन्छ।

**न चास्य कश्चिद् दयितो न द्वेष्यो न च बान्धवः।**
**आविशत्यप्रमत्तोऽसौ प्रमत्तं जनमन्तकृत्॥ ३९॥**

**पदार्थ–**
**अस्य** = यी कालरूप भगवान्को
**कश्चित्** = कोही
**दयितः** = प्रिय
**न** = छैन
**न च द्वेष्यः** = कोही शत्रु पनि छैन
**न च बान्धवः** = न कोही बन्धु नै छ

| | | |
|---|---|---|
| **असौ** = उहाँ कालस्वरूप भगवान् | **अन्तकृत्** = अन्त्य गर्ने बनेर | **जनम्** = प्राणीलाई |
| **अप्रमत्तः** = सावधानपूर्वक | **प्रमत्तं** = विषय-वासनाबाट उन्मत्त भएका | **आविशति** = संहार गर्नुहुन्छ |

**वाक्यार्थ–** यी कालरूप भगवान्को कोही प्रिय छैन, कोही शत्रु पनि छैन र कोही बन्धु पनि छैन। उहाँ कालस्वरूप भगवान् सावधानपूर्वक अन्त्यकर्ता बनेर विषय-वासनाबाट उन्मत्त भएका प्राणीको संहार गर्नुहुन्छ।

**यद्भयाद् वाति वातोऽयं सूर्यस्तपति यद्भयात्।**
**यद्भयाद् वर्षते देवो भगणो भाति यद्भयात्॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यद्भयात्** = जुन कालको भयले | **सूर्यः** = सूर्यले | **वर्षते** = पानी पार्दछन् |
| **अयं** = यो | **तपति** = ताप दिन्छन् | **यद्भयात्** = जुन कालकै भयबाट |
| **वातः** = हावा | **यद्भयात्** = जुन कालबाट भयभीत भएर नै | **भगणः** = तारागण |
| **वाति** = चल्दछ | **देवः** = इन्द्रले | **भाति** = चम्कन्छ |
| **यद्भयात्** = जुन कालकै भयबाट | | |

**वाक्यार्थ–** जुन कालको भयले नै यो हावा चल्दछ। जुन कालकै भयबाट सूर्यले ताप दिन्छन्। जुन कालबाट भयभीत भएर इन्द्रले पानी पार्दछन् र त्यही कालकै भयबाट तारागण चम्कन्छ।

**यद्वनस्पतयो भीता लताश्चौषधिभिः सह।**
**स्वे स्वे कालेऽभिगृह्णन्ति पुष्पाणि च फलानि च॥ ४१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्** = जुन कालबाट | **ओषधिभिः सह** = जडीबुटीले सहित भई | **च** = र |
| **भीताः** = डराएका | **स्वे स्वे** = आआफ्नो | **फलानि** = फलहरू |
| **वनस्पतयः** = वनस्पतिहरू र | **काले** = समयमा | **च** = पनि |
| **लताः** = लहराहरू | **पुष्पाणि** = फूल | **अभिगृह्णन्ति** = धारण गर्दछन् |
| **च** = पनि | | |

**वाक्यार्थ–** जुन कालबाट डराएका वनस्पतिहरू, लहराहरू र जडीबुटीहरू आ-आफ्नो समयमा फूल र फलहरू पनि धारण गर्दछन्।

**स्रवन्ति सरितो भीता नोत्सर्पत्युदधिर्यतः।**
**अग्निरिन्धे सगिरिभिर्भूर्न मज्जति यद्भयात्॥ ४२॥**

पदार्थ–

**यतः** = जुन कालको भयबाट
**भीताः** = डराएका
**सरितः** = नदीहरू
**स्रवन्ति** = बहन्छन्
**उदधिः** = समुद्र
**न उत्सर्पति** = आफ्नो मर्यादाभन्दा बाहिर जाँदैन
**यद्भयात्** = जुन कालकै भयबाट
**अग्निः** = आगो
**इन्धे** = प्रज्वलित हुन्छ र
**सगिरिभिः** = पहाडहरूले युक्त
**भूः** = पृथिवी
**न मज्जति** = जलमा डुब्दैन

**वाक्यार्थ–** जुन कालको भयबाट डराएर नदीहरू बहन्छन्, समुद्र आफ्नो मर्यादाभन्दा बाहिर जाँदैन। त्यही कालकै भयबाट आगो प्रज्वलित हुन्छ र पहाडहरूले युक्त पृथिवी जलमा डुब्दैन।

**नभो ददाति श्वसतां पदं यन्नियमाददः।**
**लोकं स्वदेहं तनुते महान् सप्तभिरावृतम्॥ ४३॥**

पदार्थ–

**यन्नियमात्** = जुन कालकै नियमअनुसार
**अदः** = यो
**नभः** = आकाशले
**श्वसतां** = प्राणीहरूको लागि
**पदं** = श्वासप्रश्वास गर्न खाली ठाउँ
**ददाति** = प्रदान गर्दछ र
**महान्** = महत्तत्त्वले
**स्वदेहं** = अहङ्काररूपी शरीरलाई
**सप्तभिः** = पृथिवी, जल, तेज, वायु, आकाश, अहङ्कार, महत्तत्त्व गरी यी सात आवरणबाट
**आवृतम्** = ढाकिएको
**लोकं** = ब्रह्माण्डरूपमा
**तनुते** = विस्तार गर्दछ

**वाक्यार्थ–** कालकै नियमअनुसार यो आकाशले प्राणीहरूको लागि श्वासप्रश्वास गर्नको लागि खाली ठाउँ प्रदान गर्दछ र महत्तत्त्वले अहङ्काररूपी शरीरलाई पृथिवी, जल, तेज, वायु, आकाश, अहङ्कार, महत्तत्त्व गरी यी सात आवरणबाट ढाकिएको ब्रह्माण्डको रूपमा विस्तार गर्दछ।

**गुणाभिमानिनो देवाः सर्गादिष्वस्य यद्भयात्।**
**वर्तन्तेऽनुयुगं येषां वश एतच्चराचरम्॥ ४४॥**

पदार्थ–

**एतत्** = यो
**चराचरम्** = चराचर जगत्
**येषां** = जसको
**वशे** = वशमा छ, ती
**गुणाभिमानिनः** = सत्त्व, रज र तमोगुणलाई स्वीकार गरेका
**देवाः** = ब्रह्मा, विष्णु, महेश्वर आदि देवताहरू
**यद्भयात्** = जुन कालकै भयबाट
**अनुयुगं** = प्रत्येक युगमा
**अस्य** = यो जगत्को
**सर्गादिषु** = सृष्टि, स्थिति, संहार इत्यादि कार्यमा
**वर्तन्ते** = प्रवृत्त हुन्छन्

**वाक्यार्थ–** यो चराचर जगत् जसको वशमा छ ती सत्त्व, रज र तमोगुणलाई स्वीकार गरेका ब्रह्मा, विष्णु, महेश्वर आदि देवताहरू कालकै भयबाट प्रत्येक युगमा यो जगत्को सृष्टि, स्थिति,

संहार इत्यादि कार्यमा प्रवृत्त हुन्छन्।

**सोऽनन्तोऽन्तकरः कालोऽनादिरादिकृदव्ययः।**
**जनं जनेन जनयन् मारयन् मृत्युनान्तकम्॥ ४५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = त्यस्तो प्रकारको | **जनेन** = पिता आदिको रूपबाट | शक्तिद्वारा |
| **कालः** = काल | **जनं** = पुत्र आदिलाई | **अन्तकम्** = यमराजलाई पनि |
| **अनादिः** = जन्मरहित | **जनयन्** = जन्माएर | **मारयन्** = मार्दै |
| **अनन्तः** = मरणरहित र | **आदिकृद्** = सृष्टिकर्ता हुन्छ भने | **अन्तकरः** = मार्नेवाला बन्दछ |
| **अव्ययः** = विकारशून्य छ, तर | **मृत्युना** = आफ्नो मृत्युरूपी | |

**वाक्यार्थ–** त्यस्तो प्रकारको काल जन्म, मृत्यु र विकारशून्य छ, तर पिता आदिको रूपबाट पुत्र आदिलाई जन्माएर सृष्टिकर्ता हुन्छ भने आफ्नो मृत्युरूपी शक्तिद्वारा यमराजलाई पनि मार्दै मार्नेवाला बन्दछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**
**कापिलेयोपाख्याने एकोनत्रिंशोऽध्यायः॥ २९॥**

# अथ त्रिंशोऽध्यायः

## शरीर, घर आदिमा आसक्त व्यक्तिको अधोगतिको वर्णन

**कपिल उवाच** (कपिल भगवान्‌ले भन्नुभयो)

**तस्यैतस्य जनो नूनं नायं वेदोरुविक्रमम्।**

**काल्यमानोऽपि बलिनो वायोरिव घनावलिः॥ १॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अयं** = यो | **काल्यमानः** = कालको प्रभावले | **बलिनः** = बलवान् |
| **जनः** = मनुष्य | भिन्न-भिन्न अवस्थाहरू र | **एतस्य** = यी कालको |
| **वायोः** = वायुद्वारा उडाइएका | योनिहरूमा पुऱ्याइए | **उरुविक्रमम्** = पराक्रमलाई |
| **घनावलिः** = मेघसमूहले | **अपि** = पनि | **नूनं** = निश्चय नै |
| **इव** = वायुलाई झैँ | **तस्य** = त्यस्ता | **न वेद** = जान्दैन |

**वाक्यार्थ–** हे आमा ! जसरी वायुद्वारा उडाइएको मेघसमूहले वायुको बललाई जान्दैन त्यसै गरी जीव पनि कालकै सामर्थ्यले भिन्न-भिन्न अवस्थाहरू र योनिहरूमा भ्रमण गरिरहन्छ तर यसको पराक्रमलाई जान्दैन।

**यं यमर्थमुपादत्ते दुःखेन सुखहेतवे।**

**तं तं धुनोति भगवान् पुमाञ्छोचति यत्कृते॥ २॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सुखहेतवे** = सुखका लागि | **उपादत्ते** = प्राप्त गर्दछ | **यत्कृते** = जसका लागि |
| **यं यम्** = जुन-जुन | **भगवान्** = भगवान् काल | **पुमान्** = मानिस |
| **अर्थम्** = वस्तु | **तं तं** = त्यही-त्यही (वस्तु) | **शोचति** = शोक गर्दछ |
| **दुःखेन** = कष्टका साथ | **धुनोति** = नष्ट गरिदिनुहुन्छ | |

**वाक्यार्थ–** मानिसले सुखका लागि जुन-जुन वस्तु कष्टका साथ प्राप्त गर्दछ भगवान् काल त्यही-त्यही वस्तु नष्ट गरिदिनुहुन्छ जसका लागि मानिस शोक गर्दछ।

**यदध्रुवस्य देहस्य सानुबन्धस्य दुर्मतिः।**

**ध्रुवाणि मन्यते मोहाद् गृहक्षेत्रवसूनि च॥ ३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यत्** = यसकारण | **दुर्मतिः** = मन्द बुद्धिवाला | मानिस |

**अध्रुवस्य** = अनित
**सानुबन्धस्य** = नाता-गोता, इष्टमित्रसहित
**देहस्य** = शरीर र यसका सम्बन्धी
**गृहक्षेत्रवसूनि** = घर, खेत र धनसम्पत्ति आदिलाई
**च** = पनि
**मोहात्** = मोहवश
**ध्रुवाणि** = नित्य
**मन्यते** = मान्दछ

**वाक्यार्थ–** यसकारण मन्द बुद्धिवाला मानिस अनित्य शरीर र त्यस शरीरसँग सम्बन्धित घर, खेत र धनसम्पत्ति आदिलाई पनि मोहवश नित्य मान्दछ।

**विवरण–** दुःख वा बन्धनको मूल कारण अज्ञान हो। आत्माको यथार्थ स्वरूपको ज्ञान नहुनुलाई अज्ञान भनिन्छ। आत्माको ज्ञान नभएपछि आत्मामा आत्मबुद्धि नभएर अनात्म शरीरमा आत्मबुद्धि हुन्छ। त्यसपछि जीवलाई विषयभोग गर्ने इच्छा उत्पन्न हुन्छ। विषयको उपभोग गर्ने इच्छाले मानिसलाई कर्ममा प्रवृत्त गराउँछ। यस प्रकार अविद्या, काम र कर्मको कारणले जीव अनित्य देह, गेह आदिलाई नित्य मानेर ऊ त्यसैमा रमाउँछ र भोगप्राप्तिका लागि विभिन्न कर्महरू गर्न थाल्दछ। देह भनेको शरीर हो भने गेह भनेको घर हो। गेह भनेर यहाँ धन, सम्पत्ति, स्त्री, पुत्र आदिलाई समेत बुझाउन खोजिएको छ।

मनुष्यको शरीर अनि शरीरसम्बन्धी घर, स्त्री, पुत्र आदि समस्त पदार्थहरू अनित्य भए तापनि मोहवश मनुष्य यिनीहरूलाई नित्य मान्दछ। स्त्री, पुत्र आदिले समेत आ-आफ्नै लागि एक-अर्कामा प्रेम गर्ने हुन् तर यो कुरा नबुझ्नाले जीव बाहिरी प्रेमको जालमा आफूलाई फसाई कुटुम्बभरण गर्न खोज्छ र नपुगेमा अनैतिक काम गर्न समेत पछि पर्दैन। यसमा पर्ने परिश्रम जीवनभरि केवल दुःखदायक त छँदैछ, त्यसमाथि असीमित कामनाहरू पूरा नहुँदा परिवारबाट वृद्धावस्थामा उपेक्षाको व्यवहार समेत भयो भने त सम्पूर्ण जीवनलाई निरर्थक बनाइदिन्छ। आदिदेखि अन्त्यसम्म मनुष्यले दुःख पाउनुको एकमात्र कारण हो मोह। अन्तिममा समेत संसारतिरै आफ्नो बुद्धि लगाउने मोहग्रस्त मनुष्य जीवनभरि गरेका कुकर्महरूको भयङ्कर दण्ड यमदूतहरूबाट पाउँछ र अधोगतिमा प्राप्त भई कैयौं कल्प नरकमा बिताउँछ। मोहको फल जन्म-जन्मान्तरसम्म भयङ्कर दुःखको रूपमा प्राप्त भइरहन्छ।

**जन्तुर्वै भव एतस्मिन् यां यां योनिमनुव्रजेत्।**
**तस्यां तस्यां स लभते निर्वृतिं न विरज्यते॥ ४॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**एतस्मिन्** = यस
**भवे** = संसारमा
**जन्तुः** = जीव
**यां यां** = जुन-जुन
**योनिम्** = योनिमा
**अनुव्रजेत्** = जन्म लिन्छ
**सः** = त्यो जीव
**तस्यां तस्यां** = त्यही-त्यही योनिमा
**लभते** = आनन्द मान्दछ
**निर्वृतिं** = विरक्त
**न विरज्यते** = हुँदैन

**वाक्यार्थ–** यस संसारमा जीव जुन-जुन योनिमा जन्म लिन्छ, त्यही-त्यही योनिमा आनन्द मान्दछ। त्यसबाट विरक्त हुँदैन।

**नरकस्थोऽपि देहं वै न पुमांस्त्यक्तुमिच्छति।**
**नारक्यां निर्वृतौ सत्यां देवमायाविमोहितः॥ ५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **देवमायाविमोहितः** = भगवान्को मायाले मोहित भएको | तापनि | **वै** = निश्चय नै |
| **पुमान्** = जीव | **नारक्यां** = नारकीय भोगमा | **देहं** = नारकीय शरीरलाई |
| **नरकस्थः अपि** = नरकमा रहे | **निर्वृतौ सत्यां** = सुख मानेको हुँदा | **त्यक्तुम्** = छोड्न |
| | | **न इच्छति** = चाहँदैन |

**वाक्यार्थ–** भगवान्को मायाले मोहित भएको जीव नरकमा रहे तापनि नारकीय भोगमा सुख मानेको हुँदा त्यस नारकीय शरीरलाई छोड्न चाहँदैन।

**आत्मजायासुतागारपशुद्रविणबन्धुषु।**
**निरूढमूलहृदय आत्मानं बहु मन्यते॥ ६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **आत्मजायासुतागारपशुद्रविण-बन्धुषु** = आफ्नो शरीर, पत्नी, छोरा, घर, पशु, धन, एवं | बन्धुबान्धवमा (आसक्त भएर) | **आत्मानं** = आफूलाई |
| | **निरूढमूलहृदयः** = सङ्कुचित मन भएको मूर्ख व्यक्तिले | **बहु** = भाग्यशाली |
| | | **मन्यते** = मान्दछ |

**वाक्यार्थ–** सङ्कुचित मन भएको मूर्ख व्यक्ति आफ्नो शरीर, पत्नी, छोरा, घर, पशु, धन, एवं बन्धुबान्धवमा आसक्त भएर आफूलाई भाग्यशाली मान्दछ।

**सन्दह्यमानसर्वाङ्ग एषामुद्वहनाधिना।**
**करोत्यविरतं मूढो दुरितानि दुराशयः॥ ७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एषाम्** = यी शरीर, पत्नी आदिको | **सर्वाङ्गः** = सम्पूर्ण अङ्ग | **अविरतं** = निरन्तर |
| **उद्वहनाधिना** = पालनपोषणको चिन्ताद्वारा | **सन्दह्यमानः** = जल्दै गरेको | **दुरितानि** = पापहरू |
| | **दुराशयः** = दुर्वासनाद्वारा दूषित | **करोति** = गरिरहन्छ |
| | **मूढः** = मूर्ख (उनीहरूकै लागि) | |

**वाक्यार्थ–** शरीर, पत्नी आदिको पालनपोषणका चिन्ताद्वारा सम्पूर्ण अङ्ग जल्दै गरेको दुर्वासनाद्वारा दूषित भएको मूर्ख उनीहरूकै लागि भनेर निरन्तर पापहरू गरिरहन्छ।

**आक्षिप्तात्मेन्द्रियः स्त्रीणामसतीनां च मायया।**
**रहोरचितयालापैः शिशूनां कलभाषिणाम्॥ ८॥**
**गृहेषु कूटधर्मेषु दुःखतन्त्रेष्वतन्द्रितः।**
**कुर्वन् दुःखप्रतीकारं सुखवन्मन्यते गृही॥ ९॥**

**पदार्थ–**

**असतीनां** = परपुरुषको सङ्गत गर्ने
**स्त्रीणाम्** = स्त्रीको
**रहोरचितया** = एकान्तमा प्रदर्शित
**मायया** = कपटपूर्ण प्रेम र
**कलभाषिणाम्** = मिठो बोल्ने
**शिशूनां** = बच्चाहरूका
**आलापैः** = बोलीहरूद्वारा
**च** = पनि
**आक्षिप्तात्मेन्द्रियः** = आफू र आफ्ना इन्द्रियहरूलाई फसाएको
**गृही** = गृहस्थ पुरुष
**गृहेषु** = घरको
**कूटधर्मेषु** = कपटपूर्ण एवं
**दुःखतन्त्रेषु** = दुःखमय (कर्ममा लिप्त हुन्छ)
**अतन्द्रितः** = सावधानीपूर्वक
**दुःखप्रतीकारं** = दुःखको प्रतिकार
**कुर्वन्** = गर्दै (त्यसमा पाएका केही सफलतालाई नै)
**सुखवत्** = सुखजस्तो
**मन्यते** = मान्दछ

**वाक्यार्थ–** परपुरुषको सङ्गत गर्ने स्त्रीको एकान्तमा प्रदर्शित कपटपूर्ण प्रेम र मिठो बोल्ने बच्चाहरूका बोलीद्वारा आफू र आफ्ना इन्द्रियहरूलाई फसाएको गृहस्थ पुरुष घरको कपटपूर्ण एवं दुःखमय कर्ममा लिप्त हुन्छ र सावधानीपूर्वक दुःखको प्रतिकार गर्दै त्यसमा पाएका केही सफलतालाई नै सुखजस्तो मान्दछ।

**अर्थैरापादितैर्गुर्व्या हिंसयेतस्ततश्च तान्।**
**पुष्णाति येषां पोषेण शेषभुग् यात्यधः स्वयम्॥ १०॥**

**पदार्थ–**

**गुर्व्या** = भयङ्कर
**हिंसया** = हिंसावृत्तिद्वारा
**इतस्ततः** = जतातत्तैबाट
**च** = पनि
**आपादितैः** = सञ्चय गरेको
**अर्थैः** = धन सम्पत्तिद्वारा
**तान्** = ती पत्नी, पुत्र, आदिलाई
**पुष्णाति** = पालनपोषण गर्दछ
**येषां** = तिनीहरूको
**पोषेण** = पालनपोषणद्वारा
**शेषभुक्** = बाँकी रहेको खाने
**स्वयम्** = आफूचाहिँ
**अधः** = नरकतिर
**याति** = जान्छ

**वाक्यार्थ–** भयङ्कर हिंसावृत्तिद्वारा जतातत्तैबाट सञ्चय गरेको धन सम्पत्तिद्वारा ती पत्नी, पुत्र आदिलाई पालनपोषण गर्दछ। तिनीहरूको पालनपोषण गरेर बाँकी रहेको खाने आफूचाहिँ नरकतिर जान्छ।

**वार्तायां लुप्यमानायामारब्धायां पुनः पुनः।**
**लोभाभिभूतो निःसत्त्वः परार्थे कुरुते स्पृहाम्॥ ११॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पुनः पुनः** = बारम्बार गरेको | **लोभाभिभूतः** = लोभले विवेक नष्ट भएको | **परार्थे** = अरूको धनमा |
| **आरब्धायां** = प्रयास | **निःसत्त्वः** = सामर्थ्यहीन (गृहस्थ) | **स्पृहाम्** = इच्छा |
| **लुप्यमानायाम्** = बेकार भएपछि | | **कुरुते** = गर्दछ |
| **वार्तायां** = जीविकाका लागि | | |

**वाक्यार्थ–** बारम्बार गरेको प्रयास बेकार भएपछि जीविकाका लागि लोभले विवेक नष्ट भएको सामर्थ्यहीन गृहस्थ अरूको धन प्राप्त गर्ने इच्छा गर्दछ।

**कुटुम्बभरणाकल्पो मन्दभाग्यो वृथोद्यमः।**
**श्रिया विहीनः कृपणो ध्यायञ्छ्वसिति मूढधीः॥ १२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कुटुम्बभरणाकल्पः** = आफ्ना बन्धुबान्धवको पालनपोषणमा असमर्थ | **श्रिया** = धन-सम्पत्तिले | **ध्यायन्** = चिन्ताग्रस्त हुँदै |
| **मन्दभाग्यः** = भाग्यले ठगिएको | **विहीनः** = रहित भएको | **श्वसिति** = लामो-लामो श्वास फेर्छ |
| **वृथोद्यमः** = सम्पूर्ण प्रयास असफल भएको | **मूढधीः** = मूर्ख बुद्धि भएको | |
| | **कृपणः** = धनहीन व्यक्ति | |

**वाक्यार्थ–** आफ्ना बन्धुबान्धवको पालनपोषणमा असमर्थ, भाग्यले ठगिएको, सम्पूर्ण प्रयास असफल भएको एवं धन-सम्पत्तिले रहित भएको, मूर्ख बुद्धि भएको र धनहीन त्यो व्यक्ति चिन्ताग्रस्त हुँदै लामो-लामो श्वास फेर्छ।

**एवं स्वभरणाकल्पं तत्कलत्रादयस्तथा।**
**नाद्रियन्ते यथा पूर्वं कीनाशा इव गोजरम्॥ १३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कीनाशाः** = लोभी किसानहरूले | **स्वभरणाकल्पं** = आफ्नो भरणपोषणमा असमर्थ (व्यक्तिलाई) | **तथा** = त्यसै गरी |
| **गोजरम्** = बुढा गोरूलाई | **तत्कलत्रादयः** = उसका पत्नीपुत्रादिहरूले | **यथा पूर्वं** = पहिलेजस्तो |
| **इव** = जस्तै | | **न आद्रियन्ते** = आदर गर्दैनन् |
| **एवं** = यसप्रकार | | |

**वाक्यार्थ–** लोभी किसानहरूले बुढा गोरुलाई वास्ता नगरेझैं यसप्रकार आफ्नो भरणपोषणमा असमर्थ भएको व्यक्तिलाई उसका पत्नी, पुत्र आदिले पहिलेजस्तो आदर गर्दैनन्।

**तत्राप्यजातनिर्वेदो भ्रियमाणः स्वयम्भृतैः ।**
**जरयोपात्तवैरूप्यो मरणाभिमुखो गृहे ॥ १४ ॥**
**आस्तेऽवमत्योपन्यस्तं गृहपाल इवाहरन् ।**
**आमयाव्यप्रदीप्ताग्निरल्पाहारोऽल्पचेष्टितः ॥ १५ ॥**

**पदार्थ–**

**तत्र अपि** = आफ्ना बन्धुहरूबाट तिरस्कृत भएर पनि
**अजातनिर्वेदः** = वैराग्य नआएको
**स्वयम्भृतैः** = आफैँले पहिले पालनषोषण गरेका पुत्रादिबाट
**भ्रियमाणः** = पालिदैँ
**जरया** = बुढ्याइँले
**उपात्तवैरूप्यः** = कुरूप भएको
**मरणाभिमुखः** = मृत्युको मुखमा पुगेको एवं
**अवमत्या** = तिरस्कारपूर्वक
**उपन्यस्तं** = दिइएको भोजन
**गृहपालः इव** = कुकुरलेझैं
**आहरन्** = खाँदै (वृद्धावस्थाले गर्दा)
**अप्रदीप्ताग्निः** = जठराग्नि मन्द भएको
**अल्पाहारः** = त्यसैले थोरै खान थालेको
**अल्पचेष्टितः** = कमै मात्र हिँडडुल गर्न सक्ने
**आमयावी** = रोगी (गृहस्थी)
**गृहे** = घरमा नै
**आस्ते** = बस्दछ

**वाक्यार्थ–** आफ्ना बन्धुहरूबाट तिरस्कृत भएर पनि वैराग्य नआएको, आफैँले पहिले पालनषोषण गरेका पुत्रादिबाट पालिदैँ बुढ्याइँले कुरूप भएको, मृत्युको मुखमा पुगेको, तिरस्कारपूर्वक दिइएको भोजन कुकुरलेझैं खाँदै, वृद्धावस्थाका कारणले जठराग्नि मन्द भएकाले थोरै खान थालेको, कमै मात्र हिँडडुल गर्न सक्ने एवं रोगी गृहस्थी घरमा नै बस्दछ।

**वायुनोत्क्रमतोत्तारः कफसंरुद्धनाडिकः ।**
**कासश्वासकृतायासः कण्ठे घुरघुरायते ॥ १६ ॥**

**पदार्थ–**

**उत्क्रमता** = माथि जाँदै गरेको
**वायुना** = प्राणवायुद्वारा
**उत्तारः** = आँखाको ज्योति गएको
**कफसंरुद्धनाडिकः** = कफले श्वासप्रश्वासका नाडीहरू अवरुद्ध भएको
**कासश्वासकृतायासः** = श्वास फेर्दा र तान्दा कफका कारण ठुलो दुःख पाएको व्यक्ति
**कण्ठे** = घाँटीमा
**घुरघुरायते** = घुरघुर आवाज निकालिरहेको हुन्छ

**वाक्यार्थ–** त्यो गृहस्थी माथि जाँदै गरेको प्राणवायुद्वारा आँखाको ज्योति गएको, कफले श्वासप्रश्वासका नाडीहरू अवरुद्ध भएको, श्वास फेर्दा र तान्दा कफका कारण ठुलो दुःख पाएको व्यक्तिले घाँटीमा घुरघुर आवाज निकालिरहेको हुन्छ।

**शयानः परिशोचद्भिः परिवीतः स्वबन्धुभिः।**
**वाच्यमानोऽपि न ब्रूते कालपाशवशं गतः॥ १७॥**

**पदार्थ–**

**शयानः** = मृत्युशय्यामा सुतिरहेको (त्यो व्यक्ति)
**परिशोचद्भिः** = शोक गर्दै गरेका
**स्वबन्धुभिः** = आफन्तजनहरू-द्वारा
**परिवीतः** = चारैतिर घेरिएको र
**कालपाशवशं गतः** = कालको पासोको नियन्त्रणमा परेको
**वाच्यमानः** = बोलाउँदा
**अपि** = पनि
**न ब्रूते** = बोल्दैन

**वाक्यार्थ–** मृत्युशय्यामा सुतिरहेको त्यो व्यक्ति शोक गर्दै गरेका आफन्तजनहरूद्वारा चारैतिरबाट घेरिएको हुन्छ र कालको पासोको नियन्त्रणमा परेको हुँदा बोलाउँदा पनि ऊ बोल्न सक्दैन।

**एवं कुटुम्बभरणे व्यापृतात्माजितेन्द्रियः।**
**म्रियते रुदतां स्वानामुरुवेदनयास्तधीः॥ १८॥**

**पदार्थ–**

**एवं** = यसरी
**कुटुम्बभरणे** = आफ्ना बन्धुबान्धवको पोषणमा
**व्यापृतात्मा** = मन लगाएको
**अजितेन्द्रियः** = इन्द्रियलाई वशमा राख्न नसकेको एवं
**उरुवेदनया** = ठुलो पीडाले गर्दा
**अस्तधीः** = चेतना नष्ट भएको त्यो व्यक्ति
**रुदतां** = रुँदै गरेका
**स्वानाम्** = आफन्तका अगाडि
**म्रियते** = मर्छ

**वाक्यार्थ–** यसरी आफ्ना बन्धुबान्धवको पोषणमा मन लगाएको, इन्द्रियलाई वशमा राख्न नसकेको एवं ठुलो पीडाले गर्दा चेतना नष्ट भएको त्यो व्यक्ति रुँदै गरेका आफन्तका अगाडि मर्छ।

**यमदूतौ तदा प्राप्तौ भीमौ सरभसेक्षणौ।**
**स दृष्ट्वा त्रस्तहृदयः शकृन्मूत्रं विमुञ्चति॥ १९॥**

**पदार्थ–**

**तदा** = त्यससमय
**प्राप्तौ** = आफूलाई लैजान आएका
**भीमौ** = डरलाग्दा
**सरभसेक्षणौ** = क्रोधित आँखा भएका
**यमदूतौ** = यमराजका दुई दूतहरूलाई
**दृष्ट्वा** = देखेर
**त्रस्तहृदयः** = भित्रैदेखि डराएको
**सः** = त्यो व्यक्ति (डरले)
**शकृत्** = मल
**मूत्रं** = मूत्र
**विमुञ्चति** = छोड्दछ

**वाक्यार्थ–** त्यससमय आफूलाई लैजान आएका डरलाग्दा क्रोधित आँखा भएका यमराजका दुई दूतहरूलाई देखेर यमदूतदेखि डराएको त्यो व्यक्ति मल-मूत्र छोड्दछ।

**यातनादेह आवृत्य पाशैर्बद्ध्वा गले बलात्।**

**नयतो दीर्घमध्वानं दण्ड्यं राजभटा यथा॥ २०॥**

**पदार्थ—**

**यातनादेहे** = यातना योग्य शरीरमा
**आवृत्य** = राखेर
**गले** = घाँटीमा
**बलात्** = जबर्जस्ती
**पाशैः** = पाशले
**बद्ध्वा** = बाँधेर
**यथा** = जसरी
**दण्ड्यं** = दण्ड दिन योग्य मानिसलाई
**राजभटाः** = राजसैनिकहरू (बाँधेर लैजान्छन् त्यसै गरी )
**दीर्घम्** = लामो
**अध्वानं** = (यमलोकको) बाटोमा (ती यमदूतहरूले)
**नयतः** = लैजान्छन्

**वाक्यार्थ—** ती यमदूतहरूले त्यो मरेको व्यक्तिलाई यातनायोग्य शरीरमा राखेर घाँटीमा जबर्जस्ती पाशले बाँधेर जसरी दण्ड दिन योग्य मानिसलाई राजसैनिकहरू बाँधेर लैजान्छन् त्यसै गरी यमलोकको लामो बाटोमा लैजान्छन्।

**तयोर्निर्भिन्नहृदयस्तर्जनैर्जातवेपथुः।**

**पथि श्वभिर्भक्ष्यमाण आर्तोऽघं स्वमनुस्मरन्॥ २१॥**

**पदार्थ—**

**तयोः** = ती दुई यमदूतको
**तर्जनैः** = गालीबाट
**निर्भिन्नहृदयः** = हृदय छियाछिया भएको
**जातवेपथुः** = त्यसैले लगलग काँपेको
**पथि** = बाटोमा
**श्वभिः** = कुकुरहरूले
**भक्ष्यमाणः** = टोक्दै गरेको
**आर्तः** = भयङ्कर दुःखले पीडित भएको त्यो जीवले
**स्वम्** = आफूले गरेको
**अघं** = पाप
**अनुस्मरन्** = रुल्रुली सम्झन्छ

**वाक्यार्थ—** ती दुई यमदूतको गालीबाट हृदय छियाछिया भएको र लगलग काँपेको अनि बाटोमा कुकुरहरूले टोक्नाले भयङ्कर दुःखले पीडित भएर त्यो जीवले आफूले पहिला गरेको पाप रुल्रुली सम्झन्छ।

**क्षुत्तृट्परीतोऽर्कदवानलानिलैः**

**सन्तप्यमानः पथि तप्तवालुके।**

**कृच्छ्रेण पृष्ठे कशया च ताडित-**

**श्चलत्यशक्तोऽपि निराश्रमोदके॥ २२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **क्षुत्तृट्परीतः** = भोक र प्यासद्वारा सताइएको | **पृष्ठे** = ढाडमा | **पथि** = बाटोमा |
| **अर्कदवानलानिलैः** = चर्को घाम, डढेलो र हावाहुरीद्वारा | **ताडितः** = पिटिएको | **अशक्तः** = नसकी नसकी |
| **सन्तप्यमानः** = दुःख पाउँदै गरेको | **च** = पनि | **अपि** = पनि |
| **कशया** = कोर्राले | **निराश्रमोदके** = विश्रामस्थल र पानी नभएको | **कृच्छ्रेण** = ज्यादै दुःखसँग |
| | **तप्तवालुके** = तातो बालुवा भएको | **चलति** = हिँड्दछ |

**वाक्यार्थ–** भोक र प्यासद्वारा सताइएको, चर्को घाम, डढेलो र हावाहुरीद्वारा कष्ट पाउँदै गरेको, कोर्राले ढाडमा पिटिएको त्यो व्यक्ति विश्रामस्थल र पानी नभएको, तातो बालुवा भएको बाटोमा नसकी नसकी ज्यादै दुःखसँग हिँड्दछ।

**तत्र तत्र पतञ्छ्रान्तो मूर्च्छितः पुनरुत्थितः।**

**पथा पापीयसा नीतस्तरसा यमसादनम्॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **श्रान्तः** = थकित र | **पुनः** = फेरि | **पापीयसा** = दुःखमय |
| **मूर्च्छितः** = मूर्च्छित भएर | **उत्थितः** = उठ्दै गरेको त्यो व्यक्ति | **पथा** = बाटोबाट |
| **तत्र तत्र** = ठाउँठाउँमा | **तरसा** = अन्धकारले व्याप्त | **यमसादनम्** = यमलोकमा |
| **पतन्** = लड्दै | | **नीतः** = पुऱ्याइन्छ |

**वाक्यार्थ–** थकित र मूर्च्छित भएर बाटोमा ठाउँठाउँमा लड्दै र फेरि उठ्दै गरेको त्यो व्यक्ति अन्धकारले व्याप्त दुःखमय बाटोबाट यमलोकमा पुऱ्याइन्छ।

**योजनानां सहस्राणि नवतिं नव चाध्वनः।**

**त्रिभिर्मुहूर्तैर्द्वाभ्यां वा नीतः प्राप्नोति यातनाः॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नवतिं नव च** = उनान्सय | **वा** = अथवा | यातनाहरू |
| **सहस्राणि** = हजार परिमाण | **द्वाभ्यां** = दुई | **प्राप्नोति** = पाउँछ |
| **योजनानां** = योजनको | **मुहूर्तैः** = मुहूर्तमा नै (पार गरेर) | |
| **अध्वनः** = बाटो | **नीतः** = लगिएको त्यस व्यक्तिले | |
| **त्रिभिः** = तीन | **यातनाः** = यमलोकका कठोर | |

**वाक्यार्थ–** उनान्सय हजार योजन परिमाणको बाटो तीन अथवा दुई मुहूर्तमा नै पार गरेर लगिएको त्यस व्यक्तिले यमलोकका कठोर यातनाहरू पाउँछ।

**टिप्पणी–** चार कोस बराबर एक योजन हुन्छ र एक मुहूर्त बराबर अठचालीस मिनेट हुन्छ।

**आदीपनं स्वगात्राणां वेष्टयित्वोल्मुकादिभिः।**
**आत्ममांसादनं क्वापि स्वकृत्तं परतोऽपि वा॥ २५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **उल्मुकादिभिः** = अगुल्टो आदिद्वारा | **आदीपनं** = जलाइन्छ (त्यसपछि) | **परतः** = अरूद्वारा काटिएको |
| **वेष्टयित्वा** = घेरेर | **क्व अपि** = कहीँ पनि | **आत्ममांसादनं** = आफ्नो मासुको भोजन (गर्दछ) |
| **स्वगात्राणां** = आफ्नो शरीर | **स्वकृत्तं** = आफैँले काटेको | |
| | **वा** = अथवा कहीँ | |

**वाक्यार्थ–** अगुल्टो आदिद्वारा चारैतिरबाट जलाइएको त्यो व्यक्तिले आफ्नो शरीरको आफैँले काटेको अथवा कहीँ अरूद्वारा काटिएको मासुको भोजन गर्दछ।

**जीवतश्चान्त्राभ्युद्धारः श्वगृध्रैर्यमसादने।**
**सर्पवृश्चिकदंशाद्यैर्दशद्भिश्चात्मवैशसम्॥ २६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यमसादने** = यमलोकमा | **अन्त्राभ्युद्धारः** = आन्द्रा निकालिन्छ | **सर्पवृश्चिकदंशाद्यैः** = सर्प, विच्छी, डाँसहरूद्वारा |
| **श्वगृध्रैः** = कुकुर र गिद्धहरूद्वारा | **च** = र | **आत्मवैशसम्** = शरीरमा टोकाएर पीडा दिइन्छ |
| **जीवतः** = जीवितै रहेको त्यस व्यक्तिको | **दशद्भिः** = डस्ने | |

**वाक्यार्थ–** यमलोकमा कुकुर र गिद्धहरूद्वारा जीवितै रहेको त्यस व्यक्तिको आन्द्रा निकालिन्छ र डस्ने सर्प, विच्छी, डाँसहरूद्वारा शरीरमा टोकाएर पीडा दिइन्छ।

**कृन्तनं चावयवशो गजादिभ्यो भिदापनम्।**
**पातनं गिरिशृङ्गेभ्यो रोधनं चाम्बुगर्तयोः॥ २७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अवयवशः** = एक-एक अङ्गहरू | छिया पारिन्छ | **च** = र |
| **कृन्तनं** = काट्ने गरिन्छ | **गिरिशृङ्गेभ्यः** = पर्वतको टाकुराबाट | **अम्बुगर्तयोः** = पानी र खाल्डामा हालेर |
| **गजादिभ्यः** = हात्ती आदिद्वारा | **पातनं** = खसालिन्छ | **रोधनं** = थुन्ने गरिन्छ |
| **भिदापनम्** = शरीरलाई छिया- | | |

**वाक्यार्थ–** एक-एक अङ्गहरू काट्ने गरिन्छ। हात्ती आदिद्वारा शरीरलाई छिया-छिया पारिन्छ। पर्वतको टाकुराबाट खसालिन्छ र कहिले पानी र कहिले खाल्डामा हालेर थुन्ने गरिन्छ।

**यास्तामिस्रान्धतामिस्रा रौरवाद्याश्च यातनाः।**

**भुङ्क्ते नरो वा नारी वा मिथः सङ्गेन निर्मिताः॥ २८॥**

**पदार्थ–**

**यातनाः** = यस्ता यातनाहरू
**याः** = अरू जुन
**तामिस्रान्धतामिस्राः** = तामिस्र, अन्धतामिस्र र
**रौरवाद्याः** = रौरव आदि नरकमा दिइने यातनाहरू
**च** = पनि
**नरः वा** = पुरुष होस् वा
**नारी वा** = महिला होस् (सबैले)
**मिथः** = परस्पर
**सङ्गेन** = आसक्तिका कारण
**निर्मिताः** = तयार भएका पीडाहरू
**भुङ्क्ते** = भोग गर्दछन्

**वाक्यार्थ–** यी यातनाहरू र अरू तामिस्र, अन्धतामिस्र र रौरव आदि नरकमा दिइने यातनाहरू पनि छन्। पुरुष होस् वा महिला होस् सबैले परस्पर आसक्तिका कारण तयार भएका यातनाहरू भोग्नैपर्छ।

**अत्रैव नरकः स्वर्ग इति मातः प्रचक्षते।**

**या यातना वै नारक्यस्ता इहाप्युपलक्षिताः॥ २९॥**

**पदार्थ–**

**मातः** = हे आमा
**स्वर्गः** = स्वर्ग र
**नरकः** = नरक पनि
**अत्र** = यही लोकमा
**एव** = नै छन्
**इति** = यस्तो
**प्रचक्षते** = भन्छन्
**याः** = जो
**नारक्यः** = नरकसम्बन्धी
**यातनाः** = यातना (छन्)
**ताः** = ती (यातनाहरू)
**वै** = निश्चय नै
**इह** = यस संसारमा
**अपि** = पनि
**उपलक्षिताः** = देखिएकै छन्

**वाक्यार्थ–** हे आमा ! स्वर्ग र नरक पनि यही लोकमा नै छन् भनेर पनि कसैले भन्छन्। जो नरकसम्बन्धी यातना छन्, ती यातनाहरू यस संसारमा पनि देखिएकै छन्।

**एवं कुटुम्बं बिभ्राण उदरम्भर एव वा।**

**विसृज्येहोभयं प्रेत्य भुङ्क्ते तत्फलमीदृशम्॥ ३०॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**इह** = यस लोकमा
**कुटुम्बं** = आफ्ना बन्धुबान्धवहरूको
**बिभ्राणः** = पालनपोषण गर्ने
**वा** = अथवा
**उदरम्भरः** = आफ्नो पेट भर्ने व्यक्ति
**उभयं** = कुटुम्ब र शरीर दुबै
**विसृज्य** = छोडेर
**प्रेत्य** = यमलोक पुगेपछि
**तत्फलम्** = ती पापको फल
**ईदृशम्** = यस प्रकार
**भुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ–** यसप्रकार यस लोकमा आफ्ना बन्धुबान्धवहरूको पालनपोषण गर्ने अथवा आफ्नो पेट भर्ने व्यक्ति कुटुम्ब र शरीर छोडेर यमलोक पुगेपछि ती पापको फल यस प्रकार भोग गर्दछ।

**विवरण–** जीवहरूले पूर्वजन्ममा विभिन्न विषयहरूको भोग गरेका हुन्छन्। विषयभोगजन्य संस्कारहरू उनीहरूका अन्तःकरणमा जरो गाडेर बसेका हुन्छन्। ती संस्कारहरूको कारणले ती जीवहरू पूर्वजन्ममा जैँ यस जन्ममा पनि विषयप्रति आकृष्ट हुन्छन् र विषयको भोग गर्दछन्। फेरि उनीहरूको अन्तःकरणमा भोगजन्य संस्कारहरू एकत्रित हुन्छन्। ती संस्कारहरूले अर्को जन्ममा फेरि भोगमा प्रवृत्त गराउँछन्। यस प्रकार साइकलको पाङ्ग्रा चलेजैँ ती भोगासक्त जीवहरूका लागि जन्म र मृत्युको प्रवाह निरन्तर चलिरहन्छ। यसरी विषयप्रतिको आसक्ति नै बन्धनको कारण हो। भोगासक्त मानिसका मन र इन्द्रियहरू निरन्तर विषयतिर नै आकृष्ट भइरहन्छन्। यसबाट ऊ अनित्य देह, गेह आदिमा आत्मबुद्धि लिएर बस्दछ। उनीहरूका लागि भएको नित्य आत्मा नभएको जस्तो र नभएका संसारका पदार्थहरू भएका जस्ता प्रतीत हुन थाल्दछन्।

**एकः प्रपद्यते ध्वान्तं हित्वेदं स्वकलेवरम्।**
**कुशलेतरपाथेयो भूतद्रोहेण यद् भृतम्॥ ३१॥**

**पदार्थ–**

**भूतद्रोहेण** = अरू प्राणीहरूलाई पीडा दिएर
**भृतम्** = पालन-पोषण गरिएको
**यत्** = जुन
**इदं** = यो
**स्वकलेवरम्** = आफ्नो स्थूल शरीर थियो त्यसलाई
**हित्वा** = यहीँ छोडेर
**कुशलेतरपाथेयः** = पापरूप सामल (बाटामा खाने खाजा) बोकेर
**एकः** = एक्लै
**ध्वान्तं** = नरकमा
**प्रपद्यते** = जान्छ

**वाक्यार्थ–** अरू प्राणीहरूलाई पीडा दिएर पालन-पोषण गरिएको आफ्नो स्थूल शरीरलाई यहीँ छोडेर पापरूप सामल (बाटामा खाने खाजा) लिएर जीवात्मा एक्लै नरकमा जान्छ।

**दैवेनासादितं तस्य शमलं निरये पुमान्।**
**भुङ्क्ते कुटुम्बपोषस्य हृतवित्त इवातुरः॥ ३२॥**

**पदार्थ–**

**पुमान्** = त्यो व्यक्ति
**दैवेन** = प्रारब्ध कर्मद्वारा
**आसादितं** = प्राप्त भएको
**तस्य** = त्यो
**कुटुम्बपोषस्य** = कुटुम्बपालनको
**शमलं** = पापफल
**हृतवित्तः** = पैसा चोरिएको र
**आतुरः** = व्याकुल भएको
**इव** = व्यक्ति जैँ
**निरये** = नरकमा बसेर
**भुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ–** त्यो व्यक्ति प्रारब्ध कर्मअनुसार प्राप्त भएको कुटुम्बपालनकार्यको त्यो पापफल पैसा चोरिनाले व्याकुल भएको व्यक्ति जस्तो भएर नरकमा बसेर भोग गर्दछ।

**केवलेन ह्यधर्मेण कुटुम्बभरणोत्सुकः।**

**याति जीवोऽन्धतामिस्रं चरमं तमसः पदम्॥ ३३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **हि** = निश्चय नै | कुटुम्बपालनपोषणमा आसक्त | **पदम्** = सीमा |
| **केवलेन** = केवल | **जीवः** = जीव | **अन्धतामिस्रं** = अन्धतामिस्रमा |
| **अधर्मेण** = अधर्मद्वारा | **तमसः** = नरकको | **याति** = पुग्दछ |
| **कुटुम्बभरणोत्सुकः** = आफ्ना | **चरमं** = अन्तिम | |

**वाक्यार्थ–** केवल अधर्मद्वारा आफ्ना कुटुम्बपालनपोषणमा आसक्त भएको जीव नरकको अन्तिम सीमा भएको अन्धतामिस्र नामक नरकमा पुग्दछ।

**अधस्तान्नरलोकस्य यावतीर्यातनादयः।**

**क्रमशः समनुक्रम्य पुनरत्राव्रजेच्छुचिः॥ ३४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नरलोकस्य** = मनुष्यलोक (जन्म) | **यातनादयः** = यातनारूप | **शुचिः** = शुद्ध भई |
| भन्दा | योनिहरू छन् (ती सबै) | **पुनः** = फेरि |
| **अधस्तात्** = तल (पहिला) | **क्रमशः** = क्रमैले | **अत्र** = यस मनुष्ययोनिमा |
| **यावतीः** = जति पनि | **समनुक्रम्य** = भोगेर | **आव्रजेत्** = जन्म लिन्छ |

**वाक्यार्थ–** मनुष्यजन्म पाउनुभन्दा पहिला जति पनि यातनाहरू छन् अथवा सुङ्गुर, कुकुर आदि योनिहरूमा जति पनि कष्ट छन् ती सबै कष्ट क्रमशः भोगेर शुद्ध भएपछि ऊ फेरि यस मनुष्ययोनिमा जन्म लिन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**कापिलेयोपाख्याने कर्मविपाको नाम त्रिंशोऽध्यायः॥ ३०॥**

# अथ एकत्रिंशोऽध्यायः

## मनुष्ययोनि प्राप्त गरेका जीवको गति

**श्रीभगवानुवाच** (श्रीभगवान् कपिलले भन्नुभयो)

**कर्मणा दैवनेत्रेण जन्तुर्देहोपपत्तये।**

**स्त्रियाः प्रविष्ट उदरं पुंसो रेतःकणाश्रयः॥ १॥**

पदार्थ–

**जन्तुः** = जीव
**देहोपपत्तये** = मनुष्यशरीर प्राप्त गर्नका लागि
**दैवनेत्रेण** = दैवको प्रेरणाबाट
**कर्मणा** = पूर्वजन्ममा गरिएका कर्मअनुसार
**पुंसः** = पुरुषको
**रेतः** = वीर्यको
**कणाश्रयः** = कणमा आश्रित हुँदै
**स्त्रियाः** = स्त्रीको
**उदरं** = पेटमा (गर्भाशयमा)
**प्रविष्ट** = प्रवेश गर्छ

**वाक्यार्थ–** हे आमा ! जीव मनुष्य शरीर प्राप्त गर्नका लागि दैवको प्रेरणाबाट पूर्वजन्ममा गरिएका कर्मअनुसार पुरुषको वीर्यको कणमा आश्रित हुँदै स्त्रीको गर्भाशयमा प्रवेश गर्छ।

**कललं त्वेकरात्रेण पञ्चरात्रेण बुद्बुदम्।**

**दशाहेन तु कर्कन्धूः पेश्यण्डं वा ततः परम्॥ २॥**

पदार्थ–

**एकरात्रेण तु** = (रज र वीर्यको मिलन भएपछि) एक रातमै
**कललं** = भ्रूण बन्छ
**पञ्चरात्रेण** = पाँच रातमा
**बुद्बुदम्** = फोका जस्तो गोलो आकारको हुन्छ
**दशाहेन** = दश दिनमा
**तु** = त
**कर्कन्धूः** = बयरको दाना जस्तो हुन्छ
**ततः परम्** = त्यसपछि
**पेशी** = मांसपेशी
**अण्डं** = अण्डाकार
**वा** = अथवा (बन्दछ)

**वाक्यार्थ–** रज र वीर्यको मिलन भएपछि एक रातमैं भ्रूण बन्छ। पाँच रातमा फोका जस्तो गोलो आकारको हुन्छ। दश दिनमा बयरको दानाजस्तो हुन्छ। त्यसपछि मांसपिण्डाकार अथवा अण्डाकार बन्दछ।

**मासेन तु शिरो द्वाभ्यां बाह्वङ्घ्र्याद्यङ्गविग्रहः।**

**नखलोमास्थिचर्माणि लिङ्गच्छिद्रोद्भवस्त्रिभिः॥ ३॥**

पदार्थ–

**मासेन** = एक महिनामा
**तु** = त
**शिरः** = टाउको बन्छ

**द्वाभ्यां** = दुई महिनामा
**बाह्वङ्घ्रयाद्यङ्गविग्रहः** = हात, खुट्टा आदि अङ्गको विकास हुन्छ
**त्रिभिः** = तीन महिनामा
**नखलोमास्थिचर्माणि** = नङ, रौँ, हाड, छाला र
**लिङ्गच्छिद्रोद्भवः** = पुरुष वा स्त्रीको लिङ्ग एवं विभिन्न छिद्रको विकास हुन्छ

**वाक्यार्थ–** एक महिनामा टाउको बन्छ। दुई महिनामा हात, खुट्टा आदि अङ्गको विकास हुन्छ। तीन महिनामा नङ, रौँ, हाड, छाला र स्त्री–पुरुषको चिह्न एवं विभिन्न छिद्रको विकास हुन्छ।

**चतुर्भिर्धातवः सप्त पञ्चभिः क्षुत्तृडुद्भवः।**
**षड्भिर्जरायुणा वीतः कुक्षौ भ्राम्यति दक्षिणे ॥ ४ ॥**

पदार्थ–
**चतुर्भिः** = चार महिनामा
**सप्त** = मांसादि सात
**धातवः** = धातुहरूको र
**पञ्चभिः** = पाँच महिनामा
**क्षुत्तृडुद्भवः** = भोक र प्यासको उत्पत्ति हुन्छ,
**षड्भिः** = छ महिनामा
**जरायुणा** = सालनालद्वारा
**वीतः** = बेरिएर
**दक्षिणे** = दाहिने
**कुक्षौ** = कोखमा
**भ्राम्यति** = घुम्दछ

**वाक्यार्थ–** चार महिनामा मांसादि सात धातुहरू र पाँच महिनामा भोक र प्यासको उत्पत्ति हुन्छ। छ महिनामा सालनालद्वारा बेरिएको गर्भ दाहिने कोखमा घुम्दछ।

**मातुर्जग्धान्नपानाद्यैरेधद्धातुरसम्मते।**
**शेते विण्मूत्रयोर्गर्ते स जन्तुर्जन्तुसम्भवे ॥ ५ ॥**

पदार्थ–
**मातुः** = आमाले
**जग्धान्नपानाद्यैः** = खाएको अन्न पानी आदिद्वारा
**एधद्धातुः** = सबै धातु पुष्ट भएको
**सः** = त्यो
**जन्तुः** = प्राणी
**जन्तुसम्भवे** = कीटाणुहरू उत्पन्न हुने
**विण्मूत्रयोः** = मल र मूत्रको
**असम्मते** = फोहर
**गर्ते** = खाडल (गर्भाशय)मा
**शेते** = सुत्दछ

**वाक्यार्थ–** त्यस समयमा आमाले खाएको अन्न, जल आदिबाट उसका सबै धातुहरू पुष्ट हुन थाल्दछन् र ऊ कीटाणुहरू उत्पन्न हुने मलमूत्रको फोहर खाडलमा सुत्दछ।

**कृमिभिः क्षतसर्वाङ्गः सौकुमार्यात् प्रतिक्षणम्।**
**मूर्च्छामाप्नोत्युरुक्लेशस्तत्रत्यैः क्षुधितैर्मुहुः ॥ ६ ॥**

पदार्थ–
**तत्रत्यैः** = त्यहाँ रहेका
**क्षुधितैः** = भोकाएका
**कृमिभिः** = किराहरूद्वारा

**मुहुः** = बारम्बार
**क्षतसर्वाङ्गः** = सम्पूर्ण अङ्ग छिया-छिया पारिएको
**सौकुमार्यात्** = कोमल अङ्ग हुनाले
**प्रतिक्षणम्** = प्रत्येक क्षण
**उरुक्लेशः** = धेरै कष्ट पाएको त्यो जीव
**मूर्च्छाम्** = मूर्छा अवस्थामा
**आप्नोति** = प्राप्त हुन्छ

**वाक्यार्थ–** त्यहाँ रहेका भोकाएका किराहरूले बारम्बार टोक्नाले सम्पूर्ण अङ्ग छिया-छिया पारिएको एवं कोमल अङ्ग हुनाले प्रत्येक क्षण धेरै कष्ट पाएको त्यो जीव मूर्छा पर्दछ।

**कटुतीक्ष्णोष्णलवणरूक्षाम्लादिभिरुल्बणैः।**
**मातृभुक्तैरुपस्पृष्टः सर्वाङ्गोत्थितवेदनः॥ ७॥**

पदार्थ–
**मातृभुक्तैः** = आमाले खाएका
**उल्बणैः** = सहन गर्न कठिन
**कटुतीक्ष्णोष्णलवणरूक्षाम्लादिभिः** = पिरो, तितो, तातो, नुनिलो, रुखो, अमिलो आदि भोजनहरूद्वारा
**उपस्पृष्टः** = छोइएको त्यो (बालक)
**सर्वाङ्गोत्थितवेदनः** = सम्पूर्ण अङ्गमा परेको पीडाले छट्पटाउन थाल्दछ

**वाक्यार्थ–** आमाले खाएका दुःसह पिरो, तितो, तातो, नुनिलो, रुखो, अमिलो आदि भोजनहरूद्वारा छोइएको त्यो बालक सम्पूर्ण अङ्गमा परेको पीडाले गर्दा छट्पटाउन थाल्दछ।

**उल्बेन संवृतस्तस्मिन्नन्त्रैश्च बहिरावृतः।**
**आस्ते कृत्वा शिरः कुक्षौ भुग्नपृष्ठशिरोधरः॥ ८॥**

पदार्थ–
**तस्मिन्** = आमाको त्यस गर्भाशयमा
**उल्बेन** = सालनालले
**संवृतः** = बेरिएको
**बहिः** = बाहिर
**च** = पनि
**अन्त्रैः** = आमाको आन्द्राद्वारा
**आवृतः** = ढाकिएको
**भुग्नपृष्ठशिरोधरः** = ढाड र घाँटी बाङ्गिएको गर्भको शिशु
**शिरः** = आफ्नो शिरलाई
**कुक्षौ** = कोखामा
**कृत्वा** = राखेर
**आस्ते** = बस्दछ

**वाक्यार्थ–** आमाको त्यस गर्भाशयमा सालनालले बेरिएको, बाहिर पनि आमाको आन्द्राद्वारा ढाकिएको एवं ढाड र घाँटी बाङ्गिएको गर्भस्थ शिशु आफ्नो शिरलाई कोखामा राखेर गुटुमुटु परेर बस्दछ।

**अकल्पः स्वाङ्गचेष्टायां शकुन्त इव पञ्जरे।**
**तत्र लब्धस्मृतिर्दैवात् कर्म जन्मशतोद्भवम्॥**

**स्मरन् दीर्घमनुच्छ्वासं शर्म किं नाम विन्दते ॥ ९ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **पञ्जरे** = पिँजडामा थुनिएको | **दैवात्** = अदृष्टबाट | **दीर्घम्** = लामो समयसम्म |
| **शकुन्तः** = चरा | **लब्धस्मृतिः** = स्मरणशक्ति पाएको (त्यसैले) | **अनुच्छ्वासं** = श्वास लिन पनि नसक्दा |
| **इव** = झैँ | **जन्मशतोद्भवम्** = सयौँ जन्ममा गरेका | **किं नाम** = के |
| **स्वाङ्गचेष्टायां** = आफ्ना अङ्गहरू चलाउन | **कर्म** = कर्म | **शर्म** = सुख |
| **अकल्पः** = असमर्थ हुन्छ | **स्मरन्** = सम्झँदै | **विन्दते** = प्राप्त गर्दछ होला र |
| **तत्र** = त्यहाँ गर्भमा | | |

**वाक्यार्थ—** त्यो गर्भस्थ जीव पिँजडामा थुनिएको चराले झैँ आफ्ना अङ्गहरू चलाउन पनि सक्दैन। त्यहाँ गर्भमा अदृष्टबाट स्मरणशक्ति पाएकाले सयौँ जन्ममा गरेका कर्म सम्झँदै लामो समयसम्म श्वास फेर्न पनि नसक्ने भएर रहँदा उसले के सुख प्राप्त गर्दछ होला र ?

**आरभ्य सप्तमान्मासाल्लब्धबोधोऽपि वेपितः ।**
**नैकत्रास्ते सूतिवातैर्विष्ठाभूरिव सोदरः ॥ १० ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **सप्तमात्** = सातौँ | **सूतिवातैः** = प्रसूतिवायुद्वारा | **विष्ठाभूः** = मलमा उत्पन्न भएका किरा |
| **मासात्** = महिनाबाट | **वेपितः** = यता र उता हुत्याइएको (त्यो जीव) | **इव** = झैँ |
| **आरभ्य** = आरम्भ भएर | **सोदरः** = एउटै पेटमा रहेका (भए पनि) | **एकत्र** = एउटै ठाउँमा |
| **लब्धबोधः अपि** = ज्ञानको उदय भएको भए पनि | | **न आस्ते** = बस्न सक्दैन |

**वाक्यार्थ—** सातौँ महिना सुरु भएपछि उसमा ज्ञानको पनि उदय हुन्छ, तापनि प्रसूतिवायुद्वारा यता र उता हुत्याइएको त्यो जीव त्यही पेटमै मलमा उत्पन्न भएका किराहरू एकै ठाउँमा मिलेर बसिरहन नसकेझैँ ऊ पनि एकै ठाउँमा बसिरहन सक्दैन।

**नाथमान ऋषिर्भीतः सप्तवध्रिः कृताञ्जलिः ।**
**स्तुवीत तं विक्लवया वाचा येनोदरेऽर्पितः ॥ ११ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **सप्तवध्रिः** = सप्तधातुमय स्थूल शरीरद्वारा बाँधिएको | भनेर) डराएको | **उदरे** = आमाको गर्भमा |
| **कृताञ्जलिः** = दुई हात जोडेको | **नाथमानः** = दुःखी भएको | **अर्पितः** = राखियो |
| **भीतः** = (फेरि गर्भमा बस्नुपर्छ | **ऋषिः** = आत्मदर्शी (त्यो जीव) | **तं** = उनै भगवान्लाई |
| | **येन** = जुन भगवान्द्वारा | **विक्लवया** = विह्वल |

**वाचा** = वाणीले | **स्तुवीत** = स्तुति गर्दछ

**वाक्यार्थ–** सप्तधातुमय स्थूल शरीरद्वारा बाँधिएको, दुई हात जोडेको, फेरि गर्भमा बस्नुपर्छ भनेर डराएर दुःखी भएको आत्मदर्शी त्यो जीव जुन भगवान्द्वारा उसलाई आमाको गर्भमा राखियो उनै भगवान्लाई विह्वल वाणीले स्तुति गर्दछ।

**जन्तुरुवाच** (जीवले भन्यो)

**तस्योपसन्नमवितुं जगदिच्छयात्त-**
**नानातनोर्भुवि चलच्चरणारविन्दम्।**
**सोऽहं व्रजामि शरणं ह्यकुतोभयं मे**
**येनेदृशी गतिरदर्श्यसतोऽनुरूपा॥ १२॥**

पदार्थ–

**येन** = जुन भगवान्द्वारा
**असतः** = अधम भएको
**मे** = मेरो लागि
**अनुरूपा** = उपयुक्त
**ईदृशी** = यस्तो (गर्भवासरूप)
**गतिः** = फल
**अदर्शि** = देखाइयो (यसैले)
**सः अहं** = त्यस्तो म
**हि** = निश्चय नै
**उपसन्नम्** = आफ्नो शरणमा आएको
**जगत्** = संसारको
**अवितुं** = रक्षाका लागि
**इच्छया** = स्वेच्छाले
**भुवि** = संसारमा
**आत्तनानातनोः** = विभिन्न अवतार धारण गर्नुहुने
**तस्य** = ती भगवान्को
**अकुतोभयं** = अभय दिने
**चलच्चरणारविन्दम्** = पृथ्वीमा विचरण गर्ने चरणकमलको
**शरणं** = शरणमा
**व्रजामि** = जान्छु

**वाक्यार्थ–** म अधमका लागि योग्य हुने गर्भवासरूप यस्तो फल जुन भगवान्ले दिनुभयो त्यस्ता आफ्नो शरणमा आएको यस संसारको रक्षाका लागि स्वेच्छाले संसारमा विभिन्न अवतार धारण गर्नुहुने भगवान्को अभय दिने, पृथ्वीमा विचरण गरिरहेका चरणकमलको शरणमा जान्छु।

**यस्त्वत्र बद्ध इव कर्मभिरावृतात्मा-**
**भूतेन्द्रियाशयमयीमवलम्ब्य मायाम्।**
**आस्ते विशुद्धमविकारमखण्डबोध-**
**मातप्यमानहृदयेऽवसितं नमामि॥ १३॥**

पदार्थ–

**यः तु** = जो
**भूतेन्द्रियाशयमयीम्** = शरीर, इन्द्रिय र अन्तःकरणरूप

**मायाम्** = मायालाई
**अवलम्ब्य** = स्वीकार गरेर
**कर्मभिः** = पुण्यपापरूप कर्महरूद्वारा
**आवृतात्मा** = आफ्नो स्वरूप ढाकिएको हुनाले
**बद्धः इव** = बाँधिएझैं भएर
**अत्र** = यस गर्भाशयमा
**आस्ते** = बस्दछ (त्यो म जीव)
**आतप्यमानहृदये** = संतप्त हृदयमा
**अवसितं** = रहनुभएका
**विशुद्धम्** = उपाधिरहित
**अविकारम्** = अविकारी
**अखण्डबोधम्** = अखण्डबोध-स्वरूप परमात्मालाई
**नमामि** = नमस्कार गर्दछु

**वाक्यार्थ–** आमाको यस गर्भाशयमा शरीर, इन्द्रिय र अन्तःकरणरूप मायालाई स्वीकार गरेर पुण्यपापरूप कर्महरूद्वारा आफ्नो स्वरूप ढाकिनाले बाँधिएझैं भएर म बसेको छु, त्यही जीव म आफ्नो संतप्त हृदयमा रहनुभएका उपाधिरहित, अविकारी एवं अखण्डबोधस्वरूप परमात्मालाई नमस्कार गर्दछु।

**विवरण–** जीवात्मा बन्धनमा परेको मायालाई स्वीकार गरेर नै हो। पञ्चमहाभूत, इन्द्रिय र अन्तःकरणमय माया भगवान्मा छैन। त्यसैले उहाँ नित्यमुक्त, बोधस्वरूप र विशुद्ध हुनुहुन्छ। जीवात्मा आफ्नै धारणा र मिथ्याबुद्धिद्वारा बाँधिएको हो र यो बन्धन केवल नजान्नाले भएको हो, वास्तवमा जीव बन्धनमा परेको होइन। अतः श्लोकमा **बद्ध इव** भनिएको हो।

**यः पञ्चभूतरचिते रहितः शरीरे-**
**च्छन्नोऽयथेन्द्रियगुणार्थचिदात्मकोऽहम्।**
**तेनाविकुण्ठमहिमानमृषिं तमेनं**
**वन्दे परं प्रकृतिपूरुषयोः पुमांसम्॥ १४॥**

**पदार्थ–**

**यः** = जो
**अहम्** = म (जीव)
**रहितः** = (वास्तवमा) असङ्ग छु
**पञ्चभूतरचिते** = पञ्चमहाभूतले रचित
**शरीरे** = शरीरमा
**छन्नः** = सम्बद्ध भएको
**तेन** = त्यही मिथ्या सम्बन्धका कारण
**अयथेन्द्रियगुणार्थचिदात्मकः** = वस्तुतः असत् भएका इन्द्रिय, गुण, शब्द आदि विषय र चिदाभासरूप (देखिने म)
**अविकुण्ठमहिमानम्** = शरीर आदिको आवरणले जसको महिमा कुण्ठित भएको छैन, त्यस्ता
**प्रकृतिपूरुषयोः** = प्रकृति र पुरुषका
**परं** = नियन्ता
**ऋषिं** = सर्वज्ञ
**पुमांसम्** = परमपुरुष
**तम् एनं** = उनै परमात्मालाई
**वन्दे** = वन्दना गर्दछु

**वाक्यार्थ–** म जीव वास्तवमा शरीर आदिले रहित वा असङ्ग भएर पनि देख्नमा पाञ्चभौतिक शरीरले सम्बद्ध देखिन्छु र यसैले असत् इन्द्रिय, गुण, शब्द आदि विषय र चिदाभास (अहङ्कार)को रूपमा देखिन्छु। शरीर आदिको आवरणले जसको महिमा कुण्ठित भएको छैन त्यस्ता, प्रकृति र पुरुषका नियन्ता हुनुभएका सर्वज्ञ परमपुरुष परमात्माको म वन्दना गर्दछु।

**विवरण–** इन्द्रिय, गुण, शब्द आदि विषय र चिदाभासको समष्टि नै जीव हो। चिदाभास भनेको अहङ्कार हो। अन्तःकरण र त्यसमा परेको चित्को आभास मिली चेतन र अचेतन दुबैको मिश्रणबाट अहङ्कार अर्थात् जीवात्माको स्वरूप बन्दछ। त्यही शरीरभित्र बस्ने साक्षीस्वरूप परमात्मा भने मिथ्या आवरणबाट युक्त हुनुहुन्न। जीवात्मा र परमात्माको भेद अज्ञानको कारणले भएको हो। परमात्मामा स्वरूपज्ञान हुने हुनाले नै उहाँ प्रकृति र पुरुष (जीव)को समेत नियन्ता हुनुहुन्छ।

**यन्माययोरुगुणकर्मनिबन्धनेऽस्मिन्**
**सांसारिके पथि चरंस्तदभिश्रमेण।**
**नष्टस्मृतिः पुनरयं प्रवृणीत लोकं**
**युक्त्या कया महदनुग्रहमन्तरेण॥ १५॥**

पदार्थ–

**यन्मायया** = जसको मायाद्वारा
**नष्टस्मृतिः** = आफ्नो स्वरूपको स्मृति नष्ट भएको (जीव)
**उरुगुणकर्मनिबन्धने** = सत्त्व आदि गुण र कर्मबन्धनले युक्त भएर
**अस्मिन्** = यो
**सांसारिके** = सांसारिक
**पथि** = बाटोमा
**तदभिश्रमेण** = दुःखहरू भोग्दै
**चरन्** = भौँतारिइरहेको छ
**पुनः** = फेरि
**अयं** = यो जीव
**महदनुग्रहम्** = परमात्माको कृपा
**अन्तरेण** = विना
**कया** = कुन
**युक्त्या** = उपायले
**लोकं** = आफ्नो स्वरूपलाई
**प्रवृणीत** = जान्न सक्छ र

**वाक्यार्थ–** परमात्माकै मायाको कारणले आफ्नो स्वरूपको स्मृति नष्ट भएको यो जीव अनेक प्रकारका सत्त्व आदि गुण र कर्मका बन्धनले युक्त भएर यस संसारमार्गमा अनेक किसिमका दुःखहरू भोग्दै भौँतारिइरहेको छ, त्यसकारण परमात्माको कृपा नभई अरू कुन उपायले उसले आफ्नो स्वरूपलाई जान्न सक्छ र ?

**ज्ञानं यदेतददधात् कतमः स देव-**
**स्त्रैकालिकं स्थिरचरेष्वनुवर्तितांशः।**
**तं जीवकर्मपदवीमनुवर्तमाना-**
**स्तापत्रयोपशमनाय वयं भजेम॥ १६॥**

पदार्थ–

**यद् एतद्** = जो यो
**त्रैकालिकं** = (भूत, वर्तमान र भविष्यत्) तीनै कालको

**ज्ञानं** = ज्ञान भएको छ (त्यो ज्ञान परमात्माविना)
**कतमः** = कसले
**अदधात्** = धारण गराइदियो र (तर)
**स्थिरचरेषु** = स्थावर र जङ्गम समस्त प्राणीहरूमा
**सः देवः** = त्यही परमात्मा
**अनुवर्तितांशः** = अन्तर्यामीरूप अंशले विद्यमान हुनुहुन्छ
**जीवकर्मपदवीम्** = जीवरूप कर्मजनित मार्गमा
**अनुवर्तमानाः** = हिँडिरहेका
**वयं** = हामीहरू
**तापत्रयोपशमनाय** = तीन किसिमका ताप (आधिदैविक, आदिभौतिक र आध्यात्मिक) नाशका लागि
**तं** = उनै परमात्माको
**भजेम** = भजन गर्दछौँ

**वाक्यार्थ–** मलाई जुन यो त्रैकालिक ज्ञान प्राप्त छ त्यो ज्ञान परमात्माविना कसले दिएको हो र ? किनभने स्थावर र जङ्गम समस्त प्राणीहरूमा अन्तर्यामीरूपमा परमात्मा नै त विद्यमान हुनुहुन्छ। त्यसकारण जीवरूप कर्मजनित मार्गमा हिँडिरहेका हामीहरू त्रिविध तापको नाशका लागि उनै परमात्माको भजन गर्दछौँ।

**देह्यन्यदेहविवरे जठराग्निनासृग्-**
**विण्मूत्रकूपपतितो भृशतप्तदेहः।**
**इच्छन्नितो विवसितुं गणयन् स्वमासान्**
**निर्वास्यते कृपणधीर्भगवन् कदा नु॥ १७॥**

**पदार्थ–**

**भगवन्** = हे भगवान्
**देही** = देहधारी जीव
**अन्यदेहविवरे** = आमाको पेटरूपी गुफाभित्र
**असृग्विण्मूत्रकूपपतितः** = रगत, मल र मूत्रको कुवामा खसेको
**जठराग्निना** = आमाको जठराग्निको तापले
**भृशतप्तदेहः** = शरीर ज्यादै तातेको
**कृपणधीः** = दीनबुद्धि भएको जीव
**विवसितुं** = निस्कन
**इच्छन्** = चाहँदै
**स्वमासान्** = आफू बाहिर निस्कने महिना
**गणयन्** = गन्दै बसेको छ
**कदा** = कहिले
**नु** = चाहिँ
**इतः** = यहाँबाट
**निर्वास्यते** = बाहिर निकालिन्छ

**वाक्यार्थ–** हे भगवान् ! देहधारी जीव आमाको पेटरूपी गुफाभित्र रगत, मल र मूत्रको कुवामा खसेको छ, आमाको जठराग्निको तापले उसको शरीर ज्यादै तातेको छ, दुःखी भएको ऊ बाहिर निस्कन चाहँदै आफू बाहिर निस्कने महिना गन्दै बसैको छ। हे भगवान् ! कहिले चाहिँ यसलाई यहाँबाट बाहिर निकालिने होला ?

**येनेदृशीं गतिमसौ दशमास्य ईश**
**सङ्ग्राहितः पुरुदयेन भवादृशेन।**

**स्वेनैव तुष्यतु कृतेन स दीननाथः**
**को नाम तत् प्रति विनाञ्जलिमस्य कुर्यात् ॥ १८ ॥**

**पदार्थ–**

**ईश** = हे भगवान्
**भवादृशेन** = हजुरजस्तो
**पुरुदयेन** = एकदमै दयालु
**येन** = भगवान्द्वारा
**दशमास्यः** = दश महिनाको
**असौ** = यो जीवलाई
**ईदृशीं** = यस्तो दुर्लभ
**गतिम्** = ज्ञान
**सङ्ग्राहितः** = दिनुभएको छ
**सः** = उहाँ
**दीननाथः** = दुःखीहरूका रक्षक
**स्वेन** = आफूद्वारा
**एव** = नै
**कृतेन** = गरिएको उपकारद्वारा
**तुष्यतु** = आफैँ खुसी हुनुहोस्
**अञ्जलिम्** = नमस्कार
**विना** = बाहेक
**कः नाम** = कसले चाहिँ
**अस्य तत्** = ज्ञान दिने त्यस कार्यको
**प्रति कुर्यात्** = उपकारको बदलामा के दिन सक्छ र

**वाक्यार्थ–** हे ईश ! हजुरजस्तो एकदमै दयालु भगवान्ले दश महिनाको यो जीवलाई यस्तो दुर्लभ ज्ञान दिनुभएको छ। दुःखीहरूका रक्षक हुनुभएका हजुर आफूबाट नै गरिएको उपकारद्वारा आफैँ खुसी हुनुहोस्। नमस्कार गर्नु बाहेक कसले चाहिँ हजुरको त्यस कार्यको उपकारको बदलामा के दिन सक्छ र ?

**पश्यत्ययं धिषणया ननु सप्तवध्रिः**
**शारीरके दमशरीर्यपरः स्वदेहे ।**
**यत्सृष्टयासं तमहं पुरुषं पुराणं**
**पश्ये बहिर्हृदि च चैत्यमिव प्रतीतम् ॥ १९ ॥**

**पदार्थ–**

**अयं** = यो
**अपरः** = पशुपक्षी आदि अन्य जीव
**सप्तवध्रिः** = मांस आदि सात धातुहरूद्वारा बनेको
**स्वदेहे** = आफ्नो
**शारीरके** = शरीरमा उत्पन्न हुने सुख र दुःख आदि
**ननु** = नै
**पश्यति** = अनुभव गर्दछ
**अहं** = म त
**यत्सृष्टया** = हजुरले दिएको
**धिषणया** = ज्ञानद्वारा
**दमशरीरी** = शम, दम आदि साधनसम्पन्न शरीरयुक्त
**आसं** = भएँ (अतः हजुरले दिनुभएको बुद्धिले म)
**बहिः** = बाहिर र
**हृदि च** = हृदयमा पनि
**चैत्यम् इव** = चेतनरूपले झैँ
**प्रतीतम्** = प्रतीत हुनुभएका
**तम्** = हजुर
**पुराणं पुरुषं** = आदिपुरुषलाई
**पश्ये** = साक्षात्कार गर्छु

**वाक्यार्थ–** हे प्रभु ! संसारका यी पशु-पक्षी आदि अन्य जीवहरू त मांस आदि सात

धातुहरूद्वारा बनेको आफ्नो शरीरमा उत्पन्न हुने सुख, दुःख आदिको मात्र अनुभव गर्दछन्, तर म त हजुरको कृपाले शम, दम आदि साधनसम्पन्न शरीरले युक्त भएको छु, त्यसकारण हजुरले दिनुभएको विवेकयुक्त बुद्धिले म आफ्नो शरीरको बाहिर र भित्र पनि चेतनरूपले प्रतीत हुनुभएका हजुर आदिपुरुषलाई नै साक्षात्कार गर्छु।

**विवरण–** विवेकशक्तियुक्त मनुष्यको जीवन र फलभोगको लागि मात्र जन्मने पशुपक्षीहरूको जीवनमा ठुलो अन्तर छ। आहार, निद्रा, भय र सन्तानोत्पत्तिका प्रक्रिया मानिसमा र अन्य जीवहरूमा सामान्यतया समान रूपमा आवश्यक भएका देखिन्छन् तर पनि मनुष्य प्राकृतिक आवश्यकताहरूमाथि नियन्त्रण गर्न सक्छ। त्यसैले मानिसलाई **दमशरीरी** भनिएको हो।

कर्मेन्द्रियहरूमाथिको नियन्त्रणलाई दम भनिन्छ भने ज्ञानेन्द्रियहरूमाथिको नियन्त्रणलाई शम भनिन्छ। स्वाभाविक रूपमा मनुष्य त्यो हो जसले भोजन, निद्रा, काम, क्रोध आदि शारीरिक र मानसिक जन्मजात वृत्तिहरूलाई आवश्यकताअनुसार नियन्त्रण गर्दछ।

**सोऽहं वसन्नपि विभो बहुदुःखवासं**
**गर्भान्न निर्जिगमिषे बहिरन्धकूपे।**
**यत्रोपयातमुपसर्पति देवमाया**
**मिथ्यामतिर्यदनु संसृतिचक्रमेतत्॥ २०॥**

**पदार्थ–**

**विभो** = हे व्यापक भगवान्
**सः अहं** = हजुरको अनुभव गर्ने म
**बहुदुःखवासं** = बडो दुःखमय गर्भाशयमा
**वसन् अपि** = बसिरहँदा पनि
**गर्भात्** = यस गर्भबाट
**न निर्जिगमिषे** = बाहिर निस्कन चाहन्नँ
**बहिः** = गर्भदेखि बाहिर
**अन्धकूपे** = अँध्यारो कुवारूपी विवेकहीन संसारमा
**उपयातम्** = पुगेको जीवलाई
**यत्र** = जहाँ
**देवमाया** = हजुरको मायाले
**उपसर्पति** = घेर्दछ
**यदनु** = त्यसपछि
**मिथ्यामतिः** = शरीरमा अहंबुद्धि भएको जीव
**एतत्** = यस
**संसृतिचक्रम्** = संसारचक्रमा फस्दछ

**वाक्यार्थ–** हे भगवान्! बडो दुःखमय यस गर्भाशयमा बसिरहँदा पनि म यस गर्भबाट बाहिर निस्कन चाहन्नँ। गर्भदेखि बाहिर अँध्यारो कुवारूपी विवेकहीन संसारमा पुगेको जीवलाई त्यहाँ हजुरको मायाले घेर्दछ। त्यो मायाद्वारा शरीर आदिमा अहं र ममबुद्धि भएको जीव यो संसारचक्रमा फस्दछ।

**विवरण–** वेदान्तसिद्धान्तअनुसार 'मिथ्या' भनेर त्यस्ता पदार्थलाई लिइन्छ जसको स्वरूपतः अस्तित्व नभए तापनि व्यवहारकालमा भान हुन्छ। नहुनु र देखिनु मिथ्यात्वको लक्षण हो। ख्याति

भनेको देखिनु र बाध भनेको नहुनु हो। यी दुबै जहाँ हुन्छन् त्यो वस्तुलाई अनिर्वचनीय अथवा मिथ्या भनिन्छ। वेदान्तसिद्धान्तअनुसार सम्पूर्ण जगत् पनि ब्रह्मरूपी आश्रयमा डोरीमा सर्प देखिएझैं देखिएको मात्र हुनाले सम्पूर्ण जगत् मिथ्या हो।

नभएको वस्तुमा भएको बुद्धि गर्नु मिथ्यामति हो। जन्मिनु, मर्नु जस्ता विकारहरूले ग्रस्त भएको परिच्छिन्न शरीरमा अविकारी नजन्मिने र नमर्ने त्यसै गरी सर्वव्यापक आत्मतत्त्वलाई निश्चय गर्नु उल्टो बुद्धि हो। त्यसैले शरीरमा गरिने 'अहं' अर्थात् 'म शरीर हुँ' भन्ने बुद्धि अथवा मतिलाई यहाँ मिथ्यामति भनिएको हो।

**तस्मादहं विगतविक्लव उद्धरिष्य**
**आत्मानमाशु तमसः सुहृदात्मनैव।**
**भूयो यथा व्यसनमेतदनेकरन्ध्रं**
**मा मे भविष्यदुपसादितविष्णुपादः॥ २१॥**

**पदार्थ–**

**तस्माद्** = त्यसकारण (यहीं रहेर पनि)
**विगतविक्लवः** = व्याकुल नभई
**उपसादितविष्णुपादः** = भगवान् विष्णुको चरणकमलको प्राप्ति गरेर
**अहं** = म
**आशु** = चाँडै
**सुहृदा** = आफ्नो बुद्धिका सहायताले
**आत्मना एव** = आफूले नै
**आत्मानम्** = आफूलाई
**तमसः** = संसारको दुःखरूपी अन्धकारबाट
**उद्धरिष्ये** = बाहिर निकाल्छु
**यथा** = जसबाट
**अनेकरन्ध्रं** = विभिन्न गर्भमा बस्नुपर्ने
**एतत्** = यो
**व्यसनम्** = दुःख
**भूयः** = फेरि
**मे** = मलाई
**मा भविष्यत्** = नआइलागोस्

**वाक्यार्थ–** त्यसकारण म व्याकुलतालाई छाडेर आफ्नो हृदयमा भगवान् विष्णुको चरणलाई स्थापित गरेर आफ्नो बुद्धिको सहायताले आफूले नै आफूलाई यस संसारको दुःखरूपी अन्धकारबाट छिट्टै नै बाहिर निकाल्छु, जसबाट मलाई विभिन्न गर्भमा बस्नुपर्ने यो दुःख फेरि नआइलागोस्।

**कपिल उवाच** (कपिल भगवान्ले भन्नुभयो)

**एवं कृतमतिर्गर्भे दशमास्यः स्तुवन्नृषिः।**
**सद्यः क्षिपत्यवाचीनं प्रसूत्यै सूतिमारुतः॥ २२॥**

**पदार्थ–**

**दशमास्यः** = दश महिना गर्भमा रहेको
**ऋषिः** = जीवले

| | | |
|---|---|---|
| **एवं** = यसरी | **सूतिमारुतः** = प्रसवकालको वायुले | **प्रसूत्यै** = बाहिर निकाल्नको लागि |
| **कृतमतिः** = ज्ञानसम्पन्न भएर | **अवाचीनं** = तलतिर मुख भएको जीवलाई | **क्षिपति** = धकेल्न थाल्दछ |
| **गर्भे** = गर्भमा | **सद्यः** = तत्काल | |
| **स्तुवन्** = भगवान्को स्तुति गरिरहँदा | | |

**वाक्यार्थ–** दश महिना गर्भमा रहेको जीवले यसरी ज्ञानसम्पन्न भएर गर्भमा भगवान्को स्तुति गरिरहँदा प्रसवकालको वायुले तलतिर मुख भएको त्यस जीवलाई तत्काल बाहिर निकाल्नको लागि धकेल्न थाल्दछ।

**तेनावसृष्टः सहसा कृत्वावाक् शिर आतुरः।**
**विनिष्क्रामति कृच्छ्रेण निरुच्छ्वासो हतस्मृतिः॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तेन** = त्यो प्रसूति वायुद्वारा | **कृत्वा** = गरेर | नष्ट भएर |
| **सहसा** = अचानक | **आतुरः** = पीडित हुँदै | **कृच्छ्रेण** = ठुलो दुःखले |
| **अवसृष्टः** = धकेलिएको | **निरुच्छ्वासः** = कष्टपूर्वक श्वास फेर्दै | **विनिष्क्रामति** = बाहिर निक्कन्छ |
| **अवाक्** = तलतिर | **हतस्मृतिः** = पहिलेको स्मृति | |
| **शिरः** = टाउको | | |

**वाक्यार्थ–** प्रसूति वायुद्वारा अचानक धकेलिएको त्यो जीव तलतिर टाउको गरेर पीडित हुँदै कष्टपूर्वक श्वास फेर्दै पहिलेको स्मृति नष्ट भएर ज्यादै दुःखले बाहिर निक्कन्छ।

**पतितो भुव्यसृङ्मूत्रे विष्ठाभूरिव चेष्टते।**
**रोरूयति गते ज्ञाने विपरीतां गतिं गतः॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भुवि** = संसारमा | **चेष्टते** = छट्पटाउँछ | **गतिं** = अज्ञान अवस्थामा |
| **असृङ्मूत्रे** = (आमाको) रगत र मूत्रमा | **ज्ञाने** = गर्भवासकालमा रहेको ज्ञान | **गतः** = पुगेर |
| **पतितः** = खसेको बालक | **गते** = नष्ट भएपछि | **रोरूयति** = बारम्बार रुन थाल्दछ |
| **विष्ठाभूः इव** = विष्ठाको किराझैं | **विपरीतां** = त्यसदेखि विपरीत | |

**वाक्यार्थ–** संसारमा आमाको रगत र मूत्रमा डुबेको त्यो बालक विष्ठाको किराझैं छट्पटाउँछ। गर्भवासकालमा रहेको ज्ञान नष्ट भएपछि त्यसदेखि विपरीत देहाभिमानरूप अज्ञान अवस्थामा पुगेर बारम्बार रुन्छ।

**परच्छन्दं न विदुषा पुष्यमाणो जनेन सः।**
**अनभिप्रेतमापन्नः प्रत्याख्यातुमनीश्वरः॥ २५॥**

पदार्थ–

**परच्छन्दं** = अरूको (बालकको) अभिप्रायलाई
**न विदुषा** = नबुझ्ने
**जनेन** = मानिसद्वारा
**पुष्यमाणः** = पालिएको
**सः** = त्यो बालक
**अनभिप्रेतम्** = नचाहेको कुरा
**आपन्नः** = आइपर्दा पनि
**प्रत्याख्यातुम्** = हटाउन
**अनीश्वरः** = असमर्थ हुन्छ

**वाक्यार्थ–** बालकको अभिप्रायलाई नबुझ्ने मानिसले त्यसलाई पालनपोषण गर्दछन्। त्यस्तो अवस्थामा त्यो बालक नचाहेको कुरा आइपर्दा पनि हटाउन असमर्थ हुन्छ।

**शायितोऽशुचिपर्यङ्के जन्तुः स्वेदजदूषिते।**
**नेशः कण्डूयनेऽङ्गानामासनोत्थानचेष्टने॥ २६॥**

पदार्थ–

**स्वेदजदूषिते** = जुम्रा, उडुस आदिद्वारा दूषित
**अशुचिपर्यङ्के** = फोहरी ओछ्यानमा
**शायितः** = सुताइएको
**जन्तुः** = नवजात शिशु
**अङ्गानाम्** = आफ्ना अङ्गहरू
**कण्डूयने** = कन्याउन
**आसनोत्थानचेष्टने** = बस्न, उठ्न र शरीर चलाउन पनि
**न ईशः** = असमर्थ हुन्छ

**वाक्यार्थ–** जुम्रा, उडुस आदिद्वारा दूषित फोहरी ओछ्यानमा सुताइएको नवजात शिशु आफ्ना अङ्गहरू कन्याउन, बस्न, उठ्न र शरीर चलाउनमा पनि असमर्थ हुन्छ।

**तुदन्त्यामत्वचं दंशा मशका मत्कुणादयः।**
**रुदन्तं विगतज्ञानं कृमयः कृमिकं यथा॥ २७॥**

पदार्थ–

**आमत्वचं** = कोमल छाला भएको
**विगतज्ञानं** = गर्भावस्थामा हुँदाको ज्ञान गएको
**रुदन्तं** = रुँदै गरेको शिशुलाई
**कृमिकं** = ठुला किरालाई
**कृमयः** = साना किराहरूले
**यथा** = दुःख दिएझैं
**दंशाः** = डाँस
**मशकाः** = लामखुट्टेहरू र
**मत्कुणादयः** = उडुस आदिले
**तुदन्ति** = दुःख दिन्छन्

**वाक्यार्थ–** कोमल छाला भएको, गर्भावस्थामा हुँदाको ज्ञान गएको एवं रुँदै गरेको शिशुलाई ठुला किराहरूलाई साना किराहरूले दुःख दिएझैं डाँस, लामखुट्टे र उडुस आदिले दुःख दिन्छन्।

**इत्येवं शैशवं भुक्त्वा दुःखं पौगण्डमेव च ।**

**अलब्धाभीप्सितोऽज्ञानादिद्धमन्युः शुचार्पितः ॥ २८ ॥**

**पदार्थ–**

**इति एवं** = यसप्रकार
**शैशवं** = शैशव अवस्थाको र
**पौगण्डम्** = पौगण्डावस्थाको
**एव च** = पनि
**दुःखं** = दुःख
**भुक्त्वा** = भोग गरेर (यौवनावस्थामा पुग्दछ, त्यहाँ पनि)
**अलब्धाभीप्सितः** = आफ्नो मनोरथ पूरा नभएपछि
**अज्ञानात्** = अज्ञाने गर्दा
**इद्धमन्युः** = एकदमै क्रोधित भएर
**शुचार्पितः** = शोकले व्याप्त हुन्छ

**वाक्यार्थ–** यसप्रकार शैशव अवस्था र पौगण्डावस्था (यौवनावस्थाभन्दा केही अघिको समय)मा हुने दुःख भोगेर यौवनावस्थामा पुग्दछ। त्यहाँ पनि आफ्नो मनोरथ पूरा नभएपछि अज्ञानले गर्दा ऊ एकदमै क्रोधित भएर शोकले व्याप्त हुन्छ।

**सह देहेन मानेन वर्धमानेन मन्युना ।**

**करोति विग्रहं कामी कामिष्वन्ताय चात्मनः ॥ २९ ॥**

**पदार्थ–**

**देहेन सह** = शरीरसँगै
**वर्धमानेन** = बढ्दै गरेको
**मानेन** = अहङ्कारले र
**मन्युना** = रिसले
**च** = पनि युक्त भएको
**कामी** = कामनाले ग्रस्त भएको जीव
**आत्मनः** = आफ्नो
**अन्ताय** = विनाशका लागि
**कामिषु** = अन्य कामग्रस्त जीवसँग
**विग्रहं** = विरोध
**करोति** = गर्दछ

**वाक्यार्थ–** शरीरसँगै अहङ्कार र क्रोध बढ्दै जानाले कामनाले ग्रस्त भएको जीव आफ्नै विनाशका लागि अन्य कामग्रस्त जीवहरूसँग विरोध गर्दछ।

**भूतैः पञ्चभिरारब्धे देहे देह्यबुधोऽसकृत् ।**

**अहं ममेत्यसद्ग्राहः करोति कुमतिर्मतिम् ॥ ३० ॥**

**पदार्थ–**

**असद्ग्राहः** = असद्वस्तु मात्र ग्रहण गर्ने
**कुमतिः** = कुबुद्धि भएको
**अबुधः** = अज्ञानी
**देही** = जीव
**पञ्चभिः** = पाँच
**भूतैः** = महाभूतहरूद्वारा
**आरब्धे** = बनेको
**देहे** = शरीरमा
**असकृत्** = बारम्बार
**अहं मम इति** = म मेरो भन्ने
**मतिम्** = बुद्धि
**करोति** = गर्दछ

**वाक्यार्थ–** असद्वस्तु मात्र ग्रहण गर्ने कुबुद्धि भएको अज्ञानी जीव पाँच महाभूतहरूद्वारा बनेको यस शरीरमा बारम्बार म र मेरो भन्ने बुद्धि गर्दछ।

**तदर्थं कुरुते कर्म यद्बद्धो याति संसृतिम्।**
**योऽनुयाति ददत् क्लेशमविद्याकर्मबन्धनः॥ ३१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यः** = जो यो | **अनुयाति** = फेरि आउँछ | बाँधिएर |
| **अविद्याकर्मबन्धनः** = अज्ञान-जनित कर्मद्वारा बाँधिएको जीव | **तदर्थं** = देहनिर्वाहको लागि | **संसृतिम्** = अनेकौं योनिमा |
| **क्लेशम्** = दुःख | **कर्म** = कर्म | **याति** = पुग्दछ |
| **ददत्** = दिनेवाला शरीरमा | **कुरुते** = गर्दछ | |
| | **यद्बद्धः** = जुन कर्मद्वारा | |

**वाक्यार्थ–** अज्ञानजनित कर्मद्वारा बाँधिएको जीव दुःख दिनेवाला शरीरमा फेरि आउँछ, शरीर पालनको लागि कर्म गर्दछ र कर्मद्वारा बाँधिएर अनेकौं योनिमा पुग्दछ।

**यद्यसद्भिः पथि पुनः शिश्नोदरकृतोद्यमैः।**
**आस्थितो रमते जन्तुस्तमो विशति पूर्ववत्॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यदि** = यदि | सेवित | **तमः** = अन्धकारमय |
| **जन्तुः** = जीव | **पथि** = मार्गमा | मातृगर्भमा |
| **शिश्नोदरकृतोद्यमैः** = कामवासनापूर्ति र पेटको प्रयोजनको लागि कर्म गर्नेवाला | **आस्थितः** = रहेर | **विशति** = प्रवेश गर्दछ |
| | **पुनः** = फेरि पहिलाझैं विषयमा | |
| | **रमते** = रमाउँछ (भने) | |
| **असद्भिः** = असत् व्यक्तिद्वारा | **पूर्ववत्** = फेरि पहिलेजस्तै | |

**वाक्यार्थ–** यदि जीव कामवासनापूर्ति र पेटको प्रयोजनको लागि कर्म गर्ने असत् व्यक्तिद्वारा सेवित मार्गमा रहेर फेरि विषयमा रमाउँछ भने फेरि पहिलेजस्तै अन्धकारमय आमाको गर्भमा प्रवेश गर्दछ।

**सत्यं शौचं दया मौनं बुद्धिः श्रीर्ह्रीर्यशः क्षमा।**
**शमो दमो भगश्चेति यत्सङ्गाद् याति सङ्क्षयम्॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्सङ्गात्** = जसको सङ्गतबाट | **सत्यं** = सत्य | **शौचं** = शुद्धता |

| | | |
|---|---|---|
| **दया** = दया | **यशः** = कीर्ति | **भगः** = ऐश्वर्य |
| **मौनं** = मौनता | **क्षमा** = सहनशीलता | **इति** = यी सबै सद्गुण |
| **बुद्धिः** = बुद्धि | **शमः** = शान्ति | **सङ्क्षयम्** = नष्ट |
| **श्रीः** = श्री | **दमः** = इन्द्रियनिग्रह | **याति** = हुन्छन् |
| **ह्रीः** = लज्जा | **च** = र | |

**वाक्यार्थ–** जसको सङ्गतबाट सत्य, शुद्धता, दया, मौनता, बुद्धि, श्री, लज्जा, कीर्ति, सहनशीलता, शान्ति, इन्द्रियनिग्रह र ऐश्वर्य यी नष्ट हुन्छन्।

**तेष्वशान्तेषु मूढेषु खण्डितात्मस्वसाधुषु।**
**सङ्गं न कुर्याच्छोच्येषु योषित्क्रीडामृगेषु च॥ ३४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तेषु** = ती | **असाधुषु** = अशिष्ट | **सङ्गं** = सङ्गत |
| **अशान्तेषु** = अशान्त | **योषित्क्रीडामृगेषु** = स्त्रीका | **च** = पनि |
| **मूढेषु** = मूर्ख | खेलौना भएका | **न कुर्यात्** = नगर्नू |
| **खण्डितात्मसु** = देहात्मवादी | **शोच्येषु** = शोचनीय व्यक्तिसँग | |

**वाक्यार्थ–** ती अशान्त, मूर्ख, देहात्मवादी, अशिष्ट, स्त्रीको खेलौना भएका शोचनीय व्यक्तिसँग सङ्गत पनि नगर्नू।

**न तथास्य भवेन्मोहो बन्धश्चान्यप्रसङ्गतः।**
**योषित्सङ्गाद् यथा पुंसो यथा तत्सङ्गिसङ्गतः॥ ३५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अस्य** = यस | आसक्त पुरुषको सङ्गतबाट | **तथा** = त्यस्तो |
| **पुंसः** = पुरुषको | **यथा यथा** = जसरी जसरी | **अन्यप्रसङ्गतः** = अरू कसैको |
| **योषित्सङ्गाद्** = स्त्रीको सङ्गतबाट | **मोहः** = मोह र | सङ्गतबाट |
| र | **बन्धः** = बन्धन | **न भवेत्** = हुँदैन |
| **तत्सङ्गिसङ्गतः** = ती स्त्रीहरूमा | **च** = पनि हुन्छ | |

**वाक्यार्थ–** मानिसलाई अन्य पदार्थसँग सङ्गत गर्नाले त्यति मोह र बन्धन हुँदैन जति स्त्री र ती स्त्रीमा आसक्त अन्य साथीहरूसँगको सङ्गतबाट हुन्छ।

**प्रजापतिः स्वां दुहितरं दृष्ट्वा तद्रूपधर्षितः।**
**रोहिद्भूतां सोऽन्वधावदृक्षरूपी हतत्रपः॥ ३६॥**

पदार्थ–

**स्वां** = आफ्नी
**दुहितरं** = छोरी सरस्वतीलाई
**दृष्ट्वा** = देखेर
**तद्रूपधर्षितः** = उनको रूपले मोहित भएर
**रोहिद्भूतां** = मृगीको रूप धारण गरेर भाग्दै गरेकी सरस्वतीलाई
**ऋक्षरूपी** = मृगरूप लिएका
**सः** = उनी
**प्रजापतिः** = सृष्टिकर्ता ब्रह्माजी
**हतत्रपः** = लाज पचाएर
**अन्वधावत्** = पछि-पछि दौडनुभयो

**वाक्यार्थ–** आफ्नी छोरी सरस्वतीलाई देखेर उनको रूपले मोहित भएका सृष्टिकर्ता ब्रह्माजी मृगीको रूप धारण गरी भाग्दै गरेकी सरस्वतीको पछि-पछि मृगरूप लिएर लाज पचाएर दौडनुभयो ।

**तत्सृष्टसृष्टसृष्टेषु को न्वखण्डितधीः पुमान् ।**
**ऋषिं नारायणमृते योषिन्मय्येह मायया ॥ ३७ ॥**

पदार्थ–

**तत्सृष्टसृष्टसृष्टेषु** = ब्रह्माले सिर्जना गरेका कश्यप आदि, तिनीहरूले सृष्टि गरेका मरीचि आदि र मरीचि आदिले सृष्टि गरेका देवता, मनुष्य आदि प्राणीहरूमध्ये
**नारायणम्** = नारायण
**ऋषिं** = ऋषि
**ऋते** = बाहेक
**इह** = यस संसारमा
**योषिन्मय्या** = स्त्रीरूपी
**मायया** = मायाले
**नु** = निश्चय नै
**अखण्डितधीः** = बुद्धि नष्ट नहुने
**पुमान्** = पुरुष
**कः** = को छ

**वाक्यार्थ–** ब्रह्माले सिर्जना गरेका कश्यप आदि, तिनीहरूले सृष्टि गरेका मरीचि आदि र मरीचि आदिले सृष्टि गरेका देवता, मनुष्य आदि प्राणीहरूमध्ये नारायण ऋषि बाहेक यस संसारमा स्त्रीरूपी मायाले बुद्धि नष्ट नहुने पुरुष को छ र ?

**बलं मे पश्य मायायाः स्त्रीमय्या जयिनो दिशाम् ।**
**या करोति पदाक्रान्तान्भ्रूविजृम्भेण केवलम् ॥ ३८ ॥**

पदार्थ–

**स्त्रीमय्या** = स्त्रीरूपी
**मे** = मेरो
**मायायाः** = मायाको
**बलं** = सामर्थ्यलाई
**पश्य** = हेर्नुहोस्
**या** = जुन स्त्री
**केवलम्** = केवल
**भ्रूविजृम्भेण** = आँखीभौँको विलासले
**दिशाम्** = दिशाहरूका
**जयिनः** = विजयीहरूलाई पनि
**पदाक्रान्तान्** = पैतालामुनि
**करोति** = पार्दछे

**वाक्यार्थ–** स्त्रीरूपी मेरो मायाको सामर्थ्यलाई हेर्नुहोस्, जुन स्त्री केवल आँखीभौँका विलासले नै

दिग्विजयीहरूलाई आफ्नो पैतालामुनि पार्दछे।

**सङ्गं न कुर्यात् प्रमदासु जातु**
**योगस्य पारं परमारुरुक्षुः।**
**मत्सेवया प्रतिलब्धात्मलाभो**
**वदन्ति या निरयद्वारमस्य॥ ३९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **योगस्य** = योगको | **प्रमदासु** = स्त्रीहरूमा | **निरयद्वारम्** = नरकको ढोका |
| **परम् पारं** = परम पार | **जातु** = कहिल्यै पनि | (हो भनेर) |
| **आरुरुक्षुः** = प्राप्त गर्न इच्छुक | **सङ्गं** = आसक्ति | **वदन्ति** = (विद्वान्हरू) |
| **मत्सेवया** = मेरो सेवाले | **न कुर्यात्** = नगरोस् | भन्दछन् |
| **प्रतिलब्धात्मलाभः** = आत्मबोध | **या** = जो स्त्री | |
| भएको व्यक्तिले | **अस्य** = यी मुमुक्षुहरूको लागि | |

**वाक्यार्थ–** योगको परम पार प्राप्त गर्न इच्छुक एवं मेरो सेवाले आत्मबोध भएको व्यक्तिले कहिल्यै पनि स्त्रीहरूमा आसक्ति नगरोस्। स्त्री मुमुक्षुहरूको लागि नरकको ढोका हो भनेर विद्वान्हरू भन्दछन्।

**योपयाति शनैर्माया योषिद् देवविनिर्मिता।**
**तामीक्षेतात्मनो मृत्युं तृणैः कूपमिवावृतम्॥ ४०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **देवविनिर्मिता** = भगवान्द्वारा | **शनैः** = बिस्तारै | **कूपम् इव** = कुवा झैं |
| रचिएकी | **उपयाति** = नजिकै आउँछे | **आत्मनः** = आफ्नै |
| **या** = जो | **ताम्** = त्यस स्त्रीलाई | **मृत्युं** = मृत्युका रूपमा |
| **योषित्** = स्त्रीरूपी | **तृणैः** = घाँसहरूद्वारा | **ईक्षेत** = हेरोस् |
| **माया** = माया | **आवृतम्** = ढाकिएको | |

**वाक्यार्थ–** भगवान्द्वारा रचिएकी स्त्रीरूपी माया बिस्तारै-बिस्तारै गरेर नजिकै आउँछे। त्यस स्त्रीलाई घाँसहरूद्वारा ढाकिएको कुवा झैं आफ्नै मृत्युका रूपमा हेरोस्।

**यां मन्यते पतिं मोहान्मन्मायामृषभायतीम्।**
**स्त्रीत्वं स्त्रीसङ्गतः प्राप्तो वित्तापत्यगृहप्रदम्॥ ४१॥**

**तामात्मनो विजानीयात् पत्यपत्यगृहात्मकम् ।**
**दैवोपसादितं मृत्युं मृगयोर्गायनं यथा ॥ ४२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **स्त्रीसङ्गतः** = स्त्रीमा आसक्त हुनाको कारणले | **वित्तापत्यगृहप्रदम्** = धन, पुत्र, घर आदि दिनेवाला | **पत्यपत्यगृहात्मकम्** = पति, पुत्र, गृह आदि रूपमा आएको |
| **स्त्रीत्वं** = स्त्रीको स्वभाव | **पतिं** = पति | **दैवोपसादितं** = आफ्नो प्रारब्धले प्राप्त |
| **प्राप्तः** = पाएको जीव | **मन्यते** = मान्दछ | **आत्मनः** = आफ्नो |
| **ऋषभायतीम्** = पुरुषलेझैं आचरण गर्ने भएकी | **ताम्** = ती मेरी मायालाई | **मृत्युं** = मृत्यु |
| **यां** = जुन | **यथा** = जसरी | **विजानीयात्** = जानोस् |
| **मन्मायाम्** = मेरी मायालाई | **गायनं** = व्याधाको गीत | |
| **मोहात्** = मोहका कारण | **मृगयोः** = मृगको मृत्युको कारण बन्दछ त्यसै गरी | |

**वाक्यार्थ–** स्त्रीमा आसक्त हुनाको कारणले स्त्रीको स्वभाव पाएको जीव पुरुषलेझैं आचरण गर्ने भएकी मेरी मायालाई मोहका कारण धन, पुत्र, घर आदि दिने पति मान्दछ। जसरी व्याधाको गीत मृगको मृत्युको कारण बन्दछ त्यसै गरी मेरो मायारूप पति, पुत्र, गृह आदि आफ्नो प्रारब्धले प्राप्त वस्तुहरूलाई पनि पुरुषले आफ्नो मृत्यु जानोस्।

**देहेन जीवभूतेन लोकाल्लोकमनुव्रजन् ।**
**भुञ्जान एव कर्माणि करोत्यविरतं पुमान् ॥ ४३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **जीवभूतेन** = जीवको उपाधि भएको | **लोकात्** = एक लोकबाट | **अविरतं** = निरन्तर |
| | **लोकम्** = अर्को लोकमा | **कर्माणि** = कर्महरू |
| **देहेन** = लिङ्ग शरीरद्वारा | **अनुव्रजन्** = घुम्दै | **एव** = नै |
| **पुमान्** = जीव | **भुञ्जानः** = कर्मफल भोग्दै | **करोति** = गरिरहन्छ |

**वाक्यार्थ–** जीवको उपाधि भएको लिङ्ग शरीरद्वारा जीव एक लोकबाट अर्को लोकमा घुम्दै कर्मफल भोग्दै निरन्तर कर्म गरिरहन्छ।

**जीवो ह्यस्यानुगो देहो भूतेन्द्रियमनोमयः ।**
**तन्निरोधोऽस्य मरणमाविर्भावस्तु सम्भवः ॥ ४४ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **हि** = निश्चय नै | **जीवः** = जीवको उपाधिका | रूपमा रहेको लिङ्गशरीर |

**अस्यानुगः** = (मोक्षपर्यन्त) जीवको पछिपछि लाग्ने हुन्छ
**भूतेन्द्रियमनोमयः** = पञ्चमहाभूत, मन र इन्द्रियरूप
**देहः** = भोगायतन शरीर हो
**तन्निरोधः** = यी दुई शरीरको परस्पर संयोग नहुनु नै
**अस्य** = यस जीवको
**मरणम्** = मृत्यु हो
**सम्भवः तु** = यी दुईको संयोग नै
**आविर्भावः** = जन्म हो

**वाक्यार्थ–** जीवको उपाधिका रूपमा रहेको लिङ्गशरीर चाहिँ जीवको मोक्ष नहुन्जेलसम्म जीवको पछि-पछि लाग्दछ। पञ्चमहाभूत, मन र इन्द्रियरूप शरीर चाहिँ भोगायतन शरीर हो। यी दुई शरीरको परस्पर संयोग नहुनु नै जीवको मृत्यु हो भने यी दुईको संयोग नै जन्म हो।

**द्रव्योपलब्धिस्थानस्य द्रव्येक्षायोग्यता यदा।**
**तत्पञ्चत्वमहंमानादुत्पत्तिर्द्रव्यदर्शनम्॥ ४५॥**

**पदार्थ–**

**द्रव्योपलब्धिस्थानस्य** = पदार्थहरूलाई ग्रहण गर्ने स्थानरूप यस स्थूल शरीरमा
**द्रव्येक्षायोग्यता** = पदार्थहरूलाई ग्रहण गर्ने योग्यता नरहनु
**तत्पञ्चत्वम्** = त्यही नै जीवको मरण हो (फेरि)
**अहं** = म स्थूलशरीर हुँ भन्ने
**मानात्** = अभिमानका साथ
**यदा** = जहिले
**द्रव्यदर्शनम्** = पदार्थहरूको दर्शन (हुन्छ त्यो)
**उत्पत्तिः** = जीवको जन्म हो

**वाक्यार्थ–** पदार्थहरूलाई ग्रहण गर्ने स्थानरूप यस स्थूल शरीरमा ती पदार्थहरूलाई ग्रहण गर्ने योग्यता नरहनु नै जीवको मरण हो भने यो स्थूल शरीर म नै हुँ भन्ने यस्तो देहाभिमानका साथ त्यस ती पदार्थहरूलाई देख्नु नै उसको जन्म हो।

**यथाक्ष्णोर्द्रव्यावयवदर्शनायोग्यता यदा।**
**तदैव चक्षुषो द्रष्टुर्द्रष्टृत्वायोग्यतानयोः॥ ४६॥**

**पदार्थ–**

**यथा** = जसरी
**यदा** = जब
**अक्ष्णोः** = आँखाको
**द्रव्यावदर्शनायोग्यता** = रूप आदि देख्न योग्यता हुँदैन
**तदा एव** = त्यस समयमा
**चक्षुषः** = चक्षु इन्द्रियको (पनि रूप देख्न सक्ने योग्यता हुँदैन)
**अनयोः** = आँखा र चक्षु इन्द्रिय यी दुबैको देख्न सक्ने योग्ता नभएपछि
**द्रष्टुः** = यी दुबैको साक्षी जीवको पनि
**द्रष्टृत्वायोग्यता** = देख्न सक्ने क्षमता हुँदैन

**वाक्यार्थ–** आँखामा जब कुनै दोषको कारण रूप आदिलाई देख्नमा योग्यता हुँदैन त्यस समयमा आँखामा रहने चक्षु इन्द्रिय पनि रूप देख्नमा असमर्थ हुन्छ। जब आँखा र आँखामा रहने चक्षु इन्द्रिय दुबै नै रूप देख्न असमर्थ हुन्छन् तब यी दुबैको साक्षी जीवमा पनि रूपलाई देख्न सक्ने क्षमता रहँदैन।

**तस्मान्न कार्यः सन्त्रासो न कार्पण्यं न सम्भ्रमः।**
**बुद्ध्वा जीवगतिं धीरो मुक्तसङ्गश्चरेदिह ॥ ४७ ॥**

पदार्थ–

**तस्मात्** = त्यसकारण
**सन्त्रासः** = (मृत्यु आदिबाट) भय
**न कार्यः** = गर्नुहुँदैन
**न कार्पण्यं** = दीनता छोड्नुपर्दछ
**न सम्भ्रमः** = हड्बड गर्नुहुँदैन
**जीवगतिं** = जीवनको गतिलाई
**बुद्ध्वा** = जानेर
**धीरः** = धीर पुरुष
**मुक्तसङ्गः** = आसक्तिरहित भएर
**इह** = यस संसारमा
**चरेत्** = घुमोस्

**वाक्यार्थ–** त्यसकारण मृत्यु आदिबाट डराउनुहुँदैन, दीनता छोड्नुपर्दछ, हड्बड गर्नुहुँदैन। जीवनको गतिलाई जानेर धीर पुरुष आसक्तिरहित भएर यस संसारमा घुमोस्।

**सम्यग्दर्शनया बुद्ध्या योगवैराग्ययुक्तया।**
**मायाविरचिते लोके चरेन्न्यस्य कलेवरम् ॥ ४८ ॥**

पदार्थ–

**मायाविरचिते** = माया रचित
**लोके** = यस लोकमा
**सम्यग्दर्शनया** = सम्यक् दर्शनयुक्त
**योगवैराग्ययुक्तया** = योग र वैराग्यले सहित भएको
**बुद्ध्या** = बुद्धिद्वारा
**कलेवरम्** = शरीरलाई
**न्यस्य** = निक्षेप (नासो) झैँ राखेर
**चरेत्** = घुमोस्

**वाक्यार्थ–** मायारचित यस लोकमा सम्यक् दर्शन, योग र वैराग्ययुक्त बुद्धिद्वारा यस शरीरलाई कसैको नासो राखेझैँ राखेर त्यसमा आसक्तिरहित भई घुमोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**
**कापिलेयोपाख्याने जीवगतिर्नामैकत्रिंशोऽध्यायः ॥ ३१ ॥**

# अथ द्वात्रिंशोऽध्यायः

## धूममार्ग र अर्चिरादि मार्गबाट जाने व्यक्तिको गति र भक्तियोगको उत्कृष्टताको वर्णन

**कपिल उवाच** (कपिल भगवान्‌ले भन्नुभयो)

**अथ यो गृहमेधीयान् धर्मानेवावसन् गृहे।**
**काममर्थं च धर्मान् स्वान् दोग्धि भूयः पिपर्ति तान्॥ १॥**

**पदार्थ–**

**यः** = जो मानिस
**गृहे** = घरमा
**एव** = नै
**आवसन्** = बस्दै
**गृहमेधीयान्** = गृहस्थाश्रमसम्बन्धी
**धर्मान्** = सकाम कर्महरू गर्दै
**स्वान्** = आफ्नो
**धर्मान्** = धर्म
**कामम्** = काम
**अर्थं** = अर्थको
**च** = र
**दोग्धि** = सेवन गर्दछ
**अथ** = त्यसपछि
**भूयः** = फेरि (ती विभिन्न कामनाहरूबाट मोहित भएर)
**तान्** = ती गृहस्थाश्रमसम्बन्धी धर्महरूको
**पिपर्ति** = अनुष्ठान गर्दछ

**वाक्यार्थ–** जो मानिस घरमा नै बस्दै गृहस्थाश्रमसम्बन्धी सकाम कर्महरू गर्दै धर्म, काम र अर्थको सेवन गर्दछ उसले त्यसपछि फेरि पनि ती विभिन्न कामनाहरूबाट मोहित भएर ती गृहस्थाश्रमसम्बन्धी धर्महरूको अनुष्ठान गर्दछ।

**स चापि भगवद्धर्मात् काममूढः पराङ्मुखः।**
**यजते क्रतुभिर्देवान् पितॄंश्च श्रद्धयान्वितः॥ २॥**

**पदार्थ–**

**काममूढः** = विभिन्न प्रकारका कामनाहरूले मन्दबुद्धि भएको
**सः च अपि** = ऊ पनि
**भगवद्धर्मात्** = भगवद्धर्मदेखि
**पराङ्मुखः** = विमुख भएको
**श्रद्धयान्वितः** = श्रद्धायुक्त भएर
**क्रतुभिः** = यज्ञहरूद्वारा
**देवान्** = देवता र
**पितॄन्** = पितृहरूलाई
**च** = पनि
**यजते** = पूजा गर्दछ

**वाक्यार्थ–** विभिन्न प्रकारका कामनाहरूले गर्दा मन्दबुद्धि भएको ऊ भगवद्धर्मदेखि विमुख हुन्छ र श्रद्धायुक्त भएर यज्ञहरूद्वारा देवता र पितृहरूको पूजा गर्दछ।

**तच्छ्रद्धयाक्रान्तमतिः पितृदेवव्रतः पुमान्।**
**गत्वा चान्द्रमसं लोकं सोमपाः पुनरेष्यति॥ ३॥**

पदार्थ–

**पितृदेवव्रतः** = पितृ र देवताको उपासना गर्ने
**तच्छ्रद्धया** = उनीहरूको श्रद्धामा नै
**आक्रान्तमतिः** = मन लगाइरहने
**पुमान्** = त्यो मानिस
**चान्द्रमसं** = चन्द्रलोक
**गत्वा** = गएर
**सोमपाः** = सोमपान गर्दछ, तर
**पुनः** = फेरि (पुण्यक्षीण भएपछि)
**लोकं** = यही लोकमा
**एष्यति** = फर्केर आउँछ

**वाक्यार्थ–** पितृ र देवताको उपासना गर्ने, उनीहरूमा मन लगाएर श्रद्धा गरिरहने त्यो मानिस दक्षिणायन मार्गबाट चन्द्रलोक जान्छ र उनीहरूकै साथमा सोमपान गरेर पुण्य सकिएपछि फेरि यही लोकमा आउँछ।

**यदा चाहीन्द्रशय्यायां शेतेऽनन्तासनो हरिः।**
**तदा लोका लयं यान्ति त एते गृहमेधिनाम्॥ ४॥**

पदार्थ–

**यदा च** = जब (प्रलयकालमा)
**अनन्तासनः** = शेषशायी
**हरिः** = भगवान् विष्णु
**अहीन्द्रशय्यायां** = शेषशय्यामा
**शेते** = सुत्नुहुन्छ
**तदा** = त्यस वेला
**गृहमेधिनाम्** = गृहस्थाश्रमीहरूलाई प्राप्त हुने
**एते** = यी
**ते लोकाः** = ती स्वर्ग आदि लोकहरू
**लयं** = विनष्ट
**यान्ति** = हुन्छन्

**वाक्यार्थ–** जब प्रलयकालमा शेषशायी भगवान् विष्णु शेषशय्यामा सुत्नुहुन्छ त्यस वेला गृहस्थाश्रमीहरूलाई प्राप्त हुने ती स्वर्ग आदि लोकहरू विनष्ट हुन्छन्।

**ये स्वधर्मान्न दुह्यन्ति धीराः कामार्थहेतवे।**
**निःसङ्गा न्यस्तकर्माणः प्रशान्ताः शुद्धचेतसः॥ ५॥**
**निवृत्तिधर्मनिरता निर्ममा निरहङ्कृताः।**
**स्वधर्माख्येन सत्त्वेन परिशुद्धेन चेतसा॥ ६॥**
**सूर्यद्वारेण ते यान्ति पुरुषं विश्वतोमुखम्।**
**परावरेशं प्रकृतिमस्योत्पत्त्यन्तभावनम्॥ ७॥**

पदार्थ–

**ये** = जो
**धीराः** = धीर मानिसहरू
**कामार्थहेतवे** = भोगविलास र धन–सम्पत्ति प्राप्तिका लागि
**स्वधर्मान्** = आफ्नो धर्मलाई
**न दुह्यन्ति** = उपयोगमा ल्याउँदैनन्
**निःसङ्गाः** = अनासक्त भएका
**न्यस्तकर्माणः** = सम्पूर्ण कर्महरू भगवान्मै चढाएका
**प्रशान्ताः** = शान्त र
**शुद्धचेतसः** = शुद्ध चित्त भएका साथै
**निवृत्तिधर्मनिरताः** = निवृत्तिमार्गमा लागेका
**निर्ममाः** = ममतारहित
**निरहङ्कृताः** = अहङ्कारशून्य भएका (ती मानिसहरू)
**स्वधर्माख्येन** = स्वधर्मपालनद्वारा प्राप्त गरेको
**सत्त्वेन** = सत्त्वगुणद्वारा
**परिशुद्धेन** = सर्वथा शुद्ध
**चेतसा** = चित्तद्वारा
**ते** = ती मानिसहरू अन्तमा
**सूर्यद्वारेण** = सूर्यमार्ग (अर्चिमार्ग)बाट
**विश्वतोमुखम्** = सर्वव्यापी
**परावरेशं** = ब्रह्मा आदिदेखि मनुष्यसम्मका मालिक
**अस्य** = यस संसारको
**प्रकृतिम्** = उपादानकारण हुनुभएका
**उत्पत्त्यन्तभावनम्** = सृष्टि, स्थिति र संहार गर्नेवाला
**पुरुषं** = परमात्मामा
**यान्ति** = पुग्दछन्

**वाक्यार्थ–** जो धीर मानिसहरू भोगविलास र धन–सम्पत्ति पाउनका लागि आफ्नो धर्मलाई उपयोगमा ल्याउँदैनन्, त्यस्ता आसक्तिरहित, सम्पूर्ण कर्महरू भगवान्मैं चढाएका, क्रोधले रहित, शान्त एवं शुद्ध चित्त भएका, निवृत्तिमार्गमा लागेका, ममतारहित एवं अहङ्कारशून्य भएका, स्वधर्मपालनद्वारा प्राप्त गरेको सत्त्वगुणद्वारा सर्वथा शुद्ध चित्त भएका ती मानिसहरू अन्तमा सूर्यमार्ग (अर्चिमार्ग)बाट सर्वव्यापी, ब्रह्मा आदिदेखि मनुष्यसम्मका मालिक हुनुभएका, यस संसारको उपादानकारण हुनुभएका सृष्टि, स्थिति र संहार गर्नेवाला परमात्मामा पुग्दछन्।

**द्विपरार्धावसाने यः प्रलयो ब्रह्मणस्तु ते।**
**तावदध्यासते लोकं परस्य परचिन्तकाः॥ ८॥**

पदार्थ–

**परस्य** = हिरण्यगर्भको
**परचिन्तकाः** = परमात्मभावले उपासना गर्ने
**ते** = तिनीहरू
**तु** = चाहिँ
**द्विपरार्धावसाने** = द्विपरार्धको अन्त्यमा
**यः** = जब
**ब्रह्मणः** = ब्रह्माको
**प्रलयः** = प्रलय हुन्छ
**तावत्** = त्यस वेलासम्म
**लोकं** = ब्रह्मलोकमा
**अध्यासते** = बस्दछन्

**वाक्यार्थ–** जो मनुष्य हिरण्यगर्भलाई नै परमात्मभावले उपासना गर्दछन् तिनीहरू द्विपरार्धको अन्त्यमा जब ब्रह्माको प्रलय हुन्छ त्यस वेलासम्म ब्रह्मलोकमा बस्दछन्।

**क्ष्माम्भोऽनलानिलवियन्मनइन्द्रियार्थ-**
**भूतादिभिः परिवृतं प्रतिसञ्जिहीर्षुः।**
**अव्याकृतं विशति यर्हि गुणत्रयात्मा**
**कालं पराख्यमनुभूय परः स्वयम्भूः॥ ९॥**
**एवं परेत्य भगवन्तमनुप्रविष्टा**
**ये योगिनो जितमरुन्मनसो विरागाः।**
**तेनैव साकममृतं पुरुषं पुराणं**
**ब्रह्म प्रधानमुपयान्त्यगताभिमानाः॥ १०॥**

पदार्थ—
**यर्हि** = जतिखेर
**पराख्यम्** = द्विपरार्ध
**कालं** = समयपर्यन्तको (अधिकारको)
**अनुभूय** = भोग गरेर
**क्ष्माम्भोऽनलानिलवियन्मनइन्द्रियार्थभूतादिभिः** = पृथिवी, जल, अग्नि, वायु, आकाश, मन, इन्द्रिय, तिनका शब्द आदि विषय र अहङ्कारले
**परिवृतं** = घेरिएको ब्रह्माण्डलाई
**प्रतिसञ्जिहीर्षुः** = संहार गर्न चाहने
**गुणत्रयात्मा** = त्रिगुणात्मक प्रपञ्चका अभिमानी
**परः** = देवताभन्दा श्रेष्ठ
**स्वयम्भूः** = ब्रह्माजी
**अव्याकृतं** = सर्वविकारशून्य परमात्मामा
**विशति** = लीन हुनुहुन्छ
**एवं** = त्यसै समयमा
**परेत्य** = देह त्यागेर
**भगवन्तम्** = ब्रह्माजीमा
**अनुप्रविष्टाः** = प्रवेश गरेका
**जितमरुन्मनसः** = प्राण र मनलाई वशमा राखेका
**विरागाः** = विरक्त तर
**अगताभिमानाः** = अभिमान बाँकी भएका
**ये** = जो
**योगिनः** = योगीहरू छन् (तिनीहरू पनि)
**तेन साकम्** = ब्रह्माजीसँगै
**अमृतं** = परमानन्दरूप
**पुराणं पुरुषं** = पुराणपुरुष
**प्रधानम्** = प्रधान
**ब्रह्म** = परब्रह्ममा
**एव** = नै
**उपयान्ति** = लीन हुन्छन्

**वाक्यार्थ—** जुन समयमा द्विपरार्ध कालसम्मको आफ्नो अधिकारको भोग गरेर पृथिवी, जल, अग्नि, वायु, आकाश, मन, इन्द्रिय, तिनका शब्द आदि विषय र अहङ्कारले घेरिएको ब्रह्माण्डलाई संहार गर्न चाहने त्रिगुणात्मक प्रपञ्चका अभिमानी अरू देवताभन्दा श्रेष्ठ ब्रह्माजी सर्वविकारशून्य परमात्मा ममा लीन हुनुहुन्छ त्यसै समयमा देहत्याग गरेर ब्रह्माजीमा प्रवेश गरेका, प्राण र मनलाई वशमा राखेका विरक्त तर अभिमान बाँकी भएका जो योगीहरू छन् तिनीहरू पनि ब्रह्माजीसँगै परमानन्दरूप पुराणपुरुष प्रधान परब्रह्ममा नै लीन हुन्छन्।

**अथ तं सर्वभूतानां हृत्पद्मेषु कृतालयम् ।**

**श्रुतानुभावं शरणं व्रज भावेन भामिनि ॥ ११ ॥**

**पदार्थ–**

**भामिनि** = हे प्रिय आमा
**अथ** = यसैले
**भावेन** = भक्तिभावका साथ
**श्रुतानुभावं** = जसको प्रभाव सुन्नुभयो त्यस्ता
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**हृत्पद्मेषु** = हृदयकमलमा
**कृतालयम्** = निवास गर्नुहुने
**तं** = उनै परमात्माको
**शरणं** = शरणमा
**व्रज** = जानुहोस्

**वाक्यार्थ–** हे आमा ! यसैले भक्तिभावका साथ जसको प्रभाव सुन्नुभयो त्यस्ता सम्पूर्ण प्राणीहरूको हृदयकमलमा बस्नुहुने उनै परमात्माको शरणमा जानुहोस् ।

**आद्यः स्थिरचराणां यो वेदगर्भः सहर्षिभिः ।**

**योगेश्वरैः कुमाराद्यैः सिद्धैर्योगप्रवर्तकैः ॥ १२ ॥**

**भेददृष्ट्याभिमानेन निःसङ्गेनापि कर्मणा ।**

**कर्तृत्वात् सगुणं ब्रह्म पुरुषं पुरुषर्षभम् ॥ १३ ॥**

**स संसृत्य पुनः काले कालेनेश्वरमूर्तिना ।**

**जाते गुणव्यतिकरे यथापूर्वं प्रजायते ॥ १४ ॥**

**पदार्थ–**

**यः** = जो
**स्थिरचराणां** = चराचर जगत्का
**आद्यः** = आदिकारण हुनुहुन्छ
**वेदगर्भः** = ब्रह्माजी पनि
**सहर्षिभिः** = मरीचि आदि ऋषिहरू तथा
**योगेश्वरैः** = योगेश्वर
**कुमाराद्यैः** = सनत्कुमार आदि
**योगप्रवर्तकैः** = योगको प्रवर्तन गर्ने
**सिद्धैः** = सिद्धपुरुषसहित भएर
**निःसङ्गेन** = निष्काम
**कर्मणा** = कर्मद्वारा
**पुरुषर्षभम्** = सबै पुरुषमा श्रेष्ठ
**पुरुषं** = परमपुरुष
**सगुणं** = सगुण
**ब्रह्म** = परब्रह्मलाई
**संसृत्य** = पाएर
**अपि** = पनि
**भेददृष्ट्या** = भेददृष्टि र
**अभिमानेन** = कर्तृत्वको अभिमानका कारण
**पुनः** = फेरि
**काले** = सृष्टिकालमा
**ईश्वरमूर्तिना** = ईश्वरमूर्ति
**कालेन** = कालद्वारा
**गुणव्यतिकरे** = सत्त्व आदि गुणमा परिवर्तन
**जाते** = भएपछि
**कर्तृत्वात्** = संसारको कर्ममा अधिकृत रहनाले
**यथापूर्वं** = पहिलेको कल्पमा जस्तै (आ–आफ्नो अधिकारअनुसार)
**प्रजायते** = उत्पन्न हुनुहुन्छ

**वाक्यार्थ–** जो चराचर जगत्‌का आदिपुरुष हुनुहुन्छ त्यस्ता ब्रह्माजी पनि मरीचि आदि ऋषिहरू र सनत्कुमार आदि योगप्रवर्तक सिद्धहरूसहित भएर निष्काम कर्मद्वारा सबै पुरुषमा श्रेष्ठ, सगुणपुरुष परब्रह्मलाई पाएर पनि भेददृष्टि र कर्तृत्वको अभिमानका कारण फेरि सृष्टिकालमा ईश्वरमूर्ति कालद्वारा सत्त्व आदि गुणमा क्षोभ (परिवर्तन) भएपछि संसारको कर्ममा पहिलेको कल्पमा जस्तै आ–आफ्नो अधिकारबमोजिम प्रवृत्त हुने गरी फेरि उत्पन्न हुनुहुन्छ।

**ऐश्वर्यं पारमेष्ठ्यं च तेऽपि धर्मविनिर्मितम्।**
**निषेव्य पुनरायान्ति गुणव्यतिकरे सति॥ १५॥**

**पदार्थ–**

(जो कर्मद्वारा ब्रह्मलोक गएका छन्)
**ते** = तिनीहरू
**च अपि** = पनि
**धर्मविनिर्मितम्** = आ–आफ्नो शुभ कर्मको फलअनुसार
**पारमेष्ठ्यं** = ब्रह्मलोकमा प्राप्त हुने
**ऐश्वर्यं** = ऐश्वर्यको
**निषेव्य** = भोग गरेर
**गुणव्यतिकरे सति** = भोगद्वारा सत्त्वादि गुणको क्षयपछि
**पुनः** = फेरि
**आयान्ति** = मर्त्यलोकमा आउँछन्

**वाक्यार्थ–** जो कर्मद्वारा ब्रह्मलोक गएका छन् तिनीहरू पनि आ–आफ्नो शुभ कर्मको फलअनुसार ब्रह्मलोकको ऐश्वर्य भोग गरेर भोगद्वारा सत्त्व आदि गुणको क्षयपछि फेरि मर्त्यलोकमा आउँछन्।

**विवरण–** यहाँ ब्रह्मा आदि देवता पनि पुनः जन्म धारण गर्छन् भन्ने जुन वर्णन आएको छ त्यो भेदोपासनालाई लिएर हो। परमात्मालाई आफूभन्दा भिन्न रूपमा मानी उपासना गर्नाले त ब्रह्माजी समेत पुनःसंसारमा आउनुपर्छ। वास्तवमा त ब्रह्माजी द्विपरार्द्ध सकिएपछि मुक्त नै हुनुहुन्छ। यही लोकान्तरप्राप्तिकै प्रसङ्गमा यस अध्यायमा विभिन्न थरी मुक्तिको वर्णन आएको छ। परमात्माको आफूभन्दा अभिन्न रूपले उपासना गर्नेहरू मरेपछि सीधै भगवान्‌मा गई मिल्दछन्। त्यसै गरी परमेश्वररूपले हिरण्यगर्भको अभेदोपासना गर्नेहरू उत्तरायण मार्गबाट ब्रह्मलोकमा गई द्विपरार्द्धपछि ब्रह्माजीसँगै मुक्त हुन्छन्। यी दुबै थरी मुक्तिहरू उपनिषद्‌मा बताइएको सद्योमुक्ति होइन भनी बुझ्नुपर्छ। ज्ञानीहरूको मुक्तिमा प्राणको लोकान्तरगमन हुँदैन। ज्ञानद्वारा उनीहरूको सूक्ष्म शरीर नष्ट भइसकेको हुनाले प्रारब्ध समाप्तिपछि उनीहरू ब्रह्ममा लीन हुन्छन्। यसलाई विदेहमुक्ति भनिन्छ। जुन भक्तहरूको भगवत्कृपाबाट प्राप्त प्रकाशमय ज्ञानरूपी बत्तीद्वारा अन्धकार नष्ट हुन्छ ती ज्ञानी भक्तहरू उपनिषद्‌मा बताइए अनुसार विदेहमुक्ति नै प्राप्त गर्दछन्। सकाम कर्मको अनुष्ठान गर्ने, आसक्त बुद्धिवाला, रजोगुणी, शास्त्रनियमको पालना गर्ने अजितेन्द्रिय पुरुषहरू भने दक्षिणायन वा धूममार्गबाट स्वर्गलोकमा गई पुण्य क्षीण भइसकेपछि फेरि संसारमा नै आई कर्मअनुसार विभिन्न योनिमा जन्म लिन्छन्। गीता (९। २१)मा पनि भनिएको छ– **गतागतं कामकामा लभन्ते**, अर्थात् कामनायुक्त मनुष्यहरू लोकलोकान्तरमा आउने–जाने गरिरहन्छन्। यी

सबैभन्दा भिन्न अशास्त्रीय पाप कर्महरू गर्ने मानिसहरूको गतिलाई अधोगति भनिन्छ। यसमा शास्त्रनिषिद्ध कर्म गर्ने मानिस मरेपछि नरक पुग्छन् र पछि अनन्त पापकर्महरूको फल भोग्न स्थावर आदि योनिमा जन्म लिन्छन्।

**ये त्विहासक्तमनसः कर्मसु श्रद्धयान्विताः।**
**कुर्वन्त्यप्रतिषिद्धानि नित्यान्यपि च कृत्स्नशः॥ १६॥**

**पदार्थ–**

**ये तु** = जो
**इह** = यस संसारका
**कर्मसु** = कर्ममा
**आसक्तमनसः** = मन आसक्त भएका
**श्रद्धया** = श्रद्धाले
**अन्विताः** = युक्त भएका छन् तिनीहरू
**कृत्स्नशः** = सम्पूर्ण रूपले
**अप्रतिषिद्धानि** = वेदद्वारा निषेध नगरिएका काम्य आदि कर्म र
**नित्यानि** = नित्यकर्म
**अपि च** = पनि
**कुर्वन्ति** = गर्दछन्

**वाक्यार्थ–** यस संसारका कर्ममा मन आसक्त भएका र श्रद्धाले युक्त भएका जो मानिसहरू छन् तिनीहरू सम्पूर्ण रूपले वेदद्वारा निषेध नगरिएका काम्य आदि कर्म र नित्यकर्म पनि गर्दछन्।

**विवरण–** कर्मको फल भोग्न आसक्त भएका मानिसहरू फलोत्पत्तिको लागि कर्महरू गर्दछन्। ती कर्महरूभित्र वेद आदि शास्त्रहरूले निषेध नगरेका काम्य आदि कर्म र नित्य कर्महरूसमेत पर्दछन्।

नित्य कर्म भनेको त्यस्तो कर्म हो जसलाई गर्दा विशेष फल प्राप्त हुँदैन तर नगर्दा प्रत्यवाय (पाप) लाग्दछ। सन्ध्यावन्दन, बलिवैश्वदेव, वेदाध्ययन आदि कर्महरू नित्यकर्मभित्र पर्दछन्। यिनीहरूको अनुष्ठान नगर्नाले प्रत्यवाय लाग्दछ। यी अनिवार्य कर्महरू हुन्।

वेदले गर्न हुँदैन भनी निषेध नगरेका कर्महरू अप्रतिषिद्ध कर्महरू हुन्। यसभित्र नैमित्तिक र काम्य कर्महरू पर्दछन्। विवाह, व्रतबन्ध, पितृश्राद्ध आदि कर्महरू नैमित्तिक कर्महरू हुन्। स्वर्ग आदि प्राप्तिको कामनाले गरिने ज्योतिष्टोम आदि कर्महरू काम्य कर्महरू हुन्। वेदद्वारा निषेध गरिएका कर्महरू प्रतिषिद्ध कर्म हुन्। सकाम मनुष्यलाई यी सबै कर्मको फल स्वर्गादि लोकको प्राप्ति हुन्छ।

**रजसा कुण्ठमनसः कामात्मानोऽजितेन्द्रियाः।**
**पितॄन् यजन्त्यनुदिनं गृहेष्वभिरताशयाः॥ १७॥**

**पदार्थ–**

**रजसा** = रजोगुणले
**कुण्ठमनसः** = बुद्धि मलीन भएका
**कामात्मानः** = कामभोगको वासनाले ग्रस्त भएका
**अजितेन्द्रियाः** = इन्द्रिय वशमा नभएका
**गृहेषु** = घरका व्यवहारमा
**अभिरताशयाः** = आसक्त

| | | |
|---|---|---|
| मनुष्य | **पितॄन्** = पितृहरूको | |
| **अनुदिनं** = प्रतिदिन | **यजन्ति** = पूजा गर्दछन् | |

**वाक्यार्थ–** रजोगुणले बुद्धि मलीन भएका, कामभोगको वासनाले ग्रस्त भएका, इन्द्रिय वशमा नभएका एवं घरका व्यवहारमा आसक्त मनुष्यहरू प्रतिदिन पितृहरूको पूजा गर्दछन्।

**त्रैवर्गिकास्ते पुरुषा विमुखा हरिमेधसः।**

**कथायां कथनीयोरुविक्रमस्य मधुद्विषः॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **त्रैवर्गिकाः** = धर्म, अर्थ र कामरूप त्रिवर्गमा आसक्त हुने | **कथनीयोरुविक्रमस्य** = कीर्तन गर्न योग्य महान् पराक्रम भएका | **मधुद्विषः** = भगवान् मधुसूदनको |
| **ते** = ती | **हरिमेधसः** = सांसारिक दुःख हरण गर्नुहुने | **कथायां** = कथाबाट |
| **पुरुषाः** = मानिसहरू | | **विमुखाः** = विमुख हुन्छन् |

**वाक्यार्थ–** ती मानिसहरू धर्म, अर्थ र काममा आसक्त हुन्छन् यसैले कीर्तन गर्न योग्य महान् पराक्रम भएका सांसारिक दुःख हरण गर्नुहुने भगवान् मधुसूदनको कथाबाट विमुख हुन्छन्।

**नूनं दैवेन विहता ये चाच्युतकथासुधाम्।**

**हित्वा शृण्वन्त्यसद्‌गाथाः पुरीषमिव विड्भुजः॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विड्भुजः** = फोहर खाने सुँगुर, कुकुर आदिले | **अच्युतकथासुधाम्** = भगवान्‌को कथारूप अमृतलाई | **शृण्वन्ति** = सुन्छन् |
| **पुरीषम् इव** = बिष्ठालाई रोजेझैँ | **हित्वा** = छोडेर | **नूनं** = निश्चय नै (तिनीहरू) |
| **ये** = जो मानिसहरू | **असद्‌गाथाः** = निन्दित कुराहरू | **दैवेन** = भाग्यले |
| | | **विहताः** = ठगिएका हुन् |

**वाक्यार्थ–** फोहर खाने सुँगुर, कुकुर आदिले बिष्ठालाई रोजेझैँ जो मानिसहरू भगवान्‌को कथामृतलाई छोडेर निन्दित कुराहरू सुन्छन् तिनीहरू निश्चय नै भाग्यले ठगिएका हुन्।

**दक्षिणेन पथार्यम्णः पितृलोकं व्रजन्ति ते।**

**प्रजामनु प्रजायन्ते श्मशानान्तक्रियाकृतः॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **श्मशानान्तक्रियाकृतः** = गर्भाधानदेखि लिएर अन्त्येष्टिसम्मका संस्कारहरू गर्ने | **दक्षिणेन** = दक्षिणपट्टि रहेको | **व्रजन्ति** = जान्छन् (फेरि) |
| **ते** = ती मानिसहरू | **पथा** = बाटोबाट | **प्रजाम् अनु** = आफ्नै सन्तानका वंशमा |
| | **अर्यम्णः** = अर्यमा (यमराज)को | **प्रजायन्ते** = जन्मन्छन् |
| | **पितृलोकं** = पितृलोकमा | |

**वाक्यार्थ–** गर्भाधानदेखि लिएर अन्त्येष्टिसम्मका सबै संस्कारहरूलाई विधिपूर्वक गर्ने जो सकामकर्मी छन् उनीहरू सूर्यभन्दा दक्षिणपट्टि रहेको पितृयान या धूममार्गबाट यमराजको लोकमा जान्छन् र उनीहरू फेरि आफ्नै सन्तानका वंशमा जन्मन्छन्।

**ततस्ते क्षीणसुकृताः पुनर्लोकमिमं सति।**

**पतन्ति विवशा देवैः सद्यो विभ्रंशितोदयाः॥ २१॥**

पदार्थ–

**सति** = हे आमा
**ततः** = पितृलोकको भोग भोगिसकेपछि
**क्षीणसुकृताः** = पुण्य समाप्त भएका र
**देवैः** = देवताहरूद्वारा
**सद्यः** = तत्काल
**विभ्रंशितोदयाः** = ऐश्वर्यच्युत गरिएका
**ते** = ती मानिसहरू
**विवशाः** = विवश भएर
**पुनः** = फेरि
**इमं** = यो
**लोकम्** = लोकमा
**पतन्ति** = झर्छन्

**वाक्यार्थ–** हे आमा ! पितृलोकको भोग भोगिसकेपछि पुण्य क्षीण भएका ती मानिसहरूलाई देवताहरूले तत्काल ऐश्वर्यच्युत गरिदिन्छन् र उनीहरू विवश भएर फेरि यसै लोकमा झर्छन्।

**तस्मात् त्वं सर्वभावेन भजस्व परमेष्ठिनम्।**

**तद्गुणाश्रयया भक्त्या भजनीयपदाम्बुजम्॥ २२॥**

पदार्थ–

**तस्मात्** = त्यसकारण
**त्वं** = तपाईं
**सर्वभावेन** = सबै प्रकारले
**तद्गुणाश्रयया** = भगवत्कथा आश्रय भएको
**भक्त्या** = भक्तिद्वारा
**भजनीयपदाम्बुजम्** = भजन गर्न योग्य चरणकमलयुक्त
**परमेष्ठिनम्** = भगवान्को
**भजस्व** = भजन गर्नुहोस्

**वाक्यार्थ–** त्यसकारण तपाईं सबै प्रकारले भगवत्कथाको आश्रय भएको भक्तिद्वारा भजन गर्न योग्य चरणकमलयुक्त भगवान्को भजन गर्नुहोस्।

**वासुदेवे भगवति भक्तियोगः प्रयोजितः।**

**जनयत्याशु वैराग्यं ज्ञानं यद् ब्रह्मदर्शनम्॥ २३॥**

पदार्थ–

**वासुदेवे** = वासुदेव
**भगवति** = भगवान्मा
**प्रयोजितः** = निरन्तर गरिएको
**भक्तियोगः** = भक्तियोगले
**यत्** = जो
**वैराग्यं** = संसारबाट वैराग्य र
**ब्रह्मदर्शनम्** = ब्रह्म साक्षात्कार गराउने
**ज्ञानं** = ज्ञान
**आशु** = चाँडै नै
**जनयति** = उत्पन्न गराउँछ

**वाक्यार्थ–** वासुदेव भगवान्मा निरन्तर गरिएको भक्तियोगले संसारबाट वैराग्य उत्पन्न गराउने र र ब्रह्म साक्षात्कार गराउने ज्ञान चाँडै उत्पन्न गराउँछ।

**विवरण–** भक्तिबाट ज्ञान र वैराग्यलाई छुट्याएमा भक्ति अर्थहीन हुन्छ। भगवान्को स्वरूपको ज्ञान नै भएन भने कसको भक्ति गर्ने अनि संसारबाट वैराग्य नभई कसरी परमात्मचिन्तन गर्ने ? कुनै पनि वस्तुमा बुद्धिलाई लगाउन त्यस वस्तुको ज्ञान हुनुपर्दछ र बुद्धिलाई अरू विषयबाट हटाउनुपर्दछ। विषयदेखि बुद्धि हटाउनु वैराग्य हो भने भगवान्को स्वरूप थाहा पाउनु ज्ञान हो। भक्तिमा यी दुबै आवश्यक छन् र भक्ति गर्दैगएपछि वैराग्य र ज्ञान पनि बढ्दै जान्छन्। भगवान्को सामान्य ज्ञान र सामान्य वैराग्यबाट सुरु भएको भक्तिले पूर्ण वैराग्य र ब्रह्मसाक्षात्काररूप ज्ञानलाई उत्पन्न गर्छ भन्ने यस श्लोकको आशय हो। भागवत माहात्म्यको पहिलो अध्यायमा पनि कथाको माध्यमले ज्ञान र वैराग्य उपेक्षित अनि बूढा हुँदा भक्ति दुःखी भएको कुरा बताएर यही सिद्धान्तको पुष्टि गरिएको छ।

**यदास्य चित्तमर्थेषु समेष्विन्द्रियवृत्तिभिः।**
**न विगृह्णाति वैषम्यं प्रियमप्रियमित्युत ॥ २४ ॥**
**स तदैवात्मनात्मानं निःसङ्गं समदर्शनम्।**
**हेयोपादेयरहितमारूढं पदमीक्षते ॥ २५ ॥**

**पदार्थ–**

**यदा** = जब
**अस्य** = यस भक्तको
**चित्तम्** = चित्तले
**इन्द्रियवृत्तिभिः** = इन्द्रियवृत्तिद्वारा
**समेषु** = सम्पूर्ण
**अर्थेषु** = शब्द आदि विषयहरूमा
**प्रियम्** = प्रिय
**उत** = अथवा
**अप्रियम् इति** = अप्रिय इत्यादि
**वैषम्यं** = विषमताको
**न विगृह्णाति** = अनुभव गर्दैन
**तदा एव** = त्यसै समयमा नै
**सः** = ऊ
**आत्मना** = विशुद्ध चित्तले
**निःसङ्गं** = सङ्गरहित
**समदर्शनम्** = सबैमा समानरूपले स्थित
**हेयोपादेयरहितम् पदम्** = छोड्न र ग्रहण गर्न योग्य गुण र दोषले रहित पद
**आरूढं** = आफ्नो महिमामा आरूढ
**आत्मानं** = आत्मालाई
**ईक्षते** = साक्षात्कार गर्दछ

**वाक्यार्थ–** जब यस भक्तको चित्तले इन्द्रियवृत्तिद्वारा सम्पूर्ण शब्द आदि विषयहरूमा प्रिय अथवा अप्रिय इत्यादि विषमताको अनुभव गर्दैन त्यसै समयमा उसले विशुद्ध चित्तले सङ्गरहित, सबैमा समानरूपले स्थित, छोड्न र ग्रहण गर्न योग्य, गुण र दोषले रहित एवं आफ्नो महिमामा आरूढ आत्माको साक्षात्कार गर्दछ।

**ज्ञानमात्रं परं ब्रह्म परमात्मेश्वरः पुमान्।**
**दृश्यादिभिः पृथग्भावैर्भगवानेक ईयते ॥ २६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ज्ञानमात्रं** = ज्ञानस्वरूप | **पुमान्** = पुरुष | **पृथग्भावैः** = सुख, दुःख आदि |
| **परं ब्रह्म** = परब्रह्म | **भगवान्** = भगवान् | अनेक भावको रूपमा |
| **परमात्मा** = परमात्मा | **दृश्यादिभिः** = विभिन्न दृश्य | **ईयते** = प्रतीत हुनुहुन्छ |
| **एकः** = एउटै | पदार्थ, द्रष्टा एवं इन्द्रियको | |
| **ईश्वरः** = ईश्वर | रूपमा र | |

**वाक्यार्थ–** ज्ञानरूप एउटै परब्रह्म, परमात्मा, ईश्वर, पुरुष वा भगवान् नै विभिन्न दृश्य पदार्थ द्रष्टा एवं इन्द्रियको रूपमा र सुख, दुःख आदि अनेक भावको रूपमा प्रतीत हुनुहुन्छ।

**एतावानेव योगेन समग्रेणेह योगिनः।**
**युज्यतेऽभिमतो ह्यर्थो यदसङ्गस्तु कृत्स्नशः ॥ २७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इह** = यस संसारमा | **एतावान् एव हि** = यही नै | **अभिमतः** = अभीष्ट |
| **कृत्स्नशः** = सम्पूर्णरूपले | **योगिनः** = योगीको | **अर्थः** = फल |
| **यत्** = जुन | **समग्रेण** = सम्पूर्ण | **युज्यते** = हो |
| **असङ्गः तु** = आसक्तिरहित हुनु | **योगेन** = योगद्वारा | |

**वाक्यार्थ–** यस संसारमा सम्पूर्णरूपले आसक्तिरहित हुनु यही नै योगीहरूको सबै प्रकारका योगसाधनहरूको एक मात्र अभीष्ट फल हो।

**ज्ञानमेकं पराचीनैरिन्द्रियैर्ब्रह्म निर्गुणम्।**
**अवभात्यर्थरूपेण भ्रान्त्या शब्दादिधर्मिणा ॥ २८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **निर्गुणम्** = निर्गुण | **पराचीनैः** = बहिर्मुख भएका | गुणयुक्त |
| **एकं** = एउटै | **इन्द्रियैः** = इन्द्रियहरूद्वारा | **अर्थरूपेण** = विभिन्न |
| **ज्ञानम्** = ज्ञानरूप | **भ्रान्त्या** = भ्रमवश | पदार्थहरूको रूपमा |
| **ब्रह्म** = ब्रह्म नै | **शब्दादिधर्मिणा** = शब्द आदि | **अवभाति** = भासित हुन्छ |

**वाक्यार्थ–** निर्गुण ज्ञानरूप ब्रह्म एउटै भएर पनि बहिर्मुख भएका इन्द्रियहरूद्वारा भ्रान्तिवश शब्द आदि धर्मयुक्त विभिन्न पदार्थहरूको रूपमा भासित हुन्छ।

**यथा महानहंरूपस्त्रिवृत् पञ्चविधः स्वराट् ।**
**एकादशविधस्तस्य वपुरण्डं जगद् यतः ॥ २९ ॥**

पदार्थ–

**यथा** = जसरी (एउटै ब्रह्म)
**महान्** = महत्तत्त्व
**त्रिवृत्** = वैकारिक, राजस र तामस यी तीन गुण भएको
**अहंरूपः** = अहङ्काररूप एवं
**पञ्चविधः** = आकाश आदि महाभूतरूपले पाँच प्रकारको र
**एकादशविधः** = पाँच कर्मेन्द्रिय, पाँच ज्ञानेन्द्रिय र मन समेत गरी एघार इन्द्रियरूप छ
**स्वराट्** = स्वयंप्रकाश
**अण्डं** = ब्रह्माण्ड
**तस्य** = त्यस ब्रह्मको
**वपुः** = शरीर हो
**यतः** = जुन ब्रह्माण्डबाट
**जगद्** = यो जगत्को उत्पत्ति भयो

**वाक्यार्थ–** जसरी एउटै ब्रह्म महत्तत्त्व अनि वैकारिक, राजस र तामस यी तीन प्रकारको अहङ्कार, पञ्च महाभूत एवं एघार इन्द्रियको रूपमा देखियो, स्वयंप्रकाश यो ब्रह्माण्ड नै ब्रह्मको शरीर हो, त्यही ब्रह्माण्ड शरीरबाट नै जगत्को पनि उत्पत्ति भयो।

**एतद् वै श्रद्धया भक्त्या योगाभ्यासेन नित्यशः ।**
**समाहितात्मा निःसङ्गो विरक्त्या परिपश्यति ॥ ३० ॥**

पदार्थ–

**श्रद्धया** = श्रद्धा
**भक्त्या** = भक्ति,
**नित्यशः** = निरन्तर
**योगाभ्यासेन** = योगको अभ्यास एवं
**विरक्त्या** = वैराग्यले
**समाहितात्मा** = एकाग्र चित्त र
**निःसङ्गः** = आसक्तिरहित भएको व्यक्तिले
**वै** = नै
**एतत्** = यो ब्रह्मरूपलाई
**परिपश्यति** = राम्ररी देख्दछ

**वाक्यार्थ–** श्रद्धा, भक्ति, निरन्तर योगको अभ्यास एवं वैराग्यले एकाग्र चित्त र असङ्गबुद्धि भएको व्यक्तिले नै यो ब्रह्मरूपलाई राम्ररी देख्दछ।

**इत्येतत् कथितं गुर्वि ज्ञानं तद् ब्रह्मदर्शनम् ।**
**येनानुबुद्ध्यते तत्त्वं प्रकृतेः पुरुषस्य च ॥ ३१ ॥**

पदार्थ–

**गुर्वि** = हे आमा
**इति** = यसरी
**तत् एतत्** = त्यो यो
**ब्रह्मदर्शनम्** = ब्रह्मसाक्षात्कार गर्ने साधनरूप
**ज्ञानं** = ज्ञान
**कथितं** = बताइयो
**येन** = जसद्वारा
**प्रकृतेः** = प्रकृति र
**पुरुषस्य** = पुरुषको
**च** = पनि
**तत्त्वं** = यथार्थस्वरूपको
**अनुबुद्ध्यते** = बोध हुन्छ

**कौस्तुभाभरणग्रीवं पीतकौशेयवाससम् ॥ ४८ ॥**

पदार्थ–

**किरीटिनं** = किरीट लगाउनुभएका
**कुण्डलिनं** = कुण्डल धारण गर्नुभएका
**केयूरवलयान्वितम्** = बाजुबन्द, बाला आदि गहनाले शोभायमान
**कौस्तुभाभरणग्रीवं** = घाँटीमा कौस्तुभको गहना लगाउनुभएका
**पीतकौशेयवाससम्** = पहेँलो रेसमी कपडा धारण गर्नुभएका (भगवान् नारायणको ध्यान गर्नू)

**वाक्यार्थ–** किरीट लगाउनुभएका, कुण्डल धारण गर्नुभएका, बाजुबन्द, बाला आदि गहनाले शोभायमान घाँटीमा कौस्तुभको गहना लगाउनुभएका, पहेँलो रेसमी कपडा धारण गर्नुभएका भगवान् नारायणको ध्यान गर्नू।

**काञ्चीकलापपर्यस्तं लसत्काञ्चननूपुरम् ।**
**दर्शनीयतमं शान्तं मनोनयनवर्धनम् ॥ ४९ ॥**

पदार्थ–

**काञ्चीकलापपर्यस्तं** = कम्मरमा धैरैओटा मेखला धारण गर्नुभएका
**लसत्काञ्चननूपुरम्** = सुनको पाउजुले जसको चरण शोभायमान भएका छन्
**दर्शनीयतमं** = अत्यन्त दर्शनीय
**शान्तं** = शान्त स्वरूप भएका
**मनोनयनवर्धनम्** = मन र आँखालाई आनन्दित गराउनुहुने (भगवान् नारायणको ध्यान गर्नू)

**वाक्यार्थ–** कम्मरमा धैरैओटा मेखला धारण गर्नुभएका, सुनको पाउजुले जसको चरण शोभायमान भएका छन् त्यस्ता अत्यन्त दर्शनीय, शान्त स्वरूप भएका, मन र आँखालाई आनन्दित गराउनुहुने भगवान् नारायणको ध्यान गर्नू।

**पद्भ्यां नखमणिश्रेण्या विलसद्भ्यां समर्चताम् ।**
**हृत्पद्मकर्णिकाधिष्ण्यमाक्रम्यात्मन्यवस्थितम् ॥ ५० ॥**

पदार्थ–

**नखमणिश्रेण्या** = नङ्रूपी मणिको पङ्क्तिद्वारा
**विलसद्भ्यां** = शोभायमान
**पद्भ्यां** = चरणकमलले
**हृत्पद्मकर्णिकाधिष्ण्यम्** = हृदयरूपी कमलको फल (कमलगट्टा)को मध्यभागमा
**आक्रम्य** = चढेर
**समर्चताम्** = पूजा गरिरहेका भक्तहरूको
**आत्मनि** = आत्मामा
**अवस्थितम्** = बस्नुहुने (भगवान् नारायणको ध्यान गर्नू)

**वाक्यार्थ–** नङ्रूपी मणिको पङ्क्तिद्वारा शोभायमान चरणकमलले हृदयरूपी कमलगट्टाको

मध्यभागमा चढेर पूजा गरिरहेका भक्तहरूको आत्मामा बस्नुहुने भगवान् नारायणको ध्यान गर्नू।

**स्मयमानमभिध्यायेत् सानुरागावलोकनम्।**
**नियतेनैकभूतेन मनसा वरदर्षभम्॥ ५१॥**

**पदार्थ–**

**सानुरागावलोकनम्** = प्रेमपूर्वक हेरिरहनुभएका
**स्मयमानम्** = मुस्कुराइ-रहनुभएका
**वरदर्षभम्** = वर दिने ब्रह्मा आदिहरूमा श्रेष्ठ भगवान् नारायणलाई
**नियतेन** = संयमित भएर
**एकभूतेन मनसा** = एकाग्र मनले
**अभिध्यायेत्** = चिन्तन गर्नू

**वाक्यार्थ–** प्रेमपूर्वक हेरिरहनुभएका, मुस्कुराइरहनुभएका, वर दिनेहरूमा श्रेष्ठ भगवान् नारायणलाई संयमित भएर एकाग्र मनले चिन्तन गर्नू।

**एवं भगवतो रूपं सुभद्रं ध्यायतो मनः।**
**निर्वृत्या परया तूर्णं सम्पन्नं न निवर्तते॥ ५२॥**

**पदार्थ–**

**एवं** = यसरी
**भगवतः** = भगवान् नारायणको
**सुभद्रं** = परममङ्गलकारी
**रूपं** = स्वरूप
**ध्यायतः** = चिन्तन गर्ने मानिसको
**मनः** = अन्तःकरण
**तूर्णं** = चाँडै नै
**परया निर्वृत्या** = परम आनन्दरूप भगवान्का साथ
**सम्पन्नं** = मिल्दछ (र फेरि त्यहाँबाट)
**न निवर्तते** = फर्कँदैन

**वाक्यार्थ–** यसरी भगवान् नारायणको परममङ्गलकारी स्वरूप चिन्तन गर्ने मानिसको अन्तःकरण चाँडै नै परम आनन्दरूप भगवान्का साथ मिल्दछ र ऊ फेरि त्यहाँबाट फर्कँदैन।

**जप्यश्च परमो गुह्यः श्रूयतां मे नृपात्मज।**
**यं सप्तरात्रं प्रपठन् पुमान् पश्यति खेचरान्॥ ५३॥**

**पदार्थ–**

**नृपात्मज** = हे राजपुत्र
**मे** = मबाट
**परमः** = उत्कृष्ट
**गुह्यः** = गोप्य
**जप्यः** = मन्त्र
**श्रूयतां** = सुन
**यं** = जुन मन्त्रलाई
**सप्तरात्रं** = सात रातसम्म
**प्रपठन्** = जप्ने
**पुमान्** = मानिसले
**खेचरान्** = आकाशगामी सिद्धहरूलाई

| | |
|---|---|
| **च** = पनि | **पश्यति** = देख्न सक्छ |

**वाक्यार्थ–** हे राजपुत्र ! मबाट उत्कृष्ट र गोप्य मन्त्र सुन। यो मन्त्रलाई सात रातसम्म जप्ने मानिसले आकाशगामी सिद्धहरूलाई पनि देख्न सक्छ।

**ॐ नमो भगवते वासुदेवाय।**

**मन्त्रेणानेन देवस्य कुर्याद् द्रव्यमयीं बुधः।**

**सपर्यां विविधैर्द्रव्यैर्देशकालविभागवित्॥ ५४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **देशकालविभागवित्** = कुन स्थान र कुन समयमा भगवान्को पूजा कसरी गर्नुपर्छ भन्ने कुरा जान्ने | **मन्त्रेण** = 'ॐ नमो भगवते वासुदेवाय' (भगवान् वासुदेवलाई नमस्कार छ) यस मन्त्रद्वारा | **द्रव्यैः** = द्रव्यहरूद्वारा |
| **बुधः** = ज्ञानीले | **विविधैः** = विभिन्न | **देवस्य** = भगवान् नारायणको |
| **ॐ नमः भगवते वासुदेवाय अनेन** | | **द्रव्यमयीं** = द्रव्यप्रधान |
| | | **सपर्यां** = पूजा |
| | | **कुर्यात्** = गरोस् |

**वाक्यार्थ–** कुन स्थान र कुन समयमा भगवान्को पूजा कसरी गर्नुपर्छ भन्ने कुरा बुझ्ने ज्ञानीले **'ॐ नमो भगवते वासुदेवाय'** मन्त्रद्वारा विभिन्न द्रव्यहरूद्वारा भगवान् नारायणको द्रव्यप्रधान पूजा गरोस्।

**सलिलैः शुचिभिर्माल्यैर्वन्यैर्मूलफलादिभिः।**

**शस्ताङ्कुरांशुकैश्चार्चेत् तुलस्या प्रियया प्रभुम्॥ ५५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **शुचिभिः** = पवित्र | फलहरूद्वारा | **तुलस्या** = तुलसीद्वारा |
| **सलिलैः** = जलले | **शस्ताङ्कुरांशुकैः** = पूजाका लागि उपयुक्त दुर्वाङ्कुरहरू र बल्कल आदि वस्त्रहरूद्वारा एवं | **च** = पनि |
| **माल्यैः** = मालाले | **प्रियया** = भगवान्की प्रिया | **प्रभुम्** = सर्वसमर्थ नारायणलाई |
| **वन्यैः** = वनमा भएका | | **अर्चेत्** = पूजा गरोस् |
| **मूलफलादिभिः** = कन्दमूल एवं | | |

**वाक्यार्थ–** पवित्र जल, माला, वनमा भएका कन्दमूल एवं फलहरू, पूजाका लागि उपयुक्त दुर्वाङ्कुरहरू र बल्कल आदि वस्त्रहरूद्वारा एवं भगवान्की प्रिया तुलसीद्वारा पनि सर्वसमर्थ नारायणको पूजा गरोस्।

**लब्ध्वा द्रव्यमयीमर्चां क्षित्यम्ब्वादिषु वार्चयेत्।**

**आभृतात्मा मुनिः शान्तो यतवाङ् मितवन्यभुक् ॥ ५६ ॥**

**पदार्थ–**

**आभृतात्मा** = अन्तःकरण वशमा गरेको
**यतवाक्** = वाणी संयमित भएको
**मितवन्यभुक्** = आवश्यक मात्र वन्यफल खाने
**शान्तः** = शान्त
**मुनिः** = मननशील साधकले
**द्रव्यमयीम्** = पत्थर आदिद्वारा निर्मित
**अर्चां** = प्रतिमा
**लब्ध्वा** = स्थापना गरेर
**वा** = अथवा प्रतिमा प्राप्त गर्न नसकेमा
**क्षित्यम्ब्वादिषु** = जमिन, पानी आदिमा (भगवान्को)
**अर्चयेत्** = पूजा गरोस्

**वाक्यार्थ–** अन्तःकरण वशमा राख्ने, वाणी संयमित भएको, आवश्यक मात्र वन्यफल खाने शान्त मननशील साधकले पत्थर आदिद्वारा निर्मित प्रतिमा स्थापना गरेर अथवा प्रतिमा प्राप्त गर्न नसकेमा जमिन, पानी आदिमा भगवान्को पूजा गरोस्।

**स्वेच्छावतारचरितैरचिन्त्यनिजमायया ।**
**करिष्यत्युत्तमश्लोकस्तद् ध्यायेद्धृदयङ्गमम् ॥ ५७ ॥**

**पदार्थ–**

**उत्तमश्लोकः** = श्रेष्ठ कीर्ति भएका भगवान्
**अचिन्त्यनिजमायया** = आफ्नो अकल्पनीय मायाशक्तिद्वारा
**स्वेच्छावतारचरितैः** = स्वेच्छाले अवतार लिएर विभिन्न लीलाचरित्रद्वारा
**हृदयङ्गमम् करिष्यति** = (भक्तलाई) आफ्नो हृदयमा लिनुहुन्छ
**तत्** = भगवान्का ती लीलाचरित्रहरूको
**ध्यायेत्** = ध्यान गरोस्

**वाक्यार्थ–** श्रेष्ठ कीर्ति भएका भगवान् आफ्नो अकल्पनीय मायाशक्तिद्वारा स्वेच्छाले अवतार लिएर विभिन्न लीलाचरित्रद्वारा भक्तलाई आफ्नो हृदयमा लिनुहुन्छ। त्यसैकारण भगवान्का ती लीलाचरित्रहरूको ध्यान गरोस्।

**परिचर्या भगवतो यावत्यः पूर्वसेविताः ।**
**ता मन्त्रहृदयेनैव प्रयुञ्ज्यान्मन्त्रमूर्तये ॥ ५८ ॥**

**पदार्थ–**

**भगवतः** = भगवान् नारायणका
**यावत्यः** = जति पनि
**पूर्वसेविताः** = पहिले गरिएका
**परिचर्याः** = पूजाहरू (थिए)
**ताः** = पूजाका ती सबै सामग्रीहरू (पुनः)
**मन्त्रहृदयेन एव** = मनले 'ॐ नमो भगवते वासुदेवाय' यो मन्त्र जप्दै
**मन्त्रमूर्तये** = मन्त्रमूर्ति भगवान्लाई
**प्रयुञ्ज्यात्** = अर्पण गर्नू

**वाक्यार्थ–** भगवान् नारायणका जति पनि पहिले गरिएका पूजाहरू थिए, पूजाका ती सबै सामग्रीहरू पुनः मनले **'ॐ नमो भगवते वासुदेवाय'** यो मन्त्र जप्दै मन्त्रमूर्ति भगवान्लाई अर्पण गर्नू।

**एवं कायेन मनसा वचसा च मनोगतम्।**
**परिचर्यमाणो भगवान् भक्तिमत्परिचर्यया॥ ५९॥**
**पुंसाममायिनां सम्यग्भजतां भाववर्धनः।**
**श्रेयो दिशत्यभिमतं यद् धर्मादिषु देहिनाम्॥ ६०॥**

पदार्थ–

**एवं** = यसप्रकार
**मनोगतम्** = मनमा भगवन्मूर्ति दृढ हुने गरी
**कायेन** = देहसम्पाद्य जलद्वारा
**मनसा** = मनद्वारा (ध्यानद्वारा)
**वचसा** = वाणीद्वारा (जप आदिद्वारा)
**भक्तिमत्परिचर्यया** = प्रेमपूर्वक गरिने पूजाद्वारा
**च** = पनि
**परिचर्यमाणः** = पूजित
**भाववर्धनः** = भाववृद्धि गराउनुहुने
**भगवान्** = भगवान् नारायण
**अमायिनां** = अहङ्काररहित भएर
**सम्यग्भजतां** = श्रद्धापूर्वक राम्रोसँग पूजा गर्ने
**देहिनाम्** = शरीरधारी
**पुंसाम्** = भक्तहरूलाई
**धर्मादिषु** = धर्म, अर्थ, काम वा मोक्षमध्ये
**यत्** = जे
**श्रेयः** = कल्याणकारक वस्तु
**अभिमतं** = इच्छा गरिएको छ (त्यही)
**दिशति** = दिनुहुन्छ

**वाक्यार्थ–** यसप्रकार मनमा जसरी भगवन्मूर्ति दृढ हुन्छ त्यसरी नै देहसम्पाद्य जल आदिद्वारा, मनद्वारा, ध्यानद्वारा, वाणीद्वारा, जप आदिद्वारा र प्रेमपूर्वक गरिने पूजाद्वारा पनि पूजित भाववृद्धि गराउनुहुने भगवान् नारायण अहङ्काररहित भएर श्रद्धापूर्वक राम्रोसँग पूजा गर्ने शरीरधारी भक्तहरूलाई धर्म, अर्थ, काम र मोक्षमध्ये जे कल्याणकारक वस्तु इच्छा गरिएको छ त्यही दिनुहुन्छ।

**विरक्तश्चेन्द्रियरतौ भक्तियोगेन भूयसा।**
**तं निरन्तरभावेन भजेताद्धा विमुक्तये॥ ६१॥**

पदार्थ–

**इन्द्रियरतौ** = इन्द्रियलभ्य विषयभोगबाट
**विरक्तः** = विरक्त भएको
(भक्तले)
**च** = पनि
**निरन्तरभावेन** = अनवच्छिन्न प्रेमद्वारा
**अद्धा** = साक्षात्
**विमुक्तये** = मोक्षका लागि

| | |
|---|---|
| **तं** = ती भगवान्लाई | **भक्तियोगेन** = भक्तियोगले |
| **भूयसा** = ठुलो (दृढ) | **भजेत** = भजन गरोस् |

**वाक्यार्थ–** इन्द्रियलभ्य विषयभोगबाट विरक्त भएको भक्तले अनवच्छिन्न प्रेमद्वारा साक्षात् मोक्षका लागि ती भगवान्लाई दृढ भक्तियोगले भजन गरोस्।

**इत्युक्तस्तं परिक्रम्य प्रणम्य च नृपार्भकः।**
**ययौ मधुवनं पुण्यं हरेश्चरणचर्चितम्॥ ६२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इति** = नारदमुनिद्वारा यसप्रकार | **तं** = ती देवर्षि नारदलाई | **चरणचर्चितम्** = चरणचिह्नित |
| **उक्तः** = उपदिष्ट | **परिक्रम्य** = प्रदक्षिणा गरेर | **पुण्यं** = पवित्र |
| **नृपार्भकः** = राजा उत्तानपादका छोरा ध्रुव | **प्रणम्य च** = प्रणाम पनि गरेर | **मधुवनं** = मधुवन |
| | **हरेः** = भगवान्को | **ययौ** = गए |

**वाक्यार्थ–** यसप्रकार नारदमुनिद्वारा उपदिष्ट राजा उत्तानपादका छोरा ध्रुव देवर्षि नारदलाई प्रदक्षिणा र प्रणाम गरेर भगवान्को चरणचिह्न भएको पवित्र मधुवन गए।

**तपोवनं गते तस्मिन् प्रविष्टोऽन्तःपुरं मुनिः।**
**अर्हितार्हणको राज्ञा सुखासीन उवाच तम्॥ ६३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तस्मिन्** = ती ध्रुव | **प्रविष्टः** = प्रवेश गरेर | **मुनिः** = देवर्षि नारदले |
| **तपोवनं** = तपोवन | **राज्ञा** = राजाद्वारा | **तम्** = ती राजा उत्तानपादलाई |
| **गते** = गएपछि | **अर्हितार्हणकः** = पाद्य आदिले पुजिएका | **उवाच** = भन्नुभयो |
| **अन्तःपुरं** = राजा उत्तानपादको दरबारमा | **सुखासीनः** = सुखपूर्वक बसेका | |

**वाक्यार्थ–** ध्रुव तपोवन गएपछि देवर्षि नारद राजा उत्तानपादको दरबारमा प्रवेश गर्नुभयो। त्यहाँ राजाद्वारा प्रदत्त पाद्य आदि पूजा स्वीकार गरेर सुखपूर्वक बस्नुभएका नारदले राजा उत्तानपादलाई भन्नुभयो।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**राजन् किं ध्यायसे दीर्घं मुखेन परिशुष्यता।**
**किं वा न रिष्यते कामो धर्मो वार्थेन संयुतः॥ ६४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राजन्** = हे राजा उत्तानपाद | **दीर्घं** = धेरै समयसम्म | **कामः** = काम |
| **परिशुष्यता** = सुकेको | **किं ध्यायसे** = के सोच्दै हुनुहुन्छ ? | **धर्मः वा** = अथवा धर्म |
| **मुखेन** = मुखले | **अर्थेन** = अर्थले सहित | **न रिष्यते किं वा** = केही नष्ट भएको त छैन ? |
| **संयुतः** = युक्त भएर | | |

**वाक्यार्थ–** हे राजा उत्तानपाद ! मुख सुकाएर धेरै समयसम्म के सोच्दै हुनुहुन्छ ? अर्थ, काम अथवा धर्म नष्ट भएको त छैन ?

**राजोवाच** (राजाले भने)

**सुतो मे बालको ब्रह्मन् स्त्रैणेनाकरुणात्मना ।**

**निर्वासितः पञ्चवर्षः सह मात्रा महान् कविः ॥ ६५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे ब्रह्मन् ! | **महान्** = श्रेष्ठ | **अकरुणात्मना** = निर्दयी मद्वारा |
| **मे** = मेरो | **कविः** = बुद्धिमान् | **मात्रा सह** = उसकी आमासँगै |
| **पञ्चवर्षः** = पाँच वर्षको | **सुतः** = छोरा ध्रुव | **निर्वासितः** = घरबाट निकालिए |
| **बालकः** = बालक (भए पनि) | **स्त्रैणेन** = स्त्रीमा आसक्त भएको | |

**वाक्यार्थ–** हे ब्रह्मन् ! मेरो पाँच वर्षको छोरो बालक भए पनि श्रेष्ठ बुद्धिमान् थियो, उसलाई स्त्रीमा आसक्त भएको निर्दयी मैले उसकी आमाको साथमा घरबाट निकालिदिएँ।

**अप्यनाथं वने ब्रह्मन् मा स्मादन्त्यर्भकं वृकाः ।**

**श्रान्तं शयानं क्षुधितं परिम्लानमुखाम्बुजम् ॥ ६६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे ब्रह्मन् ! | **शयानं** = जमिनमा सुतेको | **वने** = वनमा |
| **श्रान्तं** = थकित | **अपि** = र | **वृकाः** = ब्वाँसाहरूले |
| **क्षुधितं** = भोकाएको | **अनाथं** = कोही पनि रक्षक नभएको | **मा स्म अदन्ति** = कतै नखाऊन् |
| **परिम्लानमुखाम्बुजम्** = मुख सुकेको | **अर्भकं** = बालक ध्रुवलाई | |

**वाक्यार्थ–** हे ब्रह्मन् ! थकित, भोकाएको, मुख सुकेको, जमिनमा सुतेको र कोही पनि रक्षक नभएको बालक ध्रुवलाई वनमा कतै ब्वाँसाहरूले नखाऊन्।

**अहो मे बत दौरात्म्यं स्त्रीजितस्योपधारय ।**

**योऽङ्कं प्रेम्णारुरुक्षन्तं नाभ्यनन्दमसत्तमः ॥ ६७ ॥**

**पदार्थ–**

**अहो** = अहो
**बत** = ज्यादै दुःखको कुरा छ
**स्त्रीजितस्य** = स्त्रीको वशीभूत भएको
**मे** = मेरो
**दौरात्म्यं** = दुष्टता
**उपधारय** = हेर्नुहोस्
**प्रेम्णा** = स्नेहपूर्वक
**अङ्कं** = काखमा
**अरुरुक्षन्तं** = उक्लन चाहने छोरालाई
**यः** = जो म
**असत्तमः** = दुष्टले
**न अभ्यनन्दम्** = काखमा बस्न दिएर खुसी बनाइनँ

**वाक्यार्थ–** अहो ! ज्यादै दुःखको कुरा छ, स्त्रीको वशीभूत भएको मेरो दुष्टता हेर्नुहोस्, स्नेहपूर्वक काखमा उक्लन चाहने छोरालाई म दुष्टले काखमा बस्न दिएर खुसी बनाउन सकिनँ।

**नारद उवाच** (नारदले भन्नुभयो)

**मा मा शुचः स्वतनयं देवगुप्तं विशाम्पते ।**

**तत्प्रभावमविज्ञाय प्रावृङ्क्ते यद्यशो जगत् ॥ ६८ ॥**

**पदार्थ–**

**विशाम्पते** = हे जनताहरूका स्वामी
**देवगुप्तं** = भगवान् नारायणद्वारा रक्षित
**स्वतनयं** = आफ्नो छोरालाई
**तत्प्रभावम्** = उनको सामर्थ्य
**अविज्ञाय** = नबुझेर
**मा मा शुचः** = चिन्ता गर्दै नगर्नुहोस्
**यद्यशः** = ती ध्रुवको कीर्ति
**जगत्** = लोकमा
**प्रावृङ्क्ते** = फैलनेछ

**वाक्यार्थ–** हे जनताहरूका स्वामी ! भगवान् नारायणद्वारा रक्षित आफ्नो छोरालाई र उनको सामर्थ्य नबुझेर चिन्ता नगर्नुहोस्। ती ध्रुवको कीर्ति लोकमा फैलनेछ।

**सुदुष्करं कर्म कृत्वा लोकपालैरपि प्रभुः ।**

**एष्यत्यचिरतो राजन् यशो विपुलयंस्तव ॥ ६९ ॥**

**पदार्थ–**

**राजन्** = हे राजा
**लोकपालैः** = इन्द्र आदि लोकपालहरूद्वारा
**अपि** = पनि
**सुदुष्करं** = गर्न कठिन
**कर्म** = काम
**कृत्वा** = गरेर
**तव** = तपाईंको
**यशः** = कीर्ति
**विपुलयन्** = बढाउँदै
**प्रभुः** = सामर्थ्यवान् ध्रुव
**अचिरतः** = चाँडै नै
**एष्यति** = आउनेछन्

**वाक्यार्थ–** हे राजा ! इन्द्र आदि लोकपालहरूद्वारा पनि गर्न कठिन काम गरेर तपाईंको कीर्ति

बढाउँदै सामर्थ्यवान् ध्रुव चाडैं नै आउनेछन्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इति देवर्षिणा प्रोक्तं विश्रुत्य जगतीपतिः।**

**राजलक्ष्मीमनादृत्य पुत्रमेवान्वचिन्तयत्॥ ७०॥**

**पदार्थ–**

**इति** = यसप्रकार
**देवर्षिणा** = नारदजीद्वारा
**प्रोक्तं** = भनिएको कुरा
**विश्रुत्य** = सुनेर
**जगतीपतिः** = राजा उत्तानपाद
**राजलक्ष्मीम्** = राजसम्पत्तिको
**अनादृत्य** = बेवास्ता गरी
**पुत्रम्** = छोरा ध्रुवलाई
**एव** = नै
**अन्वचिन्तयत्** = चिन्ता गर्न थाले

**वाक्यार्थ–** यसप्रकार नारदजीको कुरा सुनेर राजा उत्तानपाद राजसम्पत्तिको बेवास्ता गरी छोरा ध्रुवको मात्रै चिन्ता गर्न थाले।

**तत्राभिषिक्तः प्रयतस्तामुपोष्य विभावरीम्।**

**समाहितः पर्यचरदृष्यादेशेन पूरुषम्॥ ७१॥**

**पदार्थ–**

**तत्र** = (यता ध्रुवले) त्यहाँ यमुनामा
**अभिषिक्तः** = स्नान गरेर
**प्रयतः** = शुद्ध भएर
**समाहितः** = एकाग्रचित्त भई
**ताम् विभावरीम्** = त्यो रातमा
**उपोष्य** = उपवास बसेर
**ऋष्यादेशेन** = ऋषि नारदको उपदेशानुसार
**पूरुषम्** = नारायणलाई
**पर्यचरत्** = पूजा गर्न लागे

**वाक्यार्थ–** यता ध्रुवले यमुनामा स्नान गरी शुद्ध भएर एकाग्रचित्तले त्यस रातदेखि नै उपवास बसेर ऋषि नारदको उपदेशानुसार नारायणको पूजा गर्न लागे।

**त्रिरात्रान्ते त्रिरात्रान्ते कपित्थबदराशनः।**

**आत्मवृत्त्यनुसारेण मासं निन्येऽर्चयन् हरिम्॥ ७२॥**

**पदार्थ–**

**त्रिरात्रान्ते त्रिरात्रान्ते** = प्रत्येक तीनरातपछि
**आत्मवृत्त्यनुसारेण** = शरीर धान्नका लागि मात्र आवश्यक
**कपित्थबदराशनः** = कैथ र बयर खाएर बसेका ध्रुवले
**हरिम्** = नारायणलाई
**अर्चयन्** = पूजा गर्दै
**मासं** = एक महिना

**निन्ये** = बिताए

**वाक्यार्थ–** प्रत्येक तीन रातपछि शरीर धान्नका लागि मात्र आवश्यक कैथ र बयर खाएर बसेका ध्रुवले नारायणको पूजा गर्दै एक महिना बिताए।

**द्वितीयं च तथा मासं षष्ठे षष्ठेऽर्भको दिने।**

**तृणपर्णादिभिः शीर्णैः कृतान्नोऽभ्यर्चयन् विभुम्॥ ७३॥**

पदार्थ–

**तथा** = त्यसै गरी
**अर्भकः** = बालक ध्रुव
**षष्ठे षष्ठे दिने** = प्रत्येक छ–छ दिनमा
**शीर्णैः** = सुकेका
**तृणपर्णादिभिः** = झारपातहरूद्वारा
**कृतान्नः** = भोजन गरेर
**विभुम्** = सर्वेश्वर नारायणलाई
**अभ्यर्चयन्** = पूजा गर्दै
**द्वितीयं** = दोस्रो
**मासं** = महिना
**च** = पनि बिताए

**वाक्यार्थ–** त्यसै गरी बालक ध्रुवले प्रत्येक छ–छ दिनमा सुकेका झारपातहरू खाएर सर्वेश्वर नारायणको पूजा गर्दै दोस्रो महिना पनि बिताए।

**तृतीयं चानयन्मासं नवमे नवमेऽहनि।**

**अब्भक्ष उत्तमश्लोकमुपाधावत् समाधिना॥ ७४॥**

पदार्थ–

**नवमे नवमे** = प्रत्येक नौ–नौ
**अहनि** = दिनमा
**अब्भक्षः** = पानी मात्र पिएर
**समाधिना** = समाधिमा बसेर
**उत्तमश्लोकम्** = पुण्य कीर्ति भएका भगवान्‌लाई
**उपाधावत्** = चिन्तन गर्दै
**तृतीयं** = तेस्रो
**मासं** = महिना
**च** = पनि
**अनयत्** = बिताए

**वाक्यार्थ–** प्रत्येक नौ–नौ दिनमा पानी मात्र पिएर, समाधिमा बसेर, पुण्य कीर्ति भएका भगवान्‌को चिन्तन गर्दै उनले तेस्रो महिना पनि बिताए।

**चतुर्थमपि वै मासं द्वादशे द्वादशेऽहनि।**

**वायुभक्षो जितश्वासो ध्यायन् देवमधारयत्॥ ७५॥**

पदार्थ–

**द्वादशे द्वादशे** = बाह्र–बाह्र
**अहनि** = दिनमा
**वायुभक्षः** = हावा मात्र खाएर
**जितश्वासः** = श्वासलाई जितेर
**देवम्** = वासुदेवलाई
**ध्यायन्** = ध्यान गर्दै ध्रुवले
**वै** = निश्चय नै
**अधारयत्** = शरीर धारण गरे
**चतुर्थम्** = (यसरी उनले) चौथो
**मासं** = महिना
**अपि** = पनि बिताए

**वाक्यार्थ–** बाह्र-बाह्र दिनमा हावा मात्र खाएर प्राणलाई आफ्नो अधीनमा राखेर वासुदेवको ध्यान गर्दै उनले चौथो महिना पनि बिताए।

**पञ्चमे मास्यनुप्राप्ते जितश्वासो नृपात्मजः।**
**ध्यायन् ब्रह्म पदैकेन तस्थौ स्थाणुरिवाचलः॥ ७६॥**

पदार्थ–

**पञ्चमे मासि** = पाँचौं महिना
**अनुप्राप्ते** = सुरु भएपछि
**जितश्वासः** = श्वास-प्रश्वासलाई नियन्त्रित गरेका
**नृपात्मजः** = राजा उत्तानपादका छोरा ध्रुव
**ब्रह्म ध्यायन्** = ब्रह्मको ध्यान गर्दै
**एकेन पदा** = एउटै खट्टाले उभिएर
**स्थाणुः** = ठुटो
**इव** = झैं
**अचलः** = स्थिर भएर
**तस्थौ** = रहन थाले

**वाक्यार्थ–** पाँचौं महिना सुरु भएपछि श्वास-प्रश्वासलाई नियन्त्रित गरेका एवं राजा उत्तानपादका छोरा ध्रुव ब्रह्मको ध्यान गर्दै एउटै गोडाले मात्र उभिएर ठुटो झैं स्थिर भएर रहन थाले।

**सर्वतो मन आकृष्य हृदि भूतेन्द्रियाशयम्।**
**ध्यायन् भगवतो रूपं नाद्राक्षीत् किञ्चनापरम्॥ ७७॥**

पदार्थ–

**भूतेन्द्रियाशयम्** = पृथिवी आदि भूतका कार्य शब्द आदि विषय र इन्द्रियको नियामक
**मनः** = मनलाई
**सर्वतः** = चारैतिरबाट
**आकृष्य** = खिचेर
**हृदि** = हृदयमा
**भगवतः** = भगवान्को
**रूपं** = रूपलाई
**ध्यायन्** = ध्यान गरिरहेका ध्रुवले
**अपरम्** = अरू
**किञ्चन** = केही पनि
**न अद्राक्षीत्** = देखेनन्

**वाक्यार्थ–** पृथिवी आदि भूतका कार्य, शब्द आदि विषय र इन्द्रियको नियामक मनलाई समेत चारैतिरबाट खिचेर हृदयमा भगवान्को रूपलाई ध्यान गरिरहेका ध्रुवले अरू केही पनि देखेनन्।

**आधारं महदादीनां प्रधानपुरुषेश्वरम्।**
**ब्रह्म धारयमाणस्य त्रयो लोकाश्चकम्पिरे॥ ७८॥**

पदार्थ–

**प्रधानपुरुषेश्वरम्** = प्रकृति र पुरुषका पनि ईश्वर (कारण भएकाले)
**महदादीनां** = महत् आदि सम्पूर्ण तत्त्वको
**आधारं** = आधार भएका

| | | |
|---|---|---|
| **ब्रह्म** = ब्रह्मलाई | ध्रुवको तेज सहन गर्न नसकेर | **चकम्पिरे** = काँप्न थाले |
| **धारयमाणस्य** = धारण गरिरहेका | **त्रयः लोकाः** = तीनै लोक | |

**वाक्यार्थ–** प्रकृति र पुरुषका पनि ईश्वर एवं महत् आदि सम्पूर्ण तत्त्वका आधार भएका ब्रह्मलाई धारण गरिरहेका ध्रुवको तेज सहन गर्न नसकेर तीनै लोक काँप्न थाले।

**यदैकपादेन स पार्थिवार्भक-**
**स्तस्थौ तदङ्गुष्ठनिपीडिता मही।**
**ननाम तत्रार्धमिभेन्द्रधिष्ठिता**
**तरीव सव्येतरतः पदे पदे ॥ ७९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = ती | **तदङ्गुष्ठनिपीडिता** = ध्रुवको औँलाको चापले दबिएकी | **पदे पदे** = पाइलैपिच्छे |
| **पार्थिवार्भकः** = राजपुत्र ध्रुव | **मही** = पृथिवी | **सव्येतरतः** = दायाँबायाँतर्फ |
| **यदा** = जब | **इभेन्द्रधिष्ठिता** = ठुलो हात्ती चढेको | **अर्धम्** = आधासम्म |
| **एकपादेन** = एउटै गोडाले | **तरी इव** = डुङ्गाजैँ | **ननाम** = झुकिन् |
| **तस्थौ** = खडा भए | | |
| **तत्र** = त्यस वेला | | |

**वाक्यार्थ–** ती राजपुत्र ध्रुव जब एउटै गोडाले उभिए त्यस वेला ध्रुवको औँलाको चापले दबिएकी पृथिवी ठुलो हात्ती चढेको डुङ्गाजैँ पाइलैपिच्छ दायाँबायाँतर्फ आधासम्म झुकिन्।

**तस्मिन्नभिध्यायति विश्वमात्मनो**
**द्वारं निरुध्यासुमनन्यया धिया।**
**लोका निरुच्छ्वासनिपीडिता भृशं**
**सलोकपालाः शरणं ययुर्हरिम् ॥ ८० ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **असुम्** = प्राणलाई | **विश्वम्** = सर्वात्मक नारायणलाई | **निरुच्छ्वासनिपीडिताः** = सास रोकिएर छटपटाएका |
| **द्वारं** = इन्द्रियद्वारलाई | **तस्मिन्** = ती ध्रुवले | **सलोकपालाः** = लोकपालले सहित भएका |
| **निरुध्य** = रोकेर | **अभिध्यायति** = ध्यान गरेपछि | **लोकाः** = तीनै लोकका |
| **आत्मनः** = आफूदेखि | **भृशं** = अत्यन्त | |
| **अनन्यया धिया** = अभेदबुद्धिले | | |

| | |
|---|---|
| प्राणीहरू | **शरणं** = शरणमा |
| **हरिम्** = श्रीहरिको | **ययुः** = गए |

**वाक्यार्थ–** ती ध्रुवले प्राण र इन्द्रियद्वारलाई रोकेर आफूदेखि अभेदबुद्धिले सर्वात्मक नारायणको ध्यान गरेपछि सास रोकिएर छटपटाएका लोकपालले सहित भएका तीनै लोकका प्राणीहरू श्रीहरिको शरणमा गए।

**देवा ऊचुः** (देवताहरूले भने)

**नैवं विदामो भगवन् प्राणरोधं**
**चराचरस्याखिलसत्त्वधाम्नः।**
**विधेहि तन्नो वृजिनाद् विमोक्षं**
**प्राप्ता वयं त्वां शरणं शरण्यम्॥ ८१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भगवन्** = हे भगवान् | **न विदामः** = हामीले कहिल्यै जानेका थिएनौं, त्यसैले | **तत्** = त्यसकारण |
| **चराचरस्य** = स्थावर र जङ्गम | **वयं** = हामीहरू | **वृजिनात्** = यस दुःखबाट |
| **अखिलसत्त्वधाम्नः** = सम्पूर्ण प्राणीहरूको | **शरण्यम्** = शरणागतरक्षक | **नः** = हाम्रो |
| **एवं** = यस्तो | **त्वां** = हजुरको | **विमोक्षं** = मुक्ति |
| **प्राणरोधं** = एकसाथ प्राण रोकिएको | **शरणं** = शरणमा | **विधेहि** = गर्नुहोस् |
| | **प्राप्ताः** = आइपुगेका छौं | |

**वाक्यार्थ–** हे भगवान्! स्थावर र जङ्गम सम्पूर्ण प्राणीको यस्तो एकसाथ प्राण रोकिएको हामीले कहिल्यै थाहा पाएका थिएनौं, त्यसैले हामीहरू शरणागतरक्षक हजुरको शरणमा आइपुगेका छौं, त्यसकारण यस दुःखबाट हामीलाई मुक्त गर्नुहोस्।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**मा भैष्ट बालं तपसो दुरत्यया-**
**न्निवर्तयिष्ये प्रतियात स्वधाम।**
**यतो हि वः प्राणनिरोध आसी-**
**दौत्तानपादिर्मयि सङ्गतात्मा॥ ८२॥**

पदार्थ–

**मा भैष्ट** = नडराउनुहोस्
**स्वधाम** = आ–आफ्नो लोकमा
**प्रतियात** = जानुहोस्
**औत्तानपादिः** = उत्तानपादका छोरा ध्रुव
**मयि** = ममा
**सङ्गतात्मा** = ऐक्यभावमा प्राप्त भएका छन्
**यतः** = जुन बालकको तपस्याले
**वः** = तपाईंहरूको
**प्राणनिरोधः** = प्राण रोकिएको
**आसीत्** = थियो, त्यस्तो
**दुरत्ययात्** = मेरो अनुग्रहविना नरोकिने
**तपसः** = तपस्याबाट म
**बालं** = बालक ध्रुवलाई
**निवर्तयिष्ये हि** = निश्चय नै निवृत्त गराउनेछु

**वाक्यार्थ–** तपाईंहरू नडराउनुहोस्, आ–आफ्नो लोकमा जानुहोस्, उत्तानपादका छोरा ध्रुव ममा ऐक्यभावमा प्राप्त भएका छन्। जुन बालकको तपस्याले तपाईंहरूको प्राण रोकिएको थियो, त्यस्तो मेरो अनुग्रहविना नरोकिने तपस्याबाट म ती बालक ध्रुवलाई निवृत्त गराउनेछु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे**

**ध्रुवचरितेऽष्टमोऽध्यायः ॥ ८ ॥**

# अथ नवमोऽध्यायः

## वर प्राप्त गरेर ध्रुव घर फर्कनु

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**त एवमुत्सन्नभया उरुक्रमे**

**कृतावनामाः प्रययुस्त्रिविष्टपम् ।**

**सहस्रशीर्षापि ततो गरुत्मता**

**मधोर्वनं भृत्यदिदृक्षया गतः ॥ १ ॥**

**पदार्थ–**

**एवम्** = यसप्रकार (भगवान्को कुरा सुनेर)
**उत्सन्नभयाः** = भयरहित भएका
**ते** = ती इन्द्र आदि देवताहरू
**उरुक्रमे** = भगवान्लाई
**कृतावनामाः** = नमस्कार गरेर
**त्रिविष्टपम्** = स्वर्ग
**प्रययुः** = गए
**ततः** = त्यसपछि
**सहस्रशीर्षा** = (हजार शिर भएका) विराट्स्वरूप भगवान्
**अपि** = पनि
**भृत्यदिदृक्षया** = आफ्ना सेवक ध्रुवलाई हेर्ने इच्छाले
**गरुत्मता** = गरुडमा चढेर
**मधोः वनं** = मधुवन
**गतः** = जानुभयो

**वाक्यार्थ–** यसप्रकार भगवान्को कुरा सुनेर भयरहित भएका ती इन्द्र आदि देवताहरू भगवान्लाई नमस्कार गरेर स्वर्ग गए। त्यसपछि विराट्स्वरूप भएका भगवान् पनि आफ्ना सेवक ध्रुवलाई हेर्ने इच्छाले गरुडमा चढेर मधुवन जानुभयो।

**स वै धिया योगविपाकतीव्रया**

**हृत्पद्मकोशे स्फुरितं तडित्प्रभम् ।**

**तिरोहितं सहसैवोपलक्ष्य**

**बहिःस्थितं तदवस्थं ददर्श ॥ २ ॥**

**पदार्थ–**

**सः** = ती ध्रुव
**वै** = निश्चय नै
**योगविपाकतीव्रया** = योगको परिपाकद्वारा एकाग्र भएको
**धिया** = बुद्धिले
**हृत्पद्मकोशे** = हृदयकमलमा
**तडित्प्रभम्** = बिजुली चम्किँदाको जस्तो
**स्फुरितं** = ध्यानद्वारा प्रकाशित

भइरहेको भगवान्को रूप
**सहसा** = अचानक
**तिरोहितं** = विलीन भएको
**उपलक्ष्य** = जानेर
**तदवस्थं** = अन्तःकरणमा भएकै रूप
**एव** = नै
**बहिःस्थितं** = बाहिर पनि रहेको
**ददर्श** = देखे

**वाक्यार्थ–** ध्रुवले आफ्नो हृदयकमलमा योगको परिपाकद्वारा एकाग्र भएको बुद्धिले भगवान्को बिजुली चम्केको जस्तो प्रकाशमय रूपको ध्यान गरिरहेका थिए। त्यो रूप अचानक विलीन भयो। त्यसपछि आँखा खोलेर हेर्दा उनले आफ्नो अन्तःकरणमा भएकै रूप बाहिर पनि रहेको देखे।

**तद्दर्शनेनागतसाध्वसः क्षिता–**
**ववन्दताङ्गं विनमय्य दण्डवत्।**
**दृग्भ्यां प्रपश्यन् प्रपिबन्निवार्भक–**
**श्चुम्बन्निवास्येन भुजैरिवाश्लिषन्॥ ३॥**

पदार्थ–

**तद्दर्शनेन** = भगवान्को त्यस रूपको दर्शनले
**आगतसाध्वसः** = हतारिएका
**अर्भकः** = बालक ध्रुव
**अङ्गं** = शरीरलाई
**क्षितौ** = पृथ्वीमा
**दण्डवत्** = दण्डझैं
**विनमय्य** = झुकाएर
**अवन्दत** = प्रणाम गरे
(त्यसपछि)
**दृग्भ्यां** = आँखाद्वारा
**प्रपश्यन्** = हेरेर नै
**प्रपिबन् इव** = पिउँलाझैं गरेर
**आस्येन** = मुखले
**चुम्बन् इव** = चुम्बन गरूँलाझैं गरेर
**भुजैः** = हातले
**आश्लिषन् इव** = अङ्कमाल गरूँलाझैं गरी (भगवान्लाई हेर्न लागे)

**वाक्यार्थ–** भगवान्को दर्शनले संभ्रमित भएका बालक ध्रुवले आफ्नो शरीरलाई पृथ्वीमा दण्डझैं झुकाएर भगवान्लाई प्रणाम गरे। त्यसपछि उनले आँखाले हेरेर नै पिउँलाझैं गरेर, मुखले चुम्बन गरूँलाझैं गरेर, हातले अङ्कमाल गरूँलाझैं गरी भगवान्लाई हेर्न लागे।

**स तं विवक्षन्तमतद्विदं हरि–**
**र्ज्ञात्वास्य सर्वस्य च हृद्यवस्थितः।**
**कृताञ्जलिं ब्रह्ममयेन कम्बुना**
**पस्पर्श बालं कृपया कपोले॥ ४॥**

पदार्थ–

**अस्य** = यी ध्रुवको
**सर्वस्य च** = सम्पूर्ण जगत्को पनि
**हृदि** = हृदयमा
**अवस्थितः** = बस्नुभएका
**सः** = ती
**हरिः** = श्रीहरिले
**तं** = ती ध्रुवलाई
**कृताञ्जलिं** = नमस्कारपूर्वक
**विवक्षन्तम्** = आफ्नो स्तुति गर्न लागेको देखेर
**बालं** = बालक भएको कारणले
**अतद्विदं** = आफ्नो गुणस्तुति गर्न नसक्ने
**ज्ञात्वा** = जानेर
**ब्रह्ममयेन** = वेदमय
**कम्बुना** = शङ्खले
**कृपया** = अनुग्रहपूर्वक
**कपोले** = ध्रुवको गालामा
**पस्पर्श** = छोइदिनुभयो

**वाक्यार्थ–** ध्रुवको र सम्पूर्ण जगत्कै हृदयमा बस्नुभएका श्रीहरिले ती ध्रुवलाई नमस्कारपूर्वक आफ्नो स्तुति गर्न लागेको र उनी बालक भएको कारणले उनले आफ्नो गुणस्तुति गर्न नसक्ने जानेर वेदमय शङ्खले अनुग्रहपूर्वक उनको गालामा छोइदिनुभयो।

**स वै तदैव प्रतिपादितां गिरं**
**दैवीं परिज्ञातपरात्मनिर्णयः।**
**तं भक्तिभावोऽभ्यगृणादसत्वरं**
**परिश्रुतोरुश्रवसं ध्रुवक्षितिः॥ ५॥**

पदार्थ–
**ध्रुवक्षितिः** = (भविष्यमा) अविचलपद प्राप्त गर्ने भएका
**परिज्ञातपरात्मनिर्णयः** = परमात्मतत्त्वको वास्तविक अर्थ बुझेका
**भक्तिभावः** = भक्तिभावले युक्त भएका
**सः** = ती ध्रुवले
**तदा एव** = भगवान्ले शङ्खले छोइदिनेबित्तिकै
**असत्वरं** = तत्काल
**प्रतिपादितां** = वेदले प्रतिपादन गरेको
**दैवीं** = देवताविषयक
**गिरं** = स्तुत्यात्मक वाणीलाई
**वै** = निश्चय नै
**परिश्रुतोरुश्रवसं** = चारैतिर व्याप्त महान् कीर्ति भएका
**तं** = ती श्रीहरिको
**अभ्यगृणात्** = स्तुति गर्न लागे

**वाक्यार्थ–** भविष्यमा अविचलपद प्राप्त गर्ने भएका, परमात्मतत्त्वको वास्तविक अर्थ बुझेका, भक्तिभावले युक्त भएका ती ध्रुवले भगवान्ले शङ्खले छोइदिनेबित्तिकै तत्काल वेदले प्रतिपादन गरेको देवताविषयक स्तुत्यात्मक वाणी प्राप्त गरे। त्यसपछि उनले चारैतिर व्याप्त महान् कीर्ति भएका श्रीहरिको स्तुति गर्न लागे।

**ध्रुव उवाच** (ध्रुवले भने)

**योऽन्तः प्रविश्य मम वाचमिमां प्रसुप्तां**

**सञ्जीवयत्यखिलशक्तिधरः स्वधाम्ना ।**
**अन्यांश्च हस्तचरणश्रवणत्वगादीन्**
**प्राणान् नमो भगवते पुरुषाय तुभ्यम् ॥ ६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अखिलशक्तिधरः** = सबै शक्ति धारण गर्ने | **इमां** = यो | **सञ्जीवयति** = आ–आफ्नो काममा लाग्न बिउँझाउनुहुन्छ |
| **यः** = जो भगवान् | **वाचम्** = परा वाणीलाई | **तुभ्यम्** = हजुर |
| **मम** = मेरो | **अन्यान् च** = अरू पनि | **पुरुषाय** = पुरुषरूप |
| **अन्तः प्रविश्य** = अन्तःकरणमा प्रवेश गरेर | **हस्तचरणश्रवणत्वगादीन्** = हात, गोडा, कान, छाला आदि इन्द्रियलाई र | **भगवते** = भगवान्लाई |
| **प्रसुप्तां** = सुषुप्त अवस्थामा रहेको | **प्राणान्** = प्राणलाई पनि | **नमः** = नमस्कार छ |
| | **स्वधाम्ना** = आफ्नो तेजद्वारा | |

**वाक्यार्थ–** सबै शक्ति धारण गर्ने भगवान् जसले मेरो अन्तःकरणमा प्रवेश गरेर सुषुप्त अवस्थामा रहेको परा वाणीलाई, अरू पनि हात, गोडा, कान, छाला आदि इन्द्रियलाई र प्राणलाई पनि आफ्नो तेजद्वारा आ–आफ्नो काममा लाग्न बिउँझाउनुहुन्छ त्यस्ता पुरुषरूप भगवान्लाई नमस्कार छ।

**विवरण–** परमात्मा **अखिलशक्तिधर** अर्थात् सबै शक्तिलाई धारण गर्ने हुनुहुन्छ। इन्द्रियका देख्ने, सुन्ने आदि शक्ति परमात्माकै हुन्। आँखा आदिले परमात्मालाई देख्न नसक्ने तर सम्पूर्ण इन्द्रिय परमात्माकै कारणले चल्ने कुरा केनोपनिषद् (१।६)मा बताइएको छ। परमात्मामा पाँच शक्तिहरू नित्य रहन्छन्। ती हुन्– सृष्टि, स्थिति, संहार, निग्रह र अनुग्रह शक्ति। भगवान् आफूभन्दा अभिन्न यी शक्तिहरूलाई लिई संसारको रचना गर्नुहुन्छ, त्यसको पालन अनि संहार गर्नुहुन्छ। त्यसै गरी पापीलाई निग्रह र भक्तलाई अनुग्रह गर्नुहुन्छ। जसरी अग्निको पोल्ने शक्ति अग्निभन्दा अभिन्न हो त्यसै गरी यी शक्तिहरू परमात्माभन्दा अभिन्न हुन्। मनुष्य आफ्ना सीमित भाव र उत्साहलाई लिएर उहाँलाई खोज्छ र आफ्नो परमानन्दको तिर्खा मेटाउँछ। त्यसैले भक्तहरू भगवान् शक्तिशाली भएकाले होइन अपितु आफ्नै हृदयभित्रको प्रेमको कारणले भगवान्प्रति आकर्षित हुन्छन्।

**एकस्त्वमेव भगवन्निदमात्मशक्त्या**
**मायाख्ययोरुगुणया महदाद्यशेषम् ।**

**सृष्ट्वानुविश्य पुरुषस्तदसद्‌गुणेषु**
**नानेव दारुषु विभावसुवद् विभासि ॥ ७ ॥**

पदार्थ–

**भगवन्** = हे भगवान्
**उरुगुणया** = सत्त्व आदि त्रिगुणात्मिका
**मायाख्यया** = माया नामकी
**आत्मशक्त्या** = आफ्नो शक्तिद्वारा
**इदम्** = यो प्रत्यक्ष अनुभूत
**महदाद्यशेषम्** = महत् आदि तत्त्व र त्यसबाट उत्पन्न हुने सम्पूर्ण जगत्‌को
**सृष्ट्वा** = सृष्टि गरेर
**तत्** = त्यस सृष्टिभित्र
**अनुविश्य** = प्रवेश गरेर
**त्वम्** = हजुर
**एकः** = एक मात्र
**एव** = नै
**पुरुषः** = पुरुष
**असद्‌गुणेषु** = मायाको असद्‌गुणमा स्थित भई
**दारुषु** = काठ आदिमा
**विभावसुवत्** = अग्नि रहेझैँ
**नाना इव** = विभिन्न रूपमा
**विभासि** = प्रकाशित हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! सत्त्व आदि त्रिगुणात्मिका माया नामकी आफ्नो शक्तिद्वारा यो प्रत्यक्ष अनुभूत महत् आदि तत्त्व र त्यसबाट उत्पन्न हुने सम्पूर्ण जगत्‌को सृष्टि गरेर अनि त्यस सृष्टिभित्र प्रवेश गरेर हजुर एक मात्र पुरुष नै मायाको असद्‌गुणमा स्थित भई काठ आदिमा अग्नि रहेझैँ विभिन्न रूपमा प्रकाशित हुनुहुन्छ।

**विवरण–** जसरी अग्नि तत्त्व संसारभरि एउटै हो तर त्यो दाउरैपिच्छे छुट्टा-छुट्टै रूपमा व्यक्त हुन्छ त्यसै गरी परमात्मा पनि विभिन्न रूपमा व्यक्त हुनुहुन्छ। जीवात्माको रूपमा नामरूपको विभाग गर्न प्रवेश गर्नुभएका परमात्मा धेरै भएर पनि एउटै हुनुहुन्छ। माथिको श्लोकमा भनिएको छ– **सृष्ट्वा अनुविश्य** अर्थात् सृजना गरी त्यसभित्र पसेर। तैत्तिरीयोपनिषद् (२।६)मा **तत् सृष्ट्वा तदेव अनुप्राविशत्** भनी बताइएझैँ जीवात्माको रूपमा परमात्माले प्रवेश गरेर भन्ने यो पदावलिको अर्थ हो। परमात्मा केवल त्यस रूपमा देखिनुहुन्छ। वस्तुतः अद्वितीय परमात्मा द्वितीयझैँ हुनुभएको मात्र हो, विभिन्न रूपमा परिणत हुनुभएको होइन भन्ने यस श्लोकको आशय हो।

**त्वद्दत्तया वयुनयेदमचष्ट विश्वं**
**सुप्तप्रबुद्ध इव नाथ भवत्प्रपन्नः।**
**तस्यापवर्ग्यशरणं तव पादमूलं**
**विस्मर्यते कृतविदा कथमार्तबन्धो ॥ ८ ॥**

पदार्थ–

**आर्तबन्धो** = हे दीनवत्सल
**भवत्प्रपन्नः** = हजुरको शरणमा आउनुभएका (ब्रह्माले सृष्टिपूर्व)
**त्वद्दत्तया** = हजुरले दिनुभएको
**वयुनया** = ज्ञानद्वारा
**इदम्** = यो
**विश्वं** = विश्वलाई
**सुप्तप्रबुद्धः इव** = सुतेर उठेको पुरुषले झैं
**अचष्ट** = देख्नुभयो (त्यसैले)
**नाथ** = हे स्वामी
**आपवर्ग्यशरणं** = मुक्तहरूको आश्रय हुनुभएका
**तस्य** = त्यस्ता
**तव** = हजुरको
**पादमूलं** = चरणकमललाई
**कृतविदा** = कृतज्ञ ज्ञानीजनहरूद्वारा
**कथम्** = कसरी
**विस्मर्यते** = बिर्सन सकिन्छ

**वाक्यार्थ—** हे दीनवत्सल ! हजुरको शरणमा आउनुभएका ब्रह्माले सृष्टिपूर्व हजुरले दिनुभएको ज्ञानद्वारा यस विश्वलाई सुतेर उठेको पुरुषले झैं देख्नुभएको थियो। त्यसैले हे स्वामी ! मुक्तहरूको आश्रय हुनुभएका त्यस्ता हजुरको चरणकमललाई कृतज्ञ ज्ञानीजनहरू कसरी बिर्सन सक्छन् र ?

**नूनं विमुष्टमतयस्तव मायया ते**
**ये त्वां भवाप्ययविमोक्षणमन्यहेतोः ।**
**अर्चन्ति कल्पकतरुं कुणपोपभोग्य-**
**मिच्छन्ति यत्स्पर्शजं निरयेऽपि नृणाम् ॥ ९ ॥**

**पदार्थ—**
**भवाप्ययविमोक्षणम्** = जन्म-मरणबाट मुक्त गराउने
**कल्पकतरुं** = कल्पवृक्षझैं भक्तहरूको सम्पूर्ण इच्छा पूर्ण गरिदिनुहुने
**त्वां** = हजुरलाई
**ये** = जो मानिसहरू
**अन्यहेतोः** = भगवत्प्राप्तिबाहेक अन्य पदार्थ (अर्थ, काम आदिको) प्राप्तिका लागि
**अर्चन्ति** = पूजा गर्दछन्
**ते** = तिनीहरू
**नूनं** = निश्चय नै
**तव** = हजुरको
**मायया** = मायाशक्तिद्वारा
**विमुष्टमतयः** = चित्त मोहित भएका हुन् (किनभने तिनीहरू)
**कुणपोपभोग्यम्** = मृततुल्य शरीरद्वारा उपभोग गरिने विषयसुख
**इच्छन्ति** = चाहन्छन्
**यत्स्पर्शजं** = त्यस्ता खाले विषयसम्बन्धजन्य सुख त
**नृणाम्** = मानिसहरूले
**निरये** = नरकमा
**अपि** = पनि (पाउँछन्)

**वाक्यार्थ—** जन्म-मरणबाट मुक्त गराउने र कल्पवृक्षझैं भक्तहरूको सम्पूर्ण इच्छा पूर्ण गरिदिनुहुने हजुरलाई जो मानिसहरू भगवत्प्राप्तिबाहेक अन्य अर्थ, काम आदिको प्राप्तिका लागि पूजा गर्दछन् तिनीहरू निश्चय नै हजुरको मायाशक्तिद्वारा मोहित भएका मानिस हुन् किनभने मृततुल्य शरीरद्वारा उपभोग गरिने विषयको सुख त मानिसहरूले नरकमा पनि पाउँछन्।

**या निर्वृतिस्तनुभृतां तव पादपद्म-**
**ध्यानाद् भवज्जनकथाश्रवणेन वा स्यात्।**
**सा ब्रह्मणि स्वमहिमन्यपि नाथ मा भूत्**
**किं त्वन्तकासिलुलितात् पततां विमानात्॥ १०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **नाथ** = हे स्वामी | **वा** = अथवा | **अपि** = पनि |
| **तनुभृतां** = सम्पूर्ण प्राणीहरूलाई | **या** = जुन | **मा भूत्** = हुँदैन भने |
| **तव** = हजुरको | **निर्वृतिः** = आनन्द | **अन्तकासिलुलितात्** = कालको तरबारद्वारा पुण्य काटिएर |
| **पादपद्मध्यानात्** = चरणकमलको ध्यानबाट | **स्यात्** = प्राप्त हुन्छ | **विमानात्** = स्वर्गीय विमानबाट |
| **भवज्जनकथाश्रवणेन** = हजुरका भक्तहरूको कथाश्रवणद्वारा | **सा** = त्यो आनन्द | **पततां तु किं** = खस्नेहरूलाई त कसरी हुन सक्छ र ? |
| | **स्वमहिमनि** = निजानन्दरूप | |
| | **ब्रह्मणि** = ब्रह्ममा | |

**वाक्यार्थ–** हे स्वामी ! सम्पूर्ण प्राणीहरूलाई हजुरको चरणकमलको ध्यान र हजुरका भक्तहरूको कथाश्रवणबाट जुन आनन्द प्राप्त हुन्छ त्यो आनन्द निजानन्दरूप ब्रह्ममा त हुँदैन भने कालको तरबारद्वारा पुण्य काटिएर स्वर्गीय विमानबाट खस्नेहरूलाई त कसरी प्राप्त हुन सक्छ र ?

**विवरण–** तैत्तिरीयोपनिषद् (२।८)मा ब्रह्मानन्दलाई सर्वश्रेष्ठ भनी बताइएको छ। ब्रह्म आनन्दस्वरूप हो भने त्यसको ज्ञानबाट जीवन्मुक्तलाई हुने जुन आनन्दातिशय छ त्यो ब्रह्मानन्द हो। मनुष्य, देवता आदिभन्दा सय-सय गुणाले उत्तरोत्तर श्रेष्ठ हुँदै अन्तिममा हिरण्यगर्भ ब्रह्माले जुन आनन्द प्राप्त गर्दछन् त्यही आनन्द कामनाविहीन ब्रह्माजीले पनि प्राप्त गर्नुहुन्छ भनी उक्त उपनिषद्मा भनिएको छ। जीवन्मुक्तिको सर्वश्रेष्ठ आनन्द पनि आनन्दस्वरूप ब्रह्मको थोरै अभिव्यक्ति हो भनी त्यहाँ बताइएको छ। **सर्वाणि भूतानि तस्य मात्रामुपजीवन्ति** अर्थात् ब्रह्मा आदि सम्पूर्ण प्राणीहरू स्वरूपभूत आनन्दकै मात्रा वा अंशलाई पाएर आनन्दित हुन्छन्। त्यो ब्रह्मानन्दभन्दा पनि भगवान्‌को ध्यान, कथाश्रवण आदिमा आनन्द बढी हुने कुरा यहाँ बताइएको हो। ब्रह्मानन्द प्राप्त गर्न मनुष्यले वैराग्य, इन्द्रियनिग्रह आदिद्वारा एकान्तमा साधना गर्नुपर्दछ भने कथाश्रवण, कीर्तन आदिबाट हुने आनन्द एकैचोटि हजारौं मनुष्यलाई मिल्न सक्छ र सुलभ पनि छ। त्यसैले यहाँ श्रवण, कीर्तन आदिको आनन्दलाई ब्रह्मानन्दभन्दा श्रेष्ठ बताइएको हो।

**भक्तिं मुहुः प्रवहतां त्वयि मे प्रसङ्गो**
**भूयादनन्तमहताममलाशयानाम्।**

**येनाञ्जसोल्बणमुरुव्यसनं भवाब्धिं**

**नेष्ये भवद्गुणकथामृतपानमत्तः ॥ ११ ॥**

पदार्थ–

**अनन्त** = हे अनन्त भगवान्
**त्वयि** = हजुरमा
**मुहुः** = बारम्बार
**भक्तिं** = प्रेम
**प्रवहतां** = प्रवाहित गर्ने
**अमलाशयानाम्** = शुद्ध चित्त भएका
**महताम्** = महात्माहरूसँग
**मे** = मेरो
**प्रसङ्गः** = सङ्गत
**भूयात्** = होस्
**येन** = भक्तहरूसँगको जुन सत्सङ्गद्वारा
**भवद्गुणकथामृतपानमत्तः** = हजुरको गुणकथारूप अमृतपान गरेर मस्त भई
**उरुव्यसनं** = अनेक दुःखले युक्त
**उल्बणम्** = भयङ्कर
**भवाब्धिं** = संसारसागरलाई
**अञ्जसा** = सजिलैसँग
**नेष्ये** = पार गर्नेछु

**वाक्यार्थ–** हे अनन्त भगवान् ! हजुरमा बारम्बार प्रेम प्रवाहित गर्ने शुद्ध चित्त भएका महात्माहरूसँग मेरो सङ्गत होस्। भक्तहरूसँगको जुन सत्सङ्गद्वारा हजुरको गुणकथारूप अमृतपान गरेर मस्त भई म अनेक दुःखले युक्त भयङ्कर संसारसागरलाई सजिलैसँग पार गर्नेछु।

**ते न स्मरन्त्यतितरां प्रियमीश मर्त्यं**

**ये चान्वदः सुतसुहृद्गृहवित्तदाराः ।**

**ये त्वब्जनाभ भवदीयपदारविन्द-**

**सौगन्ध्यलुब्धहृदयेषु कृतप्रसङ्गाः ॥ १२ ॥**

पदार्थ–

**ईश** = हे भगवान्
**अब्जनाभ** = हे कमलनाभ
**ये तु** = जो
**भवदीयपदारविन्दसौगन्ध्यलुब्धहृदयेषु** = हजुरको चरणकमलको सुगन्धमा मुग्ध हृदय भएका भक्तहरूको
**कृतप्रसङ्गाः** = सत्सङ्ग गर्ने
**ते** = ती मानिसहरूले
**अतितरां** = अत्यन्त
**प्रियम्** = प्रिय लाग्ने
**मर्त्यं** = मरणशील शरीरलाई
**अदः** = यो शरीरसँग
**अनु** = सम्बद्ध
**ये** = जे-जति
**सुतसुहृद्गृहवित्तदाराः** = पुत्र, मित्र, गृह, धन, पत्नी इत्यादि छन्
**च** = तिनको पनि
**न स्मरन्ति** = वास्ता गर्दैनन्

**वाक्यार्थ–** हे भगवान् ! हे कमलनाभ ! हजुरको चरणकमलको सुगन्धमा मुग्ध हृदय भएका भक्तहरूको सङ्गत गर्ने मानिसहरू अत्यन्त प्रिय लाग्ने र मरणशील शरीरलाई र यो शरीरसँग सम्बद्ध पुत्र, मित्र, गृह, धन, पत्नी इत्यादि जे-जति छन् तिनको पनि वास्ता गर्दैनन्।

**तिर्यङ्नगद्विजसरीसृपदेवदैत्य-**
**मर्त्यादिभिः परिचितं सदसद्विशेषम् ।**
**रूपं स्थविष्ठमज ते महदाद्यनेकं**
**नातः परं परम वेद्मि न यत्र वादः ॥ १३ ॥**

**पदार्थ–**

**अज** = हे अजन्मा परमेश्वर
**तिर्यङ्नगद्विजसरीसृपदेवदैत्य-मर्त्यादिभिः** = पशु, वृक्ष, पक्षी, सर्प, देवता, दैत्य र मनुष्यहरूले
**परिचितं** = व्याप्त तथा
**सदसद्विशेषम्** = सदसदात्मक स्थूलसूक्ष्म तत्त्व
**महदाद्यनेकं** = महत् आदि अनेक कारणद्वारा सम्पादित
**ते** = हजुरको
**स्थविष्ठम्** = विराट्
**रूपं** = रूप
**वेद्मि** = जान्दछु
**यत्र** = जुन स्वरूपमा
**वादः** = श्रुतिको वा वाणीको गति
**न** = छैन
**परम** = हे परमप्रभु
**अतः** = यसदेखि
**परं** = बाहेक
**न** = जान्दिनँ

**वाक्यार्थ–** हे अजन्मा परमेश्वर ! पशु, वृक्ष, पक्षी, सर्प, देवता, दैत्य र मनुष्यहरूले व्याप्त तथा सदसदात्मक स्थूल, सूक्ष्म तत्त्व र महत् आदि अनेक कारणद्वारा सम्पादित हजुरको विराट् रूपको विषयमा म जान्दछु जुन स्वरूपमा श्रुतिको वा वाणीको गति पनि छैन। हे परमप्रभु ! तर यसदेखि बाहेक अरू केही पनि म जान्दिनँ।

**कल्पान्त एतदखिलं जठरेण गृह्णन्**
**शेते पुमान् स्वदृगनन्तसखस्तदङ्के ।**
**यन्नाभिसिन्धुरुहकाञ्चनलोकपद्म-**
**गर्भे द्युमान् भगवते प्रणतोऽस्मि तस्मै ॥ १४ ॥**

**पदार्थ–**

**कल्पान्ते** = कल्पको अन्त्यमा
**एतत्** = यो
**अखिलं** = सम्पूर्ण लोक (त्रिलोक)
**जठरेण** = पेटमा
**गृह्णन्** = ग्रहण गर्दै
**अनन्तसखः** = शेषनाग सहायक भएर
**स्वदृक्** = योगनिद्रामा रहनुभएका
**पुमान्** = परम पुरुष
**तदङ्के** = शेषनागको काखमा
**शेते** = शयन गर्नुहुन्छ
**यन्नाभिसिन्धुरुहकाञ्चनलोक-पद्मगर्भे** = जसको नाभिरूप सागरमा उत्पन्न सुवर्णमय कमलको गर्भमा
**द्युमान्** = तेजोमय ब्रह्मा उत्पन्न हुनुभयो
**तस्मै** = त्यस्ता
**भगवते** = भगवान् श्रीहरिलाई

**प्रणतः अस्मि** = प्रणाम गर्दछु

**वाक्यार्थ–** जो परमपुरुष कल्पको अन्त्यमा योगनिद्रामा रहेर यो सम्पूर्ण लोकलाई आफ्नो पेटभित्र लीन गरेर शेषनागलाई साथमा लिएर शेषनागकै काखमा शयन गर्नुहुन्छ, जसको नाभिरूप सागरमा उत्पन्न सुवर्णमय कमलको गर्भमा तेजोमय ब्रह्मा उत्पन्न हुनुभयो त्यस्ता भगवान् श्रीहरिलाई प्रणाम गर्दछु।

**त्वं नित्यमुक्तपरिशुद्धविबुद्ध आत्मा**
**कूटस्थ आदिपुरुषो भगवांस्त्र्यधीशः।**
**यद्बुद्ध्यवस्थितिमखण्डितया स्वदृष्ट्या**
**द्रष्टा स्थितावधिमखो व्यतिरिक्त आस्से ॥ १५ ॥**

पदार्थ–

**त्वं** = हजुर
**नित्यमुक्तपरिशुद्धविबुद्धः** = नित्यमुक्त, परिशुद्ध र सर्वज्ञ
**आत्मा** = आत्मा
**कूटस्थः** = निर्विकार
**आदिपुरुषः** = आदिपुरुष
**भगवान्** = ऐश्वर्यशाली
**त्र्यधीशः** = त्रिगुणका मालिक हुनुहुन्छ
**यद्बुद्ध्यवस्थितिम्** = जुन बुद्धिको अवस्थालाई
**अखण्डितया** = अखण्डित
**स्वदृष्ट्या** = चित् शक्तिद्वारा
**द्रष्टा** = अवलोकन गर्नुहुन्छ
**स्थितौ** = लोकपालन गर्न
**अधिमखः** = यज्ञाधिष्ठाता र
**व्यतिरिक्त** = जीवभन्दा भिन्न
**आस्से** = हुनुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! हजुर नित्यमुक्त, परिशुद्ध, सर्वज्ञ, आत्मा, निर्विकार, आदिपुरुष, ऐश्वर्यशाली एवं त्रिगुणका मालिक हुनुहुन्छ। हजुर नै अखण्डित चित् शक्तिद्वारा बुद्धिका अवस्था अवलोकन गर्नुहुन्छ। हजुर नै लोकपालन गर्नका लागि यज्ञाधिष्ठाताका रूपमा रहनुभएको छ र हजुर जीवभन्दा भिन्न हुनुहुन्छ।

**विवरण–** नित्यमुक्त यो पदको अर्थ हुन्छ– बन्धप्रतीतिकालमा पनि बन्धनरहित। यद्यपि जीव आफूलाई संसारमा बाँधिएको र जन्मने-मर्ने रूपमा अनुभव गर्दछ तथापि ऊ वास्तवमा बाँधिएको छैन। वास्तवमा नै बाँधिएको भए त मुक्त हुने प्रसङ्ग पनि आउँदैनथ्यो। शुद्ध भनेको माया र मायाको कार्यको सम्पर्कबाट रहित भएको भनी बुझ्नुपर्छ। विबुद्ध भनेर नित्य आफ्नो स्वरूपलाई जान्ने भनी बुझ्नुपर्छ। अनि परमात्मा नै समस्त संसारको बीचमा पनि असङ्ग र निर्विकार रूपले रहनुहुन्छ।

**यस्मिन् विरुद्धगतयो ह्यनिशं पतन्ति**

**विद्यादयो विविधशक्तय आनुपूर्व्यात्।**
**तद् ब्रह्म विश्वभवमेकमनन्तमाद्यम्**
**आनन्दमात्रमविकारमहं प्रपद्ये ॥ १६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विरुद्धगतयः** = परस्पर विरुद्ध स्वभाव भएका | **पतन्ति** = रहन्छन् | **तत्** = त्यो |
| **विद्यादयः** = विद्या, अविद्या आदि | **विश्वभवम्** = जन्म आदिका कारण | **ब्रह्म** = ब्रह्मरूप भगवान्को शरणमा |
| **विविधशक्तयः** = अनेक शक्तिहरू | **एकम्** = एक | **हि** = निश्चय नै |
| **अनिशं** = निरन्तर | **आद्यम्** = आद्य | **अहं** = म |
| **आनुपूर्व्यात्** = क्रमैले | **अनन्तम्** = अविनाशी | **प्रपद्ये** = परेको छु |
| **यस्मिन्** = जुन वासुदेवमा | **आनन्दमात्रम्** = सुखस्वरूप | |
| | **अविकारम्** = निर्विकार | |

**वाक्यार्थ–** हजुरबाट नै परस्पर विरुद्ध स्वभाव भएका विद्या, अविद्या आदि अनेक शक्तिहरू निरन्तर क्रमैले प्रकट भइरहेका छन्। जगत्को कारण, अखण्ड, अनादि, अनन्त, आनन्दमय, निर्विकार र ब्रह्मरूप त्यस्ता हजुरको शरणमा म परेको छु।

**विवरण–** परमात्मा आनन्दस्वरूप हुनुहुन्छ। हरेक वस्तुमा पाँच अंश हुन्छन्। कुनै पनि वस्तु छ भन्ने अस्तित्व अंश, देखिन्छ वा जानिन्छ भन्ने ज्ञान अंश, राम्रो लाग्छ भन्ने आनन्दांश, भिन्न-भिन्न नाम र भिन्न-भिन्न रूप। यीमध्ये अस्तित्व, ज्ञान र आनन्द अंश ब्रह्मका हुन् र नाम अनि रूप जगत्को अंश हो। भगवान् आफैँ त आनन्दस्वरूप हुनुहुन्छ नै, जगत्मा देखिने अलि-अलि आनन्द पनि परमात्माबाटै आएको हो। परमात्मामा आनन्द घैँटोमा रातोपन बसेजस्तो गुणको रूपमा बस्ने होइन अपितु आनन्द परमात्मा नै हो भन्ने बुझ्नुपर्छ। त्यही आनन्दमय परमात्मामा **विरुद्धगतयः** अर्थात् विद्या, अविद्या आदि विरोधी पदार्थहरू पनि सँग-सँगै उत्पन्न र लीन हुन्छन्। जगत्का वस्तुहरू एक-आपसभन्दा भिन्न र विरुद्ध छन् तर तिनीहरूको कारण परमात्मा अद्वितीय र अविरुद्ध हुनुहुन्छ। विरोधी वस्तुहरूको बीचमा पनि अविरोधी भई परमात्माले समान रूपले सबैलाई प्रकाशित गरिरहनुहुन्छ।

**सत्याशिषो हि भगवंस्तव पादपद्मम्**
**आशीस्तथानुभजतः पुरुषार्थमूर्तेः।**
**अप्येवमर्य भगवान् परिपाति दीनान्**

**वाश्रेव वत्सकमनुग्रहकातरोऽस्मान्॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भगवन्** = हे परमेश्वर | **तथा** = त्यसै गरी | **वत्सकम्** = बाच्छोलाई |
| **अनुभजतः** = भजन गर्ने पुरुषका लागि | **सत्याशिषः** = सच्चा आशीर्वाद | **इव** = रक्षा गरेझैं |
| **पुरुषार्थमूर्तेः** = परमानन्दस्वरूप | **अपि** = पनि हो | **हि** = निश्चय नै |
| **तव** = हजुरको | **अर्य** = हे भगवान् | **दीनान्** = दुःखी |
| **पादपद्मम्** = चरणकमल | **अनुग्रहकातरः** = भक्तहरूलाई अनुग्रह गर्न सधैं उत्सुक रहनुहुने | **अस्मान्** = हामी भक्तहरूलाई |
| **एव** = नै | **भगवान्** = भगवान् हजुर | **परिपाति** = रक्षा गर्नुहुन्छ |
| **आशीः** = परमार्थफल हो | **वाश्रा** = नवप्रसूता गाईले | |

**वाक्यार्थ–** हे परमेश्वर! भजन गर्ने पुरुषका लागि परमानन्दस्वरूप हजुरको चरणकमल नै परमार्थफल र सच्चा आशीर्वाद पनि हो। हे भगवान्! भक्तहरूलाई अनुग्रह गर्न सधैं उत्सुक रहनुहुने हजुर नवप्रसूता गाईले बाच्छोलाई रक्षा गरेझैं हामी दुःखी भक्तहरूलाई रक्षा गर्नुहुन्छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**अथाभिष्टुत एवं वै सत्सङ्कल्पेन धीमता।**

**भृत्यानुरक्तो भगवान् प्रतिनन्द्येदमब्रवीत्॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | **अभिष्टुत** = प्रार्थना गरिनुभएका | **वै** = साँच्चै |
| **धीमता** = बुद्धिमान् | **भृत्यानुरक्तः** = भक्तानुरागी | **प्रतिनन्द्य** = ध्रुवलाई प्रशंसा गर्दै |
| **सत्सङ्कल्पेन** = शुभ सङ्कल्पयुक्त ध्रुवद्वारा | **भगवान्** = भगवान्ले | **इदम्** = यसो |
| | **अथ** = यसपछि | **अब्रवीत्** = भन्नुभयो |

**वाक्यार्थ–** यसप्रकार बुद्धिमान् एवं शुभ सङ्कल्पयुक्त ध्रुवद्वारा प्रार्थना गरिनुभएका भक्तानुरागी भगवान्ले ध्रुवलाई प्रशंसा गर्दै यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**वेदाहं ते व्यवसितं हृदि राजन्यबालक।**

**तत् प्रयच्छामि भद्रं ते दुरापमपि सुव्रत॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सुव्रत** = उत्तम व्रतको पालन गर्ने | | **राजन्यबालक** = हे राजपुत्र ध्रुव |

| | | |
|---|---|---|
| **ते** = तिम्रो | **व्यवसितं** = रहेको इच्छा | चाहेको कुरा |
| **भद्रं** = कल्याण होस् | **अहं** = म | **दुरापम्** = दुष्प्राप्य |
| **ते** = तिम्रो | **वेद** = जान्दछु | **अपि** = भए पनि |
| **हृदि** = मनमा | **तत्** = त्यो तिमीले प्राप्त गर्न | **प्रयच्छामि** = तिमीलाई दिन्छु |

**वाक्यार्थ–** उत्तम व्रतको पालन गर्ने हे राजपुत्र ध्रुव ! तिम्रो कल्याण होस्, तिम्रो मनमा रहेको इच्छा म जान्दछु, तिमीले प्राप्त गर्न चाहेको कुरा दुष्प्राप्य भए पनि म तिमीलाई दिन्छु।

**नान्यैरधिष्ठितं भद्र यद् भ्राजिष्णु ध्रुवक्षिति।**
**यत्र ग्रहर्क्षताराणां ज्योतिषां चक्रमाहितम्॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भद्र** = हे बाबु | **भ्राजिष्णु** = प्रकाशमय | ताराहरूको |
| **अन्यैः** = तिमीबाहेक अरूद्वारा | **ध्रुवक्षिति** = अविचल पद छ | **ज्योतिषां चक्रम्** = ज्योतिश्चक्र |
| **न अधिष्ठितं** = प्राप्त गर्न नसकिने | **यत्र** = जहाँ | **आहितम्** = निबद्ध भएका छन् |
| **यत्** = जुन | **ग्रहर्क्षताराणां** = ग्रह, नक्षत्र र | (त्यो पद म तिमीलाई दिन्छु) |

**वाक्यार्थ–** हे बाबु ! तिमीबाहेक अरूद्वारा प्राप्त गर्न नसकिने जुन प्रकाशमय अविचल पद छ, जहाँ ग्रह, नक्षत्र र ताराहरूको ज्योतिश्चक्र निबद्ध भएका छन् त्यो पद म तिमीलाई दिन्छु।

**मेढ्यां गोचक्रवत् स्थास्नु परस्तात् कल्पवासिनाम्।**
**धर्मोऽग्निः कश्यपः शुक्रो मुनयो ये वनौकसः॥**
**चरन्ति दक्षिणीकृत्य भ्रमन्तो यत् सतारकाः॥ २१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **धर्मः** = धर्म | **मुनयः** = सप्तर्षिहरूले | **कल्पवासिनाम्** = कल्पसम्म रहने |
| **अग्निः** = अग्नि | **मेढ्यां** = मियोमा | (अरू लोकभन्दा) |
| **कश्यपः** = कश्यप | **गोचक्रवत्** = गोरुहरू घुमेझैं | **परस्तात्** = पछिसम्म पनि |
| **शुक्रः** = शुक्र आदि नक्षत्र र | **यत्** = जुन पदलाई | **स्थास्नु** = स्थिर रहने |
| **सतारकाः** = ताराहरू सहित | **दक्षिणीकृत्य** = प्रदक्षिणा गरेर | (त्यो पद म तिमीलाई दिन्छु) |
| **ये** = जो | **भ्रमन्तः** = घुम्दै | |
| **वनौकसः** = वनवासी | **चरन्ति** = हिँड्दछन् | |

**वाक्यार्थ–** धर्म, अग्नि, कश्यप, शुक्र आदि नक्षत्र र ताराहरू सहित वनवासी सप्तर्षिहरू दाईं गर्दा मियोमा गोरुहरू घुमेझैं जुन पदलाई प्रदक्षिणा गरेर घुम्दै हिँड्दछन्, कल्पको अन्त्यमा अन्य लोक नष्ट भए पनि स्थिर रहने त्यो पद म तिमीलाई दिन्छु।

**प्रस्थिते तु वनं पित्रा दत्त्वा गां धर्मसंश्रयः।**
**षट्त्रिंशद्वर्षसाहस्रं रक्षिताव्याहतेन्द्रियः॥ २२॥**

**पदार्थ–**

**गां** = (तिमीलाई) पृथ्वी (राज्य)
**दत्त्वा** = दिएर
**पित्रा** = बुबा उत्तानपाद
**वनं** = जङ्गल
**प्रस्थिते** = गएपछि
**अव्याहतेन्द्रियः** = सक्षम इन्द्रिय भएका तिमीले
**धर्मसंश्रयः** = धर्मपूर्वक
**षट्त्रिंशद्वर्षसाहस्रं** = छत्तीस हजार वर्षसम्म
**तु** = चाहिँ
**रक्षिता** = राज्यको पालन गर्नेछौ

**वाक्यार्थ–** तिमीलाई राज्य दिएर बुबा उत्तानपाद जङ्गल गएपछि सक्षम इन्द्रिय भएका तिमीले धर्मपूर्वक छत्तीस हजार वर्षसम्म राज्यको पालन गर्नेछौ।

**त्वद्भ्रातर्युत्तमे नष्टे मृगयायां तु तन्मनाः।**
**अन्वेषन्ती वनं माता दावाग्निं सा प्रवेक्ष्यति॥ २३॥**

**पदार्थ–**

**त्वद्भ्रातरि उत्तमे** = तिम्रा भाइ उत्तम
**मृगयायां** = शिकार खेल्न जाँदा
**नष्टे** = मरेपछि
**तन्मनाः** = पुत्रशोकले विह्वल हृदय भएकी
**सा** = ती
**माता** = उत्तमकी आमा सुरुचि
**तु** = चाहिँ
**वनं** = जङ्गलमा
**अन्वेषन्ती** = उत्तमलाई खोज्दै
**दावाग्निं** = डडेलोमा
**प्रवेक्ष्यति** = प्रवेश गर्नेछिन्

**वाक्यार्थ–** तिम्रा भाइ उत्तम शिकार खेल्न जाँदा मरेपछि पुत्रशोकले विह्वल हृदय भएकी ती उत्तमकी आमा सुरुचि चाहिँ जङ्गलमा उत्तमलाई खोज्दै डडेलोमा प्रवेश गर्नेछिन्।

**इष्ट्वा मां यज्ञहृदयं यज्ञैः पुष्कलदक्षिणैः।**
**भुक्त्वा चेहाशिषः सत्या अन्ते मां संस्मरिष्यसि॥ २४॥**

**पदार्थ–**

**इह** = यस भूलोकमा
**पुष्कलदक्षिणैः** = प्रशस्त उत्तम दक्षिणा भएको
**यज्ञैः** = यज्ञहरूले
**यज्ञहृदयं** = यज्ञप्राण
**मां** = मलाई
**इष्ट्वा** = पूजा गरेर
**सत्या** = श्रेष्ठ
**आशिषः** = उत्तम भोग्य वस्तुहरूको
**भुक्त्वा** = भोग गरेर
**अन्ते** = अन्त्यमा
**च** = चाहिँ
**मां** = मलाई
**संस्मरिष्यसि** = स्मरण गर्नेछौ

**वाक्यार्थ–** यस भूलोकमा प्रशस्त उत्तम दक्षिणा भएको यज्ञले यज्ञप्राण मलाई पूजा गरेर श्रेष्ठ उत्तम भोग्य वस्तुहरू भोग गरिसकेपछि तिमीले अन्त्यमा मलाई स्मरण गर्नेछौ।

**ततो गन्तासि मत्स्थानं सर्वलोकनमस्कृतम्।**

**उपरिष्टादृषिभ्यस्त्वं यतो नावर्तते गतः॥ २५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ततः** = त्यसपछि | **सर्वलोकनमस्कृतम्** = सम्पूर्ण लोकद्वारा वन्दनीय | **गतः** = जहाँ पुगेको मान्छे |
| **त्वं** = तिमी | **मत्स्थानं** = मेरो परमपदमा | **यतः** = त्यस ठाउँबाट |
| **ऋषिभ्यः** = ऋषिहरूभन्दा | **गन्तासि** = जानेछौ | **न आवर्तते** = फर्कँदैन |
| **उपरिष्टात्** = माथि रहेको | | |

**वाक्यार्थ–** त्यसपछि तिमी ऋषिहरूभन्दा माथि रहेको सम्पूर्ण लोकद्वारा वन्दनीय मेरो परमपदमा जानेछौ जहाँ पुगेको मान्छे त्यस ठाउँबाट फर्कँदैन।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इत्यर्चितः स भगवानतिदिश्यात्मनः पदम्।**

**बालस्य पश्यतो धाम स्वमगाद् गरुडध्वजः॥ २६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इति** = यसप्रकार | **आत्मनः** = आफ्नो | **स्वम्** = आफ्नो |
| **अर्चितः** = पूजा गरिनुभएका | **पदम्** = पद | **धाम** = लोक |
| **सः** = उहाँ | **अतिदिश्य** = प्रदान गरेर | **अगात्** = जानुभयो |
| **भगवान्** = भगवान् | **बालस्य** = बालक ध्रुवले | |
| **गरुडध्वजः** = विष्णुले ध्रुवलाई | **पश्यतः** = हेर्दाहेर्दै | |

**वाक्यार्थ–** यसप्रकार पूजा गरिनुभएका भगवान् विष्णुले ध्रुवलाई आफ्नो पद प्रदान गरेर बालक ध्रुवले हेर्दाहेर्दै आफ्नो लोकमा जानुभयो।

**सोऽपि सङ्कल्पजं विष्णोः पादसेवोपसादितम्।**

**प्राप्य सङ्कल्पनिर्वाणं नातिप्रीतोऽभ्यगात् पुरम्॥ २७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सः** = ती ध्रुव | **सङ्कल्पनिर्वाणं** = सङ्कल्पद्वारा पूर्ण | **पादसेवोपसादितम्** = चरणसेवाद्वारा प्राप्त |
| **अपि** = पनि | **विष्णोः** = विष्णुको | |

**सङ्कल्पजं** = मनले चिताएअनुसार **प्राप्य** = पाएर पनि **नातिप्रीतः** = ज्यादै खुसी नभईकन **पुरम्** = पिताजीको नगर **अभ्यगात्** = गए

**वाक्यार्थ–** भगवान् विष्णुको चरणसेवाद्वारा इच्छा गरेअनुसारको वस्तु प्राप्त भएकाले आफ्ना इच्छा पूरा भए पनि ध्रुव त्यति खुसी नभईकन आफ्नो सहरमा फर्किए।

**विदुर उवाच** (विदुरजीले भन्नुभयो)

**सुदुर्लभं यत् परमं पदं हरे-**
**र्मायाविनस्तच्चरणार्चनार्जितम्।**
**लब्ध्वाप्यसिद्धार्थमिवैकजन्मना**
**कथं स्वमात्मानममन्यतार्थवित्॥ २८॥**

**पदार्थ–**

**मायाविनः** = मायापति **हरेः** = भगवान्को **सुदुर्लभं** = दुष्प्राप्य **यत्** = जुन **परमं पदं** = परमपद छ त्यसलाई **तच्चरणार्चनार्जितम्** = श्रीहरिको चरणकमलको पूजाद्वारा **एकजन्मना** = एउटै जन्मद्वारा **लब्ध्वा अपि** = प्राप्त गरेर पनि **अर्थवित्** = तत्त्वज्ञ ध्रुवले **कथं** = किन **स्वम् आत्मानम्** = आफूलाई **असिद्धार्थम्** = मनोरथ नै सिद्ध नभएको **इव** = जस्तो **अमन्यत** = माने

**वाक्यार्थ–** मायापति भगवान्को दुष्प्राप्य परमपदलाई श्रीहरिको चरणकमलको पूजाद्वारा एउटै जन्मद्वारा प्राप्त गरेर पनि तत्त्वज्ञ ध्रुवले किन आफूलाई मनोरथ नै सिद्ध नभएको जस्तो माने ?

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**मातुः सपत्न्या वाग्बाणैर्हृदि विद्धस्तु तान् स्मरन्।**
**नैच्छन्मुक्तिपतेर्मुक्तिं तस्मात् तापमुपेयिवान्॥ २९॥**

**पदार्थ–**

**सपत्न्याः मातुः** = सौतेनी आमा सुरुचिको **वाग्बाणैः** = वचनरूपी बाणद्वारा **हृदि** = मनमा **विद्धः** = पीडित भएका ध्रुवले **तान्** = ती वचनबाणलाई **स्मरन्** = सम्झँदै गर्नाले **मुक्तिपतेः** = मुक्तिदाता भगवान्बाट **मुक्तिं** = मोक्ष प्राप्त गर्ने **तु** = चाहिँ **न ऐच्छत्** = चाहना गरेनन् **तस्मात्** = त्यसकारण (उनले) **तापम्** = दुःख **उपेयिवान्** = प्राप्त गरे

| | | |
|---|---|---|
| **तयोः** = ती दुई | **एव** = नै | **सम्भूतिः** = सृष्टिप्रक्रिया हुन्छ |
| **योषित्पुरुषयोः** = स्त्री र पुरुषको | **हि** = निश्चय | |
| **व्यवायात्** = समागमबाट | **इह** = यस लोकमा | |

**वाक्यार्थ–** पृथिवी आदि पाँच महाभूतबाट सुरु भएर स्त्री वा पुरुषको उत्पत्ति हुन्छ। ती दुई स्त्री र पुरुषको समागमबाट नै यस लोकमा सृष्टिप्रक्रिया हुन्छ।

**एवं प्रवर्तते सर्गः स्थितिः संयम एव च।**
**गुणव्यतिकराद् राजन् मायया परमात्मनः॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राजन्** = हे राजा ध्रुव | **गुणव्यतिकरात्** = सत्त्व आदि गुणमा हुने न्यूनाधिक भावबाट | **स्थितिः** = पालन |
| **एवं** = यसप्रकार | | **संयम** = संहार |
| **परमात्मनः** = भगवान्‌को | **एव** = नै | **च** = पनि |
| **मायया** = मायाद्वारा | **सर्गः** = सृष्टि | **प्रवर्तते** = हुने गर्दछ |

**वाक्यार्थ–** हे राजा ध्रुव ! यसप्रकार भगवान्‌को मायाद्वारा सत्त्व आदि गुणमा हुने न्यूनाधिक भावबाट नै सृष्टि, पालन र संहार पनि हुने गर्दछ।

**निमित्तमात्रं तत्रासीन्निर्गुणः पुरुषर्षभः।**
**व्यक्ताव्यक्तमिदं विश्वं यत्र भ्रमति लोहवत्॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तत्र** = त्यस सृष्टि आदि कार्यमा | **आसीत्** = हुनुहुन्थ्यो | **विश्वं** = चराचर जगत् |
| **निर्गुणः** = निर्गुण | **यत्र** = जुन परमात्मामा | **लोहवत्** = चुम्बकमा फलामझैँ |
| **पुरुषर्षभः** = परमात्मा | **व्यक्ताव्यक्तम्** = कार्यकारणात्मक | **भ्रमति** = घुम्दछ |
| **निमित्तमात्रं** = निमित्त मात्र | **इदं** = यो | |

**वाक्यार्थ–** त्यस सृष्टि आदि कार्यमा निर्गुण परमात्मा निमित्त मात्र हुनुहुन्थ्यो। कार्यकारणात्मक यो चराचर जगत् चुम्बकमा फलाम घुमेझैँ परमात्मामा घुम्दछ।

**विवरण–** परमात्मा निर्गुण र निष्क्रिय हुनुभएकाले जगत्‌को रचना प्रकृति अथवा मायाको कारणले भएको हो। परमात्मा त केवल निमित्त मात्र हुनुहुन्छ। निमित्त भनेको त्यो हो जो कार्यसिद्धिको लागि अनिवार्य चाहिन्छ तर उसले काम चाहिँ गर्नु पर्दैन। यद्यपि जगत्कर्तृत्व आदि लक्षणले परमात्मालाई नै बुझाउँछ, प्रकृतिलाई होइन, तर पनि परमात्मा केवल अधिष्ठाता रूपले रहनुहुन्छ, सृष्टि आदिमा क्षोभ हुनु प्रकृतिको काम हो। यहाँ परमात्मालाई निमित्त मात्र बताइएको हो। जसरी चुम्बक निष्क्रिय भए तापनि आफ्नो आकर्षण शक्तिको कारणले त्यसले फलामलाई

आफ्नो वरिपरि घुमाउँछ त्यसै गरी परमात्मा अकर्ता भएर पनि मायाशक्तिको कारणले सृष्टि, रक्षा र संहार गरी सारालाई घुमाउनुहुन्छ।

**स खल्विदं भगवान् कालशक्त्या**
**गुणप्रवाहेण विभक्तवीर्यः।**
**करोत्यकर्तैव निहन्त्यहन्ता**
**चेष्टा विभूम्नः खलु दुर्विभाव्या॥ १८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कालशक्त्या** = कालशक्तिको कारणले | **भगवान्** = भगवान् नारायण | गर्नुहुन्छ |
| **गुणप्रवाहेण** = सत्त्व आदि गुणमा उत्पन्न हुने विचलनद्वारा | **खलु** = नै | **विभूम्नः** = महामहिम भगवान्को |
| **विभक्तवीर्यः** = सृष्टि आदि रूपमा शक्ति बाँडिएका | **अकर्ता एव** = कर्ता नभए पनि | **चेष्टा** = लीला |
| **सः** = त्यस्ता | **इदं** = यो संसारको | **खलु** = साँच्चै |
| | **करोति** = सृष्टि गर्नुहुन्छ | **दुर्विभाव्या** = अचिन्त्य छ |
| | **अहन्ता** = संहारक नभए पनि | |
| | **निहन्ति** = सबै संहार गरेरैँ | |

**वाक्यार्थ–** कालशक्तिको कारणले सत्त्व आदि गुणमा उत्पन्न हुने विचलनद्वारा भगवान्को शक्ति सृष्टि आदि रूपमा विभक्त हुन्छ। त्यस्ता भगवान् नारायण नै कर्ता नभए पनि यो संसारको सृष्टि गर्नुहुन्छ, संहारक नभए पनि सबै संहार गरेरैँ गर्नुहुन्छ, महामहिम भगवान्को लीला साँच्चै अचिन्त्य छ।

**विवरण–** ब्रह्म वस्तुतः अकर्ता हो तर पनि मायाशक्तिको कारणले ऊ जगत्प्रपञ्चको कारण बन्दछ। कालशक्तिको कारणले क्रमानुसार रज, सत्त्व आदि गुणहरूको प्रवाह हुन्छ र त्यसैमा सृष्टि आदि भिन्न-भिन्न काम गर्ने रूपमा उहाँ देखिनुहुन्छ। जगत् परमात्मामा अध्यस्त वा आश्रित हो तर परमात्मा जगत्मा लिप्त हुनुहुन्न। यही नै परमात्माको अकर्ता भएर पनि कर्ता हुनुको रहस्य हो।

**सोऽनन्तोऽन्तकरः कालोऽनादिरादिकृदव्ययः।**
**जनं जनेन जनयन् मारयन् मृत्युनान्तकम्॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = उहाँ भगवान् नै | **अव्ययः** = अविकारी | **जनं** = मानिसलाई |
| **अनादिः** = अनादि | **जनेन** = मानिसद्वारा | **जनयन्** = उत्पन्न गराउँदै |

| | | |
|---|---|---|
| **आदिकृत्** = सृष्टिकर्ता हुनुहुन्छ | प्राणीहरूलाई | **अन्तकरः** = संहारकर्ता |
| **अनन्तः** = अनन्त भएर पनि | **मृत्युना** = मृत्युद्वारा | **कालः** = कालस्वरूप बन्नुहुन्छ |
| **अन्तकम्** = अरूलाई मार्ने | **मारयन्** = नष्ट गराउँदै | |

**वाक्यार्थ–** उहाँ भगवान् नै अनादि र अविकारी हुनुहुन्छ। मानिसद्वारा मानिसलाई उत्पन्न गराउँदै उहाँ सृष्टिकर्ता हुनुहुन्छ अनि अनन्त भएर पनि अरूलाई मार्ने प्राणीहरूलाई समेत मृत्युद्वारा नष्ट गराउँदै उहाँ संहारकर्ता कालस्वरूप बन्नुहुन्छ।

**विवरण–** एकले अर्कालाई उत्पन्न गर्ने र एकले अर्कालाई मार्ने समस्त प्राणीहरूको रूपमा ईश्वर नै सबैथरी व्यवहारका कारण हुनुहुन्छ। किनभने उहाँ नै अनादि, अनन्त र अव्यय तत्त्व हुनुहुन्छ। जीवहरूलाई उत्पन्न गर्ने माता-पिताहरू पनि अर्कैबाट उत्पन्न भएकाले उनीहरू स्वतन्त्र रूपले उत्पत्तिका कारण होइनन्, अपितु अनादि परमात्मा नै सम्पूर्ण सृष्टिको कारण हुनुहुन्छ। त्यसै गरी दुष्टहरूलाई दण्ड दिई मार्ने शासकहरू पनि एक दिन मर्ने भएकाले अनन्त अर्थात् कहिल्यै नमर्ने परमात्माले नै सबैको अन्त्य गर्नुहुन्छ।

**न वै स्वपक्षोऽस्य विपक्ष एव वा**
**परस्य मृत्योर्विशतः समं प्रजाः।**
**तं धावमानमनुधावन्त्यनीशा**
**यथा रजांस्यनिलं भूतसङ्घाः॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रजाः** = सम्पूर्ण प्राणीहरूमा | **विपक्षः** = अर्को पक्ष (शत्रु) | **भूतसङ्घाः** = प्राणीहरू |
| **समं** = समानरूपले | **न एव** = छैन | **अनीशाः** = कर्माधीन भएर |
| **विशतः** = प्रवेश गर्ने | **यथा** = जसरी | **धावमानम्** = निरन्तर चल्ने |
| **परस्य मृत्योः** = अरूको मृत्युरूप | **रजांसि** = धुलोका कणहरूले | **तं** = कालरूप भगवान्लाई |
| **अस्य** = यी परमात्माको | **अनिलं** = वायुलाई | **अनुधावन्ति** = पछ्याउँछन् |
| **स्वपक्षः** = आफ्नो पक्ष (मित्र) | पछ्याउँछन् (त्यसै गरी) | (सुखदुःख भोग गर्नका लागि |
| **वा** = अथवा | **वै** = निश्चय नै | जन्मिइरहन्छन्) |

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूमा समानरूपले प्रवेश गर्ने अरूका लागि मृत्युरूप यी परमात्माको आफ्नो पक्ष (मित्र) अथवा विपक्ष (शत्रु) कोही छैन। जसरी धुलोका कणहरूले वायुलाई पछ्याउँछन् त्यसै गरी प्राणीहरू कर्माधीन भएर निरन्तर चल्ने कालरूप भगवान्लाई पछ्याउँछन् अर्थात् सुखदुःख भोग गर्नका लागि जन्मिइरहन्छन्।

**विवरण–** ईश्वरले सृष्टि, स्थिति र संहार सबै कार्य गर्ने भए तापनि उहाँमा वैषम्य छैन। कसैलाई मार्ने र कसैलाई जन्माउने कार्य ईश्वरको पक्षपात वा भेदभाव होइन। प्राणीहरू विवश भई आ-

आफ्नो कर्मानुसार जन्मन र मर्न बाध्य छन्। त्यही हुनाले यस श्लोकमा भनिएको छ— परमात्माको कोही पनि स्वपक्ष र विपक्ष छैनन्। जसरी आकाशबाट परेको पानी खेत, जङ्गल, खोला, पोखरी सबैतिर पर्दछ, पानी पर्नमा कुनै पक्षपात हुँदैन त्यसै गरी परमात्मामा पनि कुनै पक्षपात वा विषमता हुँदैन। फलमा भिन्नता त उनीहरूको आफ्नै कर्मको कारणले भएको हो।

**आयुषोऽपचयं जन्तोस्तथैवोपचयं विभुः।**
**उभाभ्यां रहितः स्वस्थो दुःस्थस्य विदधात्यसौ॥ २१॥**

**पदार्थ–**
**असौ** = यी परमात्मा
**दुःस्थस्य** = कर्मबन्धनमा बाँधिएको
**जन्तोः** = जीवलाई (कर्मानुसार देव आदि योनिमा पठाएर)
**आयुषः** = आयुको
**अपचयं** = वृद्धि
**तथा एव** = त्यसै गरी (कीट आदि योनिमा पठाएर आयुको)
**उपचयं** = ह्रास
**विदधाति** = गर्नुहुन्छ (तर)
**स्वस्थः** = आफ्नै स्वरूपमा रहनुभएका
**विभुः** = सर्वसमर्थ परमात्मा
**उभाभ्यां रहितः** = आयुको वृद्धि र ह्रास दुबैबाट रहित (हुनुहुन्छ)

**वाक्यार्थ–** कर्मबन्धनमा बाँधिएका जीवलाई परमात्माले उनीहरूको कर्मानुसार देव आदि योनिमा पठाएर आयुको वृद्धि र कीट आदि योनिमा पठाएर उनीहरूको आयुको ह्रास गर्नुहुन्छ। तर सर्वसमर्थ एवं आफ्नै स्वरूपमा स्थित परमात्मा चाहिँ आयुको वृद्धि र ह्रास यी दुबैबाट रहित हुनुहुन्छ।

**केचित् कर्म वदन्त्येनं स्वभावमपरे नृप।**
**एके कालं परे दैवं पुंसः काममुतापरे॥ २२॥**

**पदार्थ–**
**नृप** = हे राजा ध्रुव
**एनं** = यसैलाई
**केचित्** = केही (मीमांसकहरू)
**कर्म** = कर्म
**वदन्ति** = भन्दछन्
**अपरे** = अरू (चार्वाकहरू)
**स्वभावम्** = स्वभाव मान्दछन्
**एके** = एकथरी (वैशेषिक)
**कालं** = काल भन्दछन्
**परे** = अरू (ज्योतिषीहरू) यसलाई
**दैवं** = दैव भन्दछन्
**उतः** = अथवा
**अपरे** = अन्य (कामशास्त्रीहरू)
**पुंसः** = मानिसको
**कामम्** = काम मान्दछन्

**वाक्यार्थ–** हे राजा ध्रुव ! यही परमतत्त्वलाई मीमांसकहरू कर्म भन्दछन्, चार्वाकहरू स्वभाव मान्दछन्, वैशेषिकहरू काल भन्दछन्, ज्योतिषीहरू दैव भन्दछन् भने कामशास्त्रीहरू चाहिँ मानिसको काम मान्दछन्।

**विवरण–** ईश्वरको अस्तित्वमा विवाद छैन, अपितु नाम मात्रमा विवाद हो भन्ने आशयलाई यस श्लोकले स्पष्ट गर्दछ। ईश्वर अरूप हुनुहुन्छ, त्यसैले उहाँको चिन्तन गर्न समेत सकिँदैन। अक्षज वा इन्द्रियबाट उत्पन्न हुने ज्ञान ईश्वरभन्दा अधः वा तलै रहने भएकाले उहाँलाई अधोक्षज भनिन्छ। त्यस्ता अचिन्त्य ईश्वरलाई आफ्नो सीमित बुद्धिबाट निरूपण गर्न खोज्ने मानिसहरू उहाँलाई आ-आफ्नो रुचिअनुकूल परिभाषित गर्दछन्।

मीमांसकहरू कर्मवादी हुन्। उनीहरूको मतमा कर्मले नै सम्पूर्ण फल दिने भएकाले कर्म नै ईश्वर हो। जगत्को कारण पृथ्वी, जल, तेज आदिको उत्पन्न हुने स्वभाव नै हो भन्ने चार्वाकहरू पदार्थमा रहेको स्वभावलाई नै ईश्वर मान्दछन्। वैशेषिकहरू कालबाट जगत्को सृष्टि हुन्छ भनी मान्दछन् भने ज्योतिषीहरू दैव अर्थात् भाग्यबाट जगत्को सृष्टि हुन्छ भन्दछन्। कामशास्त्रीहरू कामेच्छाबाट नै जगत्को उत्पत्ति हुन्छ भनी मान्दछन्। यी भिन्न-भिन्न सिद्धान्त बोकेका विचारकहरू जेबाट संसारको उत्पत्ति हुन्छ भन्ने मान्दछन् त्यही तत्त्वलाई नै उनीहरू ईश्वर भन्दछन्। मीमांसक, चार्वाक आदि ईश्वरलाई नमान्ने दार्शनिकहरू हुन् तर पनि यहाँ उनीहरूले विभिन्न रूपमा ईश्वरलाई नै मानेका हुन् भनी बताइएको छ।

ईश्वर भनेको कुनै स्वरूपविशेष नभई जगत्को उत्पत्ति गर्ने तत्त्व नै हो। ईश्वरलाई ईश्वर भनेर नमान्नेहरू पनि विशाल जगत्को उत्पत्तिमा कुनै न कुनै कारण रहेको बताइहाल्दछन्। त्यसैले जुन-जुन रूपमा उनीहरूले जगत्को कारण तत्त्वलाई बताएका छन् त्यही रूपमा उनीहरूले ईश्वरतत्त्वलाई मानेका छन् भन्ने यस श्लोकको तात्पर्य हो।

**अव्यक्तस्याप्रमेयस्य नानाशक्त्युदयस्य च।**
**न वै चिकीर्षितं तात को वेदाथ स्वसम्भवम्॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तात** = हे प्रिय राजा | **नानाशक्त्युदयस्य च** = विभिन्न शक्तिको पनि कारण भएका परमात्माको | **न वै वेद** = जान्नै सक्दैन |
| **अव्यक्तस्य** = इन्द्रिय आदिका विषय नभएका | **चिकीर्षितं** = गर्न खोजेको काम | **अथ** = त्यसैले |
| **अप्रमेयस्य** = कुनै पनि प्रमाणको विषय नभएका | **कः** = कसैले पनि | **स्वसम्भवम्** = आफ्नो मूलकारण परमात्मालाई कसले जान्न सक्ला |

**वाक्यार्थ–** हे प्रिय राजा ! इन्द्रिय आदिका विषय नभएका, कुनै पनि प्रमाणको विषय नभएका, विभिन्न शक्तिको पनि कारण भएका परमात्माले गर्न खोजेको काम कसैले पनि जान्नै सक्दैन। त्यसमा पनि आफ्नो समेत मूलकारण परमात्मालाई त कसले जान्न सक्ला ?

**न चैते पुत्रक भ्रातुर्हन्तारो धनदानुगाः।**

**विसर्गादानयोस्तात पुंसो दैवं हि कारणम्॥ २४ ॥**

**पदार्थ–**

**पुत्रक** = हे पुत्र
**एते** = यी
**धनदानुगाः** = कुबेरका अनुचरहरू
**भ्रातुः** = तिम्रा भाइ उत्तमको
**हन्तारः** = हत्यारा
**न** = होइनन्
**तात** = हे बाबु
**पुंसः** = मानिसको
**विसर्गादानयोः** = मृत्यु र जन्मको
**च** = पनि
**कारणम्** = कारण
**हि** = निश्चय नै
**दैवं** = परमेश्वर हुनुहुन्छ

**वाक्यार्थ–** हे पुत्र ! यी कुबेरका अनुचरहरू तिम्रा भाइ उत्तमको हत्यारा होइनन्। हे बाबु ! मानिसको मृत्यु र जन्मको वास्तविक कारण त परमेश्वर नै हुनुहुन्छ।

**स एव विश्वं सृजति स एवावति हन्ति च।**

**अथापि ह्यनहङ्कारान्नाज्यते गुणकर्मभिः॥ २५ ॥**

**पदार्थ–**

**सः** = उहाँ भगवान्
**एव** = नै
**विश्वं** = संसारलाई
**सृजति** = उत्पन्न गर्नुहुन्छ
**सः** = उहाँले
**एव हि** = नै
**अवति** = रक्षा गर्नुहुन्छ र
**हन्ति च** = संहार पनि गर्नुहुन्छ
**अथ अपि** = तर पनि
**अनहङ्कारात्** = अहङ्कारशून्य भएको हुनाले भगवान्
**गुणकर्मभिः** = गुण र कर्मबाट
**न अज्यते** = लिप्त हुनुहुन्न

**वाक्यार्थ–** भगवान् नै संसारलाई उत्पन्न गर्नुहुन्छ, उहाँ नै रक्षा गर्नुहुन्छ र संहार पनि गर्नुहुन्छ। तर पनि उहाँ अहङ्कारशून्य भएको हुनाले गुण र कर्मबाट लिप्त हुनुहुन्न।

**विवरण–** सबैथरी सत्त्व आदि गुण र कर्महरू खास गरी प्रकृतिबाट नै हुनेवाला हुन्। आत्मा यसबाट असङ्ग नै छ। तर अज्ञानी जीवात्मा अहंबुद्धि भएको कारणले शरीरद्वारा गरिएका कर्महरूलाई पनि मैले नै गरेको हुँ भनी ठान्दछ। बन्धनको कारण कर्म नभई अहङ्कार हो। त्यसैले यस श्लोकमा भगवान्लाई म कर्ता-भोक्ता हुँ भन्ने अभिमान नभएकाले उहाँ प्रकृतिका गुण कर्महरूद्वारा लिप्त हुनुहुन्न भनिएको हो।

**एष भूतानि भूतात्मा भूतेशो भूतभावनः।**

**स्वशक्त्या मायया युक्तः सृजत्यत्ति च पाति च॥ २६ ॥**

**पदार्थ–**

**एषः** = यी भगवान्
**भूतेशः** = सर्वनियन्ता
**भूतभावनः** = सर्वपालक र

**भूतात्मा** = सबैका अन्तरात्मा
**स्वशक्त्या** = आफ्नो शक्ति
**मायया** = मायाद्वारा
**युक्तः** = युक्त भएर
**भूतानि** = चराचर जगत्
**सृजति** = सृष्टि गर्नुहुन्छ
**च** = अनि
**पाति** = रक्षा गर्नुहुन्छ
**अत्ति च** = संहार पनि गर्नुहुन्छ

**वाक्यार्थ–** यी भगवान् सर्वनियन्ता, सर्वपालक र सबैका अन्तरात्मा परमात्मा नै आफ्नो माया शक्तिद्वारा युक्त भएर चराचर जगत्को सृष्टि, रक्षा र संहार पनि गर्नुहुन्छ।

**तमेव मृत्युममृतं तात दैवं**
**सर्वात्मनोपेहि जगत्परायणम्।**
**यस्मै बलिं विश्वसृजो हरन्ति**
**गावो यथा वै नसि दामयन्त्रिताः॥ २७॥**

पदार्थ–

**तात** = हे बाबु
**यथा** = जसरी
**नसि** = नाकमा
**दामयन्त्रिताः** = डोरीले बाँधिएका
**गावः** = गोरूहरू (मालिकको भारी बोक्दछन् त्यसै गरी)
**वै** = निश्चय नै
**विश्वसृजः** = विश्वको सृष्टि गर्ने ब्रह्मा आदि देवताहरू पनि
**यस्मै** = जुन भगवान्लाई
**बलिं हरन्ति** = उपहार चढाउँछन्
**मृत्युम्** = दुष्टहरूका मृत्युरूप
**अमृतं** = भक्तहरूका लागि मोक्षरूप
**जगत्परायणम्** = संसारका आश्रय
**तम् एव** = तिनै
**दैवं** = परमेश्वरको
**सर्वात्मना** = पूर्ण समर्पित भएर
**उपेहि** = शरणमा जाऊ

**वाक्यार्थ–** हे बाबु ! जसरी नाकमा डोरीले बाँधिएका गोरुहरू मालिकको भारी बोक्दछन् त्यसै गरी सृष्टिकर्ता ब्रह्मा आदि देवताहरू पनि उनै भगवान्लाई उपहार चढाउँछन् अथवा उहाँकै निर्देशनअनुसार काम गर्दछन्। त्यसकारण हे ध्रुव ! दुष्टहरूका लागि मृत्युरूप र भक्तहरूका लागि मोक्षरूप, संसारका आश्रय हुनुभएका उनै भगवान्को शरणमा पूर्ण समर्पित भएर जाऊ।

**यः पञ्चवर्षो जननीं त्वं विहाय**
**मातुः सपत्न्या वचसा भिन्नमर्मा।**
**वनं गतस्तपसा प्रत्यगक्ष-**
**माराध्य लेभे मूर्ध्नि पदं त्रिलोक्याः॥ २८॥**

पदार्थ–

**यः** = जो
**पञ्चवर्षः** = पाँच वर्षका
**त्वं** = तिमी

**सपत्न्याः** = सौतेनी
**मातुः** = आमाको
**वचसा** = वाणीद्वारा
**भिन्नमर्मा** = हृदय विदीर्ण भएर
**जननीं** = आमालाई
**विहाय** = छोडेर
**वनं** = वन
**गतः** = गयौ (अनि)
**प्रत्यगक्षम्** = आत्मदृष्टिद्वारा देखिनुहुने भगवान्लाई
**तपसा** = तपस्याद्वारा
**आराध्य** = आराधना गरेर
**त्रिलोक्याः** = तीनै लोकको
**मूर्ध्नि** = उच्चभागमा
**पदं** = स्थान
**लेभे** = प्राप्त गर्‍यौ

**वाक्यार्थ–** तिमी पाँचै वर्षको उमेरमा सौतेनी आमाको वाणीद्वारा हृदय विदीर्ण भएर आमालाई छोडेर वन गयौ, अनि आत्मदृष्टिद्वारा मात्र देखिनुहुने भगवान्लाई तिमीले तपस्याद्वारा आराधना गरेर खुसी गरायौ र तीनै लोकको उच्चभागमा स्थान प्राप्त गर्‍यौ।

**तमेनमङ्गात्मनि मुक्तविग्रहे**
**व्यपाश्रितं निर्गुणमेकमक्षरम्।**
**आत्मानमन्विच्छ विमुक्तमात्मदृग्**
**यस्मिन्निदं भेदमसत् प्रतीयते॥ २९॥**

पदार्थ–
**अङ्ग** = हे प्रिय ध्रुव
**आत्मदृग्** = आत्मदृष्टि भएका तिमी
**मुक्तविग्रहे** = नित्यमुक्त
**आत्मनि** = आफैँमा
**व्यपाश्रितं** = बस्नुहुने
**निर्गुणम्** = गुणशून्य
**एकम्** = अद्वितीय
**अक्षरम्** = अविनाशी
**विमुक्तम्** = बन्धनरहित
**तम् एनम्** = उनै यी
**आत्मानम्** = परमात्मालाई
**अन्विच्छ** = खोज
**यस्मिन्** = जुन परमात्मामा
**इदं** = यो
**भेदम्** = सर्वभेदमय (प्रपञ्च)
**असत् प्रतीयते** = असत् रूपमा प्रतिभासित छ

**वाक्यार्थ–** हे प्रिय ध्रुव! आत्मदृष्टि भएका तिमी नित्य मुक्त, आफैँमा बस्नुहुने, गुणशून्य, अद्वितीय, अविनाशी, बन्धनरहित परमात्मालाई खोज जुन परमात्मामा यो सर्वभेदमय प्रपञ्च असत् रूपमा प्रतिभासित छ।

**त्वं प्रत्यगात्मनि तदा भगवत्यनन्त**
**आनन्दमात्र उपपन्नसमस्तशक्तौ।**
**भक्तिं विधाय परमां शनकैरविद्या-**
**ग्रन्थिं विभेत्स्यसि ममाहमिति प्ररूढम्॥ ३०॥**

**पदार्थ–**

**तदा** = त्यस वेला (यसो गरेपछि)
**प्रत्यगात्मनि** = आफ्नै स्वरूपभूत
**अनन्ते** = अनन्त
**आनन्दमात्रे** = आनन्दमात्र रूप भएका
**उपपन्नसमस्तशक्तौ** = सम्पूर्ण शक्तिहरू सिद्ध भएका
**भगवति** = भगवान् नारायणमा
**परमां** = अत्यन्त दृढ
**भक्तिं** = भक्ति
**विधाय** = गरेर
**अहम्** = म र
**मम** = मेरो
**इति** = यस प्रकारको
**प्ररूढम्** = बलियो भएको
**अविद्याग्रन्थिं** = अविद्याजन्य बन्धनलाई
**त्वं** = तिमीले
**शनकैः** = बिस्तारै
**विभेत्स्यसि** = नष्ट गर्नेछौ

**वाक्यार्थ–** यसो गरेपछि आफ्नै स्वरूपभूत आत्मामा अनन्त आनन्द रूप भएका सम्पूर्ण शक्तिहरू सिद्ध भएका भगवान् नारायणमा तिम्रो अत्यन्त दृढ भक्ति हुनेछ र म र मेरो भन्ने बलियो भएको अविद्याजन्य बन्धनलाई तिमी बिस्तारै नष्ट गर्नेछौ।

**संयच्छ रोषं भद्रं ते प्रतीपं श्रेयसां परम्।**
**श्रुतेन भूयसा राजन्नगदेन यथामयम्॥ ३१॥**

**पदार्थ–**

**राजन्** = हे राजा ध्रुव
**यथा** = जसरी
**अगदेन** = औषधीले
**आमयम्** = रोग शान्त हुन्छ (त्यसै गरी)
**भूयसा** = बारम्बार
**श्रुतेन** = सुनेको उपदेशद्वारा
**श्रेयसां** = कल्याणको
**परम्** = परम
**प्रतीपं** = शत्रु
**रोषं** = क्रोधलाई
**संयच्छ** = शान्त गराऊ
**ते** = तिम्रो
**भद्रं** = कल्याण होस्

**वाक्यार्थ–** हे राजा ध्रुव ! जसरी औषधीले रोग शान्त हुन्छ त्यसै गरी बारम्बार सुनेको उपदेशद्वारा कल्याणको परम शत्रु क्रोधलाई शान्त गराऊ। तिम्रो कल्याण होस् !

**येनोपसृष्टात् पुरुषाल्लोक उद्विजते भृशम्।**
**न बुधस्तद्वशं गच्छेदिच्छन्नभयमात्मनः॥ ३२॥**

**पदार्थ–**

**येन** = जुन क्रोधले
**उपसृष्टात्** = वशीभूत भएको
**पुरुषात्** = मानिसबाट
**लोकः** = मानिसहरू
**भृशम्** = अत्यन्त
**उद्विजते** = भयाकुल बन्दछन्, त्यसैले
**आत्मनः** = आफ्नो
**अभयम्** = अभय
**इच्छन्** = चाहने
**बुधः** = ज्ञानी मानिस
**तद्वशं** = त्यस्तो क्रोधको वशमा
**न गच्छेत्** = नजाओस्

**वाक्यार्थ–** क्रोधले वशीभूत भएको मानिसबाट सबै मानिसहरू अत्यन्त भयाकुल बन्दछन्। त्यसैले आफ्नो अभय चाहने ज्ञानी मानिस त्यस्तो क्रोधको वशमा नजाओस्।

**हेलनं गिरिशभ्रातुर्धनदस्य त्वया कृतम्।**
**यज्जघ्निवान् पुण्यजनान् भ्रातृघ्नानित्यमर्षितः॥ ३३॥**

**पदार्थ–**

**त्वया** = तिमीद्वारा
**गिरिशभ्रातुः** = शङ्करका भाइ
**धनदस्य** = कुबेरको
**हेलनं** = अपमान
**कृतम्** = गरियो
**यत्** = किनभने
**अमर्षितः** = सहन गर्न नसकेर
**भ्रातृघ्नान्** = भाइ उत्तमको हत्यारा
**इति** = यस्तो मानेर
**पुण्यजनान्** = यक्षहरूलाई
**जघ्निवान्** = मार्‍यौ

**वाक्यार्थ–** तिमीले शङ्करका भाइ कुबेरको अपमान गर्‍यौ। किनभने भाइ उत्तमको हत्या भएको सहन नसकेर भाइको हत्यारा मानेर तिमीले यक्षहरूलाई मार्‍यौ।

**तं प्रसादय वत्साशु सन्नत्या प्रश्रयोक्तिभिः।**
**न यावन्महतां तेजः कुलं नोऽभिभविष्यति॥ ३४॥**

**पदार्थ–**

**वत्स** = हे बाबु
**यावत्** = जबसम्म
**महतां** = महापुरुषको
**तेजः** = क्रोधले
**नः** = हाम्रो
**कुलं** = वंशलाई
**न अभिभविष्यति** = परास्त गर्नेछैन, त्योभन्दा अगाडि नै तिमीले
**सन्नत्या** = नमस्कारले
**प्रश्रयोक्तिभिः** = नम्रताका साथ स्तुतिवचनले
**तं** = ती कुबेरलाई
**आशु** = छिट्टै
**प्रसादय** = प्रसन्न गराऊ

**वाक्यार्थ–** हे बाबु ! महापुरुषको क्रोधले हाम्रो वंशलाई आक्रान्त गर्नुभन्दा अगाडि नै तिमीले नमस्कार र नम्रताका साथ स्तुतिवचनले ती कुबेरलाई छिट्टै प्रसन्न गराऊ।

**एवं स्वायम्भुवः पौत्रमनुशास्य मनुर्ध्रुवम्।**
**तेनाभिवन्दितः साकमृषिभिः स्वपुरं ययौ॥ ३५॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**पौत्रम्** = आफ्ना नाति
**ध्रुवम्** = ध्रुवलाई
**अनुशास्य** = उपदेश दिएर
**तेन** = ती ध्रुवद्वारा
**अभिवन्दितः** = नमस्कार गरिएका
**स्वायम्भुवः मनुः** = स्वायम्भुव मनु
**ऋषिभिः साकम्** = ऋषिहरूका साथमा
**स्वपुरं** = आफ्नो लोकमा

**ययौ** = जानुभयो

**वाक्यार्थ–** यसप्रकार स्वायम्भुव मनुले आफ्ना नाति ध्रुवलाई उपदेश दिनुभयो। त्यसपछि ध्रुवद्वारा नमस्कार गरिएपछि ऋषिहरूका साथमा उहाँ आफ्नो लोकमा जानुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे एकादशोऽध्यायः ॥ ११ ॥**

# अथ द्वादशोऽध्यायः

## ध्रुवलाई कुबेरको वरदान एवं विष्णुलोकको प्राप्ति

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**ध्रुवं निवृत्तं प्रतिबुद्ध्य वैशसा-**
**दपेतमन्युं भगवान् धनेश्वरः ।**
**तत्रागतश्चारणयक्षकिन्नरैः**
**संस्तूयमानोऽभ्यवदत् कृताञ्जलिम् ॥ १ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वैशसात्** = (यक्षहरूको) हिंसाबाट | **प्रतिबुद्ध्य** = जानेर | **आगतः** = आएका |
| **निवृत्तं** = हटेका | **चारणयक्षकिन्नरैः** = यक्ष, चारण र किन्नरहरूद्वारा | **भगवान्** = ऐश्वर्यशाली |
| **अपेतमन्युं** = (मनुको उपदेशपछि) क्रोध शान्त भएका (ध्रुवलाई) | **संस्तूयमानः** = स्तुति गरिएका | **धनेश्वरः** = कुबेरले |
| | **तत्र** = त्यहाँ (ध्रुव भएको ठाउँमा) | **कृताञ्जलिम्** = हात जोडिरहेका |
| | | **ध्रुवं** = ध्रुवलाई |
| | | **अभ्यवदत्** = भन्न लागे |

**वाक्यार्थ–** ध्रुव यक्षहरूको हिंसाबाट निवृत्त भएका र मनुको उपदेशपछि उनको क्रोध शान्त भएको थाहा पाएर यक्ष, चारण र किन्नरहरूद्वारा स्तुति गरिएका ऐश्वर्यशाली कुबेर ध्रुव भएको ठाउँमा आएर आफूलाई हात जोडेर नमस्कार गरिरहेका ध्रुवलाई भन्न लागे।

**धनद उवाच** (कुबेरले भने)

**भो भोः क्षत्रियदायाद परितुष्टोऽस्मि तेऽनघ ।**
**यस्त्वं पितामहादेशाद् वैरं दुस्त्यजमत्यजः ॥ २ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भोः क्षत्रियदायाद** = हे क्षत्रियकुमार | **परितुष्टः** = प्रसन्न | **पितामहादेशात्** = पितामह मनुको आदेशबाट |
| **भोः अनघ** = हे निष्पाप ध्रुव | **अस्मि** = भएको छु | **दुस्त्यजम्** = त्याग्न कठिन हुने |
| **ते** = (म) तिमीबाट | **यः** = जुन | **वैरं** = शत्रुतालाई |
| | **त्वं** = तिमीले | |

**अत्यजः** = त्याग गर्‍यौ

**वाक्यार्थ–** हे क्षत्रियकुमार ! हे निष्पाप ध्रुव ! म तिमीबाट प्रसन्न भएको छु किनभने तिमीले पितामह मनुको आदेशबाट त्याग्न कठिन हुने शत्रुता त्याग गर्‍यौ।

**न भवानवधीद् यक्षान् न यक्षा भ्रातरं तव।**
**काल एव हि भूतानां प्रभुरप्ययभावयोः ॥ ३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भवान्** = तिमीले | **भ्रातरं** = भाइलाई | **काल** = काल |
| **यक्षान्** = यक्षहरूलाई | **न** = मारेका होइनन् (किनभने) | **एव** = नै |
| **न अवधीत्** = मारेनौ | **भूतानां** = प्राणीहरूको | **हि** = निश्चय नै |
| **यक्षाः** = यक्षहरूले | **अप्ययभावयोः** = मृत्यु र जन्मको लागि | **प्रभुः** = समर्थ छ |
| **तव** = तिम्रो | | |

**वाक्यार्थ–** न तिमीले यक्षहरूलाई मार्‍यौ न त यक्षहरूले तिम्रो भाइलाई मारे। किनभने प्राणीहरूको मृत्यु र जन्मको लागि काल नै समर्थ छ। (त्यसैले यो सबै काम कालले नै गरेको हो।)

**अहं त्वमित्यपार्था धीरज्ञानात् पुरुषस्य हि।**
**स्वाप्नीवाभात्यतद्ध्यानाद् यया बन्धविपर्ययौ ॥ ४ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पुरुषस्य** = अज्ञानी मानिसको | वस्तुझैं | **हि** = नै |
| **अज्ञानात्** = अज्ञानका कारण | **अहं** = म | **आभाति** = प्रतीत हुन्छ |
| **अतद्ध्यानात्** = आत्मादेखि भिन्न वस्तुको ध्यान (विचार) गर्नाले | **त्वम्** = तिमी | **यया** = जुन मिथ्याबुद्धिद्वारा |
| **स्वाप्नी इव** = स्वप्नमा देखिएको | **इति** = यसप्रकारको | **बन्धविपर्ययौ** = बन्धन र दुःखरूप विपरीत गति प्राप्त हुन्छ |
| | **अपार्था** = मिथ्या | |
| | **धीः** = बुद्धि | |

**वाक्यार्थ–** अज्ञानी मानिसको अज्ञानका कारण आत्मादेखि भिन्न वस्तुको ध्यान गर्नाले स्वप्नमा देखिएको वस्तुझैं म, तिमी यसप्रकारको मिथ्या बुद्धि प्रतीत हुन्छ। यही मिथ्याबुद्धिद्वारा बन्धन र दुःखरूप विपरीत गति प्राप्त हुन्छ।

**विवरण–** म, तिमी, त्यो आदि भिन्न भावना गर्ने बुद्धि मिथ्याबुद्धि हो। जब एउटै परमतत्त्व यो, त्यो, तिमी र म सबैको रूपमा देखिएको छ भने त्यसमा भिन्दाभिन्दै भाव गर्नु अज्ञान मात्र हो। जब मनुष्य सबैमा व्यापक भएर रहेको एउटै आत्मालाई चिन्दैन र आफूलाई जगत्भरि नै रहेको

अनुभव गर्दैन तब ऊ आफूलाई सीमित र परिच्छिन्न शरीरमा मात्र रहेको अनुभव गर्दछ। अज्ञानको कारणले शरीरमा उत्पन्न हुने अहं अर्थात् म भन्ने बुद्धि नै समस्त भेदव्यवहारको एक मात्र कारण हो अनि मेरो र तेरो भन्ने भेदबुद्धि नै आसक्तिको कारणले हुने जन्म–मृत्युरूप बन्धनको मूल हो।

**तद् गच्छ ध्रुव भद्रं ते भगवन्तमधोक्षजम्।**
**सर्वभूतात्मभावेन सर्वभूतात्मविग्रहम्॥ ५॥**
**भजस्व भजनीयाङ्घ्रिमभवाय भवच्छिदम्।**
**युक्तं विरहितं शक्त्या गुणमय्यात्ममायया॥ ६॥**

**पदार्थ–**

**ध्रुव** = हे ध्रुव
**तत्** = त्यसकारण
**गच्छ** = जाऊ र
**सर्वभूतात्मविग्रहम्** = सबै प्राणीको आत्मा स्वरूप भएका
**भजनीयाङ्घ्रिम्** = सेवा गर्न योग्य चरण भएका
**भवच्छिदम्** = संसारनिवर्तक
**गुणमय्या** = त्रिगुणात्मिका
**आत्ममायया** = आफ्नो माया
**शक्त्या** = शक्तिले
**युक्तं** = युक्त हुनुभएका र
**विरहितं** = वस्तुतः गुणातीत
**भगवन्तम्** = भगवान्
**अधोक्षजम्** = विष्णुलाई
**अभवाय** = संसारनिवृत्तिका लागि
**सर्वभूतात्मभावेन** = सम्पूर्ण प्राणीहरूमा आत्मरूपले
**भजस्व** = भजन गर (त्यसैबाट)
**ते** = तिम्रो
**भद्रं** = कल्याण हुनेछ

**वाक्यार्थ–** त्यसकारण हे ध्रुव ! जाऊ र सबै प्राणीको आत्मा स्वरूप भएका, सेवा गर्न योग्य चरण भएका, संसारनिवर्तक, त्रिगुणात्मिका आफ्नो माया शक्तिले युक्त भएर पनि वस्तुतः गुणातीत भएका भगवान् विष्णुलाई संसारनिवृत्तिका लागि सम्पूर्ण प्राणीहरूमा आत्मरूपले भजन गर। त्यसैबाट तिम्रो कल्याण हुनेछ।

**वृणीहि कामं नृप यन्मनोगतं**
**मत्तस्त्वमौत्तानपदेऽविशङ्कितः।**
**वरं वरार्होऽम्बुजनाभपादयो-**
**रनन्तरं त्वां वयमङ्ग शुश्रुम॥ ७॥**

**पदार्थ–**

**औत्तानपदे** = हे उत्तानपादका पुत्र
**नृप** = हे राजा ध्रुव
**मत्तः** = मबाट
**अविशङ्कितः** = निःशङ्क भई
**यन्मनोगतं** = आफ्नो मनभित्र

| | | |
|---|---|---|
| रहेको | **त्वां** = तिमीलाई | **शुश्रुमः** = सुनेका छौँ (त्यसैले) |
| **कामं** = इच्छा अनुसारको | **अम्बुजनाभपादयोः** = पद्मनाभ भगवान् विष्णुको चरणको | **त्वम्** = तिमी |
| **वरं** = वर | **अनन्तरं** = निकटवर्ती हौ भन्ने | **वरार्हः** = वर पाउन योग्य छौ |
| **वृणीहि** = माग | **वयम्** = हामीले | |
| **अङ्ग** = हे ध्रुव | | |

**वाक्यार्थ–** हे उत्तानपादका पुत्र ! हे राजा ध्रुव ! मबाट निशङ्क भई आफूलाई मन भित्र रहेको इच्छाअनुसारको वर माग। हे ध्रुव ! तिमी पद्मनाभ भगवान् विष्णुको चरणको निकटवर्ती हौ भन्ने हामीले सुनेका छौँ, त्यसैले तिमी वर पाउन योग्य छौ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**स राजराजेन वराय चोदितो**
**ध्रुवो महाभागवतो महामतिः।**
**हरौ स वव्रेऽचलितां स्मृतिं यया**
**तरत्ययत्नेन दुरत्ययं तमः॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राजराजेन** = यक्षराज कुबेरद्वारा | **सः** = ती | **यया** = जुन स्मृतिद्वारा (मानिस) |
| **वराय** = वर माग्नका लागि | **ध्रुवः** = ध्रुवले | **दुरत्ययं** = पार गर्न कठिन |
| **चोदितः** = प्रेरित गरिएका | **हरौ** = भगवान् हरिमा | **तमः** = अज्ञानलाई पनि |
| **महाभागवतः** = भगवान्का परमभक्त | **अचलितां** = विचलित नहुने | **अयत्नेन** = सजिलै |
| **महामतिः** = महाज्ञानी | **स्मृतिं** = स्मृतिरूप | **तरति** = तर्दछ |
| | **वव्रे** = वर मागे | |

**वाक्यार्थ–** यक्षराज कुबेरद्वारा वर माग्नका लागि प्रेरित गरिएका भगवान्का परमभक्त महाज्ञानी ती ध्रुवले भगवान् हरिलाई सधैँ सम्झन सकूँ भन्ने वर मागे। भगवान्लाई सम्झनाले मात्र पनि मानिस पार गर्न कठिन अज्ञान पनि सजिलै तर्दछ।

**तस्य प्रीतेन मनसा तां दत्त्वैडविडस्ततः।**
**पश्यतोऽन्तर्दधे सोऽपि स्वपुरं प्रत्यपद्यत॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ततः** = त्यसपछि | कुबेर | **मनसा** = मनले |
| **ऐडविडः** = इडविडाका छोरा | **प्रीतेन** = खुसी | **तस्य** = ती ध्रुवले मागेको |

**तां** = त्यो अविचलस्मृतिरूप वर
**दत्त्वा** = दिएर
**पश्यतः** = ध्रुवले हेर्दाहेर्दै
**अन्तर्दधे** = अन्तर्धान भए
**सः** = ती ध्रुव
**अपि** = पनि
**स्वपुरं** = आफ्नो नगर
**प्रत्यपद्यत** = फर्किए

**वाक्यार्थ–** त्यसपछि इडविडाका छोरा कुबेर खुसी मनले ती ध्रुवलाई भगवान्को अविचलस्मृतिरूप वर दिएर ध्रुवले हेर्दाहेर्दै अन्तर्धान भए। ध्रुव पनि आफ्नो नगर फर्किए।

**अथायजत यज्ञेशं क्रतुभिर्भूरिदक्षिणैः।**
**द्रव्यक्रियादेवतानां कर्म कर्मफलप्रदम्॥ १०॥**

पदार्थ–

**अथ** = त्यसपछि (घर आएर)
**भूरिदक्षिणैः** = प्रशस्त दक्षिणाद्वारा सम्पन्न गरिने
**क्रतुभिः** = यज्ञहरूद्वारा
**द्रव्यक्रियादेवतानां** = द्रव्य, क्रिया र देवतासम्बन्धी
**कर्म** = यज्ञ आदि कर्म र
**कर्मफलप्रदम्** = ती कर्मको फलदाता
**यज्ञेशं** = यज्ञपति भगवान्लाई
**अयजत** = पूजा गरे

**वाक्यार्थ–** त्यसपछि घर आएर उनले प्रशस्त दक्षिणाद्वारा सम्पन्न गरिने यज्ञद्वारा यज्ञपति भगवान्को पूजा गरे। भगवान् नै द्रव्य, क्रिया र देवतासम्बन्धी कर्म र ती कर्मको फलदाता हुनुहुन्छ।

**सर्वात्मन्यच्युतेऽसर्वे तीव्रौघां भक्तिमुद्वहन्।**
**ददर्शात्मनि भूतेषु तमेवावस्थितं विभुम्॥ ११॥**

पदार्थ–

**सर्वात्मनि** = सबैको आत्मास्वरूप
**असर्वे** = सबै उपाधिशून्य
**अच्युते** = अच्युत भगवान्मा
**तीव्रौघां** = अखण्डित एवं तीव्र प्रवाह भएको
**भक्तिम्** = भक्ति
**उद्वहन्** = लगाएर
**आत्मनि** = आफूमा र
**भूतेषु** = सम्पूर्ण प्राणीहरूमा पनि
**तम् एव** = उनै
**विभुम्** = सर्वव्यापक भगवान्
**अवस्थितं** = बस्नुभएको
**ददर्श** = देखे

**वाक्यार्थ–** सबैको आत्मास्वरूप, सबै उपाधिशून्य अच्युत भगवान्मा अखण्डित एवं तीव्र प्रवाह भएको भक्ति लगाएर ध्रुवले आफू र सम्पूर्ण प्राणीहरूमा सर्वव्यापक भगवान् नै बस्नुभएको देखे।

**तमेवं शीलसम्पन्नं ब्रह्मण्यं दीनवत्सलम्।**
**गोप्तारं धर्मसेतूनां मेनिरे पितरं प्रजाः॥ १२॥**

**पदार्थ–**

**ब्रह्मण्यं** = ब्राह्मणभक्त
**दीनवत्सलम्** = दुःखीमाथि दया गर्ने
**धर्मसेतूनां** = वर्णाश्रमधर्मको मर्यादाका
**गोप्तारं** = रक्षक
**एवं** = यस प्रकारका
**शीलसम्पन्नं** = गुणहरूले सम्पन्न भएका
**तम्** = ती ध्रुवलाई
**प्रजाः** = प्रजाहरूले
**पितरं** = पिताको रूपमा
**मेनिरे** = माने

**वाक्यार्थ–** ब्राह्मणभक्त, दुःखीमाथि दया गर्ने, वर्णाश्रमधर्मको मर्यादाका रक्षक, यस प्रकारका गुणहरूले सम्पन्न भएका ती ध्रुवलाई प्रजाहरूले पिताको रूपमा माने।

**षट्त्रिंशद्वर्षसाहस्रं शशास क्षितिमण्डलम्।**
**भोगैः पुण्यक्षयं कुर्वन्नभोगैरशुभक्षयम्॥ १३॥**

**पदार्थ–**

**भोगैः** = विषयको भोगद्वारा
**पुण्यक्षयं** = पुण्यको क्षय र
**अभोगैः** = विषयभोगको परित्यागद्वारा
**अशुभक्षयम्** = पापको क्षय
**कुर्वन्** = गर्दै (ध्रुवले)
**षट्त्रिंशद्वर्षसाहस्रं** = छत्तीस हजार वर्षसम्म
**क्षितिमण्डलम्** = भूमण्डलमा
**शशास** = शासन गरे

**वाक्यार्थ–** विषयको भोगद्वारा पुण्यको क्षय र विषयभोगको परित्यागद्वारा पापको क्षय गर्दै ध्रुवले छत्तीस हजार वर्षसम्म भूमण्डलमा शासन गरे।

**एवं बहुसवं कालं महात्माविचलेन्द्रियः।**
**त्रिवर्गौपयिकं नीत्वा पुत्रायादान्नृपासनम्॥ १४॥**
**मन्यमान इदं विश्वं मायारचितमात्मनि।**
**अविद्यारचितस्वप्नगन्धर्वनगरोपमम्॥ १५॥**

**पदार्थ–**

**एवं** = यसप्रकार भोग गर्दै
**अविचलेन्द्रियः** = इन्द्रिय विचलित नभएका
**महात्मा** = शुद्ध चित्त भएका ध्रुवले
**त्रिवर्गौपयिकं** = धर्म, अर्थ, कामको सम्पादनमा उपयोगी
**बहुसवं** = धेरै यज्ञहरू गरी
**कालं** = समय
**नीत्वा** = बिताएर
**इदं** = यो
**विश्वं** = विश्वलाई
**आत्मनि** = आफूमा नै
**मायारचितम्** = भगवान्‌को मायाद्वारा रचिएको
**अविद्यारचितस्वप्नगन्धर्वनगरोपमम्** = अविद्यारचित र सपनामा देखिएको गन्धर्वनगर

| | | |
|---|---|---|
| जस्तो | **पुत्राय** = छोरा (उत्कल)लाई | **अदात्** = सुम्पिए |
| **मन्यमानः** = ठान्दै | **नृपासनम्** = राजसिंहासन | |

**वाक्यार्थ–** यसप्रकार इन्द्रियलाई नियन्त्रित गरेका र शुद्ध चित्त भएका ध्रुवले धर्म, अर्थ र कामको सम्पादनमा उपयोगी धैरै यज्ञहरू सम्पन्न गरी समय बिताए। साथै उनले यो विश्वलाई आफूमा नै भगवान्‌को मायाद्वारा रचिएको, अविद्यारचित र सपनामा देखिएको गन्धर्वनगरजस्तो ठान्दै आफ्ना छोरा उत्कललाई राजसिंहासन सुम्पिए।

**आत्मस्त्र्यपत्यसुहृदो बलमृद्धकोश-**
**मन्तःपुरं परिविहारभुवश्च रम्याः।**
**भूमण्डलं जलधिमेखलमाकलय्य**
**कालोपसृष्टमिति स प्रययौ विशालाम्॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **आत्मस्त्र्यपत्यसुहृदः** = देह, स्त्री, पुत्र, मित्र | **जलधिमेखलम्** = समुद्र नै मेखला भएको | **इति** = यस्तो |
| **बलम्** = सेना | **भूमण्डलं** = पृथिवी (आफ्नो राज्य) | **आकलय्य** = विचार गरेर |
| **ऋद्धकोशम्** = समृद्ध कोश | **च** = पनि यी सबै | **सः** = ती ध्रुव |
| **अन्तःपुरं** = महल | **कालोपसृष्टम्** = कालले व्याप्त छन् | **विशालाम्** = बदरिकाश्रम (विशाला) |
| **रम्याः** = सुन्दर | | **प्रययौ** = गए |
| **परिविहारभुवः** = विहारभूमिहरू | | |

**वाक्यार्थ–** देह, स्त्री, पुत्र, मित्र, सेना, समृद्ध कोश, महल, सुन्दर विहारभूमि अनि समुद्रपर्यन्त फैलिएको आफ्नो राज्य यी सबै कालले व्याप्त छन् भन्ने विचार गरेर ती ध्रुव बदरिकाश्रम गए।

**तस्यां विशुद्धकरणः शिववार्विगाह्य**
**बद्ध्वासनं जितमरुन्मनसाहृताक्षः।**
**स्थूले दधार भगवत्प्रतिरूप एतद्**
**ध्यायंस्तदव्यवहितो व्यसृजत् समाधौ॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तस्यां** = त्यो बदरिकाश्रम (विशाला)मा | **शिववाः** = पवित्र जलमा | **विशुद्धकरणः** = शुद्ध अन्तःकरण भएका |
| | **विगाह्य** = प्रवेश गरेर (नुहाएर) | |

**आसनं** = आसन
**बद्ध्वा** = बाँधेर
**जितमरुन्मनसाहृताक्षः** = प्राणवायुलाई जितेका र मनद्वारा इन्द्रियहरूलाई विषयबाट फर्काएका ध्रुवले
**भगवत्प्रतिरूपे स्थूले** = भगवान्को विराट्रूपमा
**एतत्** = त्यस मनलाई
**दधार** = स्थिर गरे, त्यसपछि
**ध्यायन्** = भगवान्को ध्यान गर्दै
**तदव्यवहितः** = ध्याता, ध्येय र ध्यानरूप भेदज्ञानरहित भएका ध्रुवले (आफूलाई)
**समाधौ** = समाधिमा
**व्यसृजत्** = समर्पित गरिदिए

**वाक्यार्थ–** त्यस बदरिकाश्रममा पवित्र जलमा नुहाएर शुद्ध अन्तःकरण भएका, आसन बाँधेर प्राणवायुलाई जितेका र मनद्वारा इन्द्रियहरूलाई विषयबाट फर्काएका ध्रुवले भगवान्को विराट्रूपमा आफ्नो मनलाई स्थिर गरे। त्यसपछि भगवान्को ध्यान गर्दै ध्याता, ध्येय र ध्यानरूप भेदज्ञानरहित भएका ध्रुवले आफूलाई समाधिमा नै समर्पित गरिदिए।

**भक्तिं हरौ भगवति प्रवहन्नजस्र-**
**मानन्दबाष्पकलया मुहुरर्द्यमानः।**
**विक्लिद्यमानहृदयः पुलकाचिताङ्गो**
**नात्मानमस्मरदसाविति मुक्तलिङ्गः॥ १८॥**

**पदार्थ–**

**भगवति** = भगवान्
**हरौ** = श्रीहरिमा
**अजस्रम्** = निरन्तर
**भक्तिं** = प्रेम
**प्रवहन्** = प्रवाहित गर्दै
**आनन्दबाष्पकलया** = आनन्दजन्य अश्रुधारा बगाउँदै
**मुहुः** = बारम्बार
**अर्द्यमानः** = प्रार्थना गरिरहेका
**विक्लिद्यमानहृदयः** = हृदय द्रवीभूत भएका
**पुलकाचिताङ्गः** = शरीरका अङ्गहरू रोमाञ्चित भएका
**मुक्तलिङ्गः** = देहाभिमान छुटेका ध्रुवले
**आत्मानम्** = आफूलाई
**असौ इति** = म यो ध्रुव हुँ भन्ने कुरा नै
**न अस्मरत्** = सम्झिएनन्

**वाक्यार्थ–** भगवान् श्रीहरिमा निरन्तर प्रेम प्रवाहित गर्दै आनन्दजन्य अश्रुधारा बगाउँदै बारम्बार प्रार्थना गरिरहेका, हृदय द्रवीभूत भएका, शरीरका अङ्गहरू रोमाञ्चित भएका, देहाभिमान छुटेका ध्रुवले 'म ध्रुव हुँ' भन्ने कुरा नै सम्झिएनन्।

**विवरण–** प्रगाढ समाधिमा ध्याता, ध्यान र ध्येयको भेदलाई पनि अतिक्रमण गरिन्छ। सामान्य ध्यानावस्थामा यी तीनै वस्तुको स्फुरण हुन्छ अर्थात् म ध्यान गर्नेवाला हुँ र म ध्येय ईश्वरको ध्यान गर्दैछु भन्ने अनुभूति मनमा रहन्छ। समाधिको प्रगाढतासँगै यी तीनै भेद समाप्त हुँदै जान्छन् अनि अन्तिममा एउटै परम सत्तामा यी तीनैको विलय हुन्छ। शुद्ध सत्ताको मात्र स्फुरण भएको यो समयमा मनुष्यले स्थूल र सूक्ष्म शरीरमा भएको आफ्नो अभिमानलाई छोड्दछ। त्यस समयमा

उसलाई स्थूल शरीरको आफ्नो नाम अनि सूक्ष्म शरीरको अस्तित्वको बोधसमेत हुँदैन।

**स ददर्श विमानाग्र्यं नभसोऽवतरद् ध्रुवः।**

**विभ्राजयद् दश दिशो राकापतिमिवोदितम्॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = ती | **इव** = जस्तै | **अवतरत्** = ऊर्दै गरेको |
| **ध्रुवः** = ध्रुवले | **दशदिशः** = दशै दिशालाई | **विमानाग्र्यं** = श्रेष्ठ विमानलाई |
| **उदितम्** = उदाएको | **विभ्राजयत्** = प्रकाशित गर्दै | **ददर्श** = देखे |
| **राकापतिम्** = चन्द्रमाले | **नभसः** = आकाशबाट | |

**वाक्यार्थ–** ती ध्रुवले आकाशबाट ऊर्दै गरेको श्रेष्ठ विमान देखे जुन विमानले उदाएको चन्द्रमाले जस्तै दशै दिशालाई प्रकाशित गरिरहेको थियो।

**तत्रानु देवप्रवरौ चतुर्भुजौ**

**श्यामौ किशोरावरुणाम्बुजेक्षणौ।**

**स्थिताववष्टभ्य गदां सुवाससौ**

**किरीटहाराङ्गदचारुकुण्डलौ॥ २०॥**

**विज्ञाय तावुत्तमगायकिङ्करा-**

**वभ्युत्थितः साध्वसविस्मृतक्रमः।**

**ननाम नामानि गृणन् मधुद्विषः**

**पार्षत्प्रधानाविति संहताञ्जलिः॥ २१॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तत्र अनु** = विमानलाई देखेपछि त्यस विमानमा | **अरुणाम्बुजेक्षणौ** = रातो कमल जस्तो आँखा भएका | **किरीटहाराङ्गदचारुकुण्डलौ** = किरीट, हार, बाजुबन्द र कानमा सुन्दर कुण्डल लगाएका |
| **चतुर्भुजौ** = चारओटा हात भएका | **गदां** = गदा | **देवप्रवरौ** = भगवान्का पार्षद सुनन्द र नन्दलाई देखे |
| **श्यामौ** = श्याम वर्ण भएका | **अवष्टभ्य** = समातेर | **तौ** = ती दुई पार्षद |
| **किशोरौ** = किशोर अवस्था भएका | **स्थितौ** = बसेका | **उत्तमगायकिङ्करौ** = पुण्यकीर्ति |
| | **सुवाससौ** = सुन्दर वस्त्र लगाएका | |

भगवान्को अनुचर भन्ने
**विज्ञाय** = जानेर
**अभ्युत्थितः** = स्वागतका लागि उठे
**मधुद्विषः** = नारायणको
**पार्षत्प्रधानौ** = यी प्रधान पार्षद हुन्
**इति** = यसो भनेर
**साध्वसविस्मृतक्रमः** = हतारिनाले पूजाक्रम बिर्सिएका
**संहताञ्जलिः** = दुई हात जोडेर उभिइरहेका ध्रुवले
**नामानि** = भगवान्का नामहरू
**गृणन्** = उच्चारण गर्दै
**ननाम** = नमस्कार गरे

**वाक्यार्थ–** ध्रुवले देखेको त्यस विमानमा चारओटा हात भएका, श्याम वर्णका, किशोर अवस्थाका, रातो कमलजस्तो आँखा भएका, गदा हातमा लिएर बसेका, सुन्दर वस्त्र लगाएका, किरीट, हार, बाजुबन्द र कानमा सुन्दर कुण्डल लगाएका, भगवान्का पार्षद सुनन्द र नन्दलाई देखे। ती दुई पार्षद पुण्यकीर्ति भगवान्का अनुचर हुन् भन्ने जानेर उनीहरूको स्वागतका लागि ध्रुव उठे। यिनीहरू नारायणका प्रधान पार्षद हुन् भनेर हतारिनाले पूजाक्रम बिर्सिएर दुई हात जोड्दै उभिइरहेका ध्रुवले भगवान्का नामहरू उच्चारण गर्दै उनीहरूलाई नमस्कार गरे।

**तं कृष्णपादाभिनिविष्टचेतसं**
**बद्धाञ्जलिं प्रश्रयनम्रकन्धरम्।**
**सुनन्दनन्दावुपसृत्य सस्मितं**
**प्रत्यूचतुः पुष्करनाभसम्मतौ॥ २२॥**

**पदार्थ–**
**कृष्णपादाभिनिविष्टचेतसं** = भगवान् कृष्णको चरणकमलमा मन लगाएका
**बद्धाञ्जलिं** = हात जोडेर नमस्कार गर्दै
**प्रश्रयनम्रकन्धरम्** = विनयभावले काँध झुकाएका
**तं** = ती ध्रुवको
**उपसृत्य** = अगाडि गएर
**पुष्करनाभसम्मतौ** = पद्मनाभ श्रीहरिका प्रियपार्षद
**सुनन्दनन्दौ** = सुनन्द र नन्दले
**सस्मितं** = मुस्कुराउँदै
**प्रत्यूचतुः** = भन्न लागे

**वाक्यार्थ–** भगवान् कृष्णको चरणकमलमा मन लगाएका, नमस्कार गरेर विनयभावले काँध झुकाएका ती ध्रुवको अगाडि गएर पद्मनाभ श्रीहरिका प्रियपार्षद सुनन्द र नन्दले मुस्कुराउँदै भन्न लागे।

**सुनन्दनन्दावूचतुः** (सुनन्द र नन्दले भने)
**भो भो राजन् सुभद्रं ते वाचं नोऽवहितः शृणु।**
**यः पञ्चवर्षस्तपसा भवान् देवमतीतृपत्॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भो भो राजन्** = हे ध्रुव | **वाचं** = कुरा | **तपसा** = तपस्याद्वारा |
| **ते** = तपाईंको | **शृणु** = सुन्नुहोस् | **देवम्** = भगवान्लाई |
| **सुभद्रं** = कल्याण होस् | **यः** = जो | **अतीतृपत्** = प्रसन्न गराउनुभयो |
| **अवहितः** = सावधान भएर | **पञ्चवर्षः** = पाँच वर्षका | |
| **नः** = हाम्रो | **भवान्** = तपाईंले | |

**वाक्यार्थ–** हे ध्रुव ! तपाईंको कल्याण होस्, सावधान भएर हाम्रो कुरा सुन्नुहोस्। पाँचै वर्षको उमेरमा तपाईंले तपस्याद्वारा भगवान्लाई प्रसन्न गराउनुभयो।

**तस्याखिलजगद्धातुरावां देवस्य शार्ङ्गिणः।**
**पार्षदाविह सम्प्राप्तौ नेतुं त्वां भगवत्पदम्॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तस्य** = ती | **पार्षदौ** = पार्षद | **नेतुं** = लैजानका लागि |
| **अखिलजगद्धातुः** = सम्पूर्ण जगत्का पालक | **आवां** = हामी दुई सुनन्द र नन्द | **इह** = यहाँ |
| **देवस्य** = भगवान् | **त्वां** = तपाईंलाई | **सम्प्राप्तौ** = आएका हौं |
| **शार्ङ्गिणः** = विष्णुका | **भगवत्पदम्** = भगवान्को धाममा | |

**वाक्यार्थ–** ती सम्पूर्ण जगत्का पालक भगवान् विष्णुका पार्षद हामी दुई सुनन्द र नन्द तपाईंलाई भगवान्को धाममा लैजानका लागि यहाँ आएका हौं।

**सुदुर्जयं विष्णुपदं जितं त्वया**
**यत् सूरयोऽप्राप्य विचक्षते परम्।**
**आतिष्ठ तच्चन्द्रदिवाकरादयो**
**ग्रहर्क्षताराः परियन्ति दक्षिणम्॥ २५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सूरयः** = देवताहरू | **चन्द्रदिवाकरादयः** = चन्द्र, सूर्य आदि | **सुदुर्जयं** = प्राप्त गर्न कठिन |
| **यत्** = जुन पद | **ग्रहर्क्षताराः** = ग्रह, नक्षत्र र ताराहरू | **विष्णुपदं** = भगवान् विष्णुको त्यो स्थानलाई |
| **अप्राप्य** = प्राप्त गर्न नसकेर (टाढैबाट) | **दक्षिणम्** = प्रदक्षिणा गर्नलाई | **त्वया** = तपाईंले |
| **परम्** = केवल | **परियन्ति** = घुम्दछन् | **जितं** = जित्नुभयो (प्राप्त गर्नुभयो) |
| **विचक्षते** = हेर्दछन् (जुन पदलाई) | | |

**तत् आतिष्ठ** = तपाईं त्यहाँ विराजमान हुनुहोस्

**वाक्यार्थ–** देवताहरू जुन पदलाई आफूले प्राप्त गर्न नसकेर केवल टाढैबाट हेर्दछन्, चन्द्र, सूर्य आदि ग्रह, नक्षत्र र ताराहरू जुन पदलाई प्रदक्षिणा गर्न घुम्दछन् दुष्प्राप्य भगवान् विष्णुको त्यस्तो स्थानलाई तपाईंले प्राप्त गर्नुभयो। तपाईं त्यहाँ विराजमान हुनुहोस्।

**अनास्थितं ते पितृभिरन्यैरप्यङ्ग कर्हिचित्।**

**आतिष्ठ जगतां वन्द्यं तद् विष्णोः परमं पदम्॥ २६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अङ्ग** = हे ध्रुव | **कर्हिचित्** = कहिल्यै | **तत्** = त्यो |
| **ते** = तपाईंका | **अनास्थितं** = वास नगरिएको | **परमं पदम्** = परमपदमा |
| **पितृभिः** = पूर्वजहरूद्वारा र | **जगतां** = संसारकै | **आतिष्ठ** = तपाईं बस्नुहोस् |
| **अन्यैः** = अन्य तपस्वीहरूद्वारा पनि | **वन्द्यं** = वन्दनीय | |
| | **विष्णोः** = भगवान् विष्णुको | |

**वाक्यार्थ–** हे ध्रुव ! आजसम्म तपाईंका पूर्वजहरू र अन्य तपस्वीहरू पनि त्यस पदमा कहिल्यै बस्न सकेनन्। संसारकै वन्दनीय भगवान् विष्णुको त्यो परमपदमा तपाईं बस्नुहोस्।

**एतद्विमानप्रवरमुत्तमश्लोकमौलिना।**

**उपस्थापितमायुष्मन्नधिरोढुं त्वमर्हसि॥ २७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **आयुष्मन्** = हे आयुष्मान् ध्रुव | **एतद्विमानप्रवरम्** = यो श्रेष्ठ विमान | **त्वम्** = तपाईं |
| **उत्तमश्लोकमौलिना** = उत्तम कीर्ति भएकाहरूमा श्रेष्ठ भगवान्ले | **उपस्थापितम्** = (तपाईंका लागि) पठाउनुभएको हो, त्यसकारण | **अधिरोढुं** = यसमा चढ्न |
| | | **अर्हसि** = योग्य हुनुहुन्छ |

**वाक्यार्थ–** हे आयुष्मान् ध्रुव ! उत्तम कीर्ति भएकाहरूमा श्रेष्ठ भगवान्ले यो श्रेष्ठ विमान तपाईंका लागि पठाउनुभएको हो। त्यसकारण तपाईं यसमा चढ्न योग्य हुनुहुन्छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**निशम्य वैकुण्ठनियोज्यमुख्ययो-**

**र्मधुच्युतं वाचमुरुक्रमप्रियः।**

**कृताभिषेकः कृतनित्यमङ्गलो**

**मुनीन् प्रणम्याशिषमभ्यवादयत् ॥ २८ ॥**

**पदार्थ–**

**वैकुण्ठनियोज्यमुख्ययोः** = भगवान्का अनुचरहरूमा श्रेष्ठ नन्द र सुनन्दको
**मधुच्युतं** = महजस्तो मिठो
**वाचम्** = कुरा
**निशम्य** = सुनेर
**उरुक्रमप्रियः** = भगवान्का प्रिय ध्रुवले
**कृताभिषेकः** = स्नान गरेर
**कृतनित्यमङ्गलः** = नित्यकर्म र माङ्गलिक अलङ्कार आदि धारण गरेर
**मुनीन्** = (बदरिकाश्रममा बस्ने) ऋषिहरूलाई
**प्रणम्य** = प्रणाम गरी, (उहाँहरूलाई)
**आशिषम्** = आशीर्वाद
**अभ्यवादयत्** = बोल्न लगाए (उहाँहरूले आशीर्वाद दिनुभयो)

**वाक्यार्थ–** भगवान्का अनुचरहरूमा श्रेष्ठ नन्द र सुनन्दको मिठो कुरा सुनेर भगवान्का प्रिय ध्रुवले स्नान गरेर, नित्यकर्म र माङ्गलिक अलङ्कार आदि धारण गरेर बदरिकाश्रममा बस्ने ऋषिहरूलाई प्रणाम गरे। ऋषिहरूले उनलाई आशीर्वाद दिनुभयो।

**परीत्याभ्यर्च्य धिष्ण्याग्र्यं पार्षदावभिवन्द्य च।**
**इयेष तदधिष्ठातुं बिभ्रद् रूपं हिरण्मयम् ॥ २९ ॥**

**पदार्थ–**

**धिष्ण्याग्र्यं** = श्रेष्ठ विमानलाई
**अभ्यर्च्य** = पूजा गरेर
**परीत्य** = प्रदक्षिणा गरेर
**पार्षदौ च** = भगवान्का पार्षदहरूलाई पनि
**अभिवन्द्य** = नमस्कार गरेर
**हिरण्मयम्** = सुवर्णसमान ज्योतिर्मय
**रूपं** = आफ्नो रूप
**बिभ्रत्** = धारण गरेर
**तदधिष्ठातुं** = विमानमा चढ्न
**इयेष** = इच्छा गरे

**वाक्यार्थ–** श्रेष्ठ विमानलाई पूजा गरेर त्यसलाई प्रदक्षिणा गरेर भगवान्का पार्षदहरूलाई पनि नमस्कार गरेर सुवर्णसमान ज्योतिर्मय रूप धारण गरी ध्रुव त्यस विमानमा चढ्न लागे।

**तदोत्तानपदः पुत्रो ददर्शान्तकमागतम्।**
**मृत्योर्मूर्ध्नि पदं दत्त्वा आरुरोहाद्भुतं गृहम् ॥ ३० ॥**

**पदार्थ–**

**तदा** = त्यस समयमा
**उत्तानपदः** = उत्तानपादका
**पुत्रः** = छोरा ध्रुवले
**आगतम्** = आइरहेको
**अन्तकम्** = मृत्युलाई
**ददर्श** = देखे (त्यसपछि)
**मृत्योः** = मृत्युको
**मूर्ध्नि** = शिरमा
**पदं दत्त्वा** = गोडाले टेकेर
**अद्भुतं** = अद्भुत
**गृहम्** = विमानमा
**आरुरोह** = चढे

**वाक्यार्थ–** त्यस समयमा उत्तानपादका छोरा ध्रुवले आफूतर्फ आइरहेको मृत्युलाई देखे। त्यसपछि

मृत्युको शिरमा गोडाले टेकेर उनी अद्भुत विमानमा चढे।

**तदा दुन्दुभयो नेदुर्मृदङ्गपणवादयः।**
**गन्धर्वमुख्याः प्रजगुः पेतुः कुसुमवृष्टयः॥ ३१॥**

**पदार्थ–**

**तदा** = त्यस समयमा
**दुन्दुभयः** = दमाहाहरू
**मृदङ्गपणवादयः** = मादल र ढोलहरू पनि
**नेदुः** = बज्न थाले
**गन्धर्वमुख्याः** = श्रेष्ठ गन्धर्वहरूले
**प्रजगुः** = गाउन थाले
**कुसुमवृष्टयः** = (आकाशबाट) पुष्पवृष्टि
**पेतुः** = झर्न थाल्यो

**वाक्यार्थ–** त्यस समयमा दमाहा, मादल र ढोलहरू पनि बज्न थाले, श्रेष्ठ गन्धर्वहरूले गाउन थाले, आकाशबाट पुष्पवृष्टि हुन थाल्यो।

**स च स्वर्लोकमारोक्ष्यन् सुनीतिं जननीं ध्रुवः।**
**अन्वस्मरदगं हित्वा दीनां यास्ये त्रिविष्टपम्॥ ३२॥**

**पदार्थ–**

**स्वर्लोकम्** = भगवान्को धामतिर
**आरोक्ष्यन्** = जान लागेका
**सः** = ती
**ध्रुवः** = ध्रुवले
**च** = चाहिँ
**जननीं** = आफ्नी आमा
**सुनीतिं** = सुनीतिलाई
**अन्वस्मरत्** = सम्झिए
**दीनां** = पुत्रवियोगले दुःखित आमालाई
**हित्वा** = छोडेर
**अगं** = दुर्गम
**त्रिविष्टपम्** = वैकुण्ठ धाम
**यास्ये** = कसरी जान्छु

**वाक्यार्थ–** भगवान्को धामतिर जान लागेका ती ध्रुवले आफ्नी आमा सुनीतिलाई सम्झिए। पुत्रवियोगले दुःखित भएकी आमालाई छोडेर म दुर्गम वैकुण्ठ धाममा कसरी जाऊँ भन्ने उनलाई लाग्यो।

**इति व्यवसितं तस्य व्यवसाय सुरोत्तमौ।**
**दर्शयामासतुर्देवीं पुरो यानेन गच्छतीम्॥ ३३॥**

**पदार्थ–**

**तस्य** = ती ध्रुवको
**इति** = यस्तो
**व्यवसितं** = अभिप्राय
**व्यवसाय** = बुझेर
**सुरोत्तमौ** = भगवान्का दुई पार्षदहरूले
**पुरः** = अगाडि
**यानेन** = विमानबाट
**गच्छतीम्** = जाँदै गरेकी
**देवीं** = सुनीतिलाई
**दर्शयामासतुः** = देखाइदिए

**वाक्यार्थ–** ध्रुवको यस्तो अभिप्राय बुझेर भगवान्का ती दुई पार्षदहरूले आफ्नो अगाडि विमानबाट जाँदै गरेकी सुनीतिलाई देखाइदिए।

**तत्र तत्र प्रशंसद्भिः पथि वैमानिकैः सुरैः।**
**अवकीर्यमाणो ददृशे कुसुमैः क्रमशो ग्रहान्॥ ३४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तत्र तत्र** = तत्तत् | **प्रशंसद्भिः** = ध्रुवको प्रशंसा गर्दै | **क्रमशः** = क्रमैले |
| **पथि** = बाटोमा | **कुसुमैः** = फूलद्वारा | **ग्रहान्** = विभिन्न ग्रहहरूलाई |
| **वैमानिकैः** = विमानमा बसेका | **अवकीर्यमाणः** = ढाकिएका ध्रुवले | **ददृशे** = देखे |
| **सुरैः** = देवताहरूले | | |

**वाक्यार्थ–** बाटोमा विभिन्न ठाउँमा विमानमा बसेका देवताहरूले ध्रुवको प्रशंसा गर्दै उनीमाथि पुष्पवृष्टि गरिरहेका थिए। यस प्रकार फूलद्वारा ढाकिएका ध्रुवले क्रमैले विभिन्न ग्रहहरू देखे।

**त्रिलोकीं देवयानेन सोऽतिव्रज्य मुनीनपि।**
**परस्ताद् यद् ध्रुवगतिर्विष्णोः पदमथाभ्यगात्॥ ३५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अथ** = त्यसपछि | **त्रिलोकीं** = तीनै लोक र | **यद्** = जुन |
| **ध्रुवगतिः** = अविचल पद प्राप्त गरेका | **मुनीन्** = सप्तर्षिहरूलाई | **विष्णोः पदम्** = भगवान् विष्णुको धाम छ (त्यसमा) |
| | **अपि** = पनि | |
| **सः** = ती ध्रुव | **अतिव्रज्य** = अतिक्रमण गरेर | **अभ्यगात्** = पुगे |
| **देवयानेन** = भगवान्को दिव्य विमानमा चढेर | **परस्तात्** = त्यसभन्दा माथि रहेको | |

**वाक्यार्थ–** त्यसपछि अविचल पद प्राप्त गरेका ती ध्रुव भगवान्को दिव्य विमानमा चढेर तीनै लोक र सप्तर्षिहरूलाई पनि अतिक्रमण गरेर त्यसभन्दा माथि रहेको भगवान् विष्णुको धाममा पुगे।

**यद् भ्राजमानं स्वरुचैव सर्वतो**
**लोकास्त्रयो ह्यनु विभ्राजन्त एते।**
**यन्नाव्रजञ्जन्तुषु येऽननुग्रहा**
**व्रजन्ति भद्राणि चरन्ति येऽनिशम्॥ ३६॥**

पदार्थ–
**यत्** = जुन भगवान् विष्णुको पद
**स्वरुचा** = आफ्नो प्रकाशले
**एव** = नै
**सर्वतः** = सबैतिर
**भ्राजमानं** = प्रकाशित छ
**एते** = यी
**त्रयः** = तीनै
**लोकाः** = लोकहरू
**हि** = नै
**अनु विभ्राजन्ते** = जसको प्रकाशद्वारा प्रकाशित हुन्छन्
**ये** = जो
**जन्तुषु** = प्राणीहरूमा
**अननुग्रहाः** = भगवत्कृपा नभएका प्राणीहरू
**यत्** = जुन पदमा
**न अव्रजन्** = कहिल्यै जान सकेनन्
**ये** = जुन प्राणीहरू
**अनिशम्** = निरन्तर
**भद्राणि** = शुभ कर्म
**चरन्ति** = गर्दछन् (तिनीहरू मात्र)
**व्रजन्ति** = त्यस लोकमा जान्छन्

**वाक्यार्थ–** भगवान् विष्णुको त्यो पद आफ्नै प्रकाशले सबैतिर प्रकाशित छ। यी तीनै लोकहरू त्यसैको प्रकाशद्वारा प्रकाशित हुन्छन्। भगवत्कृपा नभएका प्राणीहरू त्यस पदमा कहिल्यै जान सक्दैनन् र जुन प्राणीहरू निरन्तर शुभ कर्म गर्दछन् तिनीहरू मात्र त्यस लोकमा जान्छन्।

**शान्ताः समदृशः शुद्धाः सर्वभूतानुरञ्जनाः।**
**यान्त्यञ्जसाच्युतपदमच्युतप्रियबान्धवाः॥ ३७॥**

पदार्थ–
**शान्ताः** = शान्त
**समदृशः** = समदर्शी
**शुद्धाः** = पवित्र चित्त भएका
**सर्वभूतानुरञ्जनाः** = सम्पूर्ण प्राणीहरूलाई प्रसन्न गराउने
**अच्युतप्रियबान्धवाः** = भगवान्का भक्तहरूलाई परम मित्र ठान्ने भक्तहरूले चाहिँ
**अच्युतपदम्** = भगवान्को पद
**अञ्जसा** = सजिलै
**यान्ति** = प्राप्त गर्दछन्

**वाक्यार्थ–** शान्त, समदर्शी, पवित्र चित्त भएका, सम्पूर्ण प्राणीहरूलाई प्रसन्न गराउने, भगवान्का भक्तहरूलाई आफ्नो परम मित्र ठान्ने भक्तहरूले भगवान्को पद सजिलै प्राप्त गर्दछन्।

**इत्युत्तानपदः पुत्रो ध्रुवः कृष्णपरायणः।**
**अभूत् त्रयाणां लोकानां चूडामणिरिवामलः॥ ३८॥**

पदार्थ–
**इति** = यसप्रकार
**उत्तानपदः** = उत्तानपादका
**पुत्रः** = छोरा
**कृष्णपरायणः** = भगवान् श्रीकृष्णलाई प्राप्त गर्ने परम लक्ष्य लिएका
**ध्रुवः** = ध्रुव
**त्रयाणां** = तीनै
**लोकानां** = लोकका
**अमलः** = स्वच्छ
**चूडामणिः** = शिरोमणि
**इव** = जस्ता
**अभूत्** = भए

**वाक्यार्थ–** यसप्रकार उत्तानपादका छोरा, भगवान् श्रीकृष्णलाई प्राप्त गर्ने परम लक्ष्य लिएका ध्रुव तीनै लोकका स्वच्छ शिरोमणिजस्ता भए।

**गम्भीरवेगोऽनिमिषं ज्योतिषां चक्रमाहितम्।**

**यस्मिन् भ्रमति कौरव्य मेढ्यामिव गवां गणः॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कौरव्य** = हे कुरुनन्दन विदुर | **गम्भीरवेगः** = गम्भीर गति भएका | **यस्मिन्** = ध्रुवको जुन पदमा |
| **मेढ्याम्** = दाइँको मियोमा | **ज्योतिषां** = सूर्य आदि ग्रहहरूको | **आहितम्** = समर्पित भएर |
| **गवां** = गोरुको | **चक्रम्** = चक्र | **अनिमिषं** = निरन्तर |
| **गण** = समूह | | **भ्रमति** = घुम्दछन् |
| **इव** = झैं | | |

**वाक्यार्थ–** हे कुरुनन्दन विदुर! दाइँको मियोमा गोरुको समूह घुमेझैं गम्भीर गति भएका सूर्य आदि ग्रहहरूको चक्र ध्रुवको पदमा समर्पित भएर निरन्तर घुम्दछन्।

**महिमानं विलोक्यास्य नारदो भगवानृषिः।**

**आतोद्यं वितुदञ्श्लोकान् सत्रेऽगायत् प्रचेतसाम्॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अस्य** = यी ध्रुवको | **ऋषिः** = मुनि | **वितुदन्** = बजाउँदै |
| **महिमानं** = महिमा | **प्रचेतसाम्** = ध्रुववंशीय राजाहरूको | **श्लोकान्** = श्लोक (कीर्तिपद्य)हरू |
| **विलोक्य** = देखेर | **सत्रे** = यज्ञशालामा | **अगायत्** = गाउन थाल्नुभयो |
| **भगवान्** = भगवान् | **आतोद्यं** = वीणा | |
| **नारदः** = नारद | | |

**वाक्यार्थ–** ध्रुवको महिमा देखेर भगवान् नारदमुनि ध्रुववंशीय राजाहरूको यज्ञशालामा वीणा बजाउँदै यी कीर्तिपद्यहरू गाउन थाल्नुभयो।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**नूनं सुनीतेः पतिदेवताया-**

**स्तपःप्रभावस्य सुतस्य तां गतिम्।**

**दृष्ट्वाभ्युपायानपि वेदवादिनो**

**नैवाधिगन्तुं प्रभवन्ति किं नृपाः॥ ४१॥**

**पदार्थ–**

**नूनं** = निश्चय नै
**पतिदेवतायाः** = पतिलाई नै देवता मान्ने भएकी
**सुनीतेः** = सुनीतिका
**सुतस्य** = छोरा ध्रुवको
**तपःप्रभावस्य** = तपस्याको प्रभावले (प्राप्त भएको)
**तां** = त्यो
**गतिम्** = गति
**दृष्ट्वा** = देखेर
**अभ्युपायान्** = त्यो गति प्राप्त गर्न चाहने
**वेदवादिनः** = कर्मकाण्डी ऋषिहरूले
**अपि** = पनि
**अधिगन्तुं** = त्यो गति प्राप्त गर्न
**न एव प्रभवन्ति** = निश्चय नै सक्दैनन्
**नृपाः** = राजाहरूले त
**किं** = प्राप्त गर्न के सक्दथे

**वाक्यार्थ–** पतिलाई नै देवता मान्ने भएकी सुनीतिका छोरा ध्रुवले तपस्याको प्रभावले प्राप्त गरेको त्यो गति देखेर सो प्राप्त गर्न चाहने कर्मकाण्डी ऋषिहरूले त प्राप्त गर्न सक्दैनन् भने राजाहरूले त प्राप्त गर्न के सक्दथे ?

**यः पञ्चवर्षो गुरुदारवाक्शरै-**
**र्भिन्नेन यातो हृदयेन दूयता।**
**वनं मदादेशकरोऽजितं प्रभुं**
**जिगाय तद्भक्तगुणैः पराजितम्॥ ४२॥**

**पदार्थ–**

**पञ्चवर्षः** = पाँचवर्षका
**यः** = जो बालक ध्रुव
**गुरुदारवाक्शरैः** = पिताकी कान्छी पत्नी (आफ्नी सौतेनी आमा) सुरुचिको वाग्बाणले
**भिन्नेन** = छिया-छिया भएको
**दूयता** = दुःखित
**हृदयेन** = हृदयले युक्त भएर
**वनं** = जङ्गल
**यातः** = गएर
**मदादेशकरः** = मेरो आज्ञा मानेर तपस्या गरी
**अजितं** = जित्न नसकिने (प्राप्त गर्न कठिन) तर
**तद्भक्तगुणैः** = आफ्ना भक्तहरूको गुणहरूद्वारा
**पराजितम्** = परास्त (प्राप्त) हुनुहुने
**प्रभुं** = वासुदेवलाई
**जिगाय** = जिते (प्राप्त गरे)

**वाक्यार्थ–** पाँचवर्षका बालक ध्रुव सौतेनी आमा सुरुचिको वाग्बाणले छिया-छिया भएको दुःखित हृदय लिएर जङ्गल गएका थिए। मेरो आज्ञा मानेर उनले तपस्या गरी प्राप्त गर्न कठिन हुने तर आफ्ना भक्तहरूका गुणहरूद्वारा सजिलै प्राप्त हुनुहुने भगवान् वासुदेवलाई प्राप्त गरे।

**यः क्षत्रबन्धुर्भुवि तस्याधिरूढ-**
**मन्वारुरुक्षेदपि वर्षपूगैः।**

**षट्पञ्चवर्षो यदहोभिरल्पैः**

**प्रसाद्य वैकुण्ठमवाप तत् पदम् ॥ ४३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो | **यत्** = जुन | **भुवि** = मर्त्यलोकमा रहेका |
| **षट्पञ्चवर्षः** = पाँच-छ वर्षका ध्रुवले | **पदम्** = ध्रुव पद | **क्षत्रबन्धुः** = कुनै उत्तम क्षत्रियले |
| **अल्पैः** = केही | **अवाप** = प्राप्त गरे | **वर्षपूगैः** = वर्षौंसम्म साधना गरेर |
| **अहोभिः** = दिनहरूमा नै (छ महिनाको छोटो समयमा) | **तस्य** = ती ध्रुवले | **आरुरुक्षेत्** = आरोहण गर्न सक्ला र ? |
| **वैकुण्ठम्** = भगवान् नारायणलाई | **अधिरूढम्** = प्राप्त गरेको स्थानलाई | |
| **प्रसाद्य** = खुसी गराएर | **तत्** = त्यो पद | |
| | **अनु अपि** = ध्रुवपछि पनि | |

**वाक्यार्थ–** पाँच-छ वर्षका ध्रुवले केही दिनहरूमा नै भगवान् नारायणलाई खुसी गराएर जुन ध्रुव पद प्राप्त गरे त्यो ध्रुवले प्राप्त गरेको पद ध्रुवपछि मर्त्यलोकमा रहेको कुनै उत्तम क्षत्रियले वर्षौंसम्म साधना गरेर आरोहण गर्न सक्ला र ?

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**एतत् तेऽभिहितं सर्वं यत् पृष्टोऽहमिह त्वया ।**

**ध्रुवस्योद्दामयशसश्चरितं सम्मतं सताम् ॥ ४४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सताम्** = सज्जनद्वारा | **यत्** = जुन | **सर्वं** = सबै कुरा |
| **सम्मतं** = प्रशंसित | **चरितं** = चरित्र | **ते** = तपाईंलाई |
| **उद्दामयशसः** = असामान्य कीर्ति भएका | **त्वया** = तपाईं (विदुर)द्वारा | **एतत्** = यो ध्रुवचरित्र |
| **ध्रुवस्य** = ध्रुवको | **अहम्** = म | **इह** = यहाँ |
| | **पृष्टः** = सोधिएको थिएँ | **अभिहितं** = बताएँ |

**वाक्यार्थ–** सज्जनद्वारा प्रशंसित एवं असामान्य कीर्ति भएका ध्रुवको जुन चरित्र तपाईं (विदुर)ले मलाई सोध्नुभएको थियो त्यो सबै कुरा मैले यहाँ बताएँ।

**धन्यं यशस्यमायुष्यं पुण्यं स्वस्त्ययनं महत् ।**

**स्वर्ग्यं ध्रौव्यं सौमनस्यं प्रशस्यमघमर्षणम् ॥ ४५ ॥**

**पदार्थ–**

पृथ्वीको शासन गर्न सक्दछन्।

राजृ दीप्तौ धातुबाट बनेको राजा शब्दले आफ्ना पराक्रमहरूद्वारा सधैँ दीप्त रहने शासकलाई जनाउँछ। जो भोगविलासमा भन्दा आफ्ना कर्तव्यहरूको पालनामा आनन्द मान्छ अनि जसको शास्त्रीय विधिअनुसार मूर्धाभिषेक गरिएको छ त्यस्तो राजामा लोकपालहरूको तेज प्रविष्ट हुन्छ भन्ने शास्त्रीय मान्यता छ। राजा पृथुको जीवन अध्यात्ममय र पराक्रम अनुपम भएकाले यस अध्यायभरि उहाँको स्तुति गरिएको हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे षोडशोऽध्यायः ॥ १६ ॥**

# अथ सप्तदशोऽध्यायः

## महाराज पृथु पृथिवीमाथि क्रुद्ध हुनु र पृथिवीद्वारा उहाँको स्तुति गरिनु

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**एवं स भगवान् वैन्यः ख्यापितो गुणकर्मभिः।**
**छन्दयामास तान् कामैः प्रतिपूज्याभिनन्द्य च ॥ १ ॥**

पदार्थ–

**एवं** = यसप्रकार (सूत आदि वन्दीजनद्वारा)
**गुणकर्मभिः** = गुण र कर्मको वर्णनद्वारा
**ख्यापितः** = प्रशंसा गरिनुभएका
**सः** = उहाँ
**भगवान्** = भगवान्
**वैन्यः** = वेनपुत्र पृथुले
**तान् च** = ती वन्दीहरूलाई पनि
**अभिनन्द्य** = वचनले खुसी बनाएर
**कामैः** = इच्छाअनुसारका वस्तुद्वारा
**प्रतिपूज्य** = सम्मान गरेर
**छन्दयामास** = सन्तुष्ट बनाउनुभयो

**वाक्यार्थ–** यसप्रकार सूत आदि वन्दीजनद्वारा गुण र कर्मको वर्णनद्वारा प्रशंसा गरिनुभएका भगवान् वेनपुत्र पृथुले ती वन्दीहरूलाई पनि मिठा वचनले खुसी बनाएर इच्छाअनुसारका वस्तुद्वारा सम्मान गरेर सन्तुष्ट बनाउनुभयो।

**ब्राह्मणप्रमुखान् वर्णान् भृत्यामात्यपुरोधसः।**
**पौरान् जानपदान् श्रेणीः प्रकृतीः समपूजयत् ॥ २ ॥**

पदार्थ–

(राजा पृथुले)
**ब्राह्मणप्रमुखान्** = ब्राह्मण आदि
**वर्णान्** = चार वर्ण
**भृत्यामात्यपुरोधसः** = सेवक, मन्त्री, पुरोहित
**पौरान्** = पुरवासी
**जानपदान्** = ग्रामवासी
**श्रेणीः** = विभिन्न व्यवसाय अँगोलका
**प्रकृतीः** = प्रजाहरूलाई
**समपूजयत्** = सत्कार गर्नुभयो

**वाक्यार्थ–** राजा पृथुले ब्राह्मण आदि चार वर्ण, सेवक, मन्त्री, पुरोहित, पुरवासी, ग्रामवासी एवं विभिन्न व्यवसाय अँगालेका प्रजाहरूको सत्कार गर्नुभयो।

**विदुर उवाच** (विदुरजीले भन्नुभयो)

**कस्माद् दधार गोरूपं धरित्री बहुरूपिणी।**

**यां दुदोह पृथुस्तत्र को वत्सो दोहनं च किम्॥ ३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **बहुरूपिणी** = धेरै रूप भएकी | **पृथुः** = राजा पृथुले | **वत्सः** = बाच्छो थियो |
| **धरित्री** = पृथिवीले | **यां** = जुन पृथिवीलाई | **दोहनं च** = दुहुने भाँडो पनि |
| **कस्मात्** = किन | **दुदोह** = दुहुनुभयो | **किम्** = के थियो |
| **गोरूपं** = गाईको रूप | **तत्र** = त्यस दोहनकार्यमा | |
| **दधार** = धारण गरिन् | **कः** = को | |

**वाक्यार्थ–** धेरै रूप भएकी पृथिवीले किन गाईको रूप धारण गरिन्? राजा पृथुले पृथिवीको दोहन गर्दा को बाच्छो थियो? अनि दुहुने भाँडो चाहिँ के थियो?

**प्रकृत्या विषमा देवी कृता तेन समा कथम्।**

**तस्य मेध्यं हयं देवः कस्य हेतोरपाहरत्॥ ४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **देवी** = पृथिवी देवी | **कथम्** = कसरी | **मेध्यं** = यज्ञीय |
| **प्रकृत्या** = स्वभावैले | **समा** = समतल | **हयं** = घोडा |
| **विषमा** = उचाइ र गहिराइमा नमिलेकी (थिइन्) | **कृता** = बनाइयो | **कस्य हेतोः** = किन |
| | **देवः** = इन्द्रले | **अपाहरत्** = हरण गरे |
| **तेन** = उहाँ राजा पृथुद्वारा | **तस्य** = उहाँ राजा पृथुको | |

**वाक्यार्थ–** पृथिवी स्वभावैले उचाइ र गहिराइमा नमिलेकी थिइन्। राजा पृथुले तिनलाई कसरी समतल बनाउनुभयो? अनि राजा पृथुको यज्ञीय घोडा इन्द्रले किन हरण गरे?

**सनत्कुमाराद् भगवतो ब्रह्मन् ब्रह्मविदुत्तमात्।**

**लब्ध्वा ज्ञानं सविज्ञानं राजर्षिः कां गतिं गतः॥ ५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे ब्रह्मज्ञानी मैत्रेयजी | **सनत्कुमारात्** = सनत्कुमारबाट | **राजर्षिः** = राजर्षि पृथुले |
| **ब्रह्मविदुत्तमात्** = ब्रह्मज्ञानीहरूमा उत्तम | **सविज्ञानं** = विज्ञानले युक्त | **कां** = कस्तो |
| | **ज्ञानं** = ज्ञान | **गतिं** = गति |
| **भगवतः** = भगवान् | **लब्ध्वा** = पाएर | **गतः** = प्राप्त गर्नुभयो |

**वाक्यार्थ–** हे ब्रह्मज्ञानी मैत्रेयजी! ब्रह्मज्ञानीहरूमा उत्तम भगवान् सनत्कुमारबाट विज्ञानले युक्त ज्ञान पाएर राजर्षि पृथुले कस्तो गति प्राप्त गर्नुभयो?

**यच्चान्यदपि कृष्णस्य भवान् भगवतः प्रभोः।**

**श्रवः सुश्रवसः पुण्यं पूर्वदेहकथाश्रयम् ॥ ६ ॥**

**भक्ताय मेऽनुरक्ताय तव चाधोक्षजस्य च ।**

**वक्तुमर्हसि योऽदुह्यद् वैन्यरूपेण गामिमाम् ॥ ७ ॥**

पदार्थ–

**यः** = जसले
**वैन्यरूपेण** = वेनपुत्र पृथु रूपले
**इमाम्** = यी
**गाम्** = पृथिवीलाई
**अदुह्यत्** = दुहुनुभयो
**सुश्रवसः** = पुण्यकीर्ति भएका
**प्रभोः** = प्रभु
**भगवतः** = भगवान्
**कृष्णस्य** = कृष्णको
**पूर्वदेहकथाश्रयम्** = पूर्वजन्म अर्थात् पृथुअवतारसम्बन्धी
**यत्** = जुन
**पुण्यं** = पवित्र
**श्रवः** = कीर्ति छ त्यो र
**अन्यत् अपि च** = अरू पनि
**तव** = हजुर (मैत्रेय)को र
**अधोक्षजस्य च** = भगवान् श्रीकृष्णको पनि
**भक्ताय** = भक्त एवं
**अनुरक्ताय** = कथा सुन्न अनुरक्त भएको
**मे** = मलाई
**वक्तुम्** = बताउन
**भवान्** = हजुर
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** जसले वेनपुत्र पृथुरूपले यी पृथिवीलाई दुहुनुभयो त्यस्ता पुण्यकीर्ति प्रभु भगवान् कृष्णको पूर्वजन्म अर्थात् पृथुअवतारसम्बन्धी जुन पवित्र कीर्ति छ त्यो र उहाँसँग सम्बन्धित अरू कथा पनि बताउनुहोस्। हे मैत्रेयजी ! म हजुरको र भगवान् श्रीकृष्णको भक्त हुँ र भगवान्का कथाहरू सुन्न अनुरक्त पनि छु।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**चोदितो विदुरेणैवं वासुदेवकथां प्रति ।**

**प्रशस्य तं प्रीतमना मैत्रेयः प्रत्यभाषत ॥ ८ ॥**

पदार्थ–

**विदुरेण** = विदुरजीद्वारा
**एवं** = यसप्रकार
**वासुदेवकथां प्रति** = भगवान् वासुदेवका कथाप्रति
**चोदितः** = प्रेरित (र यसैले)
**प्रीतमनाः** = खुसी हुनुभएका
**मैत्रेयः** = मैत्रेय ऋषिले
**तं** = ती विदुरजीलाई
**प्रशस्य** = प्रशंसा गरेर
**प्रत्यभाषत** = भन्नुभयो

**वाक्यार्थ–** विदुरजीद्वारा यसप्रकार भगवान् वासुदेवका कथाप्रति प्रेरित र यसैले खुसी हुनुभएका मैत्रेय ऋषिले विदुरजीलाई प्रशंसा गर्दै भन्नुभयो।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**यदाभिषिक्तः पृथुरङ्ग विप्रै-**
**रामन्त्रितो जनतायाश्च पालः ।**
**प्रजा निरन्ने क्षितिपृष्ठ एत्य**
**क्षुत्क्षामदेहाः पतिमभ्यवोचन् ॥ ९ ॥**

**पदार्थ–**

**अङ्ग** = हे प्रिय विदुरजी
**यदा** = जब
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**अभिषिक्तः** = राज्याभिषेक गरिनुभएका
**पृथुः** = पृथु
**जनतायाः** = जनताका
**पालः** = पालक भनेर
**आमन्त्रितः च** = नियुक्त पनि हुनुभयो (त्यसै वेला)
**क्षितिपृष्ठे** = पृथिवीतल
**निरन्ने** = अन्नरहित भएपछि
**क्षुत्क्षामदेहाः** = भोकले पीडित भएका
**प्रजाः** = प्रजाहरू
**एत्य** = आएर
**पतिम्** = राक्षक राजा पृथुलाई
**अभ्यवोचन्** = भने

**वाक्यार्थ–** हे प्रिय विदुरजी ! जब ब्राह्मणहरूद्वारा राज्याभिषेक गरिनुभएका पृथु जनताका पालक भनेर नियुक्त पनि हुनुभयो त्यसै वेला पृथिवीतल अन्नरहित भएपछि भोकले पीडित भएका प्रजाहरू आएर राजा पृथुलाई भने।

**वयं राजञ्जाठरेणाभितप्ता**
**यथाग्निना कोटरस्थेन वृक्षाः ।**
**त्वामद्य याताः शरणं शरण्यं**
**यः साधितो वृत्तिकरः पतिर्नः ॥ १० ॥**

**पदार्थ–**

**राजन्** = हे राजा पृथु
**यथा** = जसरी
**कोटरस्थेन** = टोड्कामा रहेको
**अग्निना** = आगोद्वारा
**वृक्षाः** = वृक्षहरू
**अभितप्ताः** = जल्दछन् (त्यसै गरी)
**वयं** = हामीहरू
**जाठरेण** = (पेटमा रहेको) जठराग्निबाट जलिरहेका छौँ
**यः** = जो हजुर
**नः** = हामी प्रजाहरूका
**वृत्तिकरः** = जीविकादाता
**पतिः** = पालक
**साधितः** = बनाइनुभएको छ (त्यस्ता)
**शरण्यं** = शरणदाता
**त्वाम्** = हजुरको
**शरणं** = शरणमा
**अद्य** = आज
**याताः** = आएका छौँ

**वाक्यार्थ–** हे राजा पृथु ! जसरी टोड्कामा रहेको आगोद्वारा वृक्षहरू जल्दछन् त्यसै गरी पेटमा रहेको जठराग्निबाट हामीहरू जलिरहेका छौँ। यसैले आज हामी प्रजाका जीविकादाता, पालक एवं शरणदाता भएका हजुरको शरणमा आएका छौँ।

**तन्नो भवानीहतु रातवेऽन्नं**
**क्षुधार्दितानां नरदेवदेव।**
**यावन्न नङ्क्ष्यामह उज्झितोर्जा**
**वार्तापतिस्त्वं किल लोकपालः॥ ११॥**

**पदार्थ–**

**नरदेवदेव** = राजाका पनि राजा हे पृथु
**तत्** = त्यसैले
**उज्झितोर्जाः** = अन्न नपाएका हामीहरू
**यावत्** = जबसम्म
**न नङ्क्ष्यामहे** = नष्ट हुँदैनौँ
(त्यसभन्दा पहिले नै)
**क्षुधार्दितानां** = भोकले पीडित भएका
**नः** = हामीहरूका लागि
**अन्नं** = अन्न
**रातवे** = दिनका लागि
**भवान्** = तपाईं
**ईहतु** = प्रयत्न गर्नुहोस्
**त्वं** = (किनभने) तपाईं
**किल** = नै
**वार्तापतिः** = जीविकादाता र
**लोकपालः** = प्रजारक्षक हुनुहुन्छ

**वाक्यार्थ** – राजाका पनि राजा हे पृथु ! अन्न नपाएका हामीहरू भोकले मर्नुभन्दा पहिले नै भोकाएका हामीहरूका लागि अन्न दिलाउन प्रयत्न गर्नुहोस्, किनभने तपाईं नै हाम्रा जीविकादाता र प्रजारक्षक हुनुहुन्छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**पृथुः प्रजानां करुणं निशम्य परिदेवितम्।**
**दीर्घं दध्यौ कुरुश्रेष्ठ निमित्तं सोऽन्वपद्यत॥ १२॥**

**पदार्थ–**

**कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ विदुरजी
**सः** = उहाँ
**पृथुः** = राजा पृथुले
**प्रजानां** = प्रजाको
**करुणं** = करुण
**परिदेवितम्** = विलाप
**निशम्य** = सुनेर
**दीर्घं** = धेरैबेरसम्म
**दध्यौ** = विचार गर्नुभयो र
**निमित्तं** = कारण
**अन्वपद्यत** = थाहा पाउनुभयो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ विदुरजी ! राजा पृथुले प्रजाको करुण विलाप सुनेर धेरैबेरसम्म विचार गर्नुभयो र जनता भोका रहनुको कारण थाहा पाउनुभयो।

**इति व्यवसितो बुद्ध्या प्रगृहीतशरासनः।**
**सन्दधे विशिखं भूमेः क्रुद्धस्त्रिपुरहा यथा॥ १३॥**

**पदार्थ–**

**इति** = पृथिवीले अन्न आफैँ लुकाएकी हुन् भन्ने कुरा
**बुद्ध्या** = बुद्धिद्वारा
**व्यवसितः** = निश्चय गरेका
**त्रिपुरहा** = त्रिपुर नाशक रुद्र
**यथा** = झैँ
**क्रुद्धः** = रिसाएका राजा पृथुले
**प्रगृहीतशरासनः** = धनुष ग्रहण गरेर
**भूमेः** = पृथिवीप्रति
**विशिखं** = बाण
**सन्दधे** = उठाउनुभयो

**वाक्यार्थ–** पृथिवीले अन्न आफैँ लुकाएकी हुन् भन्ने कुरामा निश्चित भएपछि त्रिपुरनाशक रुद्रझैँ रिसाएका राजा पृथुले धनुष ग्रहण गरेर पृथिवीमाथि बाण उठाउनुभयो।

**प्रवेपमाना धरणी निशाम्योदायुधं च तम्।**
**गौः सत्यपाद्रवद् भीता मृगीव मृगयुद्रुता॥ १४॥**

**पदार्थ–**

**उदायुधं** = शस्त्र ग्रहण गरेका
**तम्** = उहाँ राजालाई
**निशाम्य** = देखेर
**भीता** = डराएकी (यसैले)
**प्रवेपमाना** = काँपिरहेकी
**धरणी** = पृथिवी
**मृगयुद्रुता** = सिकारीद्वारा पिछा गरिएकी
**मृगी इव** = मृगीजस्तै गरी
**गौः सती** = गाईको रूप धारण गरेर
**अपाद्रवत्** = भागिन्

**वाक्यार्थ–** शस्त्र ग्रहण गरेका राजालाई देखेर डराएकी र थरथर काँपिरहेकी पृथिवी सिकारीद्वारा पिछा गरिएकी मृगीजस्तै गरी गाईको रूप धारण गरेर भागिन्।

**तामन्वधावत् तद् वैन्यः कुपितोऽत्यरुणेक्षणः।**
**शरं धनुषि सन्धाय यत्र यत्र पलायते॥ १५॥**

**पदार्थ–**

**तत्** = त्यतिखेर (डराएकी पृथिवी)
**यत्र यत्र** = जहाँ-जहाँ
**पलायते** = भाग्छिन् (त्यहाँ-त्यहाँ)
**कुपितः** = रिसाएका र
**अत्यरुणेक्षणः** = राता-राता आँखा भएका
**वैन्यः** = राजा पृथु
**धनुषि** = धनुषमा
**शरं** = बाण
**सन्धाय** = चढाएर
**ताम्** = ती पृथिवीको
**अन्वधावत्** = पछि लाग्नुभयो

**वाक्यार्थ–** त्यतिखेर डराएकी पृथिवी जहाँ-जहाँ भाग्छिन् रिसाएर राता-राता आँखा भएका राजा पृथु पनि धनुषमा बाण चढाउँदै त्यहाँ-त्यहाँ पृथिवीको पछि लाग्नुभयो।

**सा दिशो विदिशो देवी रोदसी चान्तरं तयोः।**
**धावन्ती तत्र तत्रैनं ददर्शानूद्यतायुधम्॥ १६॥**

**पदार्थ–**
**दिशः** = पूर्व आदि चार दिशा
**विदिशः** = आग्नेय आदि चार विदिशा
**रोदसी** = स्वर्गलोक र मर्त्यलोक
**तयोः** = ती दुईको
**अन्तरं च** = बीचमा रहेको अन्तरिक्षमा समेत
**धावन्ती** = दौडिरहेकी
**सा** = ती
**देवी च** = पृथिवीले
**तत्र तत्र** = त्यहाँ–त्यहाँ
**अनु** = पछाडि
**उद्यतायुधम्** = शस्त्र लिएर आएका
**एनं** = यिनै पृथु राजालाई
**ददर्श** = देखिन्

**वाक्यार्थ–** पूर्व आदि चार दिशा, आग्नेय आदि चार विदिशा, स्वर्गलोक, मर्त्यलोक एवं ती दुईको बीचमा रहेको अन्तरिक्षमा समेत दौडिरहेकी ती पृथिवीले प्रत्येक ठाउँमा पछाडि शस्त्र लिएर आएका पृथु राजालाई देखिन्।

**लोके नाविन्दत त्राणं वैन्यान्मृत्योरिव प्रजाः।**
**त्रस्ता तदा निववृते हृदयेन विदूयता॥ १७॥**

**पदार्थ–**
**मृत्योः** = मृत्युबाट डराएका
**प्रजाः इव** = प्रजाहरूजैं
**वैन्यात्** = पृथुबाट
**त्रस्ता** = डराएकी पृथिवीले
**लोके** = संसारमा
**त्राणं** = (उहाँबाहेक अर्को) रक्षक
**न अविन्दत** = पाइनन्
**तदा** = त्यसपछि
**विदूयता** = दुःखित
**हृदयेन** = चित्तका साथ
**निववृते** = फर्किन्

**वाक्यार्थ–** मृत्युबाट डराएका प्रजाहरूजैं पृथुबाट डराएकी पृथिवीले संसारमा उहाँबाहेक अर्को रक्षक पाइनन्। त्यसपछि उनी दुःखित भएर फर्किन्।

**उवाच च महाभागं धर्मज्ञापन्नवत्सल।**
**त्राहि मामपि भूतानां पालनेऽवस्थितो भवान्॥ १८॥**

**पदार्थ–**
(पृथिवीले)
**महाभागं** = पृथुलाई
**उवाच** = भनिन्
**धर्मज्ञ** = धर्मवेत्ता
**आपन्नवत्सल अपि च** = शरणागतवत्सल हे राजा
**माम्** = मलाई
**त्राहि** = रक्षा गर्नुहोस् (किनभने)
**भवान्** = तपाईं
**भूतानां** = प्राणीहरूको
**पालने** = रक्षा गर्ने कार्यमा
**अवस्थितः** = रहनुभएको छ

**वाक्यार्थ–** पृथिवीले पृथुलाई भनिन्, 'धर्मवेत्ता शरणागतवत्सल हे राजा ! मलाई रक्षा गर्नुहोस् किनभने तपाईं प्राणीहरूको रक्षा गर्ने कार्यमा लागिरहनुभएको छ।'

**स त्वं जिघांससे कस्माद् दीनामकृतकिल्बिषाम्।**
**अहनिष्यत् कथं योषां धर्मज्ञ इति यो मतः॥ १९॥**

पदार्थ–

**यः** = जो
**धर्मज्ञः** = धर्मवेत्ता
**इति** = भनेर
**मतः** = मानिनुभएको छ
**सः** = त्यस्ता
**त्वं** = तपाईं
**दीनाम्** = दुःखी
**अकृतकिल्बिषाम्** = निरपराध
**योषां** = स्त्रीलाई
**कस्मात्** = किन
**जिघांससे** = मार्न चाहनुहुन्छ र
**कथं** = कसरी
**अहनिष्यत्** = मार्नुहुन्छ

**वाक्यार्थ–** जो धर्मवेत्ता भनेर मानिनुभएको छ त्यस्ता तपाईं दुःखी निरपराध स्त्रीलाई किन मार्न चाहनुहुन्छ र कसरी मार्नुहुन्छ ?

**प्रहरन्ति न वै स्त्रीषु कृतागःस्वपि जन्तवः।**
**किमुत त्वद्विधा राजन् करुणा दीनवत्सलाः॥ २०॥**

पदार्थ–

**राजन्** = हे पृथु राजा
**कृतागःसु** = अपराध गरेका
**स्त्रीषु** = स्त्रीहरूमा
**जन्तवः अपि** = साधारण प्राणीले पनि
**वै** = निश्चय नै
**न प्रहरन्ति** = प्रहार गर्दैनन्
**त्वद्विधाः** = तपाईंजस्ता
**करुणाः** = दयालु
**दीनवत्सलाः** = दुःखीका प्रिय राजाले त
**किम् उत** = कसरी प्रहार गर्नुहुन्छ

**वाक्यार्थ–** हे पृथु राजा ! अपराधी नै भए पनि स्त्रीहरूमा साधारण प्राणीले पनि निश्चय नै प्रहार गर्दैनन्, तपाईंजस्ता दयालु र दुःखीका प्रिय राजाले त कसरी प्रहार गर्नुहुन्छ ?

**मां विपाद्याजरां नावं यत्र विश्वं प्रतिष्ठितम्।**
**आत्मानं च प्रजाश्चेमाः कथमम्भसि धास्यसि॥ २१॥**

पदार्थ–

**यत्र** = जहाँ
**विश्वं** = विश्व
**प्रतिष्ठितम्** = रहेको छ (त्यस्ती)
**अजरां** = बलियो
**नावं** = डुङ्गारूपी
**मां** = मलाई
**विपाद्य** = तोडेर
**आत्मानं** = आफूलाई
**इमाः** = यी
**प्रजाः च** = प्रजाहरूलाई पनि
**अम्भसि** = जलमा
**कथम्** = कसरी

**धास्यसि** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** जहाँ विश्व रहेको छ त्यस्ती बलियो डुङ्गारूपी मलाई तोडेर आफूलाई र यी प्रजाहरूलाई जलमा कसरी धारण गर्नुहुन्छ ?

**पृथुरुवाच** (राजा पृथुले भन्नुभयो)

**वसुधे त्वां वधिष्यामि मच्छासनपराङ्मुखीम् ।**

**भागं बर्हिषि या वृङ्क्ते न तनोति च नो वसु ॥ २२ ॥**

**पदार्थ–**

**वसुधे** = हे पृथिवी
**मच्छासनपराङ्मुखीम्** = मेरो आज्ञा उल्लङ्घन गर्ने
**त्वां** = तिमीलाई
**वधिष्यामि** = मार्दछु
**या** = जो तिमी
**बर्हिषि** = यज्ञमा
**भागं** = (देवताका रूपमा) भाग
**वृङ्क्ते** = लिन्छ्यौ
**नः** = हामीलाई
**वसु च** = अन्न आदि वस्तु
**न तनोति** = प्रदान गर्दिनौ

**वाक्यार्थ–** हे पृथिवी ! मेरो आज्ञा उल्लङ्घन गर्ने तिमीलाई म मार्दछु। जो तिमी यज्ञमा देवताका रूपमा भाग भने लिन्छ्यौ तर हामीलाई अन्न आदि वस्तु प्रदान गर्दिनौ।

**यवसं जग्ध्यनुदिनं नैव दोग्ध्यौधसं पयः ।**

**तस्यामेवं हि दुष्टायां दण्डो नात्र न शस्यते ॥ २३ ॥**

**पदार्थ–**

(गाईको रूप धारण गरेकी तिमी)
**अनुदिनं** = प्रत्येक दिन
**यवसं** = घाँस
**जग्धि** = खान्छ्यौ
**औधसं** = कल्चौँडामा भएको
**पयः** = दूध
**न एव दोग्धि** = दिन्नौ
**एवं** = यसप्रकार
**तस्याम्** = त्यस्ती
**दुष्टायां** = दुष्ट तिमीमा
**अत्र** = यस अपराधको लागि
**हि** = निश्चय नै
**दण्डः** = दण्ड दिन
**न शस्यते** = उपयुक्त छैन (भन्ने कुरो)
**न** = होइन

**वाक्यार्थ–** गाईको रूप धारण गरेकी तिमी प्रत्येक दिन घाँस भने खान्छ्यौ तर कल्चौँडामा भएको दूध दिन्नौ। यसप्रकार त्यस्ती दुष्टा तिमीमा यस अपराधको लागि दण्ड उपयुक्त छैन भन्ने कुरो होइन। (तिमी पूर्णतः दण्डनीय छ्यौ।)

**त्वं खल्वोषधिबीजानि प्राक् सृष्टानि स्वयम्भुवा ।**

**न मुञ्चस्यात्मरुद्धानि मामवज्ञाय मन्दधीः ॥ २४ ॥**

**पदार्थ–**

**स्वयम्भुवा** = ब्रह्माजीद्वारा
**प्राक्** = सृष्टिको सुरुमा
**सृष्टानि** = उत्पन्न गरिएका
**ओषधिबीजानि** = अन्न आदि बिउ
**आत्मरुद्धानि** = तिमीले आफैँमा रोकेकी छ्यौ
**मन्दधीः** = मन्द बुद्धि भएकी
**त्वं** = तिमी
**माम्** = मलाई
**अवज्ञाय** = तिरस्कार गरेर
**खलु** = नै
**न मुञ्चसि** = निकाल्दिनौ

**वाक्यार्थ–** ब्रह्माजीद्वारा सृष्टिको सुरुमा उत्पन्न गरिएका अन्न आदि बिउ तिमीले आफैँमा रोकेकी छ्यौ। मन्द बुद्धि भएकी तिमीले मलाई तिरस्कार गरेर उक्त अन्न आदि बिउ बाहिर ननिकालेकी हौ।

**अमूषां क्षुत्परीतानामार्तानां परिदेवितम्।**
**शमयिष्यामि मद्बाणैर्भिन्नायास्तव मेदसा॥ २५॥**

**पदार्थ–**
**क्षुत्परीतानाम्** = भोकले ग्रस्त र
**आर्तानां** = दुःखी
**अमूषां** = यी प्राणीहरूको
**परिदेवितम्** = बिलौनालाई
**मद्बाणैः** = मेरा बाणद्वारा
**भिन्नायाः** = काटिएकी
**तव** = तिम्रो
**मेदसा** = बोसोद्वारा
**शमयिष्यामि** = शान्त गर्दछु

**वाक्यार्थ–** भोकले ग्रस्त र दुःखी यी प्राणीहरूको बिलौनालाई मेरा बाणद्वारा काटिएकी तिम्रो बोसोद्वारा म शान्त गर्दछु।

**पुमान् योषिदुत क्लीब आत्मसम्भावनोऽधमः।**
**भूतेषु निरनुक्रोशो नृपाणां तद्वधोऽवधः॥ २६॥**

**पदार्थ–**
**पुमान्** = पुरुष वा
**योषित्** = स्त्री
**उत** = अथवा
**क्लीबः** = नपुंसक (जो)
**आत्मसम्भावनः** = आफूलाई सर्वस्व मान्ने
**भूतेषु** = प्राणीहरूमा
**निरनुक्रोशः** = दयाभाव नराख्ने
**अधमः** = अधम व्यक्ति छ
**तद्वधः** = त्यस्ता व्यक्तिको वध
**नृपाणां** = राजाका लागि
**अवधः** = वध होइन

**वाक्यार्थ–** पुरुष, स्त्री अथवा नपुंसक जोसुकै किन नहोस् आफूलाई सर्वस्व मान्ने प्राणीहरूमा दयाभाव नराख्ने अधम व्यक्ति छ भने त्यस्ता व्यक्तिको वध गर्नु राजाका लागि वध होइन।

**त्वां स्तब्धां दुर्मदां नीत्वा मायागां तिलशः शरैः।**
**आत्मयोगबलेनेमा धारयिष्याम्यहं प्रजाः॥ २७॥**

**पदार्थ–**

**मायागां** = मायाद्वारा गाईको रूप धारण गरेकी **स्तब्धां** = घमण्डी र **दुर्मदां** = मदोन्मत्त **त्वां** = तिमीलाई **शरैः** = बाणद्वारा **तिलशः** = तिलजत्रो टुक्रामा **नीत्वा** = पुऱ्याएर **अहं** = म **आत्मयोगबलेन** = आफ्नो योगको शक्तिले **इमाः** = यी **प्रजाः** = प्रजाहरूलाई **धारयिष्यामि** = धारण गर्नेछु

**वाक्यार्थ–** मायाद्वारा गाईको रूप धारण गरेकी घमण्डी र मदोन्मत्त भएकी तिमीलाई बाणद्वारा तिलजत्रो टुक्रा-टुक्रा पारेर म आफ्नो योगको शक्तिले यी प्रजाहरूलाई धारण गर्नेछु।

**एवं मन्युमयीं मूर्तिं कृतान्तमिव बिभ्रतम्।**
**प्रणता प्राञ्जलिः प्राह मही सञ्जातवेपथुः॥ २८॥**

**पदार्थ–**

**एवं** = यसप्रकार कठोर वचन बोल्ने **मन्युमयीं** = रिसले पूर्ण **मूर्तिं** = शरीर **बिभ्रतम्** = धारण गरेका **कृतान्तम् इव** = यमराजजस्तै (देखिएका राजालाई) **सञ्जातवेपथुः** = काँप्दै **प्राञ्जलिः** = हात जोडेर **प्रणता** = प्रणाम गर्दै गरेकी **मही** = पृथिवीले **प्राह** = भनिन्

**वाक्यार्थ–** यसप्रकार कठोर वचन बोल्ने, रिसले पूर्ण भएकाले यमराजजस्तै देखिएका राजालाई काँप्दै हात जोडेर प्रणाम गर्दै गरेकी पृथिवीले भनिन्।

**धरोवाच** (पृथिवीले भनिन्)

**नमः परस्मै पुरुषाय मायया**
**विन्यस्तनानातनवे गुणात्मने।**
**नमः स्वरूपानुभवेन निर्धुत-**
**द्रव्यक्रियाकारकविभ्रमोर्मये॥ २९॥**

**पदार्थ–**

**मायया** = मायाद्वारा **विन्यस्तनानातनवे** = अनेक रूप धारण गर्नुभएका **गुणात्मने** = सगुण स्वरूप हुनुभएका **परस्मै** = परम **पुरुषाय** = पुरुष तपाईंलाई **नमः** = नमस्कार छ **स्वरूपानुभवेन** = आत्मज्ञानद्वारा **निर्धुतद्रव्यक्रियाकारक-विभ्रमोर्मये** = द्रव्य (अधिभूत), क्रिया (अध्यात्म), कारक (अधिदैव)सम्बन्धी अभिमान र त्यसबाट उत्पन्न राग, द्वेष आदिलाई पूर्णतः परित्याग गर्नुभएका तपाईंलाई **नमः** = नमस्कार छ

**वाक्यार्थ–** मायाद्वारा अनेक रूप धारण गर्नुभएका, सगुण स्वरूप हुनुभएका एवं आत्मज्ञानद्वारा अधिभूत, अध्यात्म र अधिदैवसम्बन्धी अभिमान र त्यसबाट उत्पन्न राग, द्वेष आदिलाई पूर्णतः परित्याग गर्नुभएका परम पुरुष तपाईंलाई नमस्कार छ।

**येनाहमात्मायतनं विनिर्मिता**
**धात्रा यतोऽयं गुणसर्गसङ्ग्रहः।**
**स एव मां हन्तुमुदायुधः स्वरा-**
**डुपस्थितोऽन्यं शरणं कमाश्रये॥ ३०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **येन** = जुन | **अयं** = यो | **हन्तुम्** = मार्न |
| **धात्रा** = जगत्पालक तपाईंद्वारा | **गुणसर्गसङ्ग्रहः** = त्रिगुणात्मक सृष्टि हुन्छ (त्यस्ती) | **उपस्थितः** = उपस्थित हुनुभएको छ |
| **अहम्** = म (पृथिवी) | **मां** = मलाई | **अन्यं** = अरू |
| **आत्मायतनं** = सम्पूर्ण प्राणीको वासस्थान | **स्वराट्** = स्वयं प्रकाशरूप | **कम्** = कसको |
| **विनिर्मिता** = बनाइएँ | **सः एव** = तपाईं नै | **शरणं** = शरणको |
| **यतः** = यसैले (ममा) | **उदायुधः** = शस्त्र लिएर | **आश्रये** = आश्रय लिऊँ |

**वाक्यार्थ–** जुन जगत्पालक तपाईंले म (पृथिवी)लाई सम्पूर्ण प्राणीको वासस्थान बनाउनुभयो। यसैले ममा यो त्रिगुणात्मक सृष्टि हुने गर्छ। त्यस्ती मलाई स्वयं प्रकाशरूप तपाईं नै शस्त्र ग्रहण गरेर मार्न तयार हुनुभएको छ भने म अरू कसको शरणको आश्रय लिऊँ ?

**य एतदादावसृजच्चराचरं**
**स्वमाययात्माश्रययावितर्क्यया।**
**तयैव सोऽयं किल गोप्तुमुद्यतः**
**कथं नु मां धर्मपरो जिघांसति॥ ३१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यः** = जुन तपाईंले | **स्वमायया** = आफ्नी मायाद्वारा | **किल** = निश्चय नै |
| **आत्माश्रयया** = आफ्नो आश्रयमा रहने | **आदौ** = कल्पको प्रारम्भमा | **असृजत्** = उत्पन्न गर्नुभयो |
| | **एतत्** = यो | **तया एव** = त्यही मायाद्वारा नै |
| **अवितर्क्यया** = अनिर्वचनीय | **चराचरं** = चराचर जगत् | **सः अयं** = यो पृथुको रूप |

धारण गर्नुभएका तपाईं (अहिले यस जगत्को)
**गोप्तुम्** = रक्षा गर्न
**उद्यतः** = तत्पर हुनुभएको छ
**धर्मपरः** = धर्मपरायण तपाईं
**कथं नु** = किन
**मां** = मलाई
**जिघांसति** = मार्न चाहुनुहुन्छ

**वाक्यार्थ–** जुन तपाईंले आफ्नो आश्रयमा रहने अनिर्वचनीय आफ्नी मायाद्वारा यो चराचर जगत् कल्पको प्रारम्भमा उत्पन्न गर्नुभयो। त्यही मायाद्वारा नै पृथुको रूप धारण गर्नुभएका तपाईं अहिले यस जगत्को रक्षा गर्न तत्पर हुनुभएको छ। यसर्थ धर्मपरायण तपाईं किन मलाई मार्न चाहुनुहुन्छ ?

**विवरण–** अद्वितीय परमात्मामा मायाको कारणले नै जगत्को सृष्टि भएको हो। माया पनि वस्तुतः परमात्माकै शक्ति भएकाले परमात्मादेखि भिन्न होइन। शक्ति र शक्तिमान्मा पनि सामान्य भेद रहन सक्छ तर माया परमात्माभन्दा कुनै पनि हालतमा छुट्टै अस्तित्ववाला हुन सक्दैन। स्वरूपतः जो छैन त्यसैलाई माया भनिन्छ। माया ब्रह्ममा नै कल्पित भएकाले स्वरूपतः त्यसको छुट्टै सत्ता छैन। माया ब्रह्ममा नै बस्छ र त्यहीँ जगत्प्रपञ्चलाई खडा गर्दछ पनि त्यसैले यस श्लोकमा मायालाई आत्माश्रय भनिएको छ। वास्तवमा मायाको स्वरूप यस्तै हो भनी ठम्याउन सकिँदैन। माया छैन भनौँ भने प्रपञ्चको कारणको रूपमा छ, अनि छ भनौँ भने ब्रह्मभिन्नरूपले छैन पनि। यो 'अवितर्क्य' अर्थात् तर्क गरेर यस्तै हो भनी ठम्याउन नसकिने खालको छ। त्यसैले माया अनिर्वचनीय छ।

**नूनं बतेशस्य समीहितं जनै-**
**स्तन्मायया दुर्जययाकृतात्मभिः।**
**न लक्ष्यते यस्त्वकरोदकारयद्**
**योऽनेक एकः परतश्च ईश्वरः॥ ३२॥**

पदार्थ–

**नूनं बत** = आश्चर्य छ
**दुर्जयया** = दुर्जय
**तन्मायया** = भगवान्की मायाद्वारा
**अकृतात्मभिः** = चित्त विक्षिप्त भएका
**जनैः** = मानिसहरूद्वारा
**ईशस्य** = ईश्वरको
**समीहितं** = चेष्टा
**न लक्ष्यते** = थाहा पाइँदैन
**यः** = जुन
**ईश्वरः** = ईश्वरले
**अकरोत्** = (ब्रह्माजीलाई) बनाउनुभयो र
**अकारयत्** = ब्रह्माजीद्वारा विश्वलाई उत्पन्न गर्नुभयो
**यः** = जो (स्वतः)
**एकः** = एक हुनुहुन्छ
**परतः** = मायाका कारण
**अनेकः च** = अनेक पनि हुनुहन्छ

**वाक्यार्थ–** आश्चर्य ! दुर्जय भगवान्की मायाद्वारा चित्त विक्षिप्त भएका मानिसहरूद्वारा ईश्वरको चेष्टा थाहा पाइँदैन। जुन ईश्वरले ब्रह्माजीलाई बनाउनुभयो र ब्रह्माजीद्वारा विश्वलाई उत्पन्न

गर्नुभयो। जो स्वतः एक हुनुहुन्छ र मायाका कारण अनेक पनि हुनुहन्छ।

**सर्गादि योऽस्यानुरुणद्धि शक्तिभि-**
**र्द्रव्यक्रियाकारकचेतनात्मभिः।**
**तस्मै समुन्नद्धनिरुद्धशक्तये**
**नमः परस्मै पुरुषाय वेधसे ॥ ३३ ॥**

**पदार्थ–**
**द्रव्यक्रियाकारकचेतनात्मभिः** = द्रव्य (पञ्चभूत), क्रिया (इन्द्रिय), कारक (इन्द्रियका अधिष्ठाता देवता), चेतना (बुद्धि) र आत्मा (अहङ्कार)रूप
**शक्तिभिः** = आफ्ना शक्तिहरूद्वारा
**यः** = जो भगवान्
**अस्य** = यस जगत्को
**सर्गादि** = सृष्टि आदि कार्य
**अनुरुणद्धि** = गर्नुहुन्छ
**तस्मै** = त्यस्ता
**समुन्नद्धनिरुद्धशक्तये** = विभिन्न शक्तिलाई आविर्भाव र तिरोभाव गर्न सक्ने
**वेधसे** = अन्तर्यामी
**परस्मै** = परम
**पुरुषाय** = पुरुष तपाईंलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** पञ्चभूत, इन्द्रिय, इन्द्रियका अधिष्ठाता देवता, बुद्धि र अहङ्काररूप आफ्ना शक्तिहरूद्वारा जो भगवान् यस जगत्को सृष्टि, स्थिति र संहार गर्नुहुन्छ त्यस्ता विभिन्न शक्तिलाई आविर्भाव र तिरोभाव गर्न सक्ने अन्तर्यामी परम पुरुष तपाईंलाई नमस्कार छ।

**स वै भवानात्मविनिर्मितं जगद्**
**भूतेन्द्रियान्तःकरणात्मकं विभो।**
**संस्थापयिष्यन्नज मां रसातला-**
**दभ्युज्जहाराम्भस आदिसूकरः ॥ ३४ ॥**

**पदार्थ–**
**विभो** = हे व्यापक
**अज** = भगवान् (जसले पहिले मलाई उत्पन्न गर्नुभयो)
**सः** = उहाँ
**भवान् वै** = तपाईंले नै
**आत्मविनिर्मितं** = आफूले बनाएको
**भूतेन्द्रियान्तःकरणात्मकं** = भूत, इन्द्रिय र अन्तःकरणरूप
**जगत्** = जगत्लाई
**संस्थापयिष्यन्** = राम्रोसँग राख्नको लागि
**आदिसूकरः** = आदिवराह अवतार लिएर
**मां** = मलाई
**रसातलात्** = रसातलको
**अम्भसः** = पानीबाट
**अभ्युज्जहार** = निकाल्नुभयो

**वाक्यार्थ–** हे व्यापक भगवान्! जसले पहिले मलाई उत्पन्न गर्नुभयो उहाँ तपाईंले नै आफूले

बनाएको भूत, इन्द्रिय र अन्तःकरणरूप जगत्लाई राम्रोसँग राख्नको लागि आदिवराह अवतार लिएर मलाई रसातलको पानीबाट निकाल्नुभयो।

**अपामुपस्थे मयि नाव्यवस्थिताः**
**प्रजा भवानद्य रिरक्षिषुः किल।**
**स वीरमूर्तिः समभूद् धराधरो**
**यो मां पयस्युग्रशरो जिघांससि॥ ३५॥**

पदार्थ–

**अपाम्** = जलको
**उपस्थे** = माथि
**मयि** = म पृथिवीरूपी
**नावि** = डुङ्गामा
**अवस्थिताः** = रहेका
**प्रजाः** = प्रजाहरूलाई
**रिरक्षिषुः** = रक्षा गर्न चाहने
**सः** = उहाँ
**धराधरः** = पृथिवीलाई धारण गर्ने वराह भगवान्
**अद्य** = आज
**किल** = निश्चय नै
**वीरमूर्तिः** = वीर राजा पृथुको रूप धारण गरेर
**समभूत्** = उत्पन्न हुनुभएको छ
**यः** = जो
**भवान्** = तपाईं
**पयसि** = अन्नरूप दूधका लागि मात्र
**उग्रशरः** = कठोर बाण लिएर
**मां** = मलाई
**जिघांससि** = मार्न चाहनुहुन्छ

**वाक्यार्थ–** जलमाथि रहेकी म पृथिवीरूपी डुङ्गामा रहेका प्रजाहरूको रक्षा गर्न चाहने र पृथिवीलाई धारण गर्ने वराह भगवान् नै आज वीर राजा पृथुको रूप धारण गरेर उत्पन्न हुनुभएको छ, त्यस्ता तपाईं अन्नरूप दूधका लागि मात्र कठोर बाण लिएर मलाई मार्न चाहनुहुन्छ।

**नूनं जनैरीहितमीश्वराणा-**
**मस्मद्विधैस्तद्गुणसर्गमायया।**
**न ज्ञायते मोहितचित्तवर्त्मभि-**
**स्तेभ्यो नमो वीरयशस्करेभ्यः॥ ३६॥**

पदार्थ–

**तद्गुणसर्गमायया** = त्रिगुणात्मक जगत्को सृष्टि गर्ने उहाँकी मायाद्वारा
**मोहितचित्तवर्त्मभिः** = मोहग्रस्त चित्त भएका
**अस्मद्विधैः** = हामीजस्ता
**जनैः** = व्यक्तिद्वारा
**नूनं** = निश्चय नै
**ईश्वराणाम्** = ईश्वरको
**ईहितम्** = चेष्टा
**न ज्ञायते** = जान्न सकिँदैन
**तेभ्यः** = त्यस्ता

**वीरयशस्करेभ्यः** = वीरोचित कीर्ति बढाउन चाहने तपाईंलाई | **नमः** = नमस्कार छ

**वाक्यार्थ–** त्रिगुणात्मक जगत्को सृष्टि गर्ने उहाँकी मायाद्वारा मोहग्रस्त चित्त भएका हामीजस्ता व्यक्तिद्वारा ईश्वरको चेष्टा जान्न सकिँदैन, त्यस्ता वीरोचित कीर्ति बढाउन चाहने तपाईंलाई नमस्कार छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे पृथुविजये धरित्रीनिग्रहो नाम सप्तदशोऽध्यायः ॥ १७ ॥**

# अथ अष्टादशोऽध्यायः

## पृथिवीदोहन

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इत्थं पृथुमभिष्टूय रुषा प्रस्फुरिताधरम्।**

**पुनराहावनिर्भीता संस्तभ्यात्मानमात्मना ॥ १ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **रुषा** = रिसले | **अभिष्टूय** = स्तुति गरेर (खुसी नभए पछि) | **आत्मानम्** = मनलाई |
| **प्रस्फुरिताधरम्** = ओठ फर्फराएका | **भीता** = डराएकी | **संस्तभ्य** = सम्हाल्दै |
| **पृथुम्** = राजा पृथुलाई | **अवनिः** = पृथिवीले | **पुनः** = फेरि |
| **इत्थं** = यसप्रकार | **आत्मना** = बुद्धिले | **आह** = भनिन् |

**वाक्यार्थ–** यसप्रकार स्तुति गर्दा पनि रिसले ओठ फर्फराइरहेका राजा पृथु खुसी नभएपछि डराएकी पृथिवीले विचारपूर्वक मन सम्हाल्दै फेरि भनिन्।

**सन्नियच्छाभिभो मन्युं निबोध श्रावितं च मे।**

**सर्वतः सारमादत्ते यथा मधुकरो बुधः ॥ २ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अभिभो** = हे प्रभु | **निबोध** = बुझ्नुहोस् | **बुधः च** = विद्वान्ले पनि |
| **मन्युं** = रिस | **यथा** = जसरी | **सर्वतः** = सबैतिरबाट (सारतत्त्व ग्रहण गर्दछ) |
| **सन्नियच्छ** = नियन्त्रित गर्नुहोस् | **मधुकरः** = भमराले (फूलबाट) | |
| **मे** = मैले | **सारम्** = सारतत्त्व अर्थात् मह | |
| **श्रावितं** = सुनाएको कुरा | **आदत्ते** = लिन्छ (त्यसै गरी) | |

**वाक्यार्थ–** हे प्रभु ! रिस नियन्त्रित गर्नुहोस्। मैले भनेको कुरा बुझ्नुहोस्। जसरी भमराले फूलबाट सारतत्त्व अर्थात् मह लिन्छ त्यसै गरी विद्वान्ले पनि सबैतिरबाट सारतत्त्व ग्रहण गर्दछ।

**अस्मिन् लोकेऽथवामुष्मिन् मुनिभिस्तत्त्वदर्शिभिः।**

**दृष्टा योगाः प्रयुक्ताश्च पुंसां श्रेयःप्रसिद्धये ॥ ३ ॥**

पदार्थ–

**तत्त्वदर्शिभिः** = तत्त्वदर्शी
**मुनिभिः** = मुनिहरूद्वारा
**अस्मिन्** = यस
**लोके** = लोकमा
**अथवा** = अथवा
**अमुष्मिन्** = परलोकमा
**पुंसां** = मानिसहरूको
**श्रेयःप्रसिद्धये** = कल्याणका लागि
**योगाः** = उपायहरू
**दृष्टाः** = बताइएका छन्
**प्रयुक्ताः च** = प्रयोग पनि गरिएका छन्

**वाक्यार्थ–** तत्त्वदर्शी मुनिहरूद्वारा यस लोकमा अथवा परलोकमा मानिसहरूको कल्याणका लागि धेरै उपायहरू बताइएका छन् र प्रयोग पनि गरिएका छन्।

**तानातिष्ठति यः सम्यगुपायान् पूर्वदर्शितान्।**

**अवरः श्रद्धयोपेत उपेयान् विन्दतेऽञ्जसा॥ ४॥**

पदार्थ–

**पूर्वदर्शितान्** = पहिलाका मुनिहरूद्वारा बताइएका
**तान्** = ती
**उपायान्** = उपायहरूलाई
**अवरः** = अहिलेको
**यः** = जुन व्यक्तिले
**श्रद्धया** = श्रद्धाले
**उपेतः** = युक्त भएर
**सम्यक्** = राम्रोसँग
**आतिष्ठति** = पालन गर्दछ
(त्यसले)
**अञ्जसा** = सजिलै
**उपेयान्** = फल
**विन्दते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** पहिलाका मुनिहरूद्वारा बताइएका ती उपायहरूलाई अहिलेको जुन व्यक्तिले श्रद्धाले युक्त भएर राम्रोसँग पालन गर्दछ त्यसले सजिलै फल प्राप्त गर्दछ।

**tताननादृत्य योऽविद्वानर्थानारभते स्वयम्।**

**तस्य व्यभिचरन्त्यर्था आरब्धाश्च पुनः पुनः॥ ५॥**

पदार्थ–

**यः** = जो
**अविद्वान्** = अज्ञानी व्यक्ति
**तान्** = ती उपायलाई
**अनादृत्य** = वास्ता नगरी
**स्वयम्** = आफैँ
**अर्थान्** = उपाय
**आरभते** = सुरु गर्दछ
**तस्य** = त्यसका
**पुनः पुनः** = बारम्बार
**आरब्धाः** = सुरु गरिएका
**अर्थाः च** = उपायहरू पनि
**व्यभिचरन्ति** = निष्फल हुन्छन्

**वाक्यार्थ–** जो अज्ञानी व्यक्ति ती उपायलाई वास्ता नगरी आफैँ उपाय गर्दछ त्यसका बारम्बार सुरु गरिएका उपायहरू पनि निष्फल हुन्छन्।

**पुरा सृष्टा ह्योषधयो ब्रह्मणा या विशाम्पते।**

**भुज्यमाना मया दृष्टा असद्भिरधृतव्रतैः॥ ६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विशाम्पते** = हे राजा | **ओषधयः** = अन्न आदि | व्यक्तिद्वारा |
| **ब्रह्मणा** = ब्रह्माजीद्वारा | औषधिहरू थिए (ती) | **भुज्यमानाः** = खाइएका |
| **पुरा** = पहिले | **हि** = निश्चय नै | **मया** = मद्वारा |
| **सृष्टाः** = उत्पन्न गरिएका | **असद्भिः** = दुष्ट | **दृष्टाः** = देखिए |
| **याः** = जुन-जुन | **अधृतव्रतैः** = आचरणहीन | |

**वाक्यार्थ–** हे राजा ! ब्रह्माजीद्वारा पहिले उत्पन्न गरिएका जुन-जुन अन्न आदि औषधिहरू थिए ती वस्तुहरूलाई दुष्ट आचरणहीन व्यक्तिले खाइरहेको मैले देखेँ।

**अपालितानादृता च भवद्भिर्लोकपालकैः ।**

**चोरीभूतेऽथ लोकेऽहं यज्ञार्थेऽग्रसमोषधीः ॥ ७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भवद्भिः** = तपाईंजस्ता | **अहं** = मैले | **ओषधीः** = अन्न आदि |
| **लोकपालकैः** = राजाहरूद्वारा | **लोके** = समस्त संसार | औषधिहरू |
| **अपालिता** = म पालन नगरिएकी | **चोरीभूते** = चोर बनेको हुनाले | **अग्रसम्** = लुकाएँ |
| **अनादृता च** = आदर पनि नगरिएकी | **अथ** = यसपछि | |
| | **यज्ञार्थे** = यज्ञका लागि | |

**वाक्यार्थ–** तपाईंजस्ता राजाहरूद्वारा म पालन गरिइनँ र आदर पनि गरिइनँ। यसर्थ समस्त संसार चोर बनेपछि मैले यज्ञका लागि अन्नादि औषधिहरू लुकाएँ।

**नूनं ता वीरुधः क्षीणा मयि कालेन भूयसा ।**

**तत्र योगेन दृष्टेन भवानादातुमर्हति ॥ ८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भूयसा** = लामो | **नूनं** = निश्चय नै | **भवान्** = तपाईं |
| **कालेन** = समयले गर्दा | **क्षीणाः** = क्षीण भएका छन् | **आदातुम्** = लिन |
| **ताः** = ती | **तत्र** = तिनको प्राप्तिको लागि | **अर्हति** = योग्य हुनुहुन्छ |
| **वीरुधः** = अन्न आदि औषधिहरू | **दृष्टेन** = मुनिहरूद्वारा बताइएको | |
| **मयि** = ममा | **योगेन** = उपायद्वारा | |

**वाक्यार्थ–** लामो समय बितिसकेको हुनाले ती अन्न आदि औषधिहरू ममा क्षीण भएका छन्। तिनको प्राप्तिको लागि मुनिहरूद्वारा बताइएको उपायद्वारा तपाईं लिन सक्नुहुन्छ।

**वत्सं कल्पय मे वीर येनाहं वत्सला तव।**
**धोक्ष्ये क्षीरमयान् कामाननुरूपं च दोहनम्॥ ९॥**
**दोग्धारं च महाबाहो भूतानां भूतभावन।**
**अन्नमीप्सितमूर्जस्वद् भगवान् वाञ्छते यदि॥ १०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भूतभावन** = प्राणीपालक | **अन्नम्** = अन्न | **येन** = जसले गर्दा |
| **महाबाहो** = महाबाहु | **वाञ्छते** = चाहनुहुन्छ भने | **वत्सला** = बाच्छोले सहित भएकी |
| **वीर** = हे वीर राजा | **मे** = मेरो | **अहं** = म |
| **यदि** = यदि | **अनुरूपं** = योग्य | **क्षीरमयान्** = दूधको रूपमा |
| **भगवान्** = तपाईं | **वत्सं** = बाच्छो | **तव** = तपाईंका |
| **भूतानां** = प्राणीहरूको | **दोहनम्** = दुहुने भाँडो | **कामान्** = इच्छाअनुसारका वस्तु |
| **ईप्सितम्** = अभीष्ट | **दोग्धारं च** = दुहुने व्यक्ति | **धोक्ष्ये** = (दुहिनेछु) प्रदान गर्नेछु |
| **उर्जस्वत्** = बल बढाउने | **कल्पय** = तयार गर्नुहोस् | |

**वाक्यार्थ–** प्राणीपालक महाबाहु हे वीर! यदि तपाईं प्राणीको अभीष्ट एवं बलवर्द्धक अन्न चाहनुहुन्छ भने मेरो योग्य बाच्छो, दुहुने भाँडो र दुहुने व्यक्ति तयार गर्नुहोस् जसले गर्दा बाछाले सहित भएकी म दूधको रूपमा तपाईंका इच्छाअनुसारका वस्तु प्रदान गर्नेछु।

**समां च कुरु मां राजन् देववृष्टं यथा पयः।**
**अपर्तावपि भद्रं ते उपावर्तेत मे विभो॥ ११॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **विभो** = व्यापक | **अपर्तौ अपि** = वर्षा ऋतु गइसकेपछि पनि | **समां च** = समतल भएकी |
| **राजन्** = हे राजा | **मे** = ममाथि | **कुरु** = बनाउनुहोस् |
| **तथा** = जसरी | **उपावर्तेत** = रहन सकोस् (त्यसरी) | **ते** = तपाईंको |
| **देववृष्टं** = देवराज इन्द्रले बर्साएको | **मां** = मलाई | **भद्रं** = कल्याण होस् |
| **पयः** = जल | | |

**वाक्यार्थ–** व्यापक हे राजा! देवराज इन्द्रले बर्साएको जल वर्षा ऋतु गइसकेपछि पनि ममाथि सबैतिर रहिरहने गरी मलाई समतल बनाउनुहोस्। तपाईंको कल्याण होस्।

**इति प्रियं हितं वाक्यं भुव आदाय भूपतिः।**
**वत्सं कृत्वा मनुं पाणावदुहत् सकलौषधीः॥ १२॥**

**पदार्थ–**

**इति** = यसप्रकार
**भुवः** = पृथिवीको
**प्रियं** = प्रिय र
**हितं** = हितकारक
**वाक्यं** = वाक्य
**आदाय** = स्वीकार गरेर
**भूपतिः** = राजा पृथुले
**मनुं** = स्वायम्भुव मनुलाई
**वत्सं** = बाच्छो
**कृत्वा** = बनाएर
**पाणौ** = हातमा
**सकलौषधीः** = सम्पूर्ण औषधीरूप धान्यादि वस्तु
**अदुहत्** = दुहुनुभयो

**वाक्यार्थ–** यसप्रकार पृथिवीको प्रिय र हितकारक वाक्य स्वीकार गरेर राजा पृथुले स्वायम्भुव मनुलाई बाच्छो बनाएर हातमा सम्पूर्ण औषधीरूप धान्यादि वस्तु दुहुनुभयो।

**तथापरे च सर्वत्र सारमाददते बुधाः।**
**ततोऽन्ये च यथाकामं दुदुहुः पृथुभाविताम्॥ १३॥**

**पदार्थ–**

**तथा** = पृथुले जस्तै
**अपरे** = अरू
**बुधाः च** = विद्वान्‌हरू पनि
**सर्वत्र** = सबै ठाउँमा
**सारम्** = सारतत्त्व
**आददते** = ग्रहण गर्दछन्
**ततः** = यसैले
**अन्ये च** = अरू विद्वान्‌हरूले पनि
**यथाकामं** = इच्छाअनुसार
**पृथुभाविताम्** = पृथुद्वारा वशमा ल्याइएकी पृथिवीलाई
**दुदुहुः** = दुहे

**वाक्यार्थ–** पृथुले जस्तै अरू विद्वान्‌हरू पनि सबै ठाउँमा सारतत्त्व ग्रहण गर्दछन्। यसैले अरू विद्वान्‌हरूले पनि इच्छाअनुसार पृथुद्वारा वशमा ल्याइएकी पृथिवीलाई दुहे।

**ऋषयो दुदुहुर्देवीमिन्द्रियेष्वथ सत्तम।**
**वत्सं बृहस्पतिं कृत्वा पयश्छन्दोमयं शुचि॥ १४॥**

**पदार्थ–**

**सत्तम** = हे पुण्यात्मा विदुरजी
**अथ** = यसपछि
**ऋषयः** = ऋषिहरूले
**बृहस्पतिं** = बृहस्पतिलाई
**वत्सं** = बाच्छो
**कृत्वा** = बनाएर
**इन्द्रियेषु** = इन्द्रिय (वाक्, मन र श्रोत्र)रूप पात्रमा
**देवीम्** = पृथ्वीरूप देवीबाट
**छन्दोमयं** = वेदरूप
**शुचि** = पवित्र
**पयः** = दूध
**दुदुहुः** = दुहुनुभयो

**वाक्यार्थ–** हे विदुरजी ! यसपछि ऋषिहरूले बृहस्पतिलाई बाच्छो बनाएर इन्द्रिय (वाक्, मन र श्रोत्र)रूप पात्रमा पृथ्वीरूप देवीबाट वेदरूप पवित्र दूध दुहुनुभयो।

**कृत्वा वत्सं सुरगणा इन्द्रं सोममदूदुहन्।**
**हिरण्मयेन पात्रेण वीर्यमोजो बलं पयः॥ १५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सुरगणाः** = देवताहरूले | **हिरण्मयेन** = सुनको | **ओजः** = ओज (इन्द्रियबल) |
| **इन्द्रं** = इन्द्रलाई | **पात्रेण** = भाँडोमा | **बलं** = बल (शारीरिक बल)रूप |
| **वत्सं** = बाच्छो | **सोमम्** = अमृत | **पयः** = दूध |
| **कृत्वा** = बनाएर | **वीर्यम्** = वीर्य (मनोबल) | **अदूदुहन्** = दुहुनुभयो |

**वाक्यार्थ–** देवताहरूले इन्द्रलाई बाच्छो बनाएर सुनको भाँडोमा अमृत, वीर्य (मनोबल), ओज (इन्द्रियबल) र बल (शारीरिक बल)रूप दूध दुहुनुभयो।

**दैतेया दानवा वत्सं प्रह्लादमसुरर्षभम्।**
**विधायादूदुहन् क्षीरमयःपात्रे सुरासवम्॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **दैतेयाः** = दैत्य र | **वत्सं** = बाच्छो | वस्तुरूप |
| **दानवाः** = दानवहरूले | **विधाय** = बनाएर | **क्षीरम्** = दूध |
| **असुरर्षभम्** = असुरश्रेष्ठ | **अयःपात्रे** = फलामको भाँडोमा | **अदूदुहन्** = दुहे |
| **प्रह्लादम्** = प्रह्लाद (प्रह्लाद)लाई | **सुरासवम्** = मदिरा आदि मादक | |

**वाक्यार्थ–** दैत्य र दानवहरूले असुरश्रेष्ठ प्रह्लादलाई बाच्छो बनाएर फलामको भाँडोमा मदिरा आदि मादक वस्तुरूप दूध दुहे।

**गन्धर्वाप्सरसोऽधुक्षन् पात्रे पद्ममये पयः।**
**वत्सं विश्वावसुं कृत्वा गान्धर्वं मधु सौभगम्॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **गन्धर्वाप्सरसः** = गन्धर्व र अप्सराले | **कृत्वा** = बनाएर | **मधु** = माधुर्य र |
| | **पद्ममये** = कमलको | **सौभगम्** = सौन्दर्यरूप |
| **विश्वावसुं** = विश्वावसुलाई | **पात्रे** = भाँडोमा | **पयः** = दूध |
| **वत्सं** = बाच्छो | **गान्धर्वं** = गन्धर्वसम्बन्धी सङ्गीत | **अधुक्षन्** = दुहे |

**वाक्यार्थ–** गन्धर्व र अप्सराले विश्वावसुलाई बाच्छो बनाएर कमलको भाँडोमा गन्धर्वसम्बन्धी

सङ्गीतमाधुर्य र सौन्दर्यरूप दूध दुहे।

**वत्सेन पितरोऽर्यम्णा कव्यं क्षीरमधुक्षत।**

**आमपात्रे महाभागाः श्रद्धया श्राद्धदेवताः॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **श्राद्धदेवताः** = श्राद्धका देवता | **वत्सेन** = बाच्छोद्वारा | **कव्यं** = आफ्नो अन्नरूप |
| **महाभागाः** = पूज्य | **आमपात्रे** = काँचो माटाको भाँडोमा | **क्षीरम्** = दूध |
| **पितरः** = पितृहरूले | | **अधुक्षत** = दुहे |
| **अर्यम्णा** = अर्यमारूप | **श्रद्धया** = श्रद्धापूर्वक | |

**वाक्यार्थ–** श्राद्धका देवता पूज्य पितृहरूले अर्यमारूप बाच्छोद्वारा काँचो माटाको भाँडोमा श्रद्धापूर्वक आफ्नो अन्नरूप दूध दुहे।

**प्रकल्प्य वत्सं कपिलं सिद्धाः सङ्कल्पनामयीम्।**

**सिद्धिं नभसि विद्यां च ये च विद्याधरादयः॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सिद्धाः** = सिद्धहरूले | **नभसि** = आकाशरूप भाँडोमा | **ये** = जो |
| **कपिलं** = कपिल मुनिलाई | **सङ्कल्पनामयीम्** = सङ्कल्पले मात्र प्राप्त हुने | **विद्याधरादयः च** = विद्याधर आदि थिए तिनीहरूले |
| **वत्सं** = बाच्छो | | |
| **प्रकल्प्य** = बनाएर | **सिद्धिं** = अणिमादि सिद्धि (दुहे) | **विद्यां** = विद्यालाई दुहे |

**वाक्यार्थ–** सिद्धहरूले कपिल मुनिलाई बाच्छो बनाएर आकाशरूप भाँडोमा सङ्कल्पले मात्र प्राप्त हुने अणिमादि सिद्धि दुहे। यस्तै विद्याधरहरूले चाहिँ विद्यालाई दुहे।

**अन्ये च मायिनो मायामन्तर्धानाद्भुतात्मनाम्।**

**मयं प्रकल्प्य वत्सं ते दुदुहुर्धारणामयीम्॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अन्ये च** = अरू जो | **वत्सं** = बाच्छो | धारण गर्ने शक्ति भएकी |
| **मायिनः** = किम्पुरुष आदि मायावीहरू छन् | **प्रकल्प्य** = बनाएर | **मायाम्** = मायालाई |
| | **अन्तर्धानाद्भुतात्मनाम्** = अन्तर्धान हुने र | **दुदुहुः** = दुहे |
| **ते** = तिनीहरूले | | |
| **मयं** = मयलाई | **धारणामयीम्** = विचित्र रूप | |

**वाक्यार्थ–** अरू किम्पुरुष आदि मायावीहरूले मयलाई बाच्छो बनाएर अन्तर्धान हुने र विचित्र

रूप धारण गर्ने शक्ति भएकी मायालाई दुहे।

**यक्षरक्षांसि भूतानि पिशाचाः पिशिताशनाः।**
**भूतेशवत्सा दुदुहुः कपाले क्षतजासवम्॥ २१॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भूतेशवत्साः** = सम्पूर्ण प्राणीका ईश्वर रुद्रलाई बाच्छो बनाएका | **यक्षरक्षांसि** = यक्षहरू, राक्षसहरू र | **क्षतजासवम्** = रगतरूप मादक पदार्थ |
| **पिशिताशनाः** = मासु खाने | **भूतानि** = भूतहरूले | **दुदुहुः** = दुहे |
| **पिशाचाः** = पिशाचहरू | **कपाले** = खप्परमा | |

**वाक्यार्थ–** रुद्रलाई बाच्छो बनाएका मासु खाने पिशाच, यक्ष, राक्षस र भूतहरूले खप्परमा रगतरूप मादक पदार्थ दुहे।

**तथाहयो दन्दशूकाः सर्पा नागाश्च तक्षकम्।**
**विधाय वत्सं दुदुहुर्बिलपात्रे विषं पयः॥ २२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तथा** = त्यस्तै | **नागाः च** = नागहरूले पनि | **विषं** = विषरूप |
| **अहयः** = सर्प | **तक्षकम्** = तक्षक नागलाई | **पयः** = दूध |
| **दन्दशूकाः** = बिसालु सर्प | **वत्सं** = बाच्छो | **दुदुहुः** = दुहे |
| **सर्पाः** = घस्रेर हिँड्ने विषयुक्त बिच्छी आदिले र | **विधाय** = बनाएर | |
| | **बिलपात्रे** = मुखरूप पात्रमा | |

**वाक्यार्थ–** त्यस्तै सर्प, बिसालु सर्प, घस्रेर हिँड्ने विषयुक्त बिच्छी आदि र नागहरूले तक्षक नागलाई बाच्छो बनाएर मुखरूप पात्रमा विषरूप दूध दुहे।

**पशवो यवसं क्षीरं वत्सं कृत्वा च गोवृषम्।**
**अरण्यपात्रे चाधुक्षन् मृगेन्द्रेण च दंष्ट्रिणः॥ २३॥**
**क्रव्यादाः प्राणिनः क्रव्यं दुदुहुः स्वे कलेवरे।**
**सुपर्णवत्सा विहगाश्चरं चाचरमेव च॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पशवः** = पशुहरूले | **वत्सं** = बाच्छो | **अरण्यपात्रे** = जङ्गलरूप भाँडोमा |
| **गोवृषम्** = साँढेलाई | **कृत्वा** = बनाएर | **यवसं** = घाँसरूप |

**क्षीरं** = दूध (दुहे)
**दंष्ट्रिणः** = उन्नत दाह्रा भएका
**क्रव्यादाः** = मांसभक्षी
**प्राणिनः च** = प्राणीले
**मृगेन्द्रेण** = सिंहरूप बाच्छोका सहायताले
**स्वे** = आफ्नो
**कलेवरे** = शरीररूप भाँडोमा
**क्रव्यं** = काचो मासु
**अधुक्षन्** = दुहे
**सुपर्णवत्साः** = गरुडलाई बाच्छो बनाएका
**विहगाः च** = पक्षीहरूले पनि
**चरं** = भुसुना आदि चर
**अचरम् च एव** = फल आदि अचर पदार्थ
**दुदुहुः** = दुहे

**वाक्यार्थ–** पशुहरूले साँढेलाई बाच्छो बनाएर जङ्गलरूप भाँडोमा घाँसरूप दूध दुहे। उन्नत दाह्रा भएका मांसभक्षी प्राणीले सिंहरूप बाच्छोका सहायताले आफ्नो शरीररूप भाँडोमा काचो मासु दुहे। गरुडलाई बाच्छो बनाएका पक्षीहरूले पनि कीटपतङ्ग आदि चर र फल आदि अचर पदार्थ दुहे।

**वटवत्सा वनस्पतयः पृथग्रसमयं पयः।**
**गिरयो हिमवद्वत्सा नानाधातून् स्वसानुषु॥ २५॥**

**पदार्थ–**

**वटवत्साः** = बरलाई बाच्छो बनाएका
**वनस्पतयः** = वृक्षहरूले
**पृथग्रसमयं** = अनेक रसरूप
**पयः** = दूध र
**हिमवद्वत्साः** = हिमालयलाई बाच्छो बनाएका
**गिरयः** = पर्वतहरूले
**स्वसानुषु** = आफ्ना शिखररूप भाँडोमा
**नानाधातून्** = सुन चाँदी आदि विभिन्न धातु दुहे

**वाक्यार्थ–** बरलाई बाच्छो बनाएका वृक्षहरूले अनेक रसरूप दूध र हिमालयलाई बाच्छो बनाएका पर्वतहरूले आफ्ना शिखररूप भाँडोमा सुन चाँदि आदि विभिन्न धातु दुहे।

**सर्वे स्वमुख्यवत्सेन स्वे स्वे पात्रे पृथक् पयः।**
**सर्वकामदुघां पृथ्वीं दुदुहुः पृथुभाविताम्॥ २६॥**

**पदार्थ–**

**सर्वे** = सबैले
**स्वमुख्यवत्सेन** = आफ्नो जातिको मुख्यलाई बाच्छो बनाएर
**स्वे स्वे** = आ-आफ्ना
**पात्रे** = भाँडामा
**पृथुभाविताम्** = पृथुबाट वशमा ल्याइएकी
**सर्वकामदुघां** = सम्पूर्ण इच्छाअनुसारका वस्तुलाई प्रदान गर्ने
**पृथ्वीं** = पृथ्वीबाट
**पृथक्** = फरक-फरक पदार्थरूप
**पयः** = दूध
**दुदुहुः** = दुहे

**वाक्यार्थ–** सबैले आफ्नो जातिको मुख्यलाई बाच्छो बनाएर आ-आफ्ना भाँडामा पृथुबाट वशमा ल्याइएकी पृथ्वीबाट सम्पूर्ण इच्छाअनुसारका वस्तुलाई प्रदान गर्ने पृथ्वीबाट फरक-फरक पदार्थरूप दूध दुहे।

**एवं पृथ्वादयः पृथ्वीमन्नादाः स्वन्नमात्मनः।**
**दोहवत्सादिभेदेन क्षीरभेदं कुरूद्वह ॥ २७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कुरूद्वह** = हे कुरुश्रेष्ठ विदुरजी | **दोहवत्सादिभेदेन** = भिन्न-भिन्न दुहुने पात्र र बाच्छाद्वारा | **क्षीरभेदं** = फरक-फरक दूध |
| **एवं** = यसप्रकार | **आत्मनः** = आफ्नो | **पृथ्वीम्** = पृथ्वीबाट (दुहे) |
| **अन्नादाः** = अन्नभोजी | **स्वन्नम्** = अन्नरूप | |
| **पृथ्वादयः** = पृथु आदि सबैले | | |

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ विदुरजी ! यसप्रकार अन्नभोजी पृथु आदि सबैले पृथ्वीबाट भिन्न-भिन्न दुहुने पात्र र बाच्छाद्वारा आफ्नो अन्नरूप फरक-फरक दूध दुहे।

**ततो महीपतिः प्रीतः सर्वकामदुघां पृथुः।**
**दुहितृत्वे चकारेमां प्रेम्णा दुहितृवत्सलः॥ २८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ततः** = त्यसपछि | **महीपतिः** = राजा | **इमां** = यी पथिवीलाई |
| **प्रीतः** = खुसी भएका | **पृथुः** = पृथुले | **प्रेम्णा** = प्रेमपूर्वक |
| **दुहितृवत्सलः** = पृथिवीलाई छोरीसमान स्नेह गर्ने | **सर्वकामदुघां** = सम्पूर्ण इच्छित वस्तु प्रदान गर्ने | **दुहितृत्वे** = छोरीको रूपमा |
| | | **चकार** = स्वीकार गर्नुभयो |

**वाक्यार्थ–** त्यसपछि खुसी भएका र पृथिवीलाई छोरीसमान स्नेह गर्ने राजा पृथुले सम्पूर्ण इच्छाअनुसारका वस्तु प्रदान गर्ने यी पृथिवीलाई प्रेमपूर्वक छोरीको रूपमा स्वीकार गर्नुभयो।

**चूर्णयन् स्वधनुष्कोट्या गिरिकूटानि राजराट्।**
**भूमण्डलमिदं वैन्यः प्रायश्चक्रे समं विभुः॥ २९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राजराट्** = राजाका पनि राजा | **गिरिकूटानि** = पर्वतका चुचुरालाई | **प्रायः** = प्रायः |
| **विभुः** = समर्थशाली | **चूर्णयन्** = फोर्दै | **समं** = समतल |
| **वैन्यः** = पृथुले | **इदं** = यस | **चक्रे** = बनाउनुभयो |
| **स्वधनुष्कोट्या** = आफ्नो धनुको टुप्पाले | **भूमण्डलम्** = भूमण्डललाई | |

**वाक्यार्थ–** राजाका पनि राजा समर्थशाली पृथुले आफ्नो धनुको टुप्पाले पर्वतका चुचुरालाई फोर्दै यस भूमण्डललाई प्रायः समतल बनाउनुभयो।

**अथास्मिन् भगवान् वैन्यः प्रजानां वृत्तिदः पिता ।**
**निवासान् कल्पयाञ्चक्रे तत्र तत्र यथार्हतः ॥ ३० ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अथ** = यसपछि | **भगवान्** = भगवान् | **यथार्हतः** = यथायोग्य |
| **प्रजानां** = प्रजाहरूका | **वैन्यः** = पृथुले | **निवासान्** = निवासस्थानहरू |
| **वृत्तिदः** = जीविकादाता एवं | **अस्मिन्** = यस भूमण्डलमा | **कल्पयाञ्चक्रे** = बनाउनुभयो |
| **पिता** = पिता | **तत्र तत्र** = जहाँतहीँ | |

**वाक्यार्थ–** यसपछि प्रजाहरूका जीविकादाता एवं पिता भगवान् पृथुले यस भूमण्डलमा जहाँतहीँ यथायोग्य निवासस्थानहरू बनाउनुभयो ।

**ग्रामान् पुरः पत्तनानि दुर्गाणि विविधानि च ।**
**घोषान् व्रजान् सशिविरानाकरान् खेटखर्वटान् ॥ ३१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ग्रामान्** = गाउँ | **घोषान्** = गोठालाको निवासस्थान | **आकरान्** = खानि |
| **पुरः** = सहर | **व्रजान्** = गोठ | **खेटखर्वटान् च** = किसान बस्ने गाउँ र पर्वतनजिकै रहेका अन्य गाउँहरू पनि (बनाउनुभयो) |
| **पत्तनानि** = नगर | **सशिविरान्** = सेनाको शिविरसहित | |
| **विविधानि** = अनेक प्रकारका | | |
| **दुर्गाणि** = किल्ला | | |

**वाक्यार्थ–** गाउँ, सहर, नगर, अनेक प्रकारका किल्ला, गोठालाको निवासस्थान, गोठ, सेनाको शिविर, खानि, किसान बस्ने गाउँ र पर्वतनजिकै रहेका अन्य गाउँहरू पनि बनाउनुभयो ।

**प्राक् पृथोरिह नैवैषा पुरग्रामादिकल्पना ।**
**यथासुखं वसन्ति स्म तत्र तत्राकुतोभयाः ॥ ३२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पृथोः** = राजा पृथुभन्दा | **पुरग्रामादिकल्पना** = सहर, गाउँ आदिको रचना | **तत्र तत्र** = जहाँतहीँ |
| **प्राक्** = अगाडि | **न एव** = थिएन (सबै व्यक्ति) | **अकुतोभयाः** = निर्भय भएर |
| **इह** = यस भूमण्डलमा | **यथासुखं** = आ-आफ्नो सुविधाअनुसार | **वसन्ति स्म** = बस्दथे |
| **एषा** = यो | | |

**वाक्यार्थ–** राजा पृथुभन्दा अगाडि यस भूमण्डलमा सहर, गाउँ आदिको निर्माण गरिएको थिएन। सबै व्यक्ति आ-आफ्नो सुविधाअनुसार जहाँतहीँ निर्भय भएर बस्दथे ।

**अध्याय विवरण–** यस अध्यायमा पृथ्वीको दोहन गरिएको कुरा वर्णन गरिएको छ। पृथ्वी धरित्री हुन् अर्थात् उनले अन्न, औषधि र रत्न आदि समस्त वस्तुहरू धारण गर्दछिन्। यस अध्यायभरि नै पृथ्वीबाट आ-आफ्नो योग्य भोज्य पदार्थ तथा रत्नहरू दोहन गरिएको वर्णन गरिएको छ। मनुष्यहरूले मनुलाई बाच्छो बनाई गाईरूप पृथ्वीबाट सम्पूर्ण औषधिहरू, देवताहरूले इन्द्रको माध्यमले अमृत, पितृहरूले कव्य अन्न, सिद्धहरूले सिद्धि, मायावीहरूले माया, वनस्पतिहरूले रस, पहाड तथा हिमालहरूले रत्नहरू र पशुहरूले घाँस पृथ्वीबाट दोहन गरेका छन्। अग्नि अनि वेदपाठी ब्राह्मणहरूमा समर्पित गरिएको पार्थिव अन्नबाट नै पितृ, देवता र यक्ष आदिको समेत तृप्ति हुने भएकाले समस्त लौकिक र अलौकिक वस्तुहरूको दोहन पृथ्वीबाट भएको प्रसङ्ग यहाँ बताइएको हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे**

**पृथुविजये अष्टादशोऽध्यायः॥ १८॥**

# अथ एकोनविंशोऽध्यायः

## राजा पृथुका सय अश्वमेध यज्ञ

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**अथादीक्षत राजा तु हयमेधशतेन सः।**

**ब्रह्मावर्ते मनोः क्षेत्रे यत्र प्राची सरस्वती ॥ १ ॥**

पदार्थ–

**अथ** = यसपछि
**सः** = उहाँ
**राजा तु** = पृथु राजाले त
**यत्र** = जहाँ
**सरस्वती** = सरस्वती नदी
**प्राची** = पूर्वमुखी भएर (बग्दछिन्)
**मनोः** = मनुको
**ब्रह्मावर्ते** = ब्रह्मावर्त नामक
**क्षेत्रे** = क्षेत्रमा
**हयमेधशतेन** = सय अश्वमेध यज्ञको
**अदीक्षत** = दीक्षा लिनुभयो

**वाक्यार्थ–** हे विदुरजी ! यसपछि पृथु राजाले जहाँ सरस्वती नदी पूर्वमुखी भएर बग्दछिन् मनुको ब्रह्मावर्तनामक त्यस क्षेत्रमा सय अश्वमेध यज्ञको सङ्कल्पसहित दीक्षा ग्रहण गर्नुभयो।

**तदभिप्रेत्य भगवान् कर्मातिशयमात्मनः।**

**शतक्रतुर्न ममृषे पृथोर्यज्ञमहोत्सवम् ॥ २ ॥**

पदार्थ–

**तत् अभिप्रेत्य** = यो थाहा पाएर
**भगवान्** = भगवान्
**शतक्रतुः** = इन्द्रले
**आत्मनः** = आफ्नो
**कर्मातिशयम्** = कर्मलाई जित्ने
**पृथोः** = राजा पृथुको
**यज्ञमहोत्सवम्** = यज्ञको महोत्सव
**न ममृषे** = सहन गर्न सकेनन्

**वाक्यार्थ–** यो थाहा पाएर भगवान् इन्द्रले आफ्नो पुण्य कर्मलाई जित्ने राजा पृथुको यज्ञको महोत्सव सहन गर्न सकेनन्।

**यत्र यज्ञपतिः साक्षाद् भगवान् हरिरीश्वरः।**

**अन्वभूयत सर्वात्मा सर्वलोकगुरुः प्रभुः ॥ ३ ॥**

**अन्वितो ब्रह्मशर्वाभ्यां लोकपालैः सहानुगैः।**

**उपगीयमानो गन्धर्वैर्मुनिभिश्चाप्सरोगणैः ॥ ४ ॥**

पदार्थ—

**यत्र** = पृथुको जुन यज्ञमा
**ब्रह्मशर्वाभ्यां** = ब्रह्माजी, शिवजी
**सहानुगैः** = अनुचरका साथ
**लोकपालैः** = लोकपाल
**मुनिभिः** = मुनिहरूले
**अन्वितः** = सहित भएर
**गन्धर्वैः** = गन्धर्व
**अप्सरोगणैः च** = अप्सराहरूद्वारा
**उपगीयमानः** = कीर्तिगान गरिनुभएका
**सर्वात्मा** = सबैका अन्तरात्मा
**सर्वलोकगुरुः** = सम्पूर्ण संसारका गुरु
**यज्ञपतिः** = यज्ञपति
**ईश्वरः** = जगदीश्वर
**प्रभुः** = समर्थशाली
**साक्षात्** = साक्षात्
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**अन्वभूयत** = प्रत्यक्ष हुनुभयो

**वाक्यार्थ—** पृथुको त्यस यज्ञमा ब्रह्माजी, शिवजी र अनुचरका साथ लोकपाल एवं मुनिहरूले सहित भएका एवं गन्धर्व र अप्सराहरूद्वारा कीर्तिगान गरिएका सबैका अन्तरात्मा सम्पूर्ण संसारका गुरु यज्ञपति जगदीश्वर समर्थशाली साक्षात् भगवान् श्रीहरि प्रत्यक्षरूपमा प्रकट हुनुभयो।

**सिद्धा विद्याधरा दैत्या दानवा गुह्यकादयः।**
**सुनन्दनन्दप्रमुखाः पार्षदप्रवरा हरेः॥ ५॥**
**कपिलो नारदो दत्तो योगेशाः सनकादयः।**
**तमन्वीयुर्भागवता ये च तत्सेवनोत्सुकाः॥ ६॥**

पदार्थ—

**सिद्धाः** = सिद्ध
**विद्याधराः** = विद्याधर
**दैत्याः** = दैत्य
**दानवाः** = दानव
**गुह्यकादयः** = यक्ष आदि
**सुनन्दनन्दप्रमुखाः** = सुनन्द, नन्द आदि
**हरेः** = भगवान् श्रीहरिका
**पार्षदप्रवराः** = पार्षदगण
**कपिलः** = कपिल
**नारदः** = नारद
**दत्तः** = दत्तात्रेय
**सनकादयः** = सनक आदि
**योगेशाः** = योगेश्वर एवं
**ये** = अरू जो
**तत्सेवनोत्सुकाः** = उहाँको सेवा गर्न उत्सुक
**भागवताः च** = भक्तहरू (हुनुहुन्छ उहाँहरू सबै)
**तम्** = उहाँ भगवान्सँगै
**अन्वीयुः** = आउनुभयो

**वाक्यार्थ—** सिद्ध, विद्याधर, दैत्य, दानव, यक्ष, सुनन्द, नन्द आदि भगवान् श्रीहरिका पार्षदगण कपिल, नारद, दत्तात्रेय, सनक आदि योगेश्वर एवं भगवान्को सेवा गर्न उत्सुक अन्य सम्पूर्ण भक्तहरू भगवान्सँगै आउनुभयो।

**यत्र धर्मदुघा भूमिः सर्वकामदुघा सती।**
**दोग्धि स्माभीप्सितानर्थान् यजमानस्य भारत॥ ७॥**

**पदार्थ–**

**भारत** = हे विदुरजी
**यत्र** = जुन यज्ञमा
**सर्वकामदुघा** = सम्पूर्ण कामना प्रदान गर्ने (यसैले)
**धर्मदुघा सती** = धर्मका साधनभूत सम्पूर्ण पदार्थ प्रदान गर्ने भएकी
**भूमिः** = पृथिवीले
**यजमानस्य** = यजमानका
**अभीप्सितान्** = इच्छित
**अर्थान्** = सम्पूर्ण कामनाहरू
**दोग्धि स्म** = पूरा गरेकी थिइन्

**वाक्यार्थ–** हे विदुरजी ! त्यस यज्ञमा कामना र धर्मका साधनभूत सम्पूर्ण पदार्थ प्रदान गर्ने पृथिवीले यजमानले चाहना गरेका सम्पूर्ण कामनाहरू पूरा गरेकी थिइन्।

**ऊहुः सर्वरसान् नद्यः क्षीरदध्यन्नगोरसान्।**
**तरवो भूरिवर्ष्माणः प्रासूयन्त मधुच्युतः ॥ ८ ॥**

**पदार्थ–**

**नद्यः** = नदीहरू
**क्षीरदध्यन्नगोरसान्** = दूध, दही, अन्न एवं घिउ, मही आदि गोरस र अन्य
**सर्वरसान्** = सम्पूर्ण रसहरू
**ऊहुः** = बगाउँदथे
**तरवः** = रुखहरू
**भूरिवर्ष्माणः** = ठुलाठुला भएर
**मधुच्युतः** = मह चुहाउने गरी
**प्रासूयन्त** = फलेका थिए

**वाक्यार्थ–** नदीहरू दूध, दही, घिउ, मही आदि गोरस अन्न एवं अन्य सम्पूर्ण किसिमका रसहरू बगाउँदथे। रुखहरू ठुलाठुला भएर मह चुहाउने गरी फलेका थिए।

**सिन्धवो रत्ननिकरान् गिरयोऽन्नं चतुर्विधम्।**
**उपायनमुपाजह्रुः सर्वे लोकाः सपालकाः ॥ ९ ॥**

**पदार्थ–**

**सिन्धवः** = समुद्रहरूले
**रत्ननिकरान्** = रत्नराशि
**गिरयः** = पर्वतहरूले
**चतुर्विधम्** = खाने, पिउने, चुस्ने र चाट्ने गरी चार प्रकारका
**अन्नं** = अन्न
**सर्वे** = सबै
**सपालकाः** = लोकपालले सहित
**लोकाः** = प्रजाहरूले
**उपायनम्** = उपहार
**उपाजह्रुः** = अर्पण गरे

**वाक्यार्थ–** समुद्रहरूले रत्नराशि एवं पर्वतहरूले खाने, पिउने, चुस्ने र चाट्ने गरी चार प्रकारका अन्न एवं सबै लोकपाल सहित प्रजाहरूले पनि त्यस यज्ञमा उपहार अर्पण गरे।

**इति चाधोक्षजेशस्य पृथोस्तु परमोदयम्।**
**असूयन् भगवानिन्द्रः प्रतिघातमचीकरत् ॥ १० ॥**

पदार्थ—
**इति** = यसप्रकार
**अधोक्षजेशस्य** = भगवान् श्रीहरिलाई ईश्वर मान्ने
**पृथोः तु** = राजा पृथुको
(यज्ञको)
**परमोदयम्** = तीव्र उत्कर्षलाई
**असूयन्** = सहन गर्न नसक्ने (ईर्ष्या गर्ने)
**भगवान्** = भगवान्
**इन्द्रः** = इन्द्रले
**प्रतिघातम्** = विघ्न
**अचीकरत्** = गरे

**वाक्यार्थ—** यसप्रकार भगवान् श्रीहरिलाई ईश्वर मान्ने राजा पृथुको तीव्र उत्कर्षमाथि ईर्ष्या गर्ने भगवान् इन्द्रले सो यज्ञमा विघ्न गरे।

**चरमेणाश्वमेधेन यजमाने यजुष्पतिम्।**
**वैन्ये यज्ञपशुं स्पर्धन्नपोवाह तिरोहितः॥ ११॥**

पदार्थ—
**वैन्ये** = वेनपुत्र राजा पृथुले
**चरमेण** = अन्तिम (सयौँ)
**अश्वमेधेन** = अश्वमेध यज्ञद्वारा
**यजुष्पतिम्** = यज्ञेश्वर भगवान्को
**यजमाने** = पूजा गरिरहँदा
**स्पर्धन्** = ईर्ष्या गर्ने इन्द्रले
**तिरोहितः** = लुकेर
**यज्ञपशुं** = यज्ञीय पशु (घोडा)
**अपोवाह** = हरण गर्नुभयो

**वाक्यार्थ—** राजा पृथुले अन्तिम अथवा एक सयौँ अश्वमेध यज्ञद्वारा यज्ञेश्वर भगवान्को पूजा गरिरहँदा ईर्ष्या गर्ने इन्द्रले लुकेर यज्ञीय पशु (घोडा) हरण गरे।

**तमत्रिर्भगवानैक्षत् त्वरमाणं विहायसा।**
**आमुक्तमिव पाखण्डं योऽधर्मे धर्मविभ्रमः॥ १२॥**

पदार्थ—
**अधर्मे** = अधर्ममा
**धर्मविभ्रमः** = धर्मको भ्रम गराउने
**यः** = जुन वेश छ
**तम्** = त्यस्तो
**पाखण्डं** = पाखण्ड वेशलाई
**आमुक्तम् इव** = कवचजस्तै गरी धारण गरेका
**विहायसा** = आकाश मार्गबाट
**त्वरमाणं** = छिटोछिटो गइरहेका इन्द्रलाई
**भगवान्** = भगवान्
**अत्रिः** = अत्रि ऋषिले
**ऐक्षत्** = देख्नुभयो

**वाक्यार्थ—** अधर्ममा धर्मको भ्रम गराउने पाखण्ड वेशलाई कवचजस्तै गरी धारण गरेका र आकाश मार्गबाट छिटोछिटो गइरहेका इन्द्रलाई भगवान् अत्रि ऋषिले देख्नुभयो।

**अत्रिणा चोदितो हन्तुं पृथुपुत्रो महारथः।**
**अन्वधावत सङ्क्रुद्धस्तिष्ठ तिष्ठेति चाब्रवीत्॥ १३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अत्रिणा** = अत्रिद्वारा (इन्द्रलाई) | **सङ्क्रुद्धः** = रिसाएका | **अन्वधावत** = पछि लागे |
| **हन्तुं** = मार्न | **महारथः** = महारथी | **तिष्ठ तिष्ठ इति** = पख् पख् भनेर |
| **चोदितः** = प्रेरित र | **पृथुपुत्रः च** = पृथुका छोरा पनि | **अब्रवीत्** = भने |

**वाक्यार्थ–** अत्रिद्वारा इन्द्रलाई मार्न प्रेरित गरिएका र रिसाएका पृथुका महारथी छोरा इन्द्रको पछि लागे र इन्द्रलाई 'पख् पख्' भने।

**तं तादृशाकृतिं वीक्ष्य मेने धर्मं शरीरिणम्।**
**जटिलं भस्मनाच्छन्नं तस्मै बाणं न मुञ्चति ॥ १४ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **जटिलं** = जटाधारी | **तं** = ती इन्द्रलाई | **तस्मै** = ती इन्द्रमाथि |
| **भस्मना** = भस्मले | **वीक्ष्य** = देखेर (पृथुपुत्रले) | **बाणं** = बाण |
| **आच्छन्नं** = ढाकिएको | **शरीरिणम्** = शरीरधारी | **न मुञ्चति** = छोडेनन् |
| **तादृशाकृतिं** = त्यस्तो रूप भएका | **धर्मं** = धर्म | |
| | **मेने** = सम्झे र | |

**वाक्यार्थ–** जटाधारी र भस्मले ढाकिएको रूप भएका इन्द्रलाई देखेर पृथुपुत्रले उनलाई शरीरधारी धर्म सम्झे र उनमाथि बाण छोडेनन्।

**वधान्निवृत्तं तं भूयो हन्तवेऽत्रिरचोदयत्।**
**जहि यज्ञहनं तात महेन्द्रं विबुधाधमम् ॥ १५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **वधात्** = (इन्द्रको) वधबाट | **यज्ञहनं** = यज्ञमा विघ्न गर्ने | **भूयः** = फेरि |
| **निवृत्तं** = रोकिएका | **विबुधाधमम्** = देवताहरूमा अधम | **हन्तवे** = मार्नका लागि |
| **तं** = ती पृथुपुत्रलाई | **महेन्द्रं** = इन्द्रलाई | **अचोदयत्** = प्रेरित गर्नुभयो |
| **अत्रिः** = अत्रि ऋषिले | **जहि** = मार (भनी) | |
| **तात** = हे बाबु | | |

**वाक्यार्थ–** इन्द्रलाई नमार्ने विचार गरेका ती पृथुपुत्रलाई अत्रि ऋषिले 'हे बाबु ! यज्ञमा विघ्न गर्ने भएको र देवताहरूमा अधम इन्द्रलाई मार' भनी फेरि मार्नका लागि प्रेरित गर्नुभयो।

**एवं वैन्यसुतः प्रोक्तस्त्वरमाणं विहायसा।**
**अन्वद्रवदभिक्रुद्धो रावणं गृध्रराडिव ॥ १६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार (अत्रिद्वारा) | **विहायसा** = आकाश मार्गबाट (भाग्न) | **गृध्रराट्** = गृध्रराजा जटायुले |
| **प्रोक्तः** = भनिएका | **त्वरमाणं** = हतार गरिरहेको | **इव** = जस्तै (इन्द्रमाथि) |
| **वैन्यसुतः** = पृथुपुत्र | **रावणं** = रावणलाई | **अन्वद्रवत्** = जाइलागे |
| **अभिक्रुद्धः** = रिसाएर | | |

**वाक्यार्थ–** यसप्रकार अत्रिद्वारा प्रेरित पृथुपुत्र रिसाएर आकाश मार्गबाट भाग्न हतार गरिरहेको रावणलाई गृध्रराजा जटायुले जस्तै गरी इन्द्रमाथि जाइलागे।

**सोऽश्वं रूपं च तद्धित्वा तस्मा अन्तर्हितः स्वराट्।**
**वीरः स्वपशुमादाय पितुर्यज्ञमुपेयिवान्॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सः** = ती | **हित्वा** = छोडेर | **आदाय** = लिएर |
| **स्वराट्** = स्वर्गका राजा इन्द्रले | **अन्तर्हितः** = लुके र (त्यसपछि) | **पितुः** = पिताको |
| **तस्मै** = ती पृथुपुत्रका लागि | **वीरः** = वीर पृथुपुत्रले | **यज्ञम्** = यज्ञमा |
| **अश्वं** = घोडा | **स्वपशुम्** = आफ्नो यज्ञीय पशु (घोडा)लाई | **उपेयिवान्** = आइपुगे |
| **तत् रूपं च** = त्यस पाखण्ड वेशलाई पनि | | |

**वाक्यार्थ–** स्वर्गका राजा इन्द्रले पृथुपुत्रका लागि घोडा र त्यस पाखण्ड वेशलाई छोडेर लुके। वीर पृथुपुत्र आफ्नो यज्ञीय पशु (घोडा)लाई लिएर पिताको यज्ञमा आइपुगे।

**तत् तस्य चाद्भुतं कर्म विचक्ष्य परमर्षयः।**
**नामधेयं ददुस्तस्मै विजिताश्व इति प्रभो॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रभो** = शक्तिशाली हे विदुरजी | **कर्म** = कर्म | **विजिताश्वः** = विजिताश्व |
| **तस्य** = ती पृथुपुत्रको | **विचक्ष्य** = देखेर | **इति** = यो |
| **तत्** = त्यो | **परमर्षयः** = ऋषिहरूले | **नामधेयं च** = नाम |
| **अद्भुतं** = अद्भुत | **तस्मै** = उनलाई | **ददुः** = दिनुभयो |

**वाक्यार्थ–** शक्तिशाली हे विदुरजी ! ती पृथुपुत्रको त्यो अद्भुत कर्म देखेर ऋषिहरूले उनलाई विजिताश्व यो नाम राखिदिनुभयो।

**उपसृज्य तमस्तीव्रं जहाराश्वं पुनर्हरिः।**
**चषालयूपतश्छन्नो हिरण्यरशनं विभुः॥ १९॥**

पदार्थ–

**विभुः** = शक्तिशाली
**हरिः** = इन्द्रले
**तीव्रं** = गाढा
**तमः** = अन्धकार
**उपसृज्य** = फैलाएर र
**छन्नः** = लुकेर
**पुनः** = फेरि
**चषालयूपतः** = यज्ञीय मौलोबाट
**हिरण्यरशनं** = सुनको साङ्लोसहित
**अश्वं** = घोडालाई
**जहार** = हरण गरे

**वाक्यार्थ–** घोडा हरण गर्नका लागि समर्थ इन्द्रले गाढा अन्धकार फैलाउँदै लुकेर फेरि यज्ञीय मौलोमा बाँधेको सुनको साङ्लोसहित भएको घोडा हरण गरे।

**अत्रिः सन्दर्शयामास त्वरमाणं विहायसा ।**
**कपालखट्वाङ्गधरं वीरो नैनमबाधत ॥ २० ॥**

पदार्थ–

**अत्रिः** = अत्रि ऋषिले
**विहायसा** = आकाशमार्गबाट
**त्वरमाणं** = हतार गरेर जान लागिरहेका इन्द्रलाई
**सन्दर्शयामास** = देखाउनुभयो तर
**कपालखट्वाङ्गधरं** = कपाल र खट्वाङ्ग लिएका
**एनम्** = यी इन्द्रलाई (महात्मा सम्झेर)
**वीरः** = वीर पृथुपुत्रले
**न अबाधत** = रोकेनन्

**वाक्यार्थ–** अत्रि ऋषिले आकाशमार्गबाट हतार गरेर जान लागिरहेका इन्द्रलाई देखाउनुभयो तर कपाल र खट्वाङ्ग लिएका इन्द्रलाई महात्मा सम्झेर वीर पृथुपुत्रले रोकेनन्।

**अत्रिणा चोदितस्तस्मै सन्दधे विशिखं रुषा ।**
**सोऽश्वं रूपं च तद् हित्वा तस्थावन्तर्हितः स्वराट् ॥ २१ ॥**

पदार्थ–

**अत्रिणा** = अत्रि ऋषिद्वारा
**चोदितः** = सम्झाइएका
**सः** = ती पृथुपुत्रले
**तस्मै** = ती इन्द्रलाई (लक्ष्य बनाएर)
**रुषा** = रिसाएर (धनुमा)
**विशिखं** = बाण
**सन्दधे** = चढाए
**स्वराट्** = स्वर्गका राजा इन्द्र पनि
**अश्वं** = घोडा
**तत् रूपं च** = त्यस पाखण्ड वेशलाई पनि
**हित्वा** = छोडेर
**अन्तर्हितः** = लुकेर
**तस्थौ** = रहे

**वाक्यार्थ–** अत्रि ऋषिद्वारा यी महात्मा होइनन् इन्द्र हुन् भनी सम्झाइएका ती पृथुपुत्रले इन्द्रलाई लक्ष्य बनाएर धनुमा बाण चढाए। स्वर्गका राजा इन्द्र पनि घोडा र त्यस पाखण्ड वेशलाई छोडेर लुकेर रहन लागे।

**वीरश्चाश्वमुपादाय पितृयज्ञमथाव्रजत्।**
**तदवद्यं हरे रूपं जगृहुर्ज्ञानदुर्बलाः॥ २२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अथ** = यसपछि | **अव्रजत्** = गए | **ज्ञानदुर्बलाः** = मन्द बुद्धि भएका व्यक्तिले |
| **वीरः च** = वीर पृथुपुत्र पनि | **हरेः** = इन्द्रको | **जगृहुः** = ग्रहण गरे |
| **अश्वम्** = घोडा | **तत्** = त्यस | |
| **उपादाय** = लिएर | **अवद्यं** = निन्दनीय | |
| **पितृयज्ञम्** = पिताको यज्ञमा | **रूपं** = रूपलाई | |

**वाक्यार्थ–** यसपछि वीर पृथुपुत्र पनि घोडा लिएर पिताको यज्ञमा गए। इन्द्रको त्यस निन्दनीय रूपलाई मन्द बुद्धि भएका व्यक्तिले ग्रहण गरे।

**यानि रूपाणि जगृहे इन्द्रो हयजिहीर्षया।**
**तानि पापस्य खण्डानि लिङ्गं खण्डमिहोच्यते॥ २३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **इन्द्रः** = इन्द्रले | **जगृहे** = ग्रहण गरे | **खण्डम्** = खण्ड भनेर |
| **हयजिहीर्षया** = घोडा हरण गर्ने इच्छाले | **तानि** = ती | **लिङ्गं** = चिह्न |
| **यानि** = जुन-जुन | **पापस्य** = पापका | **उच्यते** = बुझिन्छ |
| **रूपाणि** = रूप (पाखण्डी रूप) | **खण्डानि** = चिह्न भए | |
| | **इह** = यहाँ | |

**वाक्यार्थ–** इन्द्रले घोडा हरण गर्ने इच्छाले जुन-जुन रूप (पाखण्डी रूप) ग्रहण गरे ती पापका चिह्न हुन्। यहाँ खण्ड भनेको चिह्न हो भन्ने बुझ्नुपर्छ।

**एवमिन्द्रे हरत्यश्वं वैन्ययज्ञजिघांसया।**
**तद्गृहीतविसृष्टेषु पाखण्डेषु मतिर्नृणाम्॥ २४॥**
**धर्म इत्युपधर्मेषु नग्नरक्तपटादिषु।**
**प्रायेण सज्जते भ्रान्त्या पेशलेषु च वाग्मिषु॥ २५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एवम्** = यसप्रकार | पृथुको यज्ञ विध्वंस गर्ने इच्छाले | **अश्वं** = घोडा |
| **वैन्ययज्ञजिघांसया** = राजा | **इन्द्रे** = इन्द्रले | **हरति** = हरण गर्दा |

**तद्गृहीतविसृष्टेषु** = उनले लिएका र छोडेका
**उपधर्मेषु** = उपधर्मरूप
**पाखण्डेषु** = पाखण्ड वेश भएका
**पेशलेषु** = चतुर
**वाग्मिषु** = तर्कशील
**नग्नरक्तपटादिषु** = नग्न (जैन), रक्ताम्बर (बौद्ध) आदिमा
**धर्मः** = धर्म
**इति** = भनेर
**प्रायेण** = प्रायः गरेर
**भ्रान्त्या** = भ्रमले
**नृणाम्** = मानिसहरूको
**मतिः** = बुद्धि
**सज्जते च** = आसक्त पनि हुन्छ

**वाक्यार्थ—** यसप्रकार राजा पृथुको यज्ञ विध्वंस गर्ने इच्छाले इन्द्रले घोडा हरण गर्दा उनले लिएका र छोडेका उपधर्मरूप पाखण्ड वेश भएका चतुर र तर्कशील जैन, बौद्ध आदिमा धर्म भनेर भ्रमले मानिसहरूको बुद्धि आसक्त हुन्छ।

**विवरण—** वेद र तदनुकूल शास्त्रहरूबाट सनातन धर्मको निश्चय हुन्छ। आस्तिकता र नास्तिकताको परिभाषा गर्दा ईश्वरलाई मान्ने र नमान्ने भन्दा पनि वेदवाक्यलाई प्रमाण मान्ने वा नमान्ने भनी विभाग गरिएको छ। वेदप्रमाणवादी आस्तिक हुन् भने वेदलाई प्रमाण नमान्नेहरू नास्तिक हुन्। ईश्वरका विभिन्न स्वरूपहरूको अशास्त्रीय कल्पना गरी मनमानी ढङ्गले आफूलाई धार्मिक मान्ने मतलाई यहाँ उपधर्म भनिएको हो। ईश्वर इन्द्रियवेद्य हुँदैनन्, उनलाई साक्षात्कार गर्न शास्त्रको मार्ग अपनाउनुपर्छ। ईश्वरको विषयमा शास्त्रभन्दा विरुद्ध मतहरू राख्नेलाई यहाँ उपधर्मावलम्बी भनिएको छ। शास्त्र प्रमाण धर्म हो भने अशास्त्रीय मत उपधर्म हो।

**तदभिज्ञाय भगवान् पृथुः पृथुपराक्रमः।**
**इन्द्राय कुपितो बाणमादत्तोद्यतकार्मुकः॥ २६॥**

पदार्थ—
**तत्** = इन्द्रको यो कार्य
**अभिज्ञाय** = थाहा पाएर
**कुपितः** = रिसाएका
**पृथुपराक्रमः** = महापराक्रमशाली
**भगवान्** = भगवान्
**पृथुः** = पृथुले
**इन्द्राय** = इन्द्रलाई (मार्न)
**उद्यतकार्मुकः** = धनुष उठाएर
**बाणम्** = बाण
**आदत्त** = लिनुभयो

**वाक्यार्थ—** इन्द्रको यो कार्य थाहा पाएर रिसाएका महापराक्रमशाली भगवान् पृथुले इन्द्रलाई मार्न धनुष उठाएर बाण लिनुभयो।

**तमृत्विजः शक्रवधाभिसन्धितं**
**विचक्ष्य दुष्प्रेक्ष्यमसह्यरंहसम्।**
**निवारयामासुरहो महामते**
**न युज्यतेऽत्रान्यवधः प्रचोदितात्॥ २७॥**

पदार्थ–

**शक्रवधाभिसन्धितं** = इन्द्रको वध गर्न तयार (यसैले क्रोधले गर्दा) **दुष्प्रेक्ष्यम्** = हेर्न कठिन र **असह्यरंहसम्** = असह्य वेग भएका **तम्** = उहाँ पृथु राजालाई **विचक्ष्य** = देखेर **ऋत्विजः** = ऋत्विक्हरूले **अहो** = अहो **महामते** = हे बुद्धिमान् राजा **अत्र** = यस यज्ञमा **प्रचोदितात्** = यज्ञको अङ्गका रूपमा रहेको अश्वबाहेक **अन्यवधः** = अरूको वध **न युज्यते** = उपयुक्त हुँदैन भनी **निवारयामासुः** = (इन्द्रको वध गर्ने कार्यबाट उहाँलाई) रोक्नुभयो

**वाक्यार्थ–** इन्द्रको वध गर्न तयार भएका, क्रोधले गर्दा हेर्न कठिन र असह्य वेग भएका पृथु राजालाई देखेर ऋत्विक्हरूले 'अहो ! हे बुद्धिमान् राजा ! यस यज्ञमा यज्ञको अङ्गका रूपमा रहेको अश्वको बाहेक अरूको वध उपयुक्त हुँदैन' भनी इन्द्रको वध गर्ने कार्यबाट उहाँलाई रोक्नुभयो।

**वयं मरुत्वन्तमिहार्थनाशनं**
**ह्वयामहे त्वच्छ्रवसा हतत्विषम्।**
**अयातयामोपहवैरनन्तरं**
**प्रसह्य राजन् जुहवाम तेऽहितम्॥ २८॥**

पदार्थ–

**राजन्** = हे राजा **अनन्तरं** = त्यसपछि **वयं** = हामीहरू **ते** = तपाईंको **अहितम्** = अहित गर्ने **अर्थनाशनं** = यज्ञनाशक **त्वत्** = तपाईंको **श्रवसा** = कीर्तिले **हतत्विषम्** = कान्तिहीन **मरुत्वन्तम्** = इन्द्रलाई **अयातयामोपहवैः** = अमोघ आवाहन मन्त्रद्वारा **इह** = यस यज्ञशालामा नै **ह्वयामहे** = बोलाउँदछौ र **प्रसह्य** = बलपूर्वक **जुहवाम** = हवन गर्दछौं

**वाक्यार्थ–** हे राजा ! यसपछि हामीहरू तपाईंको अहित गर्ने यज्ञनाशक अनि तपाईंको कीर्तिले कान्तिहीन इन्द्रलाई अमोघ आवाहन मन्त्रद्वारा यस यज्ञशालामा बोलाउँछौं र बलपूर्वक अग्निमा हवन गर्दछौं।

**इत्यामन्त्र्य क्रतुपतिं विदुरास्यर्त्विजो रुषा।**
**स्रुग्घस्तान् जुह्वतोऽभ्येत्य स्वयम्भूः प्रत्यषेधत॥ २९॥**

पदार्थ–

**विदुर** = हे विदुरजी **इति** = यसप्रकार **क्रतुपतिं** = यजमानलाई

**आमन्त्र्य** = बोलाएर
**रुषा** = क्रोधपूर्वक
**जुह्वतः** = (इन्द्रको आवाहनका लागि) हवन गर्न लागेका यसैले
**स्रुग्घस्तान्** = हातमा सुरो लिएका
**अस्य** = यी राजा पृथुका
**ऋत्विजः** = ऋत्विक्‌हरूलाई
**अभ्येत्य** = नजिकै आएर
**स्वयम्भूः** = ब्रह्माजीले
**प्रत्यषेधत** = रोक्नुभयो

**वाक्यार्थ–** हे विदुरजी ! यसप्रकार यजमानलाई बोलाएर क्रोधपूर्वक इन्द्रको आवाहनका लागि हवन गर्न लागेका र यसैले हातमा सुरो लिएका राजा पृथुका ऋत्विक्‌हरूको नजिकै आएर ब्रह्माजीले तिनीहरूलाई रोक्नुभयो।

**न वध्यो भवतामिन्द्रो यद्यज्ञो भगवत्तनुः।**
**यं जिघांसथ यज्ञेन यस्येष्टास्तनवः सुराः॥ ३०॥**

**पदार्थ–**
(यज्ञरक्षाका लागि)
**यं** = जुन इन्द्रलाई
**जिघांसथ** = मार्न चाहनुहुन्छ
**इन्द्रः** = यी इन्द्र
**भवताम्** = तपाईंहरूद्वारा
**वध्यः न** = वध गर्न योग्य छैनन्
**यत्** = किनभने
**यज्ञः** = यज्ञ नामका इन्द्र पनि
**भगवत्तनुः** = साक्षात् भगवान्‌कै अवतार हुन्
**यज्ञेन** = यज्ञद्वारा
**इष्टाः** = पूजा गरिएका
**सुराः** = सबै देवताहरू
**यस्य** = जुन इन्द्रका
**तनवः** = शरीर हुन्

**वाक्यार्थ–** ब्रह्माजीले भन्नुभयो, 'तपाईंहरू यज्ञरक्षाका लागि जुन इन्द्रलाई मार्न चाहनुहुन्छ यी इन्द्र तपाईंहरूद्वारा वध गर्न योग्य छैनन् किनभने यी यज्ञ नामका इन्द्र साक्षात् भगवान्‌कै अवतार हुन्। यज्ञद्वारा पूजा गरिएका सबै देवताहरू यिनैका शरीर हुन्।'

**तदिदं पश्यत महद्धर्मव्यतिकरं द्विजाः।**
**इन्द्रेणानुष्ठितं राज्ञः कर्मैतद् विजिघांसता॥ ३१॥**

**पदार्थ–**
**द्विजाः** = हे ब्राह्मणहरू
**तत्** = त्यसकारण
**राज्ञः** = राजाको
**एतत्** = यो
**कर्म** = कर्म अर्थात् अश्वमेध यज्ञ
**विजिघांसता** = नाश गर्न चाहने
**इन्द्रेण** = इन्द्रद्वारा
**अनुष्ठितं** = गरिएको
**इदं** = यो
**महद्धर्मव्यतिकरं** = महान् वेदको विपरीत भएका पाखण्ड धर्मलाई
(केवल)
**पश्यत** = हेर्नुहोस्

**वाक्यार्थ–** हे ब्राह्मणहरू हो ! त्यसकारण राजाको यो कर्म अर्थात् अश्वमेध यज्ञ नाश गर्न चाहने इन्द्रद्वारा गरिएको यो महान् वेदको विपरीत भएका पाखण्ड धर्मलाई केवल हेर्नुहोस्। विरोध नगर्नुहोस्, विरोध गर्दा अरू बढी पाखण्ड धर्म फैलने सम्भावना रहन्छ।

**पृथुकीर्तेः पृथोर्भूयात् तर्ह्येकोनशतक्रतुः ।**
**अलं ते क्रतुभिः स्विष्टैर्यद् भवान् मोक्षधर्मवित्॥ ३२॥**

पदार्थ–

(हे ब्राह्मणहरू)
**तर्हि** = त्यसो भए
**पृथुकीर्तेः** = परम यशस्वी
**पृथोः** = राजा पृथुको
**एकोनशतक्रतुः** = उनान्सय सङ्ख्याको यज्ञमात्र
**भूयात्** = होस् (फेरि राजा पृथुसँग भन्न लाग्नुभयो)
(हे राजा)
**स्विष्टैः** = राम्रोसँग सम्पन्न गरिएका
**क्रतुभिः** = यज्ञहरूद्वारा
**ते** = तपाईंलाई
**अलं** = केही प्रयोजन छैन
**यत्** = किनभने
**भवान्** = तपाईं
**मोक्षधर्मवित्** = मोक्षधर्मका ज्ञाता हुनुहुन्छ

**वाक्यार्थ–** हे ब्राह्मणहरू ! त्यसो भए परम यशस्वी राजा पृथुका उनान्सय यज्ञमात्र होऊन्। ब्रह्माजी फेरि राजा पृथुसँग भन्न लाग्नुभयो, 'हे राजा ! राम्रोसँग सम्पन्न गरिएका यज्ञहरूद्वारा तपाईंका लागि केही प्रयोजन छैन किनभने तपाईं मोक्षधर्मको ज्ञाता हुनुहुन्छ।'

**नैवात्मने महेन्द्राय रोषमाहर्तुमर्हसि ।**
**उभावपि हि भद्रं ते उत्तमश्लोकविग्रहौ ॥ ३३ ॥**

पदार्थ–

(हे राजा तपाईं)
**आत्मने** = आफ्नो स्वरूप भएका
**महेन्द्राय** = इन्द्रलाई
**रोषम्** = रिस
**आहर्तुम्** = गर्न
**न एव अर्हसि** = योग्य हुनुहुन्न
**हि** = किनभने
**उभौ अपि** = तपाईंहरू दुबै जना
**उत्तमश्लोकविग्रहौ** = भगवान् श्रीहरिका अवतार हुनुहुन्छ
(यसैमा)
**ते** = तपाईंको
**भद्रं** = कल्याण (हुनेछ)

**वाक्यार्थ–** हे राजा ! तपाईं आफ्नो स्वरूप भएका इन्द्रलाई रिस गर्न योग्य हुनुहुन्न किनभने तपाईंहरू दुबै जना भगवान् श्रीहरिका अवतार हुनुहुन्छ, यसैमा तपाईंको कल्याण हुनेछ।

**मास्मिन् महाराज कृथाः स्म चिन्तां**
**निशामयास्मद्वच आदृतात्मा ।**
**यद् ध्यायतो दैवहतं नु कर्तुं**
**मनोऽतिरुष्टं विशते तमोऽन्धम्॥ ३४ ॥**

पदार्थ–

**महाराज** = हे राजा
**अस्मिन्** = यस यज्ञविघ्नरूप कार्यमा
**चिन्तां** = शोक
**मा स्म कृथाः** = नगर्नुहोस्
**अस्मद्वचः** = हाम्रो वचन
**आदृतात्मा** = आदरभावका साथ
**निशामय** = सुन्नुहोस्
**यत्** = किनभने
**दैवहतं** = विधाताले बिगारेको कर्म
**कर्तुं** = गर्न
**ध्यायतः** = चाहने व्यक्तिको
**मनः** = मन
**नु** = निश्चय नै
**अतिरुष्टं** = अत्यन्त क्रुद्ध भई
**अन्धम्** = गाढा
**तमः** = अन्धकारमा
**विशते** = फस्दछ

**वाक्यार्थ–** हे राजा ! यस यज्ञविघ्नरूप कार्यमा शोक नगर्नुहोस्। हाम्रो वचन आदरभावका साथ सुन्नुहोस् किनभने विधाताले बिगारेको कर्म गर्न चाहने व्यक्तिको मन निश्चय नै अत्यन्त क्रुद्ध भई गाढा अन्धकार अर्थात् भयङ्कर मोहमा फस्दछ।

**क्रतुर्विरमतामेष देवेषु दुरवग्रहः।**
**धर्मव्यतिकरो यत्र पाखण्डैरिन्द्रनिर्मितैः॥ ३५॥**

पदार्थ–

**एषः** = यो
**क्रतुः** = यज्ञ
**विरमताम्** = रोकियोस् (किनभने यसैका कारण)
**देवेषु** = देवताहरूमा
**दुरवग्रहः** = दुराग्रह हुन्छ
**यत्र** = जुन दुराग्रह भएपछि
**इन्द्रनिर्मितैः** = इन्द्रबाट चलाइएका
**पाखण्डैः** = पाखण्ड धर्मद्वारा
**धर्मव्यतिकरः** = धर्मको नाश हुन्छ

**वाक्यार्थ–** यो यज्ञ रोकियोस् किनभने यसैका कारण देवताहरूमा दुराग्रह हुन्छ, जुन दुराग्रह भएपछि इन्द्रबाट चलाइएका पाखण्ड धर्मद्वारा धर्मको नाश हुन्छ।

**एभिरिन्द्रोपसंसृष्टैः पाखण्डैर्हारिभिर्जनम्।**
**ह्रियमाणं विचक्ष्वैनं यस्ते यज्ञध्रुगश्वमुट्॥ ३६॥**

पदार्थ–

(हे राजा)
**ते** = तपाईंको
**यज्ञध्रुग्** = यज्ञको रिस गर्ने र
**अश्वमुट्** = घोडा चोर्ने
**यः** = जो इन्द्र (छन्)
**इन्द्रोपसंसृष्टैः** = उनीद्वारा चलाइएका
**हारिभिः** = चित्ताकर्षक
**एभिः** = यी
**पाखण्डैः** = पाखण्ड धर्मद्वारा
**ह्रियमाणं** = आकृष्ट भएका
**एनं** = यी
**जनम्** = मानिसलाई
**विचक्ष्व** = हेर्नुहोस्

**वाक्यार्थ–** हे राजा ! तपाईंको यज्ञको रिस गर्ने र घोडा चोर्ने इन्द्रद्वारा चलाइएका चित्ताकर्षक

पाखण्ड धर्मद्वारा आकृष्ट भएका यी मानिसलाई हेर्नुहोस्।

**भवान् परित्रातुमिहावतीर्णो**
**धर्मं जनानां समयानुरूपम्।**
**वेनापचारादवलुप्तमद्य**
**तद्देहतो विष्णुकलासि वैन्य॥ ३७॥**

**पदार्थ–**

**वैन्य** = हे राजा पृथु
**भवान्** = तपाईं
**विष्णुकला** = भगवान् विष्णुको अंश
**असि** = हुनुहुन्छ
**वेनापचारात्** = वेनको दुराचारबाट
**अवलुप्तम्** = नष्ट भएको
**जनानां** = मानिसका लागि
**समयानुरूपम्** = शास्त्रोचित
**धर्मं** = धर्म
**परित्रातुम्** = रक्षा गर्न
**तद्देहतः** = वेनकै शरीरबाट
**अद्य** = अहिले
**इह** = यस संसारमा
**अवतीर्णः** = अवतीर्ण हुनुभएको छ

**वाक्यार्थ–** हे राजा पृथु ! तपाईं भगवान् विष्णुको अंश हुनुहुन्छ। वेनको दुराचारबाट नष्ट भएको र मानिसले गर्नुपर्ने शास्त्रोचित धर्मको रक्षा गर्न वेनकै शरीरबाट अहिले यस संसारमा अवतीर्ण हुनुभएको छ।

**स त्वं विमृश्यास्य भवं प्रजापते**
**सङ्कल्पनं विश्वसृजां पिपीपृहि।**
**ऐन्द्रीं च मायामुपधर्ममातरं**
**प्रचण्डपाखण्डपथं प्रभो जहि॥ ३८॥**

**पदार्थ–**

**प्रभो** = शक्तिशाली
**प्रजापते** = हे प्रजापति
**सः त्वं** = त्यस्तो तपाईंले
**अस्य** = यस संसारको
**भवं** = उत्पत्ति
**विमृश्य** = विचार गरेर
**विश्वसृजां** = विश्वको सृष्टि गर्न सहयोग गर्ने भृगु आदि ऋषिको
**सङ्कल्पनं** = सङ्कल्प
**पिपीपृहि** = पूर्ण गर्नुहोस् (त्यसपछि)
**प्रचण्डपाखण्डपथं** = अत्यन्त पाखण्डपद्धतिरूप
**उपधर्ममातरं** = उपधर्मलाई जन्माउने
**ऐन्द्रीं** = इन्द्रको
**मायाम् च** = मायालाई
**जहि** = नाश गर्नुहोस्

**वाक्यार्थ–** शक्तिशाली हे प्रजापति ! त्यस्तो तपाईंले यस संसारको उत्पत्ति विचार गरेर विश्वको

सृष्टि गर्न सहयोग गर्ने भृगु आदि ऋषिको सङ्कल्प पूर्ण गर्नुहोस्। त्यसपछि अत्यन्त पाखण्डपद्धतिरूप उपधर्मलाई जन्माउने इन्द्रको मायालाई नाश गर्नुहोस्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इत्थं स लोकगुरुणा समादिष्टो विशाम्पतिः।**

**तथा च कृत्वा वात्सल्यं मघोनापि च सन्दधे॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इत्थं** = यसप्रकार | **विशाम्पतिः च** = राजा पृथुले पनि | **वात्सल्यं** = स्नेहभाव |
| **लोकगुरुणा** = लोकगुरु ब्रह्माजीद्वारा | **तथा** = त्यस्तै (ब्रह्माजीको आदेशानुरूप यज्ञको आग्रह छोडेर) | **कृत्वा** = राखेर |
| **समादिष्टः** = आदेश दिइएका | | **मघोना अपि च** = इन्द्रसँग पनि |
| **सः** = उहाँ | | **सन्दधे** = मिल्नुभयो |

**वाक्यार्थ–** यसप्रकार लोकगुरु ब्रह्माजीद्वारा आदेश दिइएका राजा पृथु पनि ब्रह्माजीको आदेशानुरूप यज्ञको आग्रह छोडेर स्नेहभाव राखेर इन्द्रसँग पनि मिल्नुभयो।

**कृतावभृथस्नानाय पृथवे भूरिकर्मणे।**

**वरान् ददुस्ते वरदा ये तद्बर्हिषि तर्पिताः॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तद्बर्हिषि** = उहाँको यज्ञमा | **ते** = उहाँ | **भूरिकर्मणे** = कर्मशील |
| **ये** = जो | **वरदाः** = वर दिने देवताहरूले | **पृथवे** = पृथु राजालाई |
| **तर्पिताः** = तृप्त भएका देवताहरू हुनुहुन्थ्यो | **कृतावभृथस्नानाय** = यज्ञान्त स्नान गरेका | **वरान्** = वर |
| | | **ददुः** = दिनुभयो |

**वाक्यार्थ–** पृथु राजाको यज्ञमा तृप्त भएका वरदाता देवताहरूले यज्ञान्त स्नान गरेका कर्मशील राजा पृथुलाई वर दिनुभयो।

**विप्राः सत्याशिषस्तुष्टाः श्रद्धया लब्धदक्षिणाः।**

**आशिषो युयुजुः क्षत्तरादिराजाय सत्कृताः॥ ४१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **क्षत्तः** = हे विदुरजी | दिने | र |
| **सत्याशिषः** = सत्य आशीर्वाद | **लब्धदक्षिणाः** = दक्षिणा पाएका | **तुष्टाः** = सन्तुष्ट भएका |

| | | |
|---|---|---|
| **श्रद्धया** = श्रद्धापूर्वक | **विप्राः** = ब्राह्मणहरूले | **आशिषः** = आशीर्वाद |
| **सत्कृताः** = सत्कार गरिएका | **आदिराजाय** = आदिराज पृथुलाई | **युयुजुः** = दिनुभयो |

**वाक्यार्थ–** हे विदुरजी ! सत्य आशीर्वाद दिने, दक्षिणा पाई सन्तुष्ट भएका एवं श्रद्धापूर्वक सत्कार गरिएका ब्राह्मणहरूले आदिराज पृथुलाई आशीर्वाद दिनुभयो।

**त्वयाहूता महाबाहो सर्व एव समागताः।**

**पूजिता दानमानाभ्यां पितृदेवर्षिमानवाः॥ ४२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| (ब्राह्मणहरूले भन्नुभयो) | **समागताः** = आएका | **दानमानाभ्यां** = दान र सम्मानद्वारा |
| **महाबाहो** = हे महाबाहु राजा | **सर्वे एव** = सबै | **पूजिताः** = पूजा गरिएका छन् |
| **त्वया** = तपाईंद्वारा | **पितृदेवर्षिमानवाः** = पितृ, देवर्षि, र मनुष्यहरू | |
| **आहूताः** = बोलाइएका र | | |

**वाक्यार्थ–** ब्राह्मणहरूले भन्नुभयो, 'हे महाबाहु राजा ! तपाईंद्वारा बोलाइएका र आएका सबै पितृ, देवर्षि र मनुष्यहरू दान र सम्मानद्वारा पूजा गरिएका छन्।'

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे**

**पृथुविजये एकोनविंशोऽध्यायः॥ १९॥**

# अथ विंशोऽध्यायः

## राजा पृथुको यज्ञशालामा भगवान् विष्णुको आगमन

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**भगवानपि वैकुण्ठः साकं मघवता विभुः ।**

**यज्ञैर्यज्ञपतिस्तुष्टो यज्ञभुक् तमभाषत ॥ १ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यज्ञैः** = यज्ञद्वारा | **यज्ञपतिः** = यज्ञेश्वर | **साकं** = साथ आई |
| **तुष्टः** = सन्तुष्ट हुनुभएका | **भगवान्** = भगवान् | **तम्** = उहाँ (पृथु)लाई |
| **विभुः** = शक्तिशाली | **वैकुण्ठः अपि** = विष्णु पनि | **अभाषत** = भन्नुभयो |
| **यज्ञभुक्** = यज्ञभोक्ता | **मघवता** = इन्द्रका | |

**वाक्यार्थ–** यज्ञद्वारा सन्तुष्ट हुनुभएका शक्तिशाली यज्ञभोक्ता यज्ञेश्वर भगवान् विष्णुले पनि इन्द्रका साथ आई पृथुलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**एष तेऽकारषीद् भङ्गं हयमेधशतस्य ह ।**

**क्षमापयत आत्मानममुष्य क्षन्तुमर्हसि ॥ २ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एषः** = यी इन्द्रले | **भङ्गं** = भङ्ग | **क्षमापयतः** = क्षमा चाहने |
| **ते** = तपाईंको | **ह** = निश्चय नै | **अमुष्य** = यी इन्द्रलाई |
| **हयमेधशतस्य** = सय अश्वमेध यज्ञको | **अकारषीत्** = गरे (तर पनि) | **क्षन्तुम्** = क्षमा गर्न |
| | **आत्मानम्** = आफूलाई | **अर्हसि** = योग्य हुनुहुन्छ |

**वाक्यार्थ–** यी इन्द्रले तपाईंको अन्तिम अश्वमेध यज्ञको भङ्ग गरेर निश्चय नै सय अश्वमेध यज्ञमा बाधा गरेका छन्। तर पनि क्षमा चाहने यिनलाई तपाईं क्षमा गरिदिनुहोस्।

**सुधियः साधवो लोके नरदेव नरोत्तमाः ।**

**नाभिद्रुह्यन्ति भूतेभ्यो यर्हि नात्मा कलेवरम् ॥ ३ ॥**

पदार्थ–

**नरदेव** = हे राजा
**सुधियः** = बुद्धिमान्
**साधवः** = सज्जन
**नरोत्तमाः** = उत्तम मानिसहरू
**लोके** = संसारमा
**भूतेभ्यः** = अन्य प्राणीहरूको
**न अभिद्रुह्यन्ति** = रिस गर्दैनन्
**यर्हि** = किनभने
**कलेवरम्** = शरीर
**न आत्मा** = आत्मा होइन

**वाक्यार्थ–** हे राजा ! बुद्धिमान्, सज्जन र उत्तम मानिसहरू संसारमा अन्य प्राणीहरूको रिस गर्दैनन् किनभने उनीहरूलाई शरीर आत्मा होइन भन्ने थाहा हुन्छ।

**पुरुषा यदि मुह्यन्ति त्वादृशा देवमायया।**
**श्रम एव परं जातो दीर्घया वृद्धसेवया॥ ४॥**

पदार्थ–
**यदि** = यदि
**त्वादृशाः** = तपाईंजस्ता
**पुरुषाः** = मानिसहरू
**देवमायया** = देवताको (मेरो) मायाद्वारा
**मुह्यन्ति** = मोहित हुन्छन् भने (तिनीहरूका लागि)
**दीर्घया** = दीर्घकालको
**वृद्धसेवया** = ज्ञानवृद्धको सेवाद्वारा
**परं** = केवल
**श्रमः एव** = परिश्रम मात्र
**जातः** = भयो

**वाक्यार्थ–** यदि तपाईंजस्ता मानिसहरू मेरो मायाद्वारा मोहित हुन्छन् भने तिनीहरूका लागि लामो समयसम्म गरिएको ज्ञानीहरूको सेवाद्वारा पनि केवल परिश्रम मात्र भयो।

**अतः कायमिमं विद्वानविद्याकामकर्मभिः।**
**आरब्ध इति नैवास्मिन् प्रतिबुद्धोऽनुषज्जते॥ ५॥**

पदार्थ–
**अतः** = त्यस कारण
**इमं** = यस
**कायम्** = शरीरलाई
**अविद्याकामकर्मभिः** = अज्ञान, काम र कर्मद्वारा
**आरब्धः** = बनाइएको हो
**इति** = भनी
**प्रतिबुद्धः** = बुझेको
**विद्वान्** = विद्वान् व्यक्ति
**अस्मिन्** = यस शरीरमा
**न एव अनुषज्जते** = आसक्त हुँदैन

**वाक्यार्थ–** त्यसकारण यस शरीरलाई अज्ञान, काम र कर्मद्वारा बनाइएको हो भन्ने बुझेको विद्वान् व्यक्ति यस शरीरमा आसक्त हुँदैन।

**असंसक्तः शरीरेऽस्मिन्नमुनोत्पादिते गृहे।**
**अपत्ये द्रविणे वापि कः कुर्यान्ममतां बुधः॥ ६॥**

पदार्थ–

**अस्मिन्** = यस
**शरीरे अपि** = शरीरमा पनि
**असंसक्तः** = आसक्त नभएको
**कः** = कुन
**बुधः** = आत्मज्ञानी व्यक्तिले
**अमुना** = यस शरीरद्वारा
**उत्पादिते** = उत्पादित
**गृहे** = घर
**अपत्ये** = सन्तान
**द्रविणे** = धनमा
**वा** = अथवा
**ममतां** = ममता
**कुर्यात्** = गर्ला

**वाक्यार्थ—** यस शरीरमा पनि आसक्त नभएको कुन आत्मज्ञानी व्यक्तिले यस शरीरद्वारा उत्पादित घर, सन्तान अथवा धनमा ममता गर्ला ?

**विवरण—** पृथुको यज्ञमा उपस्थित हुनुभएका भगवान्‌ले राजा पृथुलाई इन्द्रको अपराध क्षमा गर्न उपदेश दिनुहुन्छ। भगवान् भन्नुहुन्छ— **'नात्मा कलेवरम्'** अथवा शरीर आत्मा होइन। सामान्य मानिसहरू अज्ञाननिद्राको कारणले शरीरलाई नै आफू (आत्मा) मानी त्यसकै लागि मरिमेट्छन्, अनि सम्पत्ति, जग्गा र पदलालसाको लागि अरू प्राणीहरूसँग द्वेष गर्दछन्। अरूलाई दुःख दिएर, अरूसँग झगडा र लुछाचुँडी गरी उनीहरू जुन शरीरको पोषण गर्दछन् त्यो शरीर त उनीहरूको होइन। कति लज्जाजनक व्यवहार छ प्राणीहरूको ? त्यसैले भगवान् भन्नुहुन्छ— **'कः कुर्यान्ममतां बुधः'** अर्थात् शरीर नै आफू होइन भने शरीरले आफ्नो सुविधाका लागि बनाएका घर, सम्पत्ति, राज्य, सन्तति आदि नश्वर पदार्थमा कुन चाहिँ विचारवान् मनुष्यले ममता गर्ला त ?

यो शरीर त आफ्नो स्वरूपको अज्ञान, त्यसपछि कामना अनि कामनापूर्वक गरिएको कर्मको फल भोग्न उत्पन्न भएको हो। आफ्नो परमात्मस्वरूपलाई नजानेको दण्डस्वरूप प्राप्त यो शरीर ज्ञानीको लागि सपनाबराबर हो, जसबाट बिउँझेपछि फेरि ऊ यसमा आसक्त हुँदैन। नजान्नाले गर्दा देखिएको भ्रमयुक्त वस्तुमा पनि मोह गर्नु हुन्छ र ? त्यसैले भगवान् भन्नुहुन्छ— 'हे राजा, तिमी ब्रह्मज्ञानीहरूको सेवाबाट प्राप्त भएको विवेकलाई नभुल, नत्र त्यत्रो परिश्रम व्यर्थ होला।' सामान्यतया यहाँ भगवान्‌ले आफ्ना भक्त राजाको यज्ञमा विघ्न पार्ने इन्द्रलाई दण्ड दिनुपर्ने हो तर भगवान्‌ले पृथु राजाको क्षमाशीलतालाई संसारका अगाडि प्रकट गरी पृथुको यश झनै बढाउन खोज्नुभएको हो। आत्मा नित्य हो, शुद्ध हो र सुख-दुःख आदि व्यवहारबाट नछोइनेखालको हो भनी गरिएको ज्ञानोपदेश केवल विचार मात्र होइन। यो विचार व्यवहारमा पनि उत्रिनुपर्छ। यदि शरीरद्वारा आत्मा साँच्चै नछोइएको हो भने कुनै पनि ज्ञानी किन शरीरको अहित भएको अवस्थामा पनि त्यसको प्रतिशोध गर्ला ? यसरी व्यवहारकालमा समेत परमात्मामा स्थित मनुष्यहरू प्रकृतिका गुणद्वारा छोइँदैनन्। भगवान्‌को उपदेशबाट शान्तचित्त भएका पृथुको चरित्रमा यही समता र आत्ममहिमा प्रकट भएको छ।

**एकः शुद्धः स्वयंज्योतिर्निर्गुणोऽसौ गुणाश्रयः।**
**सर्वगोऽनावृतः साक्षी निरात्मात्मात्मनः परः॥ ७॥**

पदार्थ–

**असौ** = यो
**आत्मा** = आत्मा
**एकः** = एउटै
**शुद्धः** = शुद्ध
**स्वयंज्योतिः** = स्वयं प्रकाशरूप
**निर्गुणः** = निर्गुण
**गुणाश्रयः** = गुणको आश्रयस्थान
**सर्वगः** = सर्वव्यापक
**अनावृतः** = आवरणशून्य
**साक्षी** = द्रष्टा र
**निरात्मा** = अन्य आत्माबाट रहित छ (यसैले)
**आत्मनः** = शरीरबाट
**परः** = भिन्न छ

**वाक्यार्थ–** यो आत्मा एक, शुद्ध, स्वयं प्रकाशरूप, निर्गुण, गुणको आश्रयस्थान, सर्वव्यापक, आवरणशून्य, द्रष्टा र अन्य आत्माबाट रहित छ। यसैले यो शरीरबाट भिन्न छ।

**टिप्पणी–** माथि आत्माका नौओटा विशेषण आएका छन् र यी विशेषणका कारण आत्मा शरीरबाट भिन्न रहेको देखिन्छ। आत्माका जुन विशेषणहरू यहाँ दिइएका छन् ती विशेषणका विपरीत शरीरका विशेषण हुन्छन्। शरीर अनेक, मलिन, जड, सगुण, आफ्नो कारणभूत गुणमा आश्रित, परिच्छिन्न यसैले वस्त्रादिद्वारा आवृत, दृश्य र आत्माको वासस्थान भएकाले शरीर आत्मादेखि भिन्न छ।

**य एवं सन्तमात्मानमात्मस्थं वेद पूरुषः।**
**नाज्यते प्रकृतिस्थोऽपि तद्गुणैः स मयि स्थितः॥ ८॥**

पदार्थ–

**यः** = जो
**पूरुषः** = व्यक्ति
**एवं** = यसप्रकारको
**आत्मस्थं सन्तम्** = शरीरमा रहेको
**आत्मानम्** = आत्मालाई
**वेद** = जान्दछ
**सः** = त्यो व्यक्ति
**मयि** = म परमेश्वरमा
**स्थितः** = आश्रित भई
**प्रकृतिस्थः अपि** = प्रकृति (प्रकृतिको कार्यभूत शरीर)मा रहेर पनि
**तद्गुणैः** = उसका गुणहरूद्वारा
**न अज्यते** = लिप्त हुँदैन

**वाक्यार्थ–** जो व्यक्ति यसप्रकारको शरीरमा रहेको आत्मालाई जान्दछ त्यो व्यक्ति म परमेश्वरमा आश्रित भई प्रकृति (प्रकृतिको कार्यभूत शरीर)मा रहेर पनि उसका गुणहरूद्वारा लिप्त हुँदैन।

**यः स्वधर्मेण मां नित्यं निराशीः श्रद्धयान्वितः।**
**भजते शनकैस्तस्य मनो राजन् प्रसीदति॥ ९॥**

पदार्थ–

**राजन्** = हे राजा पृथु
**यः** = जुन व्यक्ति
**निराशीः** = निष्काम भावना र
**श्रद्धयान्वितः** = श्रद्धाले युक्त भएर
**स्वधर्मेण** = आफ्नो धर्मद्वारा
**मां** = मलाई
**नित्यं** = सधैं
**भजते** = सेवा गर्दछ

**तस्य** = त्यसको
**मनः** = मन
**शनकैः** = बिस्तारै
**प्रसीदति** = शुद्ध हुन्छ

**वाक्यार्थ–** हे राजा पृथु ! जुन व्यक्ति निष्काम भावना र श्रद्धाले युक्त भएर आफ्नो वर्णाश्रम धर्मको पालना गर्दै मलाई सधैं सेवा गर्दछ त्यसको मन बिस्तारै शुद्ध हुन्छ।

**परित्यक्तगुणः सम्यग्दर्शनो विशदाशयः।**
**शान्तिं मे समवस्थानं ब्रह्म कैवल्यमश्नुते ॥ १० ॥**

**पदार्थ–**

**विशदाशयः** = अन्तःकरण शुद्ध भएको र यसैले
**परित्यक्तगुणः** = सम्पूर्ण गुणको त्याग गर्ने
**सम्यग्दर्शनः** = सुविचारसम्पन्न भएको त्यो व्यक्ति
**मे** = मेरो
**समवस्थानं** = समतारूप स्थिति
**ब्रह्म** = ब्रह्म
**कैवल्यम्** = मोक्ष अथवा
**शान्तिं** = परम शान्ति
**अश्नुते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** अन्तःकरण शुद्ध भएको र यसैले सम्पूर्ण गुणको त्याग गरी सुविचारसम्पन्न भएको त्यो व्यक्ति मेरो समतारूप स्थिति ब्रह्म, मोक्ष अथवा परम शान्ति प्राप्त गर्दछ।

**विवरण–** चित्त शुद्ध भएको व्यक्तिले ब्रह्मज्ञान प्राप्त गर्दछ। उसको सत्त्व, रज आदि गुणहरूसँग सम्बन्ध छुट्छ, त्यसैले ऊ परित्यक्तगुण हुन्छ। सत्त्व गुण यद्यपि ज्ञानसाधन हो तथापि त्यो पनि बन्धन हो भन्ने शास्त्रको निष्कर्ष छ। गीता (१४।६) मा सत्त्वगुणले पनि सुख र विषयको ज्ञान उत्पन्न गरी बन्धनमा पार्दछ भनी बताइएको छ। म कर्ता हुँ भनी अज्ञानपूर्वक गरिने पुण्यकर्म र सत्त्व गुण पनि बन्धन हुन्। कठोपनिषद् (१।२।१४)मा **अन्यत्र धर्मादन्यत्राधर्मात्** भनी आत्मतत्त्वलाई धर्म र अधर्मभन्दा टाढा रहेको बताइएको छ। ज्ञानी व्यक्ति ब्राह्मी स्थिति वा ब्रह्मनिष्ठामा रहन्छ। वास्तवमा ऊ ब्रह्म नै भएर रहन्छ।

**उदासीनमिवाध्यक्षं द्रव्यज्ञानक्रियात्मनाम्।**
**कूटस्थमिममात्मानं यो वेदाप्नोति शोभनम्॥ ११ ॥**

**पदार्थ–**

**यः** = जो व्यक्तिले
**द्रव्यज्ञानक्रियात्मनाम्** = द्रव्य (देह), ज्ञानेन्द्रिय, कर्मेन्द्रिय र मनको
**अध्यक्षं** = द्रष्टा
**इमम्** = यस
**आत्मानं** = आत्मालाई
**उदासीनम्** = उदासीन र
**कूटस्थम् इव** = निर्विकार झैं
**वेद** = जान्दछ (त्यसले)
**शोभनम्** = कल्याणमय मोक्षपद
**आप्नोति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** जो व्यक्तिले द्रव्य (देह), ज्ञानेन्द्रिय, कर्मेन्द्रिय र मनको द्रष्टा यस आत्मालाई उदासीन र निर्विकार झैं जान्दछ त्यसले कल्याणमय मोक्षपद प्राप्त गर्दछ।

**विवरण–** शरीर, मन र यिनका क्रियाहरू निरन्तर परिवर्तनशील छन्। ती सबै परिवर्तनहरूलाई आत्मा उदासीन भई हेरिरहेको हुन्छ। त्यसरी निर्विकार भइरहने आत्मालाई जसले तत्त्वतः बुझ्दछ त्यो ज्ञानीले मोक्ष प्राप्त गर्दछ। उपनिषद्मा भनिएको छ– **तमेव विदित्वाऽमृतत्वमेति नान्यः पन्था विद्यतेऽयनाय** अर्थात् आत्मालाई जानेर मात्र मोक्ष हुन्छ, मोक्षको बाटो अरू कुनै छैन, **ऋते ज्ञानान्नमुक्तिः** अर्थात् ज्ञानविना मोक्ष हुँदैन। सालोक्य आदि मुक्तिहरू ज्ञानीका विषय होइनन्, उपनिषद्ले बताएको मुक्ति ज्ञानबाट मात्र मिल्दछ। निष्काम कर्मयोग, परमात्मामा दृढ अनुराग आदिले परमात्माकै कृपाबाट बुद्धियोग अर्थात् ज्ञान उत्पन्न हुन्छ। परमात्माको सर्वरूपता र जीवात्मा अनि परमात्माको एकतालाई नबुझ्नेहरू परमात्माको अन्तिम कृपा प्राप्त गर्न असमर्थ भएकाले मोक्ष पाउँदैनन् भन्ने शास्त्रको निष्कर्ष हो।

**भिन्नस्य लिङ्गस्य गुणप्रवाहो**
**द्रव्यक्रियाकारकचेतनात्मनः।**
**दृष्टासु सम्पत्सु विपत्सु सूरयो**
**न विक्रियन्ते मयि बद्धसौहृदाः॥ १२॥**

**पदार्थ–**

(हे राजा पृथु)
**भिन्नस्य** = आत्मादेखि भिन्न
**द्रव्यक्रियाकारकचेतनात्मनः** = महाभूत, इन्द्रिय, इन्द्रियका अधिष्ठाता देवता र चिदाभासको समष्टिरूप
**लिङ्गस्य** = सूक्ष्म शरीरको
**गुणप्रवाहः** = जन्ममरण, सुख, दुःख आदि विकार हुन्छ (यसर्थ)
**मयि** = ममा
**बद्धसौहृदाः** = दृढ प्रेम गर्ने
**सूरयः** = विवेकी व्यक्तिहरू
**सम्पत्सु** = सम्पत्ति र
**विपत्सु** = विपत्ति
**दृष्टासु** = प्राप्त हुँदा
**न विक्रियन्ते** = प्रभावित हुँदैनन्

**वाक्यार्थ–** हे राजा पृथु ! आत्मादेखि भिन्न महाभूत, इन्द्रिय, इन्द्रियका अधिष्ठाता देवता र चिदाभासको समष्टिरूप सूक्ष्म शरीरको मात्र जन्ममरण एवं सुख, दुःख आदि विकार हुन्छ। यसर्थ भगवान्मा दृढ प्रेम गर्ने विवेकी व्यक्तिहरू सम्पत्ति र विपत्ति प्राप्त हुँदा हर्ष, शोक आदि विकारबाट प्रभावित हुँदैनन्।

**विवरण–** लिङ्ग शरीर पञ्च महाभूत, इन्द्रिय, इन्द्रियाधिष्ठाता देवता र चिदाभासको समष्टि रूप हो। यसैलाई सूक्ष्म शरीर पनि भनिन्छ। यो सत्र कलाले बनेको हुन्छ। स्थूल शरीरभित्र रहने यही शरीरलाई लिई चिदाभास अर्थात् जीवात्मा लोक-लोकान्तर जान्छ र नयाँ शरीरहरू धारण गर्दछ। महाभूतहरूबाट उत्पन्न पाँच प्राण, पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय अनि मन र बुद्धि मिली सूक्ष्म शरीर बन्दछ। इन्द्रियाधिष्ठाता देवताहरू इन्द्रियभित्रै गाभिन्छन्। चिदाभास अर्थात् अन्तःकरणमा परेको आत्माको प्रतिबिम्ब यी सबैको स्वामी हो। आत्मा यी सबैभन्दा भिन्न, आउने र जानेको

बीचमा रहेर पनि निष्क्रिय रहने सर्वव्यापी तत्त्व हो। जसरी घैंटो लैजाँदा त्यहाँभित्रको आकाश लगिँदैन त्यसै गरी सूक्ष्म शरीरको आवागमनमा सर्वव्यापी आत्मा आउने र जाने हुँदैन। जहाँ सूक्ष्म शरीर पुग्छ त्यहीँ विद्यमान आत्मा त्यसको प्रकाशक र साक्षी हुन्छ।

**समः समानोत्तममध्यमाधमः**
**सुखे च दुःखे च जितेन्द्रियाशयः।**
**मयोपक्लृप्ताखिललोकसंयुतो**
**विधत्स्व वीराखिललोकरक्षणम्॥ १३॥**

**पदार्थ–**

**वीर** = हे वीर पृथु
**जितेन्द्रियाशयः** = इन्द्रिय र अन्तःकरण जितेका (तपाईं)
**सुखे** = सुख र
**दुःखे च** = दुःखमा
**समः** = समान हुनुहुन्छ
**समानोत्तममध्यमाधमः** = उत्तम, मध्यम र अधमका लागि पनि समान हुनुहन्छ (यसर्थ तपाईं)
**मया** = म परमेश्वरद्वारा
**उपक्लृप्ताखिललोकसंयुतः** = बनाइएका समस्त मन्त्री प्रजा आदिले युक्त भएर
**अखिललोकरक्षणम्** = समस्त लोकको रक्षा
**विधत्स्व** = गर्नुहोस्

**वाक्यार्थ–** हे वीर पृथु ! इन्द्रिय र अन्तःकरण जितेका तपाईं सुख र दुःखमा समान हुनुहुन्छ र उत्तम, मध्यम र अधमका लागि पनि समान हुनुहन्छ। यसर्थ तपाईं मद्वारा बनाइएका मन्त्री, प्रजा आदि सम्पूर्ण सहयोगीले युक्त भएर समस्त लोकको रक्षा गर्नुहोस्।

**श्रेयः प्रजापालनमेव राज्ञो**
**यत् साम्पराये सुकृतात् षष्ठमंशम्।**
**हर्तान्यथा हृतपुण्यः प्रजाना-**
**मरक्षिता करहारोऽघमत्ति॥ १४॥**

**पदार्थ–**

**प्रजापालनम् एव** = प्रजापालन गर्नु नै
**राज्ञः** = राजाको
**श्रेयः** = कल्याणप्रद कुरा हो
**यत्** = जुन कारणले
**साम्पराये** = परलोकमा
**प्रजानाम्** = प्रजाको
**सुकृतात्** = पुण्यबाट
**षष्ठम्** = ६ भागको एक भाग
**अंशम्** = पुण्यको अंश
**हर्ता** = पाउनेवाला बन्दछ
**अन्यथा** = अन्यथा
**करहारः** = कर लिएर
**अरक्षिता** = प्रजाको रक्षा नगर्ने राजा

**हृतपुण्यः** = प्रजाहरूद्वारा पुण्य हरण गरिएको भई
**अघम्** = पाप
**अत्ति** = भोग्दछ

**वाक्यार्थ–** प्रजापालन गर्नु नै राजाको लागि कल्याणप्रद कुरा हो। जुन कारणले राजा परलोकमा प्रजाको पुण्यबाट ६ भागको एक भाग पाउँछ। अन्यथा कर लिएर प्रजाको रक्षा नगर्ने राजा प्रजाहरूद्वारा पुण्य हरण गरिन्छ र पाप भोग्दछ।

**एवं द्विजाग्र्यानुमतानुवृत्त-**
**धर्मप्रधानोऽन्यतमोऽवितास्याः।**
**ह्रस्वेन कालेन गृहोपयातान्**
**द्रष्टासि सिद्धाननुरक्तलोकः॥ १५॥**

पदार्थ–
**एवं** = यस्तो विचार गरेर
**द्विजाग्र्यानुमतानुवृत्तधर्मप्रधानः** = श्रेष्ठ ब्राह्मणहरूद्वारा स्वीकृत एवं परम्पराबाट प्राप्त धर्म नै मुख्य रूपमा पालन गर्दै
**अन्यतमः** = अन्य वस्तुमा अनासक्त र
**अनुरक्तलोकः** = जनप्रिय भएर
**अस्याः** = यस पृथिवीको
**अविता** = रक्षक बन्नुहोस्
**ह्रस्वेन** = केही
**कालेन** = समयमा
**गृहोपयातान्** = घरमा आएका
**सिद्धान्** = सनक आदि सिद्धहरूलाई
**द्रष्टासि** = देख्नुहुनेछ (भेट्नुहुनेछ)

**वाक्यार्थ–** यस्तो विचार गरेर श्रेष्ठ ब्राह्मणहरूद्वारा स्वीकृत एवं परम्पराबाट प्राप्त धर्म नै मुख्य रूपमा पालन गर्दै अन्य वस्तुमा अनासक्त र जनप्रिय भएर यस पृथिवीको रक्षक बन्नुहोस्। यसपछि केही समयमा नै तपाईंले सनक आदि सिद्धहरूलाई घरमा भेट्नुहुनेछ।

**वरं च मत् कञ्चन मानवेन्द्र**
**वृणीष्व तेऽहं गुणशीलयन्त्रितः।**
**नाहं मखैर्वै सुलभस्तपोभि-**
**र्योगेन वा यत् समचित्तवर्ती॥ १६॥**

पदार्थ–
**मानवेन्द्र** = हे नरपति
**अहं** = म
**ते** = तपाईंको
**गुणशीलयन्त्रितः** = गुण र शीलबाट वशीभूत भएको छु
**मत्** = मबाट
**कञ्चन** = कुनै
**वरं च** = वर
**वृणीष्व** = लिनुहोस्

| | | |
|---|---|---|
| **यत्** = किनभने | **मखैः** = यज्ञ | **वै** = निश्चय नै |
| **समचित्तवर्ती** = समदर्शीहरूमा रहनेवाला | **तपोभिः** = तपस्या | **न सुलभः** = सहज रूपमा प्राप्त गर्न सकिन्नँ |
| **अहं** = म | **योगेन** = योगद्वारा | |
| | **वा** = अथवा | |

**वाक्यार्थ–** हे नरपति ! म तपाईंको गुण र शीलबाट वशीभूत भएको छु। मबाट कुनै वर लिनुहोस् किनभने समदर्शीहरूमा रहनेवाला म यज्ञ, तपस्या अथवा योगद्वारा निश्चय नै सहज रूपमा प्राप्त गर्न सकिन्नँ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**स इत्थं लोकगुरुणा विष्वक्सेनेन विश्वजित्।**

**अनुशासित आदेशं शिरसा जगृहे हरेः॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इत्थं** = यसप्रकार | **विश्वजित्** = विश्वविजयी | **शिरसा** = शिरले (पूर्ण रूपमा) |
| **लोकगुरुणा** = जगद्‌गुरु | **सः** = उहाँ पृथुले | **जगृहे** = ग्रहण गर्नुभयो |
| **विष्वक्सेनेन** = भगवान्‌द्वारा | **हरेः** = भगवान् श्रीहरिको | |
| **अनुशासितः** = उपदेश दिइएका | **आदेशं** = आदेश | |

**वाक्यार्थ–** यसप्रकार जगद्‌गुरु भगवान्‌द्वारा उपदेश दिइएका विश्वविजयी राजा पृथुले भगवान् श्रीहरिको आदेश पूर्ण रूपले ग्रहण गर्नुभयो।

**स्पृशन्तं पादयोः प्रेम्णा व्रीडितं स्वेन कर्मणा।**

**शतक्रतुं परिष्वज्य विद्वेषं विससर्ज ह॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| (क्षमा माग्नका लागि) | **कर्मणा** = कर्मले | **परिष्वज्य** = आलिङ्गन गरेर |
| **पादयोः** = पाउमा | **व्रीडितं** = लज्जित | **ह** = निश्चय नै |
| **स्पृशन्तं** = छोइरहेका | **शतक्रतुं** = इन्द्रलाई | **विद्वेषं** = रिस |
| **स्वेन** = आफ्नो | **प्रेम्णा** = प्रेमपूर्वक | **विससर्ज** = परित्याग गर्नुभयो |

**वाक्यार्थ–** राजा पृथुले क्षमा माग्नका लागि आफ्नो पाउमा छोइरहेका र आफ्नो कर्मले लज्जित भएका इन्द्रलाई प्रेमपूर्वक आलिङ्गन गरेर रिसको भावना परित्याग गर्नुभयो।

**भगवानथ विश्वात्मा पृथुनोपहृतार्हणः।**

**समुज्जिहानया भक्त्या गृहीतचरणाम्बुजः॥ १९॥**

**प्रस्थानाभिमुखोऽप्येनमनुग्रहविलम्बितः।**

**पश्यन् पद्मपलाशाक्षो न प्रतस्थे सुहृत् सताम्॥ २०॥**

**पदार्थ–**

**अथ** = यसपछि
**समुज्जिहानया** = प्रतिक्षण बढिरहेको
**भक्त्या** = भक्तिले
**पृथुना** = पृथुद्वारा
**उपहृतार्हणः** = पूजित हुनुभएका र
**गृहीतचरणाम्बुजः** = चरणकमल ग्रहण गरिनुभएका
**पद्मपलाशाक्षः** = कमलपत्र जस्ता आँखा भएका
**प्रस्थानाभिमुखः अपि** = प्रस्थानका लागि तयार भएर पनि
**अनुग्रहविलम्बितः** = अनुग्रहका लागि केही ढिलो गर्न लाग्नुभएका
**सताम्** = सज्जनहरूका
**सुहृत्** = मित्र
**विश्वात्मा** = विश्वात्मा
**भगवान्** = भगवान्
**एनम्** = उहाँ राजा पृथुलाई
**पश्यन्** = हेरिरहनुभयो
**न प्रतस्थे** = प्रस्थान गर्नुभएन

**वाक्यार्थ–** यसपछि प्रतिक्षण बढिरहेको भक्तिले पृथुद्वारा पूजित हुनुभएका र चरणकमल समातिनुभएका, कमलपत्र जस्ता आँखा भएका एवं अनुग्रहका लागि केही ढिलो गर्न लाग्नुभएका, सज्जनहरूका मित्र विश्वात्मा भगवान् प्रस्थानका लागि तयार भएर पनि राजा पृथुलाई हेरिरहनुभयो, प्रस्थान गर्नुभएन।

**स आदिराजो रचिताञ्जलिर्हरिं**
**विलोकितुं नाशकदश्रुलोचनः।**
**न किञ्चनोवाच स बाष्पविक्लवो**
**हृदोपगुह्यामुमधादवस्थितः॥ २१॥**

**पदार्थ–**

**अश्रुलोचनः** = आँखाभरि आँसु भएका
**सः** = उहाँ
**आदिराजः** = आदिराज पृथुले
**हरिं** = भगवान् श्रीहरिलाई
**विलोकितुं** = हेर्न
**न अशकत्** = सक्नुभएन (यस्तै)
**बाष्पविक्लवः** = आँसुले व्याकुल भएका
**सः** = उहाँ पृथुले
**किञ्चन** = केही
**न उवाच** = भन्नुभएन (तर)
**रचिताञ्जलिः** = हात जोडेर
**अवस्थितः** = रहनुभएका उहाँले
**अमुम्** = भगवान्लाई
**हृदा** = हृदयले
**उपगुह्य** = आलिङ्गन गरेर
**अधात्** = लिइरहनुभयो

**वाक्यार्थ–** आँखाभरि आँसु गरेका आदिराज पृथुले भगवान् श्रीहरिलाई हेर्न सक्नुभएन। यस्तै

आँसुले व्याकुल भएका उहाँ पृथुले केही भन्नुभएन तर हात जोडी भगवान्‌लाई हृदयले आलिङ्गन गरेर लिइरहनुभयो।

**अथावमृज्याश्रुकला विलोकयन्-**
**नतृप्तदृग्गोचरमाह पूरुषम्।**
**पदा स्पृशन्तं क्षितिमंस उन्नते**
**विन्यस्तहस्ताग्रमुरङ्गविद्विषः॥ २२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अथ** = यसपछि | **उरङ्गविद्विषः** = सर्पका शत्रु गरुडका | **अतृप्तदृग्गोचरम्** = अतृप्त आँखाद्वारा देखिनुभएका |
| **अश्रुकलाः** = आँसु | **उन्नते** = अग्लो | **पूरुषम्** = भगवान्‌लाई |
| **अवमृज्य** = पुछेर | **अंसे** = काँधमा | **विलोकयन्** = हेर्दै |
| **पदा** = पाउले | **विन्यस्तहस्ताग्रम्** = हातको अग्रभाग राख्नुभएका | **आह** = भन्नुभयो |
| **क्षितिम्** = पृथिवीलाई | | |
| **स्पृशन्तं** = छोइरहनुभएका | | |

**वाक्यार्थ–** यसपछि पृथुले आँसु पुछेर पाउले पृथिवीलाई छोइरहनुभएका सर्पका शत्रु गरुडका अग्लो काँधमा आफ्नो हात राख्नुभएका र जति हेर्दा पनि हेरिरहुँ लाग्ने भगवान्‌लाई हेर्दै उहाँले भन्नुभयो।

**पृथुरुवाच** (पृथुले भन्नुभयो)

**वरान् विभो त्वद् वरदेश्वराद् बुधः**
**कथं वृणीते गुणविक्रियात्मनाम्।**
**ये नारकाणामपि सन्ति देहिनां**
**तानीश कैवल्यपते वृणे न च॥ २३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कैवल्यपते** = मोक्षपति | आदिका पनि ईश्वर | (भोग्न योग्य) |
| **ईश** = ईश्वर | **त्वत्** = हजुरबाट | **वरान्** = वरहरू |
| **विभो** = हे प्रभु | **गुणविक्रियात्मनाम्** = गुण र गुणका कार्यद्वारा प्रभावित चित्त भएका संसारी व्यक्तिका लागि | **कथं** = कसरी |
| **बुधः** = बुद्धिमान् व्यक्ति | | **वृणीते** = ग्रहण गर्दछ |
| **वरदेश्वरात्** = वर दिने देवता | | **ये च** = जुन वर |

**नारकाणाम्** = नरकवासी
**देहिनां अपि** = प्राणीका पनि
**सन्ति** = हुन् (अर्थात् नरकवासी प्राणीले पनि जुन वर प्राप्त गर्न सक्छन्)
**तान्** = त्यस्ता वर
**न वृणे** = ग्रहण गर्दिनँ

**वाक्यार्थ–** मोक्षपति सर्वेश्वर हे प्रभु ! बुद्धिमान् व्यक्ति वर दिने देवता आदिका पनि ईश्वर हजुरबाट संसारीले भोग्न योग्य वर कसरी ग्रहण गर्दछ ? जुन वर नरकवासी प्राणीले पनि प्राप्त गर्न सक्छन् त्यस्ता वर म हजुरबाट ग्रहण गर्दिनँ।

**न कामये नाथ तदप्यहं क्वचिन्-**

**न यत्र युष्मच्चरणाम्बुजासवः।**

**महत्तमान्तर्हृदयान्मुखच्युतो**

**विधत्स्व कर्णायुतमेष मे वरः॥ २४॥**

पदार्थ–
**नाथ** = हे प्रभु
**अहं** = म
**यत्र** = जुन मोक्षमा
**महत्तमान्तर्हृदयात्** = महापुरुषको हृदय हुँदै (उनीहरूको)
**मुखच्युतः** = मुखबाट उच्चरित
**युष्मच्चरणाम्बुजासवः** = हजुरको चरणकमलको कथारूप रस
**न** = छैन
**तत् अपि** = त्यस्तो मोक्ष पनि
**क्वचित् अपि** = कहिल्यै पनि
**न कामये** = चाहन्नँ
(हजुरका कथा सुन्नका लागि)
**कर्णायुतम्** = दश हजार कान
**विधत्स्व** = बनाइदिनुहोस्
**एषः** = यही नै
**मे** = मेरा लागि
**वरः** = वर हो

**वाक्यार्थ–** हे प्रभु ! म जुन मोक्षमा महापुरुषको हृदय हुँदै उनीहरूको मुखबाट उच्चरित हजुरको चरणकमलको कथारूप रस छैन भने त्यस्तो मोक्ष पनि कहिल्यै चाहन्नँ। हजुरका कथा सुन्नका लागि दश हजार कान बनाइदिनुहोस्, यही नै मेरा लागि वर हो।

**स उत्तमश्लोक महन्मुखच्युतो**

**भवत्पदाम्भोजसुधाकणानिलः।**

**स्मृतिं पुनर्विस्मृततत्त्ववर्त्मनां**

**कुयोगिनां नो वितरत्यलं वरैः॥ २५॥**

पदार्थ–
**उत्तमश्लोक** = उत्तम कीर्ति भएका हे प्रभु
**महन्मुखच्युतः** = महापुरुषको

मुखबाट निक्लेको
**भवत्पदाम्भोजसुधाकणानिलः** = हजुरको चरणकमलको अमृतको बिन्दु लिएर आएको हावाले सहित
**सः** = त्यस कथाले
**विस्मृततत्त्ववर्त्मनां** = तत्त्वमार्ग बिर्सेका
**कुयोगिनां** = चित्त चञ्चल भएका
**नः** = हाम्रा लागि
**पुनः** = फेरि
**स्मृतिं** = तत्त्वज्ञानको स्मृति
**वितरति** = गराइदिन्छ
(त्यो कथा नै ठीक छ)
**वरैः** = अरू वरको
**अलं** = केही प्रयोजन छैन

**वाक्यार्थ–** उत्तम कीर्ति भएका हे प्रभु ! महापुरुषको मुखबाट निक्लेको हजुरको चरणकमलको अमृतको बिन्दु लिएर आएको हावाले सहित त्यस कथाले तत्त्वमार्ग बिर्सेका र यसैले चित्त चञ्चल भएका हाम्रा लागि फेरि तत्त्वज्ञानको स्मृति गराइदिन्छ। त्यो कथा नै ठीक छ। अरू वरको केही प्रयोजन छैन।

**यशः शिवं सुश्रव आर्यसङ्गमे**
**यदृच्छया चोपशृणोति ते सकृत्।**
**कथं गुणज्ञो विरमेद् विना पशुं**
**श्रीर्यत् प्रवव्रे गुणसङ्ग्रहेच्छया॥ २६॥**

पदार्थ–
**सुश्रवः** = सुकीर्तिसम्पन्न हे प्रभु (कोही पनि व्यक्ति)
**आर्यसङ्गमे** = सत्सङ्गमा
**ते** = हजुरको
**शिवं** = कल्याणप्रद
**यशः** = कीर्ति
**यदृच्छया** = दैववश
**सकृत् च** = एकचोटि मात्र
**उपशृणोति** = सुन्दछ (भने)
**पशुं विना** = पशुबाहेक
**गुणज्ञः** = गुण जान्नेवाला त्यो व्यक्ति
**कथं** = कसरी
**विरमेत्** = विरक्त हुन सक्छ (यसैले)
**श्रीः** = लक्ष्मीले
**गुणसङ्ग्रहेच्छया** = सबै पुरुषार्थको सिद्धिको इच्छाले
**यत्** = जुन कीर्तिश्रवणरूप कार्यलाई
**प्रवव्रे** = मुख्य रूपमा स्वीकार गर्नुभयो

**वाक्यार्थ–** सुकीर्तिसम्पन्न हे प्रभु ! कोही पनि व्यक्ति सत्सङ्गमा हजुरको कल्याणप्रद कीर्ति दैववश एकचोटि मात्र सुन्दछ भने पशुबाहेक गुण जान्नेवाला त्यो व्यक्ति कसरी हजुरको कीर्तिश्रवणबाट विरक्त हुन सक्छ र? यसैले लक्ष्मीले सबै पुरुषार्थको सिद्धिको इच्छाले कीर्तिश्रवणरूप कार्यलाई नै मुख्य रूपमा स्वीकार गर्नुभयो।

**अथाभजे त्वाखिलपूरुषोत्तमं**

**गुणालयं पद्मकरेव लालसः।**
**अप्यावयोरेकपतिस्पृधोः कलि-**
**र्न स्यात् कृतत्वच्चरणैकतानयोः॥ २७॥**

**पदार्थ—**

**अथ** = यसकारण (म पनि)
**पद्मकरा इव** = लक्ष्मीले झैँ
**लालसः** = उत्सुक भएर
**अखिलपूरुषोत्तमं** = सम्पूर्ण पुरुषमा श्रेष्ठ
**गुणालयं** = सर्वगुणका आश्रय भएका
**त्वा** = हजुरको
**आभजे** = सेवा गर्दछु (तर)
**एकपतिस्पृधोः** = एउटै स्वामीको सेवा गर्न हानाथाप गर्ने
**कृतत्वच्चरणैकतानयोः** = हजुरकै चरणमा मन एकाग्र गर्ने
**आवयोः अपि** = हामी दुई (म पृथु र भगवती लक्ष्मी)को
**कलिः** = झगडा
**न स्यात्** = नहोस्

**वाक्यार्थ—** यसकारण म (पृथु) पनि लक्ष्मीले झैँ उत्सुक भएर सम्पूर्ण पुरुषमा श्रेष्ठ सर्वगुणका आश्रय भएका हजुरको सेवा गर्दछु तर एउटै स्वामीको सेवा गर्न हानाथाप गर्ने हजुरकै चरणमा मन एकाग्र गर्ने हामी दुई (म र भगवती लक्ष्मी)को बीचमा झगडा नहोस्।

**जगज्जनन्यां जगदीश वैशसं**
**स्यादेव यत्कर्मणि नः समीहितम्।**
**करोषि फल्ग्वप्युरु दीनवत्सलः**
**स्व एव धिष्ण्येऽभिरतस्य किं तया॥ २८॥**

**पदार्थ—**

**जगदीश** = हे जगत्का ईश्वर प्रभु
**यत्कर्मणि** = (हजुरको सेवारूप भगवती लक्ष्मीले गरेको) जुन कार्यमा
**नः** = हामीहरूको
**समीहितम्** = इच्छा हुन्छ (त्यस कार्यमा)
**जगज्जनन्यां** = भगवती लक्ष्मीमा
**वैशसं** = विरोधको भावना
**स्यात् एव** = हुन्छ नै (तर)
**दीनवत्सलः** = दीनवत्सल हजुर (भक्तले गरेको)
**फल्गु अपि** = तुच्छ कुरालाई पनि
**उरु** = ठुलो
**करोषि** = मान्नुहुन्छ
**स्वे एव** = आफ्नै
**धिष्ण्ये** = परमानन्दरूपमा
**अभिरतस्य** = रमाउने हजुरका लागि
**तया** = भगवती लक्ष्मीद्वारा
**किं** = के प्रयोजन सिद्ध हुन्छ र

**वाक्यार्थ—** हे जगत्का ईश्वर प्रभु ! जुन भगवती लक्ष्मीले गर्ने हजुरको सेवारूप कार्यमा हामीहरूको इच्छा हुन्छ र उहाँमा विरोधको भावना आउँछ नै। तर दीनवत्सल हजुर भक्तले गरेको

तुच्छ कुरालाई पनि ठुलो मान्नुहुन्छ किनभने आफ्नै परमानन्दरूपमा रमाउनुहुने हजुरका लागि भगवती लक्ष्मीद्वारा के प्रयोजन सिद्ध हुन्छ र? अर्थात् भगवती लक्ष्मी र मेरो बीचमा हजुरको सेवाकार्यको प्रतिस्पर्धा हुँदा हजुरले मेरो नै साथ दिनुहुनेछ।

**भजन्त्यथ त्वामत एव साधवो**
**व्युदस्तमायागुणविभ्रमोदयम्।**
**भवत्पदानुस्मरणादृते सतां**
**निमित्तमन्यद् भगवन्न विद्महे॥ २९॥**

**पदार्थ–**

**भगवन्** = हे भगवान्
**अथ** = यसैले
**साधवः** = साधुहरू
**व्युदस्तमायागुणविभ्रमोदयम्** = मायाका कार्यभूत गुणलाई निरस्त गर्ने
**त्वाम् एव** = हजुरको नै
**भजन्ति** = सेवा गर्दछन्
**अतः** = यसैले
**सतां** = ती साधुहरूको
**भवत्पदानुस्मरणात् ऋते** = हजुरको चरणारविन्दको स्मरणबाहेक
**अन्यत्** = अर्को
**निमित्तम्** = प्रयोजन
**न विद्महे** = जान्दैनौँ

**वाक्यार्थ–** हे भगवान्! यसैले साधुहरू मायाका कार्यभूत गुणलाई निरस्त गर्ने हजुरको नै सेवा गर्दछन्। यसैले ती साधुहरूको हजुरका चरणारविन्दको स्मरणबाहेक अर्को कुनै प्रयोजन छैन।

**मन्ये गिरं ते जगतां विमोहिनीं**
**वरं वृणीष्वेति भजन्तमात्थ यत्।**
**वाचा नु तन्त्या यदि ते जनोऽसितः**
**कथं पुनः कर्म करोति मोहितः॥ ३०॥**

**पदार्थ–**

(हे भगवान्)
**ते** = हजुरको
**गिरं** = वाणी
**जगतां** = जगत्लाई
**विमोहिनीं** = मोहित गराउने
**मन्ये** = मान्दछु
**यत्** = किनभने (हजुर)
**भजन्तम्** = सेवा गरिरहने मलाई
**वरं** = वर
**वृणीष्व इति** = ग्रहण गर भनेर
**आत्थ** = भन्नुहुन्छ
**ते** = हजुरको
**वाचा** = वचन (वेद)रूप
**तन्त्या** = डोरीले
**नु** = निश्चय नै
**यदि** = यदि
**जनः** = मानिस
**असितः** = बद्ध नभए
**कथं** = कसरी
**मोहितः** = मोहित भएर
**पुनः** = फेरि

**कर्म** = (संसारमा फस्ने) कर्म
**करोति** = गर्दछ

**वाक्यार्थ–** हे भगवान् ! हजुरको वाणी जगत्लाई मोहित गराउने किसिमको छ भन्ने मान्दछु किनभने हजुरको सेवा गरिरहने मलाई हजुर वर ग्रहण गर भनेर भन्नुहुन्छ। हजुरको वचन (वेद)रूप डोरीले यदि मानिस बद्ध नभए कसरी मोहित भएर उसले फेरि संसारमा फस्ने किसिमको कर्म गर्दछ त ?

**त्वन्माययाद्धा जन ईश खण्डितो**
**यदन्यदाशास्त ऋतात्मनोऽबुधः।**
**यथा चरेद् बालहितं पिता स्वयं**
**तथा त्वमेवार्हसि नः समीहितुम्॥ ३१॥**

पदार्थ–

**ईश** = हे भगवान्
**अद्धा** = निश्चय नै
**अबुधः** = अज्ञानी
**जनः** = मानिस
**त्वन्मायया** = हजुरको मायाले
**ऋतात्मनः** = सत्यस्वरूपबाट
**खण्डितः** = पराङ्मुख भएको छ
**यत्** = किनभने
**अन्यत्** = (हजुरबाहेक) अन्य कुरा
**आशास्ते** = चाहन्छ (तर)
**यथा** = जसरी
**पिता** = पिता
**बालहितं** = बालकको हित हुने कुरा
**स्वयं** = आफैँ नै
**चरेत्** = गर्दछ
**तथा** = त्यसै गरी
**त्वम् एव** = हजुर नै
**नः** = हाम्रो
**समीहितुम्** = हित गर्न
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! निश्चय नै अज्ञानी मानिस हजुरको मायाले सत्यस्वरूपबाट पराङ्मुख भएको छ किनभने ऊ हजुरबाहेक अन्य कुरा चाहन्छ। तर जसरी पिता बालकको हित हुने कुरा आफू नै गर्दछन् त्यसै गरी हजुर नै हाम्रो हित गर्न योग्य हुनुहुन्छ।

**विवरण–** पृथुको स्तुतिले शरणागतिको स्वरूपलाई प्रकट गरेको छ। गीता (१८। ६६)मा भगवान्ले अन्य सम्पूर्ण उपायहरूलाई छोडी केवल मेरो शरणमा आऊ भनी शरणागतिको उपदेश दिनुभएको छ। यहाँ राजा पृथु भन्नुहुन्छ– **यथा चरेद् बालहितं पिता स्वयम्।** मनुष्य इन्द्रियहरूको प्रियताको लागि भगवान्को हितकारितालाई बिर्सिन्छ र क्षणिक सुखको लोभमा ऊ अनन्त दुःखमा फस्दछ। यसबाट बच्न अन्तर्यामी परमात्माको शरणमा नै जानुपर्छ। राजाको यही आत्मसमर्पणको भाव भगवान्लाई रोक्न सफल भएको छ। भगवान् पृथुलाई छोडेर जान चाहँदा चाहँदै पनि उहाँ गरुडको काँधमा हात राखी मानौँ दोमन भई अडिनुभयो। भगवान्लाई समेत रोक्न सक्ने यो प्रेम पृथुको चरित्रको माध्यमले सबै मनुष्यहरूको अगाडि प्रकट गरिएको छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इत्यादिराजेन नुतः स विश्वदृक्**
**तमाह राजन् मयि भक्तिरस्तु ते।**
**दिष्ट्येदृशी धीर्मयि ते कृता यया**
**मायां मदीयां तरति स्म दुस्त्यजाम्॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **आदिराजेन** = आदिराज पृथुद्वारा | **मयि** = ममा | **मयि** = ममा |
| **इति** = यसप्रकार | **ते** = तपाईंको | **कृता** = गरियो |
| **नुतः** = स्तुति गरिनुभएका | **भक्तिः** = भक्ति | **यया** = जुन बुद्धिद्वारा |
| **सः** = उहाँ | **अस्तु** = होस् | **दुस्त्यजाम्** = त्याग्न कठिन |
| **विश्वदृक्** = सर्वसाक्षी भगवान्‌ले | **दिष्ट्या** = प्रारब्धले | **मदीयां** = मेरी |
| **तम्** = ती राजा पृथुलाई | **ईदृशी** = यस्तो अलौकिक | **मायां** = मायाबाट (मानिस) |
| **आह** = भन्नुभयो | **धीः** = बुद्धि | **तरति स्म** = पार पाउँदछ |
| **राजन्** = हे राजा पृथु | **ते** = तपाईंद्वारा | |

**वाक्यार्थ–** आदिराज पृथुद्वारा यसप्रकार स्तुति गरिनुभएका सर्वसाक्षी भगवान्‌ले राजा पृथुलाई भन्नुभयो– 'हे राजा पृथु ! तपाईंले केवल भक्ति मात्र चाहनुभयो। प्रारब्धले गर्दा यस्तो बुद्धि आएको हो। मानिस जुन बुद्धिद्वारा दुस्तर मेरी मायाबाट पार पाउँछ।'

**तत्त्वं कुरु मयादिष्टमप्रमत्तः प्रजापते।**
**मदादेशकरो लोकः सर्वत्राप्नोति शोभनम्॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रजापते** = हे प्रजापालक राजा | **मया** = मद्वारा | **लोकः** = मानिस |
| **तत्** = त्यसकारण | **आदिष्टम्** = आदेश गरिएको (आज्ञा) | **सर्वत्र** = यस लोक र परलोक दुबै ठाउँमा |
| **त्वं** = तपाईं | **कुरु** = गर्नुहोस् | **शोभनम्** = सुख |
| **अप्रमत्तः** = विषयमा अनासक्त भएर | **मदादेशकरः** = मेरो आदेश मान्ने | **आप्नोति** = पाउँछ |

**वाक्यार्थ–** हे प्रजापालक राजा ! त्यसकारण तपाईं विषयमा अनासक्त भएर मैले भनेको कुरा गर्नुहोस्। मेरो आदेश मान्ने मानिस यस लोक र परलोक दुबै ठाउँमा सुख पाउँछ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इति वैन्यस्य राजर्षेः प्रतिनन्द्यार्थवद्वचः ।**

**पूजितोऽनुगृहीत्वैनं गन्तुं चक्रेऽच्युतो मतिम् ॥ ३४ ॥**

**पदार्थ–**

**इति** = यसप्रकार
**पूजितः** = (पृथुद्वारा) पूजा गरिनुभएका
**अच्युतः** = अच्युत भगवान्ले
**राजर्षेः** = राजर्षि
**वैन्यस्य** = पृथुको
**अर्थवद्वचः** = सारगर्भित वचनलाई
**प्रतिनन्द्य** = आदर गरेर
**एनं** = यी राजालाई
**अनुगृहीत्वा** = कृपा गरेर
**गन्तुं** = जाने
**मतिम्** = विचार
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार पृथुद्वारा पूजा गरिनुभएका अच्युत भगवान्ले राजर्षि पृथुको सारगर्भित वचनलाई आदर गर्दै राजालाई कृपा गरेर आफ्नो धाममा जाने विचार गर्नुभयो।

**देवर्षिपितृगन्धर्वसिद्धचारणपन्नगाः ।**

**किन्नराप्सरसो मर्त्याः खगा भूतान्यनेकशः ॥ ३५ ॥**

**यज्ञेश्वरधिया राज्ञा वाग्वित्ताञ्जलिभक्तितः ।**

**सभाजिता ययुः सर्वे वैकुण्ठानुगतास्ततः ॥ ३६ ॥**

**पदार्थ–**

**ततः** = त्यसपछि
**राज्ञा** = राजा पृथुद्वारा
**यज्ञेश्वरधिया** = भगवद्बुद्धिले
**वाग्वित्ताञ्जलिभक्तितः** = वचन, धन, नमन र भजनद्वारा
**सभाजिताः** = सत्कार गरिएका
**देवर्षिपितृगन्धर्वसिद्धचारण-पन्नगाः** = देवता, ऋषि, पितृ, गन्धर्व, सिद्ध, चारण, नाग
**किन्नराप्सरसः** = किन्नर, अप्सरा
**मर्त्याः** = मनुष्य
**खगाः** = पक्षी आदि
**अनेकशः** = अनेक प्रकारका
**भूतानि** = प्राणी र
**वैकुण्ठानुगताः** = भगवान्का पार्षद
**सर्वे** = सबै (आ-आफ्नो ठाउँमा)
**ययुः** = गए

**वाक्यार्थ–** त्यसपछि राजा पृथुद्वारा भगवद्बुद्धिले वचन, धन, नमन र भजनद्वारा सत्कार गरिएका देवता, ऋषि, पितृ, गन्धर्व, सिद्ध, चारण, नाग, किन्नर, अप्सरा, मनुष्य, पक्षी आदि अनेक प्रकारका प्राणी र भगवान्का पार्षद सबै आ-आफ्नो ठाउँमा गए।

**भगवानपि राजर्षेः सोपाध्यायस्य चाच्युतः ।**

**हरन्निव मनोऽमुष्य स्वधाम प्रत्यपद्यत ॥ ३७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भगवान्** = भगवान् | **अमुष्य** = यी पृथु | **हरन् इव** = हरण गर्दै झैं गरी |
| **अच्युतः अपि** = अच्युत पनि | **राजर्षेः** = राजाको | **स्वधाम** = आफ्नो धाममा |
| **सोपाध्यायस्य** = ऋत्विक्सहित | **मनः च** = मन पनि | **प्रत्यपद्यत** = जानुभयो |

**वाक्यार्थ–** भगवान् अच्युत पनि ऋत्विक्सहित यी राजा पृथुको मन हरण गरेझैं गरी आफ्नो धाममा जानुभयो।

**अदृष्टाय नमस्कृत्य नृपः सन्दर्शितात्मने।**
**अव्यक्ताय च देवानां देवाय स्वपुरं ययौ॥ ३८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **नृपः च** = राजा पृथु पनि | **अदृष्टाय** = नदेखिने हुनुभएका | **स्वपुरं** = आफ्नो राजधानीमा |
| **अव्यक्ताय** = अव्यक्त भएर पनि | **देवानां** = देवताका | **ययौ** = जानुभयो |
| **सन्दर्शितात्मने** = आफ्नो स्वरूप देखाएर | **देवाय** = देवता भगवान्लाई | |
| | **नमस्कृत्य** = नमस्कार गरेर | |

**वाक्यार्थ–** राजा पृथु पनि अव्यक्त भएर पनि आफ्नो स्वरूप देखाएर नदेखिने हुनुभएका देवाधिदेव भगवान्लाई नमस्कार गरेर आफ्नो राजधानीमा जानुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे विंशोऽध्यायः॥ २०॥**

# अथ एकविंशोऽध्यायः

## राजा पृथुद्वारा आफ्ना प्रजालाई उपदेश

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**मौक्तिकैः कुसुमस्रग्भिर्दुकूलैः स्वर्णतोरणैः ।**
**महासुरभिभिर्धूपैर्मण्डितं तत्र तत्र वै ॥ १ ॥**

**पदार्थ–**
(महाराज पृथु आफ्नो राजधानीमा फर्कनुभएको समयमा त्यो नगर)
**मौक्तिकैः** = मोती
**कुसुमस्रग्भिः** = फूलका माला
**दुकूलैः** = वस्त्र
**स्वर्णतोरणैः** = सुनका तोरण
**महासुरभिभिः** = अत्यधिक सुगन्धित
**धूपैः** = धूपहरूद्वारा
**तत्र तत्र** = जहाँतहीँ
**वै** = निश्चय नै
**मण्डितं** = शोभित थियो

**वाक्यार्थ–** हे विदुरजी ! त्यस समय महाराज पृथुको नगर मोती, फूलका माला, अनेक प्रकारका वस्त्र, सुनका तोरण एवं अत्यधिक सुगन्धित धूपहरूद्वारा जहाँतहीँ सुशोभित थियो।

**चन्दनागुरुतोयार्द्ररथ्याचत्वरमार्गवत् ।**
**पुष्पाक्षतफलैस्तोक्मैर्लाजैरर्चिभिरर्चितम् ॥ २ ॥**

**पदार्थ–**
(राजा पृथुको राजधानी)
**चन्दनागुरुतोयार्द्ररथ्याचत्वर-मार्गवत्** = चन्दन र अगुरुको पानीले चिसो बनाइएका गल्ली, आँगन र मार्गले युक्त थियो
(यस्तै)
**पुष्पाक्षतफलैः** = फूल, अक्षता, फल
**तोक्मैः** = जमरा
**लाजैः** = लाजा र
**अर्चिभिः** = बत्तीहरूद्वारा
**अर्चितम्** = सजाइएको थियो

**वाक्यार्थ–** राजा पृथुको राजधानी चन्दन र अगुरुको पानीले चिसो बनाइएका गल्ली, आँगन र मार्गले युक्त थियो। यस्तै फूल, अक्षता, फल, जमरा, लाजा र बत्तीहरूद्वारा सजाइएको थियो।

**सवृन्दैः कदलीस्तम्भैः पूगपोतैः परिष्कृतम् ।**
**तरुपल्लवमालाभिः सर्वतः समलङ्कृतम् ॥ ३ ॥**

**पदार्थ–**
(राजा पृथुको राजधानी)
**सवृन्दैः** = फलफूलका गुच्छाले युक्त

**कदलीस्तम्भैः** = केराका खम्बा तथा
**पूगपोतैः** = सुपारीका सानासाना वृक्षद्वारा
**परिष्कृतम्** = सिँगारिएको र
**तरुपल्लवमालाभिः** = वृक्षका पालुवाका मालाहरूद्वारा
**सर्वतः** = सबैतिर
**समलङ्कृतम्** = सजाइएको थियो

**वाक्यार्थ–** यस्तै राजा पृथुको राजधानी फलफूलका गुच्छाले युक्त केराका खम्बा र सुपारीका सानासाना वृक्षद्वारा सिँगारिएको र वृक्षका पालुवाका मालाहरूद्वारा सबैतिर सजाइएको थियो।

**प्रजास्तं दीपबलिभिः सम्भृताशेषमङ्गलैः।**
**अभीयुर्मृष्टकन्याश्च मृष्टकुण्डलमण्डिताः॥ ४॥**

पदार्थ–

**दीपबलिभिः** = बत्तीसहित उपहार र
**सम्भृताशेषमङ्गलैः** = सम्पूर्ण माङ्गलिक सामग्री लिएका
**प्रजाः** = प्रजाहरू
**मृष्टकुण्डलमण्डिताः** = उज्ज्वल कुण्डलद्वारा सिँगारिएका
**मृष्टकन्याः च** = स्नान आदिद्वारा शुद्ध भएका कन्याहरू पनि
**तं** = ती पृथु राजालाई
**अभीयुः** = स्वागत गर्न आए

**वाक्यार्थ–** बत्तीसहित उपहार र सम्पूर्ण माङ्गलिक सामग्री लिएका प्रजाहरू र उज्ज्वल कुण्डलद्वारा सिँगारिएका र स्नान आदिद्वारा शुद्ध भएका कन्याहरू पृथु राजालाई स्वागत गर्न आए।

**शङ्खदुन्दुभिघोषेण ब्रह्मघोषेण चर्त्विजाम्।**
**विवेश भवनं वीरः स्तूयमानो गतस्मयः॥ ५॥**

पदार्थ–

**शङ्खदुन्दुभिघोषेण** = शङ्ख र दुन्दुभिको आवाजद्वारा र
**ऋत्विजाम्** = ब्राह्मणहरूको
**ब्रह्मघोषेण च** = वेदपाठद्वारा
**स्तूयमानः** = स्तुति गरिएका
**गतस्मयः** = निरहङ्कारी
**वीरः** = वीर राजा पृथु
**भवनं** = राजमहलमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** शङ्ख र दुन्दुभिको आवाजद्वारा अनि ब्राह्मणहरूको वेदपाठद्वारा स्तुति गरिएका निरहङ्कारी राजा पृथु राजमहलमा प्रवेश गर्नुभयो।

**पूजितः पूजयामास तत्र तत्र महायशाः।**
**पौराञ्जानपदांस्तांस्तान् प्रीतः प्रियवरप्रदः॥ ६॥**

पदार्थ–

**तत्र तत्र** = जहाँतहीँ
**पूजितः** = पूजा गरिएका (यसैले)
**प्रीतः** = खुसी भएका
**प्रियवरप्रदः** = प्रिय वर दिन सक्ने
**महायशाः** = परम यशस्वी राजा

पृथुले
**तान् तान्** = ती–ती
**पौरान्** = नगरवासी र
**जानपदान्** = ग्रामवासीहरूलाई
**पूजयामास** = (इच्छाअनुसार वर दिएर) सम्मानित गर्नुभयो

**वाक्यार्थ–** जहाँतहीँ पूजा गरिएका, यसैले खुसी भएका प्रिय वर दिन सक्ने परम यशस्वी राजा पृथुले ती–ती नगरवासी र ग्रामवासीहरूलाई इच्छाअनुसार वर दिएर सम्मानित गर्नुभयो।

**स एवमादीन्यनवद्यचेष्टितः**
**कर्माणि भूयांसि महान् महत्तमः।**
**कुर्वन् शशासावनिमण्डलं यशः**
**स्फीतं निधायारुरुहे परं पदम्॥ ७॥**

**पदार्थ–**
**अनवद्यचेष्टितः** = अनिन्द्य कर्म गर्ने
**महान्** = (गुणद्वारा) महान् र
**महत्तमः** = अत्यन्त पूज्य
**सः** = उहाँ राजा पृथुले
**एवम् आदीनि** = यस्तै यज्ञ आदि
**भूयांसि** = ठुलाठुला
**कर्माणि** = कर्महरू
**कुर्वन्** = गर्दै
**अवनिमण्डलं** = भूमण्डलको
**शशास** = शासन गर्नुभयो (त्यसपछि)
**स्फीतं** = विपुल
**यशः** = कीर्ति
**निधाय** = राखेर
**परं पदम्** = (भगवान्को) परम पद
**आरुरुहे** = प्राप्त गर्नुभयो

**वाक्यार्थ–** अनिन्द्य कर्म गर्ने गुणद्वारा महान् र पूज्य राजा पृथुले यस्तै यज्ञ आदि ठुलाठुला कर्महरू गर्दै भूमण्डलको शासन गर्नुभयो। त्यसपछि उहाँले ठुलो कीर्ति फैलाएर अन्त्यमा भगवान्को परम पद प्राप्त गर्नुभयो।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**तदादिराजस्य यशो विजृम्भितं**
**गुणैरशेषैर्गुणवत्सभाजितम्।**
**क्षत्ता महाभागवतः सदस्पते**
**कौषारविं प्राह गृणन्तमर्चयन्॥ ८॥**

**पदार्थ–**
**सदस्पते** = हे शौनकजी
**अशेषैः** = सम्पूर्ण
**गुणैः** = गुणद्वारा
**विजृम्भितं** = बढेको
**गुणवत्सभाजितम्** = गुणीहरू–द्वारा आदर गरिएको
**आदिराजस्य** = आदिराज पृथुको
**तत्** = त्यस पृथ्वीदोहन आदि
**यशः** = कीर्ति

**गृणन्तम्** = वर्णन गरिरहेका
**कौषारविं** = मैत्रेयजीलाई
**अर्चयन्** = सत्कार गर्दै
**महाभागवतः** = भगवान्का परम भक्त
**क्षत्ता** = विदुरजीले
**प्राह** = सोध्नुभयो

**वाक्यार्थ–** हे शौनकजी ! सम्पूर्ण गुणद्वारा बढेको र गुणीहरूद्वारा आदर गरिएको आदिराज पृथुको त्यस पृथ्वीदोहन आदि कीर्ति वर्णन गरिरहेका मैत्रेयजीलाई सत्कार गर्दै भगवान्का परम भक्त विदुरजीले सोध्नुभयो ।

**विदुर उवाच** (विदुरजीले भन्नुभयो)

**सोऽभिषिक्तः पृथुर्विप्रैर्लब्धाशेषसुरार्हणः ।**
**बिभ्रत् स वैष्णवं तेजो बाह्वोर्याभ्यां दुदोह गाम् ॥ ९ ॥**

**पदार्थ–**
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**अभिषिक्तः** = अभिषेक गरिएका र
**लब्धाशेषसुरार्हणः** = ब्रह्मा आदि समस्त देवताबाट छत्र, आसन आदि राजकीय सामग्री प्राप्त गरेका
**सः** = उहाँ
**पृथुः** = राजा पृथुले
**याभ्यां** = जुन हातद्वारा
**गाम्** = पृथ्वीको
**दुदोह** = दोहन गर्नुभयो
**बाह्वोः** = ती हातमा
**वैष्णवं** = वैष्णव
**तेजः** = तेज
**बिभ्रत्** = धारण गर्दै
**सः** = उहाँले (अरू के-के गर्नुभयो)

**वाक्यार्थ–** ब्राह्मणहरूद्वारा अभिषेक गरिएका र ब्रह्मा आदि समस्त देवताबाट छत्र, आसन आदि राजकीय सामग्री प्राप्त गरेका राजा पृथुले जुन हातद्वारा पृथ्वीको दोहन गर्नुभयो ती हातमा वैष्णव तेज धारण गर्दै उहाँले अरू के-के गर्नुभयो ?

**को न्वस्य कीर्तिं न शृणोत्यभिज्ञो**
**यद्विक्रमोच्छिष्टमशेषभूपाः ।**
**लोकाः सपाला उपजीवन्ति काम-**
**मद्यापि तन्मे वद कर्म शुद्धम् ॥ १० ॥**

**पदार्थ–**
**यद्विक्रमोच्छिष्टम्** = जुन राजा पृथुको पृथ्वीदोहन आदि पराक्रमको शेषरूप
**कामम्** = भोग्य सामग्रीबाट
**अद्य अपि** = आजसम्म पनि
**अशेषभूपाः** = सम्पूर्ण राजाहरू र
**सपालाः** = इन्द्र आदि लोकपाल सहित
**लोकाः** = सम्पूर्ण प्राणीहरू
**उपजीवन्ति** = जीवन निर्वाह गर्दछन्
**अस्य** = यस्ता राजा पृथुको

| | | |
|---|---|---|
| **कीर्तिं** = कीर्ति | **न शृणोति** = सुन्दैन (यसर्थ) | **कर्म** = कर्म |
| **अभिज्ञः** = गुणग्राही | **तत्** = त्यो | **मे** = मलाई |
| **कः नु** = कसले | **शुद्धम्** = पवित्र | **वद** = भन्नुहोस् |

**वाक्यार्थ–** जो राजा पृथुको पृथ्वीदोहन आदि पराक्रमको शेषरूप भोग्य सामग्रीबाट आजसम्म पनि सम्पूर्ण राजाहरू र इन्द्र आदि लोकपालसहित सम्पूर्ण प्राणीहरू जीवन निर्वाह गर्दछन् त्यस्ता राजा पृथुको कीर्ति कुन गुणग्राही व्यक्तिले सुन्दैन ? यसर्थ ती पृथु राजाका पवित्र कर्महरू मलाई भन्नुहोस्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**गङ्गायमुनयोर्नद्योरन्तरा क्षेत्रमावसन्।**

**आरब्धानेव बुभुजे भोगान् पुण्यजिहासया ॥ ११ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **गङ्गायमुनयोः** = गङ्गा र यमुना | **आवसन्** = बसेका उहाँ पृथुले | भएका |
| **नद्योः** = नदीको | **पुण्यजिहासया** = भोग गरेर | **भोगान्** = भोगहरू |
| **अन्तरा** = मध्य | पुण्यकर्मको नाश गर्ने इच्छाले | **बुभुजे** = भोग्नुभयो |
| **क्षेत्रम्** = क्षेत्रमा | **आरब्धान् एव** = प्रारब्धवश प्राप्त | |

**वाक्यार्थ–** गङ्गा र यमुना नदीको मध्य क्षेत्रमा बसेका पृथुले भोग गरेर पुण्यकर्मको नाश गर्ने इच्छाले प्रारब्धवश प्राप्त भएका भोगहरू मात्र भोग्नुभयो।

**सर्वत्रास्खलितादेशः सप्तद्वीपैकदण्डधृक्।**

**अन्यत्र ब्राह्मणकुलादन्यत्राच्युतगोत्रतः ॥ १२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्राह्मणकुलात्** = ब्राह्मणको वंशबाट | **अन्यत्र** = बाहेक | **सप्तद्वीपैकदण्डधृक्** = सातै द्वीपका एकमात्र दण्डधारक |
| **अन्यत्र** = बाहेक | **सर्वत्र** = सबै ठाउँमा | हुनुहुन्थ्यो |
| **अच्युतगोत्रतः** = भगवद्भक्तबाट | **अस्खलितादेशः** = आदेश विफल नहुने राजा पृथु | |

**वाक्यार्थ–** ब्राह्मणको वंश र भगवद्भक्तबाट बाहेक कुनै ठाउँमा पनि आदेश विफल नहुने राजा पृथु सातै द्वीपका एकमात्र दण्डधारक शासनकर्ता हुनुहुन्थ्यो।

**एकदासीन्महासत्रदीक्षा तत्र दिवौकसाम्।**

**समाजो ब्रह्मर्षीणां च राजर्षीणां च सत्तम ॥ १३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सत्तम** = हे सज्जनोत्तम विदुरजी | **आसीत्** = थियो | **राजर्षीणां च** = राजर्षिहरूको र |
| **एकदा** = एकदिन (उहाँले) | **तत्र** = त्यस यज्ञमा | **ब्रह्मर्षीणां च** = ब्रह्मर्षिहरूको पनि |
| **महासत्रदीक्षा** = ठूलो यज्ञको दीक्षा लिने समय | **दिवौकसाम्** = स्वर्गमा रहने देवताहरूको | **समाजः** = जमघट थियो |

**वाक्यार्थ–** हे सज्जनोत्तम विदुरजी ! एकदिन पृथुले ठूलो यज्ञको दीक्षा लिने समय थियो। त्यस यज्ञमा स्वर्गमा रहने देवताहरू, राजर्षि र ब्रह्मर्षिहरूको पनि जमघट थियो।

**तस्मिन्नर्हत्सु सर्वेषु स्वर्चितेषु यथार्हतः।**

**उत्थितः सदसो मध्ये ताराणामुडुराडिव ॥ १४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तस्मिन्** = त्यस यज्ञमा | **स्वर्चितेषु** = राम्ररी पूजा भएपछि | **उडुराट् इव** = चन्द्रमाजस्तै (राजा पृथु) |
| **सर्वेषु** = सबै | **सदसः** = सभाको | **उत्थितः** = उठ्नुभयो |
| **अर्हत्सु** = पूज्य महानुभावहरूको | **मध्ये** = बीचमा | |
| **यथार्हतः** = योग्यताको क्रमअनुसार | **ताराणाम्** = ताराका बीचमा रहेका | |

**वाक्यार्थ–** त्यस यज्ञमा सबै पूज्य महानुभावहरूको योग्यताको क्रमअनुसार राम्ररी पूजा भएपछि सभाको बीचमा ताराका बीचमा रहेका चन्द्रमाजस्तै गरी राजा पृथु उठ्नुभयो।

**प्रांशुः पीनायतभुजो गौरः कञ्जारुणेक्षणः।**

**सुनासः सुमुखः सौम्यः पीनांसः सुद्विजस्मितः ॥ १५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| (राजा पृथु) | **कञ्जारुणेक्षणः** = कमलसमान अलिअलि राता आँखा | **पीनांसः** = ठूलो काँध |
| **प्रांशुः** = अग्लो शरीर | **सुनासः** = राम्रो नाक | **सुद्विजस्मितः** = राम्रा दाँत र सुन्दर मुस्कान भएका हुनुहुन्थ्यो |
| **पीनायतभुजः** = मोटा र लामा हात | **सुमुखः** = राम्रो मुख | |
| **गौरः** = गोरो वर्ण | **सौम्यः** = सुन्दर स्वरूप | |

**वाक्यार्थ–** राजा पृथु अग्लो शरीर, मोटा र लामा हात, गोरो वर्ण, कमलसमान अलिअलि राता आँखा, राम्रो नाक, राम्रो मुख, सुन्दर स्वरूप, ठूलो काँध, राम्रा दाँत र सुन्दर मुस्कानयुक्त हुनुहुन्थ्यो।

**व्यूढवक्षा बृहच्छ्रोणिर्वलिवल्गुदलोदरः।**
**आवर्तनाभिरोजस्वी काञ्चनोरुरुदग्रपात्॥ १६॥**

**पदार्थ–**
(राजा पृथु) **व्यूढवक्षाः** = चौडा छाती **बृहच्छ्रोणिः** = ठुलो कम्मर **वलिवल्गुदलोदरः** = रेखाका कारण सुन्दर र (पिपलको) पातजस्तै माथि फैलिएको र तल खुम्चिएको पेट **आवर्तनाभिः** = पानीको भूँवरीजस्तै गहिरो नाभि **ओजस्वी** = तेजस्वी शरीर **काञ्चनोरुः** = सुनजस्तै चम्किला तिघ्रा **उदग्रपात्** = अगिल्लो भागमा उठेका गोडा (भएका हुनुहुन्थ्यो)

**वाक्यार्थ–** राजा पृथु चौडा छाती, ठुलो कम्मर, रेखाका कारण सुन्दर र पिपलको पातजस्तै माथि फैलिएको र तल खुम्चिएको पेट, पानीको भूँवरीजस्तै गहिरो नाभि, तेजस्वी शरीर, सुनजस्तै चम्किला तिघ्रा, अगिल्लो भागमा उठेका गोडा भएका हुनुहुन्थ्यो।

**सूक्ष्मवक्रासितस्निग्धमूर्धजः कम्बुकन्धरः।**
**महाधने दुकूलाग्र्ये परिधायोपवीय च॥ १७॥**

**पदार्थ–**
**सूक्ष्मवक्रासितस्निग्धमूर्धजः** = मसिना, घुम्रिएका, काला र चिल्ला रौँ **कम्बुकन्धरः** = शङ्खजस्तै घाँटी भएका राजा पृथु **महाधने** = बहुमूल्य **दुकूलाग्र्ये** = उत्तम दुई वस्त्रमध्ये (एउटा) **परिधाय** = पहिरेर र (अर्को) **उपवीय च** = ओढेर (बस्नुभएको थियो)

**वाक्यार्थ–** मसिना, घुम्रिएका, काला र चिल्ला रौँ र शङ्खजस्तै घाँटी भएका राजा पृथु बहुमूल्य उत्तम दुई वस्त्रमध्ये एउटा (धोती) पहिरेर र अर्को (उपर्ना) ओढेर बस्नुभएको थियो।

**व्यञ्जिताशेषगात्रश्रीर्नियमे न्यस्तभूषणः।**
**कृष्णाजिनधरः श्रीमान् कुशपाणिः कृतोचितः॥ १८॥**

**पदार्थ–**
**नियमे** = (यज्ञदीक्षाको) नियमानुसार **न्यस्तभूषणः** = गहना फुकालेका (यसैले) **व्यञ्जिताशेषगात्रश्रीः** = सम्पूर्ण शरीरको स्वाभाविक शोभा स्पष्ट देखिने भएका **कृष्णाजिनधरः** = कृष्णमृगको चर्म धारण गरेका **कुशपाणिः** = हातमा कुश लिएका **श्रीमान्** = तेजस्वी राजा पृथु **कृतोचितः** = नित्यकर्म सम्पन्न गरेर (बस्नुभएको थियो)

**वाक्यार्थ–** यज्ञदीक्षाको नियमानुसार गहना फुकालेकाले सम्पूर्ण शरीरको स्वाभाविक शोभा स्पष्ट रूपमा देखिने भएका, कृष्णमृगको चर्म धारण गरेका र हातमा कुश लिएका तेजस्वी राजा पृथु नित्यकर्म सम्पन्न गरेर बस्नुभएको थियो।

**शिशिरस्निग्धताराक्षः समैक्षत समन्ततः।**
**ऊचिवानिदमुर्वीशः सदः संहर्षयन्निव ॥ १९ ॥**
**चारु चित्रपदं श्लक्ष्णं मृष्टं गूढमविक्लवम्।**
**सर्वेषामुपकारार्थं तदा अनुवदन्निव ॥ २० ॥**

**पदार्थ–**

**शिशिरस्निग्धताराक्षः** = शीतल एवं स्नेहपूर्ण नेत्र भएका
**ऊर्वीशः** = पृथ्वीपति राजा पृथुले
**समन्ततः** = सबैतिरबाट
**सदः** = सभालाई
**संहर्षयन् इव** = प्रसन्न बनाउने जस्तै गरी
**समैक्षत** = हेर्नुभयो र
**तदा** = त्यस वेला
**सर्वेषाम्** = सबैको
**उपकारार्थं** = कल्याणका लागि
**अनुवदन् इव** = आफूले अनुभव गरेको कुरा भनेजस्तै गरी
**चारु** = मधुर
**चित्रपदं** = विचित्र पदले युक्त
**श्लक्ष्णं** = स्पष्ट
**मृष्टं** = शुद्ध
**गूढम्** = गहिरो अर्थ भएको
**अविक्लवम्** = संशयरहित
**इदम्** = यो वचन
**ऊचिवान्** = भन्नुभयो

**वाक्यार्थ–** शीतल एवं स्नेहपूर्ण नेत्र भएका पृथ्वीपति राजा पृथुले सबैतिरबाट सभालाई प्रसन्न बनाउने जस्तै गरी हेर्नुभयो र त्यस वेला सबैको कल्याणका लागि आफूले अनुभव गरेको कुरा भने जस्तै गरी मधुर, विचित्र पदले युक्त, स्पष्ट, शुद्ध, गहिरो अर्थ भएको संशयरहित यो वचन भन्नुभयो।

**राजोवाच** (राजा पृथुले भन्नुभयो)

**सभ्याः शृणुत भद्रं वः साधवो य इहागताः।**
**सत्सु जिज्ञासुभिर्धर्ममावेद्यं स्वमनीषितम्॥ २१ ॥**

**पदार्थ–**

**सभ्याः** = सभामा उपस्थित
**साधवः** = हे सज्जनवृन्द
**ये** = जो
**इह** = यस यज्ञमा
**आगताः** = आउनुभएको छ (उहाँहरू सबैले)
**वः** = तपाईंहरूको
**भद्रं** = कल्याण हुने कुरा
**शृणुत** = सुन्नुहोस् (किनभने)
**जिज्ञासुभिः** = जिज्ञासुहरूले
**स्वमनीषितम्** = आफूले सोचेको
**धर्मम्** = धर्मसम्बन्धी कुरा (युक्तता र अयुक्तताको परीक्षणका लागि)

**सत्सु** = सज्जन समुदायमा | **आवेद्यं** = निवेदन गर्नुपर्दछ

**वाक्यार्थ–** सभामा उपस्थित हे सज्जनवृन्द ! जो यस यज्ञमा आउनुभएको छ तपाईंहरू सबैले आफ्नो कल्याण हुने कुरा सुन्नुहोस् किनभने जिज्ञासुहरूले आफूले सोचेको धर्मसम्बन्धी कुरा युक्तता र अयुक्तताको परीक्षणका लागि सज्जनसमुदायमा निवेदन गर्नुपर्दछ।

**अहं दण्डधरो राजा प्रजानामिह योजितः।**
**रक्षिता वृत्तिदः स्वेषु सेतुषु स्थापिता पृथक् ॥ २२ ॥**

**पदार्थ–**

**अहं** = म
**इह** = यहाँ
**प्रजानाम्** = प्रजाहरूको
**राजा** = राजा
**योजितः** = बनाइएको छु (यसैले)
**दण्डधरः** = (दुष्टहरूका लागि) दण्ड धारण गर्ने
**रक्षिता** = (सज्जनहरूको) रक्षक र
**वृत्तिदः** = (सम्पूर्ण प्रजाको) जीविकादाता
**स्वेषु** = आ–आफ्नो
**सेतुषु** = मर्यादामा
**पृथक्** = अधिकारअनुसार छुट्टाछुट्टै सबैलाई
**स्थापिता** = राख्ने व्यक्तिका रूपमा म रहेको छु

**वाक्यार्थ–** म यहाँ प्रजाहरूको राजा बनाइएको छु। यसैले दुष्टहरूका लागि दण्ड धारण गर्ने, सज्जनहरूको रक्षक र सम्पूर्ण प्रजाका जीविकादाता एवं आ–आफ्नो मर्यादामा अधिकारअनुसार छुट्टाछुट्टै सबैलाई राख्ने व्यक्तिका रूपमा म रहेको छु।

**तस्य मे तदनुष्ठानाद् यानाहुर्ब्रह्मवादिनः।**
**लोकाः स्युः कामसन्दोहा यस्य तुष्यति दिष्टदृक् ॥ २३ ॥**

**पदार्थ–**

**यस्य** = जुन राजाको (स्वधर्मको पालनले)
**दिष्टदृक्** = कर्मसाक्षी भगवान् श्रीहरि
**तुष्यति** = प्रसन्न हुनुहन्छ
**तस्य** = त्यसले प्राप्त गर्ने
**यान्** = जुन लोकलाई (त्यस स्वधर्मपालनका फल हुन् भनेर)
**ब्रह्मवादिनः** = ब्रह्मवादीहरू
**आहुः** = भन्दछन्
**कामसन्दोहाः** = कामनालाई पूर्ण गर्ने
**लोकाः** = ती लोकहरू
**तदनुष्ठानात्** = त्यस स्वधर्मको पालनका कारण
**मे** = मलाई पनि
**स्युः** = प्राप्त होऊन्

**वाक्यार्थ–** जुन राजाको स्वधर्मको पालनले कर्मसाक्षी भगवान् श्रीहरि प्रसन्न भई उहाँबाट प्राप्त गर्ने लोकलाई उक्त स्वधर्मपालनका फल हुन् भनेर ब्रह्मवादीहरू भन्दछन्, कामनालाई पूर्ण गर्ने त्यस्ता लोकहरू त्यस स्वधर्मको पालनका कारण मलाई पनि प्राप्त होऊन्।

**य उद्धरेत् करं राजा प्रजा धर्मेष्वशिक्षयन्।**

**प्रजानां शमलं भुङ्क्ते भगं च स्वं जहाति सः॥ २४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो | **करं** = कर मात्र | **स्वं** = आफ्नो |
| **राजा** = राजा भएर | **उद्धरेत्** = लिन्छ | **भगं च** = ज्ञान, ऐश्वर्य आदिलाई पनि |
| **धर्मेषु** = धर्ममा | **सः** = त्यसले | **जहाति** = गुमाउँछ |
| **प्रजाः** = प्रजाहरूलाई | **प्रजानां** = प्रजाको | |
| **अशिक्षयन्** = नलगाई (तिनीहरूबाट केवल) | **शमलं** = पाप | |
| | **भुङ्क्ते** = भोग्दछ र | |

**वाक्यार्थ–** जो राजा भएर धर्ममा प्रजाहरूलाई नलगाई तिनीहरूबाट केवल कर मात्र लिन्छ त्यसले प्रजाको पाप भोग्दछ र आफ्नो ज्ञान, ऐश्वर्य आदिलाई पनि गुमाउँछ।

**तत्प्रजा भर्तृपिण्डार्थं स्वार्थमेवानसूयवः।**

**कुरुताधोक्षजधियस्तर्हि मेऽनुग्रहः कृतः॥ २५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **प्रजाः** = हे प्रजाहरू | **अधोक्षजधियः** = भगवान्मा मन लगाएर | **कुरुत** = गर्नुहोस् |
| **तत्** = त्यसकारण | **भर्तृपिण्डार्थं** = स्वामीको (मेरो) परलोकको हितका लागि | **तर्हि** = त्यसो भए |
| **अनसूयवः** = परस्परको दोषदृष्टि छोडेर | **स्वार्थम् एव** = स्वधर्मको नै पालन | **मे** = मलाई |
| | | **अनुग्रहः** = अनुग्रह |
| | | **कृतः** = गरेको मानिनेछ |

**वाक्यार्थ–** हे प्रजाहरू! त्यसकारण परस्परको दोषदृष्टि छोडेर भगवान्मा मन लगाएर मेरो परलोकको हितका लागि स्वधर्मको मात्र पालन गर्नुहोस्, त्यसो भए तपाईंहरूले मलाई अनुग्रह गरेको मानिनेछ।

**यूयं तदनुमोदध्वं पितृदेवर्षयोऽमलाः।**

**कर्तुः शास्तुरनुज्ञातुस्तुल्यं यत् प्रेत्य तत्फलम्॥ २६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अमलाः** = शुद्ध चित्त भएका | **यूयं** = तपाईंहरू | **अनुमोदध्वं** = अनुमोदन गर्नुहोस् |
| **पितृदेवर्षयः** = हे पितृ, देवता र ऋषिहरू (यदि मैले ठीक भनेको छु भने) | **तत्** = त्यसलाई | **यत्** = किनभने |
| | | **प्रेत्य** = मरेपछि |

**तत्फलम्** = त्यसको फल
**कर्तुः** = कर्ता
**शास्तुः** = उपदेष्टा र
**अनुज्ञातुः** = समर्थकका लागि
**तुल्यं** = बराबर हुन्छ

**वाक्यार्थ–** शुद्ध चित्त भएका हे पितृ, देवता र ऋषिहरू यदि मैले ठीक भनेको छु भने तपाईंहरू मेरो अनुरोधलाई अनुमोदन गर्नुहोस् किनभने मरेपछि त्यसको फल कर्ता, उपदेष्टा र समर्थकका लागि बराबर प्राप्त हुन्छ।

**अस्ति यज्ञपतिर्नाम केषाञ्चिदर्हसत्तमाः।**

**इहामुत्र च लक्ष्यन्ते ज्योत्स्नावत्यः क्वचिद् भुवः॥ २७॥**

पदार्थ–

**अर्हसत्तमाः** = हे माननीय सज्जनहरू
**केषाञ्चित्** = केहीको मतमा त (कर्मको फल दिनेवाला)
**यज्ञपतिः** = यज्ञपति
**नाम** = नामका भगवान् नै
**अस्ति** = हुनुहुन्छ (यसैले)
**इह** = यस लोक र
**अमुत्र च** = परलोकमा पनि (कर्मको फलअनुसार)
**ज्योत्स्नावत्यः** = तेजोमय
**भुवः** = भोगभूमि अर्थात् शरीर
**क्वचित्** = कहीँकहीं मात्र
**लक्ष्यन्ते** = देखिन्छन्

**वाक्यार्थ–** हे माननीय सज्जनहरू ! कसैको मतमा त कर्मको फल दिनेवाला यज्ञपति नामका भगवान् नै हुनुहुन्छ। यसैले यस लोक र परलोकमा पनि कर्मको फलअनुसार तेजोमय भोगभूमि अर्थात् शरीर कहीँकहीँ मात्र देखिन्छन्।

**मनोरुत्तानपादस्य ध्रुवस्यापि महीपतेः।**

**प्रियव्रतस्य राजर्षेरङ्गस्यास्मत्पितुः पितुः॥ २८॥**

**ईदृशानामथान्येषामजस्य च भवस्य च।**

**प्रह्लादस्य बलेश्चापि कृत्यमस्ति गदाभृता॥ २९॥**

**दौहित्रादीनृते मृत्योः शोच्यान् धर्मविमोहितान्।**

**वर्गस्वर्गापवर्गाणां प्रायेणैकात्म्यहेतुना॥ ३०॥**

पदार्थ–

**मृत्योः** = मृत्युका
**दौहित्रादीन्** = नाति वेन आदि
**शोच्यान्** = शोक गर्न योग्य
**धर्मविमोहितान्** = धर्मको विषयमा भ्रान्त व्यक्तिलाई
**ऋते** = छोडेर
**महीपतेः** = राजा
**मनोः** = मनुको
**उत्तानपादस्य** = उत्तानपादको
**ध्रुवस्य** = ध्रुवको
**राजर्षेः** = राजर्षि
**प्रियव्रतस्य** = प्रियव्रतको

**अस्मात्पितुः** = मेरा बुवाका
**अपि** = पनि
**पितुः** = बुवाको
**अङ्गस्य** = अङ्गको
**अजस्य** = ब्रह्माको
**भवस्य** = शिवको
**प्रह्लादस्य** = प्रह्लादको र
**बलेः च अपि** = बलिको पनि
**अथ** = यसपछि
**ईदृशानाम्** = यस्तै
**अन्येषाम्** = अरूको मतमा त
**वर्गस्वर्गापवर्गाणां** = धर्म, अर्थ र कामरूप त्रिवर्ग, स्वर्ग र अपवर्ग (मोक्ष)को
**प्रायेण** = प्रायः
**ऐकात्म्यहेतुना** = एकरूपताको कारणले (कर्मफलदाताको रूपमा)
**गदाभृता** = गदाधारी भगवान् विष्णुका साथ
**कृत्यम्** = प्रयोजन (सम्बन्ध)
**अस्ति** = छ

**वाक्यार्थ–** मृत्युका नाति वेन आदि शोक गर्न योग्य र धर्मको विषयमा भ्रान्त भएका व्यक्तिलाई छोडेर राजा मनु, उत्तानपाद, ध्रुव, राजर्षि प्रियव्रत, मेरा बुवाका पनि बुवा अङ्ग, ब्रह्मा, शिव, प्रह्लाद, बलि र यस्तै अरूको मतमा त धर्म, अर्थ र कामरूप त्रिवर्ग, स्वर्ग र अपवर्ग (मोक्ष)को प्रायः एकरूपताको कारणले कर्मफलदाताको रूपमा भगवान्‌का साथ सम्बन्ध छ।

**यत्पादसेवाभिरुचिस्तपस्विना-**
**मशेषजन्मोपचितं मलं धियः।**
**सद्यः क्षिणोत्यन्वहमेधती सती**
**यथा पदाङ्गुष्ठविनिःसृता सरित्॥ ३१॥**

पदार्थ–

**पदाङ्गुष्ठविनिःसृता** = भगवान्‌को पाउको बुढीऔँलाबाट निक्लेकी
**सरित्** = गङ्गाले
**यथा** = जसरी (पाप नाश गर्दछिन् त्यसरी नै)
**यत्पादसेवाभिरुचिः** = जुन भगवान्‌को चरणकलको सेवाको अभिरुचि
**अन्वहम्** = प्रतिदिन
**एधती सती** = बढिरहँदा (त्यसले पनि)
**तपस्विनाम्** = तपस्वीहरूको
**अशेषजन्मोपचितं** = सम्पूर्ण जन्मदेखि सञ्चित भएको
**धियः** = बुद्धिको
**मलं** = कामवासना आदि मल
**सद्यः** = तुरुन्तै
**क्षिणोति** = नाश गर्दछ

**वाक्यार्थ–** भगवान्‌को पाउको बुढीऔँलाबाट निक्लेकी गङ्गाले जसरी पाप नाश गर्दछिन् त्यसरी नै भगवान्‌को चरणकमलको सेवाको अभिरुचि प्रतिदिन बढिरहँदा त्यसले पनि तपस्वीहरूको सम्पूर्ण जन्मदेखि सञ्चित हुँदैआएको कामवासना आदि बुद्धिको मल तुरुन्तै नाश गर्दछ।

**विनिर्धुताशेषमनोमलः पुमा-**
**नसङ्गविज्ञानविशेषवीर्यवान्।**

**यदङ्घ्रिमूले कृतकेतनः पुन-**

**र्न संसृतिं क्लेशवहां प्रपद्यते ॥ ३२ ॥**

**पदार्थ–**

**विनिर्धुताशेषमनोमलः** = सम्पूर्ण मानसिक मल हटाई
**असङ्गविज्ञानविशेषवीर्यवान्** = वैराग्य र तत्त्वसाक्षात्काररूप बलले युक्त भई
**यदङ्घ्रिमूले** = जुन भगवान्को चरण तलमा
**कृतकेतनः** = आश्रित भएको
**पुमान्** = व्यक्ति
**पुनः** = फेरि
**क्लेशवहां** = दुःखमय
**संसृतिं** = संसारचक्रमा
**न प्रपद्यते** = पर्दैन

**वाक्यार्थ–** सम्पूर्ण मानसिक मल हटाई वैराग्य र तत्त्वसाक्षात्काररूप बलले युक्त भई भगवान्को चरणतलमा आश्रित भएको व्यक्ति फेरि दुःखमय संसारचक्रमा पर्दैन।

**तमेव यूयं भजतात्मवृत्तिभि-**

**र्मनोवचःकायगुणैः स्वकर्मभिः ।**

**अमायिनः कामदुघाङ्घ्रिपङ्कजं**

**यथाधिकारावसितार्थसिद्धयः ॥ ३३ ॥**

**पदार्थ–**

**अमायिनः** = कपटहीन
**यथाधिकारावसितार्थसिद्धयः** = वर्णधर्म आदिलाई अतिक्रमण नगरी पुरुषार्थ सिद्ध गर्ने भएका
**यूयं** = तपाईंहरू
**आत्मवृत्तिभिः** = वर्णाश्रम धर्मानुसार आ-आफ्नो अध्यापन, सुरक्षा, कृषि, सेवा आदि व्यवसायद्वारा
**मनोवचःकायगुणैः** = मन, वचन र शरीरका गुणहरू क्रमशः ध्यान, स्तुति र पूजाजस्ता
**स्वकर्मभिः** = आफ्ना कर्महरूद्वारा
**कामदुघाङ्घ्रिपङ्कजं** = इच्छित वस्तु प्रदान गर्न सक्ने चरणकमल भएका
**तम् एव** = उहाँ भगवान्लाई नै
**भजत** = सेवा गर्नुहोस्

**वाक्यार्थ–** कपटहीन वर्णधर्मादिलाई अतिक्रमण नगरी पुरुषार्थ सिद्ध गर्ने भएका तपाईंहरू वर्णाश्रम धर्मानुसार आ-आफ्नो अध्यापन, सुरक्षा, कृषि, सेवा आदि व्यवसायद्वारा मन, वचन र शरीरका गुणहरू क्रमशः ध्यान, स्तुति र पूजाजस्ता आफ्ना कर्महरूद्वारा इच्छित वस्तु प्रदान गर्न सक्ने चरणकमल भएका भगवान्को सेवा गर्नुहोस्।

**असाविहानेकगुणोऽगुणोऽध्वरः**

**पृथग्विधद्रव्यगुणक्रियोक्तिभिः ।**
**सम्पद्यतेऽर्थाशयलिङ्गनामभि-**
**र्विशुद्धविज्ञानघनः स्वरूपतः ॥ ३४ ॥**

**पदार्थ–**

**असौ** = उहाँ भगवान्
**स्वरूपतः** = स्वरूपबाट
**विशुद्धविज्ञानघनः** = पूर्ण ज्ञानस्वरूप र
**अगुणः** = निर्गुण भएर पनि
**इह** = यस कर्ममार्गमा
**पृथग्विधद्रव्यगुणक्रियोक्तिभिः** = अनेक प्रकारका पुरोडास, चरु आदि द्रव्य, शुक्ल आदि गुण, कुट्नु आदि कार्य र मन्त्रद्वारा एवं
**अर्थाशयलिङ्गनामभिः** = अर्थ, सङ्कल्प, पदार्थको शक्ति र ज्योतिष्टोम आदि नामद्वारा
**अनेकगुणः** = अनेक विशेषणयुक्त
**अध्वरः** = यज्ञरूप
**सम्पद्यते** = बन्नुहुन्छ

**वाक्यार्थ–** उहाँ भगवान् स्वरूपबाट पूर्ण, ज्ञानस्वरूप र निर्गुण भएर पनि यस कर्ममार्गमा अनेक प्रकारका पुरोडास, चरु आदि द्रव्य, शुक्ल आदि गुण, कुट्नु आदि कार्य, मन्त्र, अर्थ, सङ्कल्प, पदार्थको शक्ति र ज्योतिष्टोम आदि नामद्वारा सम्पन्न हुने अनेक विशेषणयुक्त यज्ञरूप बन्नुहुन्छ।

**प्रधानकालाशयधर्मसङ्ग्रहे**
**शरीर एष प्रतिपद्य चेतनाम्।**
**क्रियाफलत्वेन विभुर्विभाव्यते**
**यथानलो दारुषु तद्गुणात्मकः ॥ ३५ ॥**

**पदार्थ–**

**यथा** = जसरी
**अनलः** = आगो
**दारुषु** = दाउरामा रहँदा
**तद्गुणात्मकः** = त्यही दाउरा जस्तै लामो छोटो आदि आकारमा परिणत भएर देखिन्छ (त्यसै गरी)
**एषः** = उहाँ
**विभुः** = भगवान् (परमानन्दरूप भएर पनि)
**प्रधानकालाशयधर्मसङ्ग्रहे** = प्रकृति, काल, वासना र अदृष्टको समूहबाट उत्पन्न हुने
**शरीरे** = शरीरभित्र
**चेतनाम्** = विषयाकार बनेको बुद्धिमा
**प्रतिपद्य** = स्थित भएर
**क्रियाफलत्वेन** = यज्ञयाग आदि क्रियाको फलको रूपमा
**विभाव्यते** = देखिनुहन्छ

**वाक्यार्थ–** जसरी आगो दाउरामा रहँदा त्यही दाउरा जस्तै लामो, छोटो आदि आकारमा परिणत भएर देखिन्छ त्यसै गरी भगवान् परमानन्दरूप भएर पनि प्रकृति, काल, वासना र अदृष्टको समूहबाट उत्पन्न हुने शरीरभित्र विषयाकार बनेको बुद्धिमा स्थित भएर यज्ञयाग आदि क्रियाको

फलको रूपमा देखिनुहन्छ।

**अहो ममामी वितरन्त्यनुग्रहं**
**हरिं गुरुं यज्ञभुजामधीश्वरम्।**
**स्वधर्मयोगेन यजन्ति मामका**
**निरन्तरं क्षोणितले दृढव्रताः॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अहो** = अहो | **यज्ञभुजाम्** = देवताहरूका | **यजन्ति** = पूजा गर्दछन् (ती) |
| **क्षोणितले** = यस पृथ्वीमा (जो) | **अधीश्वरम्** = स्वामी | **अमी** = यिनीहरू |
| **दृढव्रताः** = दृढ सङ्कल्प भएका | **हरिं** = भगवान् श्रीहरिलाई | **मम** = ममाथि |
| **मामकाः** = मेरा प्रजाहरू | **स्वधर्मयोगेन** = आफ्नो धर्मद्वारा | **अनुग्रहं** = कृपा |
| **गुरुं** = पूज्य | **निरन्तरं** = सधैं | **वितरन्ति** = गर्दछन् |

**वाक्यार्थ–** अहो ! यस पृथ्वीमा जो दृढ सङ्कल्प भएका मेरा प्रजाहरू पूज्य देवताहरूका स्वामी भगवान् श्रीहरिलाई आफ्नो धर्मद्वारा सधैं पूजा गर्दछन् तिनीहरू ममाथि कृपा गर्दछन्।

**मा जातु तेजः प्रभवेन्महर्द्धिभि-**
**स्तितिक्षया तपसा विद्यया च।**
**देदीप्यमानेऽजितदेवतानां**
**कुले स्वयं राजकुलाद् द्विजानाम्॥ ३७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **महर्द्धिभिः** = महान् ऐश्वर्यका कारण | **तपसा** = तपस्या र | देवता मान्ने (वैष्णव)को |
| **राजकुलात्** = राजकुलबाट प्रकट भएको | **विद्यया च** = विद्याद्वारा | **कुले** = वंशमा |
| **तेजः** = तेजले | **स्वयं** = स्वतः | **जातु** = कहिल्यै पनि |
| **तितिक्षया** = सहनशीलता | **देदीप्यमाने** = उज्ज्वल | **मा प्रभवेत्** = असर नपारोस् |
| | **द्विजानाम्** = ब्राह्मणहरूको र | |
| | **अजितदेवतानां** = विष्णुलाई | |

**वाक्यार्थ–** महान् ऐश्वर्यका कारण राजकुलबाट प्रकट भएको तेजले सहनशीलता, तपस्या र विद्याद्वारा स्वतः उज्ज्वल ब्राह्मणहरू र वैष्णवहरूको वंशमा कहिल्यै पनि असर नपारोस्।

**ब्रह्मण्यदेवः पुरुषः पुरातनो**
**नित्यं हरिर्यच्चरणाभिवन्दनात्।**
**अवाप लक्ष्मीमनपायिनीं यशो**
**जगत्पवित्रं च महत्तमाग्रणीः॥ ३८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मण्यदेवः** = ब्राह्मणभक्तका देवता | **हरिः** = भगवान् श्रीहरिले | **जगत्पवित्रं** = सम्पूर्ण लोकलाई पवित्र गराउने |
| **महत्तमाग्रणीः** = महापुरुषका अग्रणी | **नित्यं** = निरन्तर | **यशः च** = कीर्ति पनि |
| **पुरातनः** = पुराण | **यच्चरणाभिवन्दनात्** = जुन ब्रह्मकुलको चरणवन्दनाबाट | **अवाप** = पाउनुभयो |
| **पुरुषः** = पुरुष | **अनपायिनीं** = अविचल | |
| | **लक्ष्मीम्** = लक्ष्मी र | |

**वाक्यार्थ–** ब्राह्मणभक्तका देवता एवं महापुरुषका अग्रणी पुराणपुरुष भगवान् श्रीहरिले निरन्तर गरिएको ब्रह्मकुलको चरणको वन्दनाबाट नै अविचल लक्ष्मी र सम्पूर्ण लोकलाई पवित्र गराउने कीर्ति पनि पाउनुभयो।

**यत्सेवयाशेषगुहाशयः स्वराड्**
**विप्रप्रियस्तुष्यति काममीश्वरः।**
**तदेव तद्धर्मपरैर्विनीतैः**
**सर्वात्मना ब्रह्मकुलं निषेव्यताम्॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्सेवया** = जुन ब्रह्मकुलको सेवाले | **कामम्** = अत्यन्त | तपाईंहरूद्वारा |
| **अशेषगुहाशयः** = सर्वान्तर्यामी | **तुष्यति** = प्रसन्न हुनुहुन्छ (यसैले) | **तत्** = त्यही |
| **स्वराट्** = स्वयं प्रकाशरूप | **तद्धर्मपरैः** = भगवद्धर्ममा तल्लीन | **ब्रह्मकुलं एव** = ब्रह्मकुलको नै |
| **विप्रप्रियः** = ब्राह्मणका प्रिय | **विनीतैः** = नम्र स्वभाव भएका | **सर्वात्मना** = हरेक तरहले |
| **ईश्वरः** = भगवान् श्रीहरि | | **निषेव्यताम्** = सेवा गरियोस् |

**वाक्यार्थ–** जुन ब्रह्मकुलको सेवाले सर्वान्तर्यामी स्वयं प्रकाशरूप ब्राह्मणका प्रिय भगवान् श्रीहरि अत्यन्त प्रसन्न हुनुहुन्छ भगवद्धर्ममा तल्लीन एवं नम्र स्वभाव भएका तपाईंहरूले पनि त्यही ब्रह्मकुलको नै हरेक तरहले सेवा गर्नुहोस्।

**पुमाँल्लभेतानतिवेलमात्मनः**
**प्रसीदतोऽत्यन्तशमं स्वतः स्वयम् ।**
**यन्नित्यसम्बन्धनिषेवया ततः**
**परं किमत्रास्ति मुखं हविर्भुजाम् ॥ ४० ॥**

पदार्थ–

**पुमान्** = पुरुषले
**यन्नित्यसम्बन्धनिषेवया** = जुन ब्राह्मणकुलको निरन्तर निष्कपट भावले सेवा गर्नाले
**स्वतः** = यज्ञादि अनुष्ठान विना नै
**प्रसीदतः** = शुद्ध भएको
**आत्मनः** = मनबाट
**अनतिवेलम्** = तुरुन्त
**स्वयम्** = आफैँ अर्थात् ज्ञान र अभ्यासविना नै
**अत्यन्तशमं** = परम शान्तिरूप मोक्ष
**लभेत** = पाउँदछ (यसैले)
**ततः** = त्यस्तो ब्राह्मणकुलभन्दा
**परं** = श्रेष्ठ
**अत्र** = यस लोकमा
**हविर्भुजाम्** = देवताहरूको
**मुखं** = मुख
**किम् अस्ति** = के छ र

**वाक्यार्थ–** पुरुषले जुन ब्राह्मणकुलको निरन्तर निष्कपटभावले सेवा गर्नाले यज्ञादि अनुष्ठानविना नै शुद्ध भएको मनबाट आफैँ अर्थात् ज्ञान र अभ्यासविना नै परमशान्तिरूप मोक्ष पाउँछ। यसैले त्यस्तो ब्राह्मणभन्दा श्रेष्ठ यस लोकमा देवताहरूको मुख के छ र ?

**अश्नात्यनन्तः खलु तत्त्वकोविदैः**
**श्रद्धाहुतं यन्मुख इज्यनामभिः ।**
**न वै तथा चेतनया बहिष्कृते**
**हुताशने पारमहंस्यपर्यगुः ॥ ४१ ॥**

पदार्थ–

**पारमहंस्यपर्यगुः** = ज्ञानस्वरूप र इन्द्रियनियन्त्रक
**अनन्तः** = भगवान् अनन्त
**तत्त्वकोविदैः** = तत्त्वज्ञानीद्वारा
**इज्यनामभिः** = इन्द्र आदि देवताको नामबाट
**यन्मुखे** = जुन ब्राह्मणको मुखमा
**श्रद्धाहुतं** = श्रद्धापूर्वक हवन गरिएको वस्तु
**खलु** = निश्चय नै (जसरी)
**अश्नाति** = खानुहुन्छ
**तथा** = त्यसरी
**चेतनया** = चेतना
**बहिष्कृते** = शून्य
**हुताशने** = अग्निमा (हवन गरिएको कुरा)
**वै** = निश्चय नै
**न** = ग्रहण गर्नुहुन्न

**वाक्यार्थ–** ज्ञानस्वरूप र इन्द्रियनियन्त्रक भगवान् अनन्त तत्त्वज्ञानीद्वारा इन्द्र आदि देवताका

नामबाट ब्राह्मणको मुखमा श्रद्धापूर्वक हवन गरिएको वस्तु जसरी खानुहुन्छ त्यसरी चेतनाशून्य अग्निमा हवन गरिएको कुरा ग्रहण गर्नुहुन्न।

**यद् ब्रह्म नित्यं विरजं सनातनं**
**श्रद्धातपोमङ्गलमौनसंयमैः।**
**समाधिना बिभ्रति हार्थदृष्टये**
**यत्रेदमादर्श इवावभासते॥ ४२॥**
**तेषामहं पादसरोजरेणु-**
**मार्या वहेयाधिकिरीटमायुः।**
**यं नित्यदा बिभ्रत आशु पापं**
**नश्यत्यमुं सर्वगुणा भजन्ति॥ ४३॥**

पदार्थ–

**आर्याः** = हे सज्जनवृन्द
**आदर्शे** = ऐनामा
**इव** = (मुख) जस्तै गरी
**यत्र** = जुन वेदमा
**इदम्** = कर्म, उपासना र ज्ञान आदि कल्याणको साधन
**अवभासते** = देखिन्छ (त्यस)
**नित्यं** = नित्य
**विरजं** = शुद्ध र
**सनातनं** = सनातन
**ब्रह्म** = वेदलाई
**अर्थदृष्टये** = त्यसको अर्थज्ञानका लागि
**यत्** = जुन ब्राह्मणहरू
**श्रद्धातपोमङ्गलमौनसंयमैः** = श्रद्धा, तप, मङ्गलमय आचरण, स्वाध्यायविरोधी वार्तालापको परित्याग, संयम
**समाधिना** = समाधिद्वारा
**बिभ्रति** = धारण गर्दछन्
**तेषाम्** = ती ब्राह्मणहरूको
**पादसरोजरेणुम्** = चरणकमलको धुलोलाई
**अहं** = म
**आयुः** = बाँचुन्जेल
**अधिकिरीटम्** = मुकुटमाथि
**वहेय** = धारण गरूँ
**यं** = जुन चरणधूलिलाई
**नित्यदा** = सधैँ
**बिभ्रतः** = धारण गर्ने व्यक्तिको
**पापं** = पाप
**आशु** = चाँडै
**नश्यति** = नष्ट हुन्छ र
**सर्वगुणाः** = सम्पूर्ण गुणहरूले
**अमुं** = यस्तो व्यक्तिलाई
**ह** = निश्चय नै
**भजन्ति** = सेवा गर्दछन्

**वाक्यार्थ–** हे सज्जनवृन्द ! जुन वेदमा कर्म, उपासना र ज्ञान आदि कल्याणको साधन ऐनामा मुखजस्तै गरी देखिन्छ त्यस्तो नित्य शुद्ध र सनातन वेदलाई त्यसको अर्थज्ञानका लागि जुन ब्राह्मणहरू श्रद्धा, तप, मङ्गलमय आचरण, स्वाध्यायविरोधी वार्तालापको परित्याग, संयम र समाधि धारण गर्दछन् ती ब्राह्मणहरूको चरणकमलको धुलोलाई म बाँचुन्जेल मुकुटमाथि धारण

गरूँ। जसले सधैँ उक्त चरणधूलि धारण गर्दछ त्यस्ता पुरुषको पाप चाँडै नष्ट हुन्छ र श्रद्धा, मैत्री, तितिक्षा आदि सम्पूर्ण गुणहरूले यस्तो पुरुषलाई नै सेवा गर्दछन्।

**गुणायनं शीलधनं कृतज्ञं**
**वृद्धाश्रयं संवृणतेऽनु सम्पदः।**
**प्रसीदतां ब्रह्मकुलं गवां च**
**जनार्दनः सानुचरश्च मह्यम्॥ ४४॥**

पदार्थ–

| **गुणायनं** = गुणवान् | मोक्षरूप सम्पत्तिले | **सानुचरः** = भक्तसहित |
|---|---|---|
| **शीलधनं** = शीलसम्पन्न | **अनु** = सबैतिरबाट | **जनार्दनः च** = भगवान् पनि |
| **कृतज्ञं** = कृतज्ञ | **संवृणते** = घेर्दछन् (यसर्थ) | **मह्यम्** = मसँग |
| **वृद्धाश्रयं** = वृद्धसेवक व्यक्तिलाई | **ब्रह्मकुलं** = ब्राह्मणकुल | **प्रसीदतां** = प्रसन्न हुनुहोस् |
| **सम्पदः** = धर्म, अर्थ, काम र | **गवां च** = गोवंश र | |

**वाक्यार्थ–** गुणवान्, शीलसम्पन्न, कृतज्ञ, वृद्धसेवक व्यक्तिलाई धर्म, अर्थ, काम र मोक्षरूप सम्पत्तिले सबैतिरबाट घेर्दछन्। यसर्थ ब्राह्मणकुल, गोवंश र भक्तसहित भगवान् पनि मसँग प्रसन्न हुनुहोस्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इति ब्रुवाणं नृपतिं पितृदेवद्विजातयः।**
**तुष्टुवुर्हृष्टमनसः साधुवादेन साधवः॥ ४५॥**

पदार्थ–

| **इति** = यसप्रकार | **हृष्टमनसः** = प्रसन्न भएका | **साधवः** = सज्जनहरूले |
|---|---|---|
| **ब्रुवाणं** = भन्दै गरेका | **पितृदेवद्विजातयः** = पितृ, देवता | **साधुवादेन** = धन्यवादका साथ |
| **नृपतिं** = राजा पृथुलाई | ब्राह्मण र | **तुष्टुवुः** = प्रशंसा गर्नुभयो |

**वाक्यार्थ–** राजा पृथुको यस्तो वचन सुनेर प्रसन्न भएका पितृ, देवता, ब्राह्मण र सज्जनहरूले धन्यवादका साथ उहाँको प्रशंसा गर्नुभयो।

**पुत्रेण जयते लोकानिति सत्यवती श्रुतिः।**
**ब्रह्मदण्डहतः पापो यद्वेनोऽत्यतरत्तमः॥ ४६॥**

पदार्थ–

**पुत्रेण** = असल छोराद्वारा (पिता)
**लोकान्** = उत्तम लोक
**जयते** = जित्तछ
**इति** = यस्तो भन्ने
**श्रुतिः** = वेद
**सत्यवती** = यथार्थ भएको छ
**यत्** = किनभने
**ब्रह्मदण्डहतः** = ब्राह्मणको श्रापरूपी दण्डबाट मारिएको
**पापः** = पापी
**वेनः** = वेनले पनि
**तमः** = नरक
**अत्यतरत्** = तऱ्यो

**वाक्यार्थ–** असल छोरा पाएर पिताले उत्तम लोक जित्तछ यस्तो भन्ने वेदको भनाइ यथार्थ भएको छ किनभने ब्राह्मणको श्रापरूपी दण्डबाट मारिएको पापी वेनले पनि नरक तऱ्यो।

**हिरण्यकशिपुश्चापि भगवन्निन्दया तमः।**
**विविक्षुरत्यगात् सूनोः प्रह्लादस्यानुभावतः॥ ४७॥**

**पदार्थ–**
**भगवन्निन्दया** = भगवान्को निन्दाले (नरक जान लागेको)
**हिरण्यकशिपुः च अपि** = हिरण्यकशिपुले पनि
**सूनोः** = स्वपुत्र
**प्रह्लादस्य** = प्रह्लाद (प्रह्लाद)को
**अनुभावतः** = प्रभावबाट
**तमः अत्यगात्** = नरक पार गऱ्यो

**वाक्यार्थ–** भगवान्को निन्दाले नरक जान लागेको हिरण्यकशिपुले पनि स्वपुत्र प्रह्लादको प्रभावबाट नरक पार गऱ्यो।

**वीरवर्य पितः पृथ्व्याः समाः सञ्जीव शाश्वतीः।**
**यस्येदृश्यच्युते भक्तिः सर्वलोकैकभर्तरि॥ ४८॥**

**पदार्थ–**
**पृथ्व्याः** = पृथ्वीका
**पितः** = पिता
**वीरवर्य** = हे वीरवर राजा पृथु
**यस्य** = जुन तपाईंको
**सर्वलोकैकभर्तरि** = सबै लोकका स्वामी भएका
**अच्युते** = अच्युत भगवान्मा
**ईदृशी** = यस्तो
**भक्तिः** = भक्ति छ (त्यसकारण तपाईं)
**शाश्वतीः** = अनन्त
**समाः** = वर्षसम्म
**सञ्जीव** = बाँच्नुहोस्

**वाक्यार्थ–** पृथ्वीका पिता हे वीरवर राजा पृथु ! सबै लोकका स्वामी भएका अच्युत भगवान्मा भएको अविचल भक्तिका कारण तपाईं अनन्त वर्षसम्म बाँच्नुहोस्।

**अहो वयं ह्यद्य पवित्रकीर्ते**
**त्वयैव नाथेन मुकुन्दनाथाः।**
**य उत्तमश्लोकतमस्य विष्णो–**

**ब्रह्मण्यदेवस्य कथां व्यनक्ति ॥ ४९ ॥**

पदार्थ—

**अहो** = अहो
**पवित्रकीर्ते** = पवित्रकीर्तिवाला हे राजा
**यः** = जो तपाईं
**उत्तमश्लोकतमस्य** = उदारकीर्ति
**ब्रह्मण्यदेवस्य** = ब्रह्मण्यदेव
**विष्णोः** = भगवान् विष्णुका
**कथां** = कथाको
**व्यनक्ति** = प्रचार गर्नुहुन्छ (त्यस्ता)
**त्वया** = तपाईं
**नाथेन एव** = स्वामी भएका कारणले नै
**अद्य** = आज
**हि** = निश्चय नै
**वयं** = हामीहरूले
**मुकुन्दनाथाः** = भगवान् विष्णुलाई स्वामीका रूपमा पाएका छौं

**वाक्यार्थ—** अहो ! पवित्रकीर्तिवाला हे राजा ! तपाईं उदारकीर्ति ब्रह्मण्यदेव भगवान् विष्णुका कथा प्रचार गर्नुहुन्छ। यसैले तपाईं स्वामी भएकाले नै आज हामीहरूले भगवान् विष्णुलाई स्वामीका रूपमा पाएका छौं।

**नात्यद्भुतमिदं नाथ तवाजीव्यानुशासनम्।**
**प्रजानुरागो महतां प्रकृतिः करुणात्मनाम्॥ ५० ॥**

पदार्थ—

**नाथ** = हे स्वामी
**तव** = हजुरको
**इदं** = यो
**आजीव्यानुशासनम्** = आफ्नो आश्रितलाई अनुशासनमा राख्ने कार्य
**न अत्यद्भुतम्** = त्यति आश्चर्यजनक छैन (किनभने)
**करुणात्मनाम्** = दयालु
**महतां** = महापुरुषको
**प्रजानुरागः** = प्रजाप्रति प्रेम हुनु
**प्रकृतिः** = स्वभाव नै हो

**वाक्यार्थ—** हजुरको यो आफ्नो आश्रितलाई अनुशासनमा राख्ने कार्य त्यति आश्चर्यजनक छैन किनभने दयालु महापुरुषको प्रजाप्रति प्रेम हुनु स्वभाव नै हो।

**अद्य नस्तमसः पारस्त्वयोपासादितः प्रभो।**
**भ्राम्यतां नष्टदृष्टीनां कर्मभिर्दैवसंज्ञितैः॥ ५१ ॥**

पदार्थ—

**प्रभो** = हे प्रभु
**अद्य** = आज
**नष्टदृष्टीनां** = अज्ञानले विवेक नष्ट भएका (यसैले)
**दैवसंज्ञितैः** = प्रारब्धनामक
**कर्मभिः** = कर्महरूद्वारा
**भ्राम्यतां** = (संसारमा विभिन्न योनिमा) घुम्ने भएका
**नः** = हामीहरूलाई
**त्वया** = हजुरद्वारा
**तमसः पारः** = अज्ञानरूपी अन्धकारबाट पार
**उपासादितः** = गराइयो

**वाक्यार्थ–** हे प्रभु ! आज अज्ञानले विवेक नष्ट भएका र यसैले प्रारब्ध कर्महरूद्वारा संसारमा विभिन्न योनिमा घुम्ने भएका हामीहरूलाई हजुरले अज्ञानरूपी अन्धकारबाट पार गराइदिनुभयो।

**नमो विवृद्धसत्त्वाय पुरुषाय महीयसे।**
**यो ब्रह्म क्षत्रमाविश्य बिभर्तीदं स्वतेजसा ॥ ५२ ॥**

**पदार्थ–**

**यः** = जो
**ब्रह्म** = ब्राह्मण जातिमा र
**क्षत्रम्** = क्षत्रिय जातिमा
**आविश्य** = प्रवेश गरेर
**स्वतेजसा** = आफ्नो तेजले
**इदं** = यस जगत्लाई
**बिभर्ति** = रक्षा गर्नुहुन्छ (त्यस्ता)
**विवृद्धसत्त्वाय** = सत्त्वप्रधान
**महीयसे पुरुषाय** = महापुरुष हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** जो ब्राह्मण र क्षत्रिय जातिमा प्रवेश गरेर आफ्नो तेजले यस जगत्लाई रक्षा गर्नुहुन्छ त्यस्ता सत्त्वप्रधान महापुरुष हजुरलाई नमस्कार छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे एकविंशोऽध्यायः ॥ २१ ॥**

# अथ द्वाविंशोऽध्यायः

## राजा पृथुलाई सनकादिको उपदेश

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**जनेषु प्रगृणत्स्वेवं पृथुं पृथुलविक्रमम्।**

**तत्रोपजग्मुर्मुनयश्चत्वारः सूर्यवर्चसः॥ १॥**

पदार्थ–

**एवं** = यसप्रकार
**जनेषु** = प्रजाहरूले
**पृथुलविक्रमम्** = धैरै पराक्रम भएका
**पृथुं** = राजा पृथुलाई
**प्रगृणत्सु** = स्तुति गरिरहँदा
**सूर्यवर्चसः** = सूर्यको जस्तै तेज भएका
**चत्वारः** = चार जना
**मुनयः** = मुनिहरू
**तत्र** = त्यहाँ
**उपजग्मुः** = आउनुभयो

**वाक्यार्थ–** यसप्रकार प्रजाहरूले धैरै पराक्रम भएका राजा पृथुलाई स्तुति गरिरहँदा सूर्यको जस्तै तेज भएका चार जना मुनिहरू त्यहाँ आउनुभयो।

**तांस्तु सिद्धेश्वरान् राजा व्योम्नोऽवतरतोऽर्चिषा।**

**लोकानपापान् कुर्वत्या सानुगोऽचष्ट लक्षितान्॥ २॥**

पदार्थ–

**सानुगः** = सेवकसहित भएका
**राजा तु** = राजा पृथुले
**लोकान्** = संसारलाई
**अपापान्** = पापरहित
**कुर्वत्या** = गर्ने
**अर्चिषा** = दिव्य तेजद्वारा
**लक्षितान्** = चिनिने
**व्योम्नः** = आकाशबाट
**अवतरतः** = ओर्लिरहेका
**तान्** = उहाँ
**सिद्धेश्वरान्** = सनकादि सिद्धेश्वरहरूलाई
**अचष्ट** = देख्नुभयो

**वाक्यार्थ–** सेवकसहित भएका राजा पृथुले संसारलाई पापरहित गर्ने, दिव्य तेजद्वारा चिनिनुहुने, आकाशबाट ओर्लिरहेका सनकादि सिद्धेश्वरहरूलाई देख्नुभयो।

**तद्दर्शनोद्गतान् प्राणान् प्रत्यादित्सुरिवोत्थितः।**

**ससदस्यानुगो वैन्य इन्द्रियेशो गुणानिव॥ ३॥**

पदार्थ–

**इन्द्रियेशः** = इन्द्रियको मालिक जीव
**गुणान् इव** = गन्ध आदि गुणतर्फ

(खिचिएझैं गरी)
**तद्दर्शनोद्गतान्** = सनकादिको दर्शनका लागि खिचिएका
**प्राणान्** = आफ्ना प्राण
**प्रत्यादित्सुः इव** = फर्काउन खोजे जस्तै गरी
**ससदस्यानुगः** = अन्य सदस्यसहित भएर
**वैन्यः** = वेनपुत्र राजा पृथु
**उत्थितः** = उठ्नुभयो

**वाक्यार्थ–** विषयासक्त जीव गन्ध आदि गुणतर्फ खिचिएझैं सनकादिलाई देख्नासाथ त्यतै खिचिएका आफ्ना प्राण फर्काउन खोजे जस्तै गरी अन्य सदस्यसहित भएर राजा पृथु उठ्नुभयो।

**गौरवाद्यन्त्रितः सभ्यः प्रश्रयानतकन्धरः।**
**विधिवत् पूजयाञ्चक्रे गृहीताध्यर्हणासनान्॥ ४॥**

**पदार्थ–**

(सनकादिको)
**गौरवात्** = गौरवले
**यन्त्रितः** = वशीभूत भएका
**सभ्यः** = सज्जन
**प्रश्रयानतकन्धरः** = नम्रताले गर्दन निहुराएका राजा पृथुले
**गृहीताध्यर्हणासनान्** = उच्च एवं श्रेष्ठ आसन ग्रहण गरेका सनकादिलाई
**विधिवत्** = विधिपूर्वक
**पूजयाञ्चक्रे** = पूजा गर्नुभयो

**वाक्यार्थ–** सनकादिको गौरवले वशीभूत भएका, सज्जन र नम्र राजा पृथुले उच्च एवं श्रेष्ठ आसनमा विराजमान सनकादिलाई विधिपूर्वक पूजा गर्नुभयो।

**तत्पादशौचसलिलैर्मार्जितालकबन्धनः।**
**तत्र शीलवतां वृत्तमाचरन् मानयन्निव॥ ५॥**

**पदार्थ–**

**तत्र** = त्यहाँ
**तत्पादशौचसलिलैः** = सनकादिको पादप्रक्षालन गरेको जलले
**मार्जितालकबन्धनः** = केशलाई पवित्र बनाएका राजा पृथु
**शीलवतां** = शीलवान्‌को
**वृत्तम्** = आचरणलाई
**मानयन्** = मान्दै र
**आचरन् इव** = त्यसलाई व्यवहारमा उतार्न लागेझैं देखिनुहुन्थ्यो

**वाक्यार्थ–** सनकादिको पादप्रक्षालनबाट निक्लेको जलले आफ्नो केशलाई पवित्र बनाएका राजा पृथु असल शीलस्वभाव भएका व्यक्तिको आचरणलाई आत्मसात् गरेर त्यसलाई व्यवहारमा उतार्न लागेझैं देखिनुहुन्थ्यो।

**हाटकासन आसीनान् स्वधिष्ण्येष्विव पावकान्।**
**श्रद्धासंयमसंयुक्तः प्रीतः प्राह भवाग्रजान्॥ ६॥**

पदार्थ–

**श्रद्धासंयमसंयुक्तः** = श्रद्धा र संयमले युक्त भएका र
**प्रीतः** = प्रसन्न राजा पृथुले
**स्वधिष्ण्येषु** = वेदीमा रहेका
**पावकान् इव** = अग्निजस्तै
**हाटकासने** = स्वर्ण सिंहासनमा
**आसीनान्** = बसेका
**भवाग्रजान्** = भगवान् शिवका पनि अग्रज सनकादिहरूसँग
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** श्रद्धावान्, संयमी एवं प्रसन्न राजा पृथुले वेदीमा रहेको अग्निजस्तै स्वर्ण सिंहासनमा बसेका भगवान् शिवका पनि अग्रज सनकादिहरूसँग भन्नुभयो।

**पृथुरुवाच** (पृथुले भन्नुभयो)

**अहो आचरितं किं मे मङ्गलं मङ्गलायनाः।**
**यस्य वो दर्शनं ह्यासीद् दुर्दर्शानां च योगिभिः॥ ७॥**

पदार्थ–

**मङ्गलायनाः** = मङ्गलका आश्रय भएका हे मुनीश्वरहरू
**अहो** = अहो
**मे** = मद्वारा
**किं** = के
**मङ्गलं** = पुण्य
**आचरितं** = आचरण गरियो
**यस्य** = जुन मलाई
**हि** = निश्चय नै
**योगिभिः च** = योगीहरूद्वारा पनि
**दुर्दर्शानां** = दर्शन दुर्लभ भएका
**वः** = तपाईंहरूको
**दर्शनं** = दर्शन
**आसीत्** = प्राप्त भयो

**वाक्यार्थ–** मङ्गलका आश्रय भएका हे मुनीश्वरहरू ! अहो मैले के पुण्य आचरण गरेँ होला ? जसले गर्दा मलाई योगीहरूद्वारा पाउन दुर्लभ तपाईंहरूको दर्शन प्राप्त भयो।

**किं तस्य दुर्लभतरमिह लोके परत्र च।**
**यस्य विप्राः प्रसीदन्ति शिवो विष्णुश्च सानुगः॥ ८॥**

पदार्थ–

**यस्य** = जुन व्यक्तिमाथि
**विप्राः** = ब्राह्मणहरू
**सानुगः** = अनुचरसहित
**शिवः** = शिव र
**विष्णुः च** = विष्णु पनि
**प्रसीदन्ति** = प्रसन्न हुनुहुन्छ
**तस्य** = त्यसको लागि
**इह लोके** = यस लोकमा र
**परत्र च** = परलोकमा पनि
**किं** = के
**दुर्लभतरम्** = दुर्लभ हुन्छ

**वाक्यार्थ–** जुन व्यक्तिमाथि ब्राह्मणहरू अनि अनुचरसहित शिव र विष्णु प्रसन्न हुनुहुन्छ, त्यसको लागि यस लोकमा र परलोकमा पनि के दुर्लभ हुन्छ र ?

**नैव लक्षयते लोको लोकान् पर्यटतोऽपि यान्।**
**यथा सर्वदृशं सर्व आत्मानं येऽस्य हेतवः॥ ९॥**

**पदार्थ–**

**यथा** = जसरी
**सर्वदृशं** = सर्वसाक्षी
**आत्मानं** = आत्मालाई
**लोकः** = सामान्य लोकले
**न एव लक्षयते** = ज्ञान गर्दैन र
**अस्य** = यस प्रपञ्चका
**हेतवः** = कारणभूत
**ये** = जो महत्तत्त्व आदि छन्
**सर्वे** = ती सबैले पनि जान्दैनन् (त्यसै गरी)
**लोकान्** = सम्पूर्ण लोकमा
**पर्यटतः अपि** = घुम्ने भए पनि
**यान्** = जुन तपाईंहरूको प्रभावलाई (मानिसहरू जान्न सक्दैनन्)

**वाक्यार्थ–** जसरी सर्वसाक्षी आत्मालाई सामान्य लोक (दृश्यप्रपञ्च) र त्यसका कारणभूत जो महत्तत्त्व आदि छन् ती सबैले पनि जान्दैनन् त्यसै गरी तपाईंहरू सम्पूर्ण लोकमा घुम्ने भए पनि तपाईंहरूको प्रभावलाई सामान्य अज्ञानी मानिसहरू जान्न सक्दैनन्।

**विवरण–** सिद्धहरूको दर्शनबाट राजा पृथु आफूलाई धन्य र मङ्गलयुक्त भएको मान्नुहुन्छ। वेदपाठी ब्राह्मण, भगवान् विष्णु र शङ्कर अनि उहाँहरूका भक्त प्रसन्न नभई सिद्धहरूको दुर्लभ दर्शन मिल्दैन। ज्ञानीहरू यद्यपि जगत्कल्याणकै लागि लोकलोकान्तरको यात्रा गर्दछन् तर पनि मन्दबुद्धि भएका प्राणीहरू उनीहरूको महत्त्व र स्वभावलाई बुझ्न सक्दैनन्। मनुष्यको शरीर प्रकृतिको कार्य हो र यो जड छ। यसमा चेतन आत्मा पसेकाले नै यो हिँड्न, खान र विचार गर्न सक्ने भएको हो। आत्माकै कारणले गर्दा अचेतन शरीरमा पनि छुट्टै व्यक्तित्व र विशेषताको आधान भएको हो। हरेक मान्छे यही आत्मसत्तालाई पाएर जगत्मा म पनि केही हुँ भनी आत्मसम्मानपूर्वक शिर ठाडो पारी हिँड्छ। जसले संसारको अस्तित्व सिद्ध गरेको छ त्यसैलाई बिर्सिएर त्यही संसारमा लिप्त रहने मनुष्यले आत्माको महत्त्व बुझ्न सक्दैन भनी यहाँ बताइएको छ।

**अधना अपि ते धन्याः साधवो गृहमेधिनः।**
**यद्गृहा ह्यर्हवर्याम्बुतृणभूमीश्वरावराः॥ १०॥**

**पदार्थ–**

**यद्गृहाः** = जसका घरहरू
**अर्हवर्याम्बुतृणभूमीश्वरावराः** = तपाईंजस्ता पूज्य पुरुषले स्विकार्ने जल, तृण, भूमि, गृहस्वामी अथवा सेवक आदि भएका छन्
**ते** = ती
**साधवः** = सज्जन
**गृहमेधिनः** = गृहस्थहरू
**अधनाः** = निर्धन भएर
**अपि** = पनि
**हि** = निश्चय नै
**धन्याः** = धन्य हुन्

**वाक्यार्थ–** जसका घरमा तपाईंजस्ता पूज्य पुरुषले स्विकार्ने जल, तृण, भूमि, गृहस्वामी अथवा सेवक आदि छन् ती सज्जन गृहस्थहरू निर्धन भएर पनि निश्चय नै धन्य हुन्।

**व्यालालयद्रुमा वै तेऽप्यरिक्ताखिलसम्पदः।**

**यद्गृहास्तीर्थपादीयपादतीर्थविवर्जिताः॥ ११॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यद्गृहाः** = जुन गृहस्थका घरहरू | पनि | **ते** = ती घरहरू |
| **अरिक्ताखिलसम्पदः अपि** = सम्पूर्ण सम्पत्तिले भरिएका भए | **तीर्थपादीयपादतीर्थविवर्जिताः** = भगवद्भक्तका चरणोदकद्वारा रहित छन् भने | **वै** = निश्चय नै |
| | | **व्यालालयद्रुमाः** = सर्प निवास गर्ने वृक्षसमान हुन् |

**वाक्यार्थ–** जुन घर सम्पूर्ण सम्पत्तिले भरिएका छन् तर भगवद्भक्तका चरणोदकद्वारा रहित छन् भने ती घर निश्चय नै सर्पनिवास गर्ने वृक्षसमान हुन्।

**स्वागतं वो द्विजश्रेष्ठा यद् व्रतानि मुमुक्षवः।**

**चरन्ति श्रद्धया धीरा बाला एव बृहन्ति च॥ १२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **द्विजश्रेष्ठाः** = हे ब्राह्मणश्रेष्ठ | **बालाः एव** = बाल्यावस्थामा रहेका हजुरहरू | **श्रद्धया** = श्रद्धापूर्वक |
| **वः** = हजुरहरूलाई | | **बृहन्ति** = ब्रह्मचर्य आदि महान् |
| **स्वागतं** = स्वागत छ | **मुमुक्षवः** = मुमुक्षु भएर | **व्रतानि च** = व्रतहरू पनि |
| **यत्** = किनभने | **धीराः** = चित्त वशमा लिई | **चरन्ति** = गर्नुहुन्छ |

**वाक्यार्थ–** हे ब्राह्मणश्रेष्ठ ! हजुरहरूलाई स्वागत छ किनभने बाल्यावस्थामा रहेका हजुरहरू मुमुक्षु भएर चित्त वशमा लिई श्रद्धापूर्वक ब्रह्मचर्य आदि महान् व्रतहरूको पालन गर्नुहुन्छ।

**कच्चिन्नः कुशलं नाथा इन्द्रियार्थार्थवेदिनाम्।**

**व्यसनावाप एतस्मिन् पतितानां स्वकर्मभिः॥ १३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नाथाः** = हे स्वामी | **व्यसनावापे** = दुःख पैदा गर्ने संसारमा | **नः** = हामीहरूका लागि |
| **इन्द्रियार्थार्थवेदिनाम्** = इन्द्रियसम्बन्धी भोगलाई नै परम पुरुषार्थ मान्ने (यसैले) | **स्वकर्मभिः** = आफ्ना कर्महरूद्वारा | **कच्चित्** = केही |
| **एतस्मिन्** = यस | **पतितानां** = खसेका | **कुशलं** = राम्रो गर्ने उपाय छ |

**वाक्यार्थ–** हे स्वामी ! इन्द्रियसम्बन्धी भोगलाई नै परम पुरुषार्थका रूपमा मान्ने भएकाले यस दुःखालयरूप संसारमा आफ्ना कर्मद्वारा खसेका हामीहरूका लागि केही राम्रो गर्ने उपाय छ ?

**भवत्सु कुशलप्रश्न आत्मारामेषु नेष्यते।**
**कुशलाकुशला यत्र न सन्ति मतिवृत्तयः॥ १४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **आत्मारामेषु** = आत्मामा रमाउने | **न इष्यते** = उचित छैन | **मतिवृत्तयः** = बुद्धिवृत्ति |
| **भवत्सु** = हजुरहरूमा | **यत्र** = जुन हजुरहरूमा | **न सन्ति** = हुँदैनन् |
| **कुशलप्रश्नः** = कुशलता सम्बन्धी प्रश्न | **कुशलाकुशलाः** = कुशल र अकुशल भन्ने | |

**वाक्यार्थ–** आत्मामा रमाउने हजुरहरूमा कुशलता सम्बन्धी प्रश्न उचित छैन। हजुरहरूमा कुशल र अकुशल भन्ने बुद्धिवृत्ति नै हुँदैनन्।

**विवरण–** राजा पृथु ज्ञानीहरूलाई 'कुशल हुनुहुन्छ ?' भनी प्रश्न गर्नु पनि उचित होइन भनी ठान्नुहुन्छ। जसको मनबाट राग, द्वेष, सुख-दुःख आदि भेदबुद्धि नष्ट भइसक्यो ती ज्ञानीलाई शरीर, मन र इन्द्रियको सञ्चोबिसञ्चोको वास्ता पनि हुँदैन। जो आफूलाई जान्दछ ऊ शरीरको कुशल र अकुशलबाट प्रभावित हुँदैन। त्यसैले 'स्वास्थ्य ठीकै छ ?' इत्यादि प्रश्नहरू ज्ञानीमा व्यर्थ छन्। ब्रह्मलाई **स्वे महिम्नि प्रतिष्ठितः** अर्थात् आफ्नै महिमामा स्थित बताइएको छ। ब्रह्मज्ञानीहरू पनि आफैँमा प्रतिष्ठित हुन्छन्। खास स्वास्थ्य भनेको शरीर, मन आदिमा नभई आफ्नो स्वरूपमा बस्नु हो। जो नित्य स्वस्थ अर्थात् आफैँमा स्थित छ त्यस्तो मान्छेलाई स्वास्थ्यको प्रश्न गर्नु अनावश्यक छ। शरीर, इन्द्रिय र मनमा आसक्ति गर्नाले बारम्बार जन्ममृत्युको अस्वस्थ स्थितिमा प्राप्त भएका मानिसहरूले ब्रह्मज्ञहरूलाई के स्वस्थताको प्रश्न गर्नु भन्ने पृथुको आशय हो।

**तदहं कृतविश्रम्भः सुहृदो वस्तपस्विनाम्।**
**सम्पृच्छे भव एतस्मिन् क्षेमः केनाञ्जसा भवेत्॥ १५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तत्** = त्यसकारण | **सुहृदः** = मित्र भएका | **अञ्जसा** = सजिलै |
| **अहं** = म | **वः** = हजुरहरूलाई (त्यस्ता व्यक्तिको) | **केन** = कुन उपायले |
| **कृतविश्रम्भः** = विश्वासका साथ | **एतस्मिन्** = यस | **क्षेमः** = कल्याण |
| **तपस्विनाम्** = दुःखले तप्त व्यक्तिका | **भवे** = संसारमा | **भवेत्** = होला भनेर |
| | | **सम्पृच्छे** = सोध्दछु |

**वाक्यार्थ–** त्यसकारण म विश्वासका साथ दुःखी व्यक्तिका मित्र भएका हजुरहरूसँग त्यस्ता

दुःखी व्यक्तिको यस संसारमा सजिलै कुन उपायले कल्याण होला भनेर सोध्दछु।

**व्यक्तमात्मवतामात्मा भगवानात्मभावनः।**

**स्वानामनुग्रहायेमां सिद्धरूपी चरत्यजः॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **व्यक्तम्** = यो निश्चय छ कि | गराउने | **स्वानाम्** = आफ्ना भक्तको |
| **आत्मवताम्** = धीर व्यक्तिका | **अजः** = अजन्मा | **अनुग्रहाय** = अनुग्रहका लागि |
| **आत्मा** = आत्मरूप र | **भगवान्** = भगवान् नारायण नै | **इमां** = यस पृथिवीमा |
| **आत्मभावनः** = तिनीहरूको | **सिद्धरूपी** = हजुरहरूजस्ता | **चरति** = भ्रमण गर्नुहुन्छ |
| हृदयमा आफ्नो स्वरूप प्रकट | सिद्धको रूप लिएर | |

**वाक्यार्थ–** यो निश्चय छ कि धीर व्यक्तिका आत्मरूप र तिनीहरूको हृदयमा आफ्नो स्वरूप प्रकट गराउने अजन्मा भगवान् नारायण नै हजुरहरूजस्ता सिद्धको रूप लिएर आफ्ना भक्तको अनुग्रहका लागि यस पृथिवीमा भ्रमण गर्नुहुन्छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**पृथोस्तत् सूक्तमाकर्ण्य सारं सुष्ठु मितं मधु।**

**स्मयमान इव प्रीत्या कुमारः प्रत्युवाच ह॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पृथोः** = राजा पृथुको | **मधु** = कर्णप्रिय | **प्रीत्या** = प्रेमपूर्वक |
| **तत्** = पूर्वोक्त | **सूक्तम्** = सुवचन | **ह** = निश्चय नै |
| **सारं** = युक्तियुक्त | **आकर्ण्य** = सुनेर | **प्रत्युवाच** = भन्नुभयो |
| **मितं** = परिमित | **स्मयमानः इव** = मुस्कुराउँदै | |
| **सुष्ठु** = राम्रो | **कुमारः** = सनत्कुमारले | |

**वाक्यार्थ–** राजा पृथुको यस्तो युक्तियुक्त परिमित राम्रो कर्णप्रिय सुवचन सुनेर प्रसन्न भएका सनत्कुमारले प्रेमपूर्वक मुस्कुराउँदै भन्नुभयो।

**सनत्कुमार उवाच** (सनत्कुमारले भन्नुभयो)

**साधु पृष्टं महाराज सर्वभूतहितात्मना।**

**भवता विदुषा चापि साधूनां मतिरीदृशी॥ १८॥**

पदार्थ–

**महाराज** = हे राजा पृथु
**विदुषा अपि** = सबै कुरा जान्ने भए पनि
**सर्वभूतहितात्मना** = सम्पूर्ण प्राणीको कल्याणको इच्छा राख्ने
**भवता** = तपाईंद्वारा
**साधु** = राम्रो कुरा
**पृष्टं च** = सोधियो (किनभने)
**साधूनां** = तपाईंजस्ता सज्जनहरूको
**मतिः** = बुद्धि
**ईदृशी** = यस्तै (परहितका लागि नै) हुन्छ

**वाक्यार्थ–** हे राजा पृथु ! सबै कुरा जान्ने भए पनि सम्पूर्ण प्राणीको कल्याणको इच्छा राख्ने तपाईंले राम्रो कुरा सोध्नुभयो किनभने तपाईंजस्ता सज्जनहरूको बुद्धि यस्तै (परहितका लागि नै) हुन्छ।

**सङ्गमः खलु साधूनामुभयेषां च सम्मतः।**
**यत्सम्भाषणसम्प्रश्नः सर्वेषां वितनोति शम्॥ १९॥**

**पदार्थ–**
**साधूनाम्** = सज्जनहरूको
**सङ्गमः** = समागम
**खलु** = निश्चय नै
**उभयेषां च** = वक्ता र श्रोता दुबैका लागि
**सम्मतः** = प्रिय हुन्छ
**यत्सम्भाषणसम्प्रश्नः** = जसको सत्कथनपूर्वकको समुचित प्रश्नले
**सर्वेषां** = सबैका लागि
**शम्** = कल्याण
**वितनोति** = विस्तार (प्रदान) गर्दछ

**वाक्यार्थ–** सज्जनहरूको समागम निश्चय नै वक्ता र श्रोता दुबैका लागि प्रिय हुन्छ जसको सत्कथनपूर्वकको समुचित प्रश्नले सबैका लागि कल्याण प्रदान गर्दछ।

**अस्त्येव राजन् भवतो मधुद्विषः**
**पादारविन्दस्य गुणानुवादने।**
**रतिर्दुरापा विधुनोति नैष्ठिकी**
**कामं कषायं मलमन्तरात्मनः॥ २०॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**मधुद्विषः** = मधुसूदन भगवान्का
**पादारविन्दस्य** = चरणकमलको
**गुणानुवादने** = गुण वर्णन गराउने कार्यमा
**दुरापा** = (भगवद्विमुखले) प्राप्त गर्न कठिन
**भवतः** = तपाईंको
**नैष्ठिकी** = निश्चल
**रतिः** = प्रेम
**अस्ति एव** = छ नै (जुन प्रेमले)
**अन्तरात्मनः** = मनको
**कामं** = वासनारूप
**कषायं** = धातुको रङ्गजस्तो (अन्य उपायद्वारा नहट्ने)

**मलम्** = मल
**विधुनोति** = नाश गरिदिन्छ

**वाक्यार्थ–** हे राजा ! मधुसूदन भगवान्का चरणकमलको गुणवर्णन गराउने कार्यमा तपाईंको निश्चल प्रेम छ जुन प्रेम भगवद्‌विमुखले प्राप्त गर्न कठिन छ, त्यस्तो प्रेमले नै मनको वासनारूप धातुको रङ्गजस्तो अन्य उपायद्वारा नहट्ने मल पनि नाश गरिदिन्छ।

**शास्त्रेष्वियानेव सुनिश्चितो नृणां**
**क्षेमस्य सध्र्यग्विमृशेषु हेतुः ।**
**असङ्ग आत्मव्यतिरिक्त आत्मनि**
**दृढा रतिर्ब्रह्मणि निर्गुणे च या ॥ २१ ॥**

**पदार्थ–**

**आत्मव्यतिरिक्ते** = आत्मादेखि भिन्न सम्पूर्ण प्रपञ्चमा
**असङ्गः** = वैराग्य र
**आत्मनि** = आत्मरूप
**निर्गुणे** = निर्गुण
**ब्रह्मणि** = ब्रह्ममा
**दृढा** = दृढ
**या रतिः च** = जुन प्रेम छ
**सध्र्यग्विमृशेषु** = राम्रोसँग विचार गरिएका
**शास्त्रेषु** = शास्त्रमा
**नृणां** = मनुष्यको
**क्षेमस्य** = कल्याणको
**हेतुः** = साधन
**इयान् एव** = यत्ति नै
**सुनिश्चितः** = निश्चित गरिएको छ

**वाक्यार्थ–** आत्मादेखि भिन्न सम्पूर्ण प्रपञ्चमा वैराग्य र आत्मरूप निर्गुण ब्रह्ममा जुन दृढ प्रेम छ राम्रोसँग विचार गरिएका शास्त्रमा मनुष्यको कल्याणको साधन यत्ति नै हो भन्ने निश्चित गरिएको छ।

**सा श्रद्धया भगवद्धर्मचर्यया**
**जिज्ञासयाध्यात्मिकयोगनिष्ठया ।**
**योगेश्वरोपासनया च नित्यं**
**पुण्यश्रवःकथया पुण्यया च ॥ २२ ॥**

**पदार्थ–**

**सा** = उक्त निर्गुण ब्रह्ममा रति
**नित्यं** = सधैं
**श्रद्धया** = (शास्त्रमा) श्रद्धा राख्नाले
**भगवद्धर्मचर्यया** = भगवान्प्रति प्रेम बढाउने धर्मको आचरण
**जिज्ञासया** = तत्त्व जान्ने इच्छाद्वारा
**आध्यात्मिकयोगनिष्ठया** = ज्ञानमा निष्ठाद्वारा
**योगेश्वरोपासनया** = योगेश्वर भगवान्को उपासना
**पुण्यया** = पुण्यदायक
**पुण्यश्रवःकथया च** = भगवान् श्रीहरिका कथाद्वारा उत्पन्न हुन्छ

**वाक्यार्थ–** सधैँ शास्त्रमा श्रद्धा, भगवान्प्रति प्रेम बढाउने धर्मको आचरण, तत्त्व जान्ने इच्छा, ज्ञानमा निष्ठा, योगेश्वर भगवान्को उपासना र पुण्यदायक भगवान् श्रीहरिका कथाद्वारा उक्त किसिमको निर्गुण ब्रह्ममा रति उत्पन्न हुन्छ।

**अर्थेन्द्रियारामसगोष्ठ्यतृष्णया**
**तत्सम्मतानामपरिग्रहेण च।**
**विविक्तरुच्या परितोष आत्मन्**
**विना हरेर्गुणपीयूषपानात्॥ २३॥**

पदार्थ–

**अर्थेन्द्रियारामसगोष्ठ्यतृष्णया** = धन र इन्द्रियको भोगमा तल्लीन व्यक्तिहरूसँग भेटघाट नगर्नाले
**तत्सम्मतानाम्** = त्यस्ता व्यक्तिले मन पराउने वस्तुको
**अपरिग्रहेण च** = सङ्ग्रह नगर्नाले पनि
**हरेः** = भगवान् श्रीहरिको
**गुणपीयूषपानात्** = गुणामृत पान गर्नु
**विना** = बाहेक
**विविक्तरुच्या** = एकान्त प्रेमका कारण
**आत्मन्** = आत्मा
**परितोषे** = सन्तुष्ट भएपछि (निर्गुण ब्रह्ममा प्रेम हुन्छ)

**वाक्यार्थ–** धन र इन्द्रियको भोगमा तल्लीन व्यक्तिहरूसँग भेटघाट नगर्नाले, त्यस्ता व्यक्तिले मन पराउने वस्तुको सङ्ग्रह नगर्नाले, भगवान् श्रीहरिको गुणामृत पान गर्नाले एवं एकान्तमा रुचि राख्नाले आत्मा सन्तुष्ट भएपछि निर्गुण ब्रह्ममा प्रेम हुन्छ।

**अहिंसया पारमहंस्यचर्यया**
**स्मृत्या मुकुन्दाचरिताग्र्यसीधुना।**
**यमैरकामैर्नियमैश्चाप्यनिन्दया**
**निरीहया द्वन्द्वतितिक्षया च॥ २४॥**

पदार्थ–

**अहिंसया** = अहिंसाले
**पारमहंस्यचर्यया** = निवृत्तिप्रति निष्ठा राख्नाले
**स्मृत्या** = आत्महितको खोजीले
**मुकुन्दाचरिताग्र्यसीधुना** = भगवान् श्रीहरिको चरित्ररूप उत्तम अमृतको पान गर्नाले
**अकामैः** = निष्काम भावनाद्वारा
**यमैः** = यमहरू र
**नियमैः** = नियमहरूको पालनले
**अनिन्दया** = अन्य मतको निन्दा नगर्नाले
**निरीहया** = कामना परित्याग गर्नाले
**द्वन्द्वतितिक्षया च अपि** =

शीतोष्ण आदि द्वन्द्वको सहन गर्नाले पनि (निर्गुण ब्रह्ममा प्रेम हुन्छ)

**वाक्यार्थ—** अहिंसा, निवृत्तिप्रति निष्ठा, आत्महितको खोजी, भगवान् श्रीहरिको चरित्ररूप उत्तम अमृतको पान, निष्काम भावना, अहिंसा आदि यम र शौच आदि नियमको पालन गर्नाले एवं अन्य मतको निन्दा नगर्नाले, कामना परित्याग गर्नाले र शीतोष्ण आदि द्वन्द्वको सहन गर्नाले पनि निर्गुण ब्रह्ममा प्रेम हुन्छ।

**हरेर्मुहुस्तत्परकर्णपूर-**
**गुणाभिधानेन विजृम्भमाणया।**
**भक्त्या ह्यसङ्गः सदसत्यनात्मनि**
**स्यान्निर्गुणे ब्रह्मणि चाञ्जसा रतिः॥ २५॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **मुहुः** = बारम्बार | **हरेः** = भगवान् श्रीहरिप्रतिको | **हि** = निश्चय नै |
| **तत्परकर्णपूरगुणाभिधानेन** = भगवद्भक्तका कानलाई सुख दिने भगवान्का गुणहरूको वर्णन गर्नाले | **भक्त्या च** = भक्तिद्वारा पनि | **निर्गुणे** = निर्गुण |
| | **सदसति** = कार्यकारणरूप | **ब्रह्मणि** = ब्रह्ममा |
| | **अनात्मनि** = अनात्म प्रपञ्चमा | **अञ्जसा** = सजिलै |
| | **असङ्गः** = आसक्तिको अभाव | **रतिः** = प्रेम हुन्छ |
| **विजृम्भमाणया** = बढिरहेको | **स्यात्** = भयो भने (यसपछि) | |

**वाक्यार्थ—** बारम्बार भगवद्भक्तका कानलाई सुख दिने भगवान्का गुणहरूको वर्णन गर्दै भगवान् श्रीहरिप्रतिको बढिरहेको भक्तिद्वारा कार्यकारणरूप अनात्म प्रपञ्चमा आसक्तिको अभाव भएपछि निश्चय नै निर्गुण ब्रह्ममा सजिलै प्रेम हुन्छ।

**विवरण—** आत्मस्वरूप निर्गुण ब्रह्ममा दृढ अनुराग अनि आत्मभिन्न संसारका पदार्थहरूमा वैराग्य हुनु नै जीवहरूको कल्याणको उपाय हो। यस्ता उत्तम अधिकारीलाई गुरुको **तत् त्वमसि** अर्थात् त्यो ब्रह्म तिमी नै हौ भन्ने उपदेशपछि तत्काल ब्रह्मज्ञान उत्पन्न भइहाल्छ। मध्यम अधिकारीहरूका लागि चाहिँ यहाँ वर्णित विभिन्न उपायहरूद्वारा चित्तशुद्धि हुन्छ अनि निर्गुण ब्रह्ममा रति उत्पन्न हुन्छ। गुरु र शास्त्रवचनमा दृढ आस्था श्रद्धा हो। भागवत धर्मपालन, तत्त्वजिज्ञासा, ज्ञानयोगनिष्ठा, भगवदुपासना, पुण्य कथाहरूको श्रवण, भौतिक विलासी वस्तुहरूको असङ्ग्रह, संसारीहरूको सङ्गत परित्याग, निरन्तर आत्मचिन्तन, अहिंसा, एकान्तसेवन, निवृत्तिधर्म पालन, सुख-दुःखहरूको सहन र अनवरत बढिरहने भगवद्भक्ति यी यस्ता उपायहरू हुन् जसले संसारबाट वैराग्य र आत्मामा दृढ अनुराग उत्पन्न गर्दछन्। यी सबै साधनहरूको लागि दुई कुरा अनिवार्य छन्— सत्सङ्गको आश्रय र दुःसङ्गको परित्याग। जसरी सूर्यको प्रकाशले भन्दा सूर्यको प्रकाशले तातेको बालुवाले बढी पोल्छ त्यसै गरी विषयको सेवनले भन्दा पनि विषयी मनुष्यहरूको सङ्गतले

बढी अहित गर्छ। त्यही भएर यहाँ अर्थ र इन्द्रियभोगमैं रमाउनेहरूको सङ्गत छोड्नमा जोड दिइएको छ।

**यदा रतिर्ब्रह्मणि नैष्ठिकी पुमा-**
**नाचार्यवान् ज्ञानविरागरंहसा।**
**दहत्यवीर्यं हृदयं जीवकोशं**
**पञ्चात्मकं योनिमिवोत्थितोऽग्निः ॥ २६ ॥**

**पदार्थ–**

**यदा** = जब
**ब्रह्मणि** = ब्रह्ममा
**नैष्ठिकी** = सुदृढ
**रतिः** = प्रेम हुन्छ (त्यसपछि)
**पुमान्** = मानिस
**आचार्यवान्** = आचार्यको शरण लिएर
**ज्ञानविरागरंहसा** = ज्ञान र वैराग्यको प्रबल वेगले
**उत्थितः** = (दाउराबाट) बलेको
**अग्निः** = आगोले
**योनिम्** = कारणभूत दाउरालाई
**इव** = झैं
**अवीर्यं** = वासनारहित
**पञ्चात्मकं** = अविद्या आदि पाँच क्लेशले युक्त
**जीवकोशं** = अहङ्कारात्मक
**हृदयं** = लिङ्गशरीरलाई
**दहति** = डढाउँदछ

**वाक्यार्थ–** जब ब्रह्ममा सुदृढ प्रेम हुन्छ त्यसपछि मानिस आचार्यको शरणमा गएर ज्ञान र वैराग्यको प्रबल वेगले दाउराबाट बलेको आगोले आफ्नो कारणभूत दाउरालाई झैं वासनारहित अविद्या आदि पाँच क्लेशले युक्त अहङ्कारात्मक लिङ्गशरीरलाई डढाउँछ।

**दग्धाशयो मुक्तसमस्ततद्गुणो**
**नैवात्मनो बहिरन्तर्विचष्टे।**
**परात्मनोर्यद् व्यवधानं पुरस्तात्**
**स्वप्ने यथा पुरुषस्तद्विनाशे ॥ २७ ॥**

**पदार्थ–**

**दग्धाशयः** = लिङ्गशरीरको नाश भएपछि
**मुक्तसमस्ततद्गुणः** = कर्तृत्व आदि समस्त गुणबाट मुक्त भएको
**पुरुषः** = व्यक्तिले
**स्वप्ने** = स्वप्नमा देखिएका वस्तु
**यथा** = झैं
**आत्मनः** = आत्माको सहायताबाट
**बहिः** = बाहिर देखिने घटपट आदि र
**अन्तः** = भित्र देखिने (सुख दुःख आदि पदार्थलाई)

**नैव विचष्टे** = देख्दैन
**पुरस्तात्** = पहिले
**परात्मनोः** = परमात्मा र जीवात्माको
**यत्** = जुन
**व्यवधानं** = भेद थियो
**तद्विनाशे** = त्यस लिङ्ग शरीरको नाश भएपछि (उक्त भेद पनि देख्दैन)

**वाक्यार्थ–** लिङ्गशरीरको नाश भए पछि कर्तृत्व आदि समस्त गुणबाट मुक्त भएको व्यक्तिले स्वप्नमा देखिएका वस्तुझैं आत्माको सहायताबाट बाहिर देखिने घटपट आदि र भित्र देखिने सुख–दुःख आदि पदार्थलाई देख्दैन र पहिले परमात्मा र जीवात्माको जुन भेद थियो त्यस लिङ्ग शरीरको नाश भएपछि उक्त भेद पनि देख्दैन।

**विवरण–** आत्मान्वेषणमा मात्र दृढ अनुराग भएको व्यक्ति रागद्वेषमय संसारबाट अलग भएर श्रोत्रिय र ब्रह्मनिष्ठ गुरुको शरणमा जान्छ। ब्रह्मज्ञान वैराग्य र आत्मचिन्तनको भरमा मात्र प्राप्त हुने वस्तु होइन। यसको लागि गुरुकृपा अनिवार्य छ। उपनिषद्ले **आचार्यवान् पुरुषो वेद** अर्थात् गुरुको शरणमा गएको अधिकारीले मात्र आत्मालाई बुझ्दछ भनी बताएको छ। पुस्तकमा लेखिएको ज्ञानले मात्र ब्रह्मसाक्षात्कार उत्पन्न गर्न सक्दैन, त्यसले वैराग्यसम्म जन्माउन सक्छ तर ज्ञानको लागि त गुरुको उपदेश सुन्नैपर्छ। त्यसैले यस श्लोकमा आचार्यवान् भनिएको हो। यसरी गुरुप्रति समर्पित व्यक्ति नै अभिमानशून्य हुन सक्ने भएकाले ऊ केवल ज्ञान र वैराग्यद्वारा अहङ्कारात्मक लिङ्गशरीरलाई नाश गर्न सक्दछ। जसको वासनामय लिङ्गशरीर नष्ट भएको छ त्यस्तो मनुष्य नै मायाका गुणहरूबाट मुक्त हुन्छ।

**आत्मानमिन्द्रियार्थं च परं यदुभयोरपि।**
**सत्याशय उपाधौ वै पुमान् पश्यति नान्यदा ॥ २८ ॥**

**पदार्थ–**
**उपाधौ** = उपाधिभूत
**आशये** = अन्तःकरण
**सति** = हुँदा मात्र
**पुमान्** = मानिसले
**उभयोः** = जाग्रत् र स्वप्नमा
**आत्मानम्** = जीवात्मालाई
**इन्द्रियार्थं** = इन्द्रियका विषयभूत दृश्यलाई र
**परं यत्** = दर्शनको कारण भएको जुन अहङ्कार हो (त्यसलाई)
**च अपि** = पनि
**वै** = निश्चय नै
**पश्यति** = देख्दछ
**अन्यदा** = अर्को (सुषुप्ति र समाधिको) अवस्थामा अन्तःकरण लीन हुने हुँदा
**न** = देख्दैन

**वाक्यार्थ–** उपाधिभूत अन्तःकरण हुँदा मात्र मानिसले जाग्रत् र स्वप्नमा जीवात्मा, इन्द्रियका विषयभूत दृश्य र दर्शनको कारण भएको अहङ्कारलाई पनि देख्दछ। सुषुप्ति र समाधिको अवस्थामा चाहिँ अन्तःकरण लीन हुने हुँदा उसले यी कुनै पनि वस्तु देख्दैन।

**विवरण–** अहङ्कार भनेको अन्तःकरणमा परेको आत्माको प्रतिबिम्ब हो। यो सम्पूर्ण कर्मफलहरूको भोक्ता हो। मनुष्यले यसैलाई आत्मा सम्झिएको कारणले नै अहङ्कारद्वारा भएका कामहरूलाई पनि उसले मैले नै गरेको हुँ भनेको हो। प्राणीहरूको वास्तविक स्वरूप यो होइन।

वस्तुतः सबै प्राणीहरू आत्मा नै हुन्। अहङ्कार त अन्तःकरण रहुन्जेलसम्म मात्र रहन्छ। ऐना फुट्दा त्यसभित्र प्रतिबिम्बित सूर्यको प्रतिबिम्ब पनि नष्ट भएझैं अन्तःकरण नष्ट हुँदा चिदाभास अर्थात् अहङ्कार पनि नष्ट हुन्छ।

**निमित्ते सति सर्वत्र जलादावपि पूरुषः।**
**आत्मनश्च परस्यापि भिदां पश्यति नान्यदा॥ २९॥**

**पदार्थ—**

**अपि** = (बाह्य जगत्मा) पनि
**सर्वत्र** = सबै ठाउँमा
**जलादौ** = जल, ऐना आदि
**निमित्ते** = कारण
**सति** = हुँदा
**पूरुषः** = मान्छेले
**आत्मनः** = आफ्नो (बिम्बको र)
**परस्य च अपि** = प्रतिबिम्बको पनि
**भिदां** = भेद
**पश्यति** = देख्दछ
**अन्यदा न** = अरू वेला देख्दैन

**वाक्यार्थ—** बाह्य जगत्मा पनि सबै ठाउँमा जल, ऐना आदि कारण हुँदा मान्छेले आफ्नो बिम्ब र प्रतिबिम्बको पनि भेद देख्दछ, अरू वेला देख्दैन।

**इन्द्रियैर्विषयाकृष्टैराक्षिप्तं ध्यायतां मनः।**
**चेतनां हरते बुद्धेः स्तम्बस्तोयमिव ह्रदात्॥ ३०॥**

**पदार्थ—**

**स्तम्बः** = (तीरमा उत्पन्न भएको) कुश आदिको जराले
**ह्रदात्** = तलाउबाट
**तोयम् इव** = पानी सोसेझैं
**ध्यायतां** = विषयचिन्तन गर्ने व्यक्तिको
**विषयाकृष्टैः** = उक्त विषयद्वारा आकृष्ट
**इन्द्रियैः** = इन्द्रियहरूद्वारा
**आक्षिप्तं** = खिचिएको
**मनः** = मनले
**बुद्धेः** = बुद्धिको
**चेतनां** = विचारसामर्थ्य
**हरते** = नष्ट गर्दछ

**वाक्यार्थ—** तीरमा उत्पन्न भएको कुश आदिको जराले तलाउबाट पानी सोसेझैं विषयचिन्तन गर्ने व्यक्तिको उक्त विषयद्वारा आकृष्ट इन्द्रियहरूद्वारा खिचिएको मनले बुद्धिको विचार गर्ने सामर्थ्य नष्ट गर्दछ।

**भ्रश्यत्यनु स्मृतिश्चित्तं ज्ञानभ्रंशः स्मृतिक्षये।**
**तद्रोधं कवयः प्राहुरात्मापह्नवमात्मनः॥ ३१॥**

**पदार्थ—**

**चित्तं अनु** = चेतना नष्ट भएपछि
**स्मृतिः** = स्मृति
**भ्रश्यति** = नष्ट हुन्छ
**स्मृतिक्षये** = स्मृति नाश भएपछि
**ज्ञानभ्रंशः** = ज्ञान नष्ट हुन्छ
**तद्रोधं** = ज्ञानको नाश हुनुलाई
**आत्मनः** = आफ्नो स्वरूपबाट
**आत्मापह्नवम्** = आफ्नो स्वरूपको नाश हुनु हो भनेर

**कवयः** = विद्वान्हरू
**प्राहुः** = भन्दछन्

**वाक्यार्थ—** चेतना नष्ट भएपछि स्मृति नष्ट हुन्छ। स्मृति नाश भएपछि ज्ञान नष्ट हुन्छ। ज्ञानको नाश हुनुलाई आफ्नो स्वरूपको नाश हुनु हो भनेर विद्वान्हरू भन्दछन्।

**नातः परतरो लोके पुंसः स्वार्थव्यतिक्रमः।**
**यदध्यन्यस्य प्रेयस्त्वमात्मनः स्वव्यतिक्रमात्॥ ३२॥**

पदार्थ—

**लोके** = संसारमा
**यदधि** = जुन आत्माका लागि
**अन्यस्य** = अन्य स्त्री, पुत्र आदिको
**प्रेयस्त्वम्** = प्रियताको बोध हुन्छ
**अतः** = त्यस
**आत्मनः** = आत्माको
**स्वव्यतिक्रमात्** = आफैँबाट नाश गर्नुभन्दा
**परतरः** = ठुलो
**पुंसः** = मानिसको
**स्वार्थव्यतिक्रमः न** = (अर्को) स्वार्थहानि छैन

**वाक्यार्थ—** संसारमा जुन आत्माका लागि अन्य स्त्री, पुत्र आदि प्रिय हुन्छन् त्यस आत्माको आफैँबाट नाश गर्नुभन्दा ठुलो मानिसको अर्को स्वार्थहानि छैन।

**अर्थेन्द्रियार्थाभिध्यानं सर्वार्थापह्नवो नृणाम्।**
**भ्रंशितो ज्ञानविज्ञानाद्येनाविशति मुख्यताम्॥ ३३॥**

पदार्थ—

**अर्थेन्द्रियार्थाभिध्यानं** = धन, इन्द्रियका विषय रूप, रस आदिको चिन्तनले
**नृणाम्** = मानिसको
**सर्वार्थापह्नवः** = सम्पूर्ण पुरुषार्थ नष्ट हुन्छ
**येन** = यसबाट (मनुष्य)
**ज्ञानविज्ञानात्** = शास्त्रज्ञान र आत्मज्ञानबाट
**भ्रंशितः** = भ्रष्ट भएर (मनुष्य)
**मुख्यताम्** = वृक्ष आदि स्थावर योनिमा
**आविशति** = प्रवेश गर्दछ

**वाक्यार्थ—** धन, इन्द्रियका विषय रूप, रस आदिको चिन्तनले मानिसको सम्पूर्ण पुरुषार्थ नष्ट हुन्छ। यसबाट मनुष्य परोक्ष शास्त्रज्ञान र अपरोक्ष अनुभवात्मक आत्मज्ञानबाट भ्रष्ट भएर वृक्ष आदि स्थावर योनिमा प्रवेश गर्दछ।

**न कुर्यात् कर्हिचित् सङ्गं तमस्तीव्रं तितीरिषुः।**
**धर्मार्थकाममोक्षाणां यदत्यन्तविघातकम्॥ ३४॥**

पदार्थ—

**तीव्रं** = अत्यन्त डरलाग्दो
संसारको मूल भएको
**तमः** = अज्ञान

**तितीरिषुः** = तर्न चाहने मनुष्यले
**यत्** = जुन कुरा (विषयको चिन्तन)
**धर्मार्थकाममोक्षाणां** = धर्म, अर्थ, काम र मोक्षको प्राप्तिमा
**अत्यन्तविघातकम्** = अत्यन्त बाधक छ भने (त्यसमा)
**कर्हिचित्** = कहिल्यै पनि
**सङ्गं** = आसक्ति
**न कुर्यात्** = नगरोस्

**वाक्यार्थ–** अत्यन्त डरलाग्दो संसारको मूल भएको अज्ञान तर्न चाहने मनुष्यले जुन कुरा (विषयको चिन्तन) धर्म, अर्थ, काम र मोक्षको प्राप्तिमा अत्यन्त बाधक छ भने त्यसमा कहिल्यै पनि आसक्ति नगरोस्।

**विवरण–** जब इन्द्रियहरूले विषयको सेवन गर्दछन् तब मनलाई पनि बलात् विषयदेशमा लैजान्छन्। विषयासक्त मनले बुद्धिको विचारशक्तिलाई बिस्तारै-बिस्तारै नष्ट गर्दै जान्छ जसरी तलाउको तीरमा उत्पन्न श्‍ारहरूले जललाई सोस्दछन्। यही क्रमले विचारशक्ति क्षीण हुँदै गएपछि मनुष्यलाई आफ्ना कर्तव्यहरूको स्मृतिसमेत हुँदैन। पूर्वापरको स्मृति नभएपछि मनुष्यको ज्ञान नष्ट हुन्छ। ज्ञाननाश आफ्नै पतन हो। जुन परमप्रिय आत्माको प्रियताको लागि अन्य धन आदि विषयहरूमा प्रेम हुन्छ त्यही आत्मालाई नै विषयासक्तिको कारणले पतित बनाउनु मनुष्यको लागि सबभन्दा ठुलो हानि हो। गीता (२। ६३)मा पनि भगवान्‌ले विषयचिन्तनबाट तिनीहरूमा आसक्ति अनि त्यही क्रमले बुद्धि नष्ट भई सर्वनाश हुने हुँदा विषयचिन्तनलाई अनर्थको मूल हो भनेर बताउनुभएको छ। जसरी ठुलो आँधिबेरी आयो भने नदीको डुङ्गा डुब्छ त्यसै गरी विषयमा गएको इन्द्रियलाई मनले साथ दियो भने मनुष्यको बुद्धि नष्ट हुन्छ।

**तत्रापि मोक्ष एवार्थ आत्यन्तिकतयेष्यते।**
**त्रैवर्ग्योऽर्थो यतो नित्यं कृतान्तभयसंयुतः॥ ३५॥**

**पदार्थ–**

**तत्र अपि** = धर्म आदि चार पुरुषार्थमा पनि
**आत्यन्तिकतया** = सर्वोत्कृष्ट भएकाले
**मोक्षः एव** = मोक्ष नै
**अर्थः** = पुरुषार्थ
**इष्यते** = मानिन्छ
**यतः** = किनभने
**त्रैवर्ग्यः** = धर्म, अर्थ, कामरूप त्रैवर्गिक
**अर्थः** = पुरुषार्थ त
**नित्यं** = सधैं
**कृतान्तभयसंयुतः** = कालको भयले युक्त हुन्छ

**वाक्यार्थ–** धर्म आदि चार पुरुषार्थमा पनि सर्वोत्कृष्ट भएको हुँदा मोक्ष नै पुरुषार्थ मानिन्छ किनभने धर्म, अर्थ, कामरूप अन्य त्रैवर्गिक पुरुषार्थ त सधैँ कालको भयले युक्त हुन्छ।

**विवरण–** कुकुर-बिरालादेखि लिएर मान्छेसम्म सबै प्राणीहरू सुखकै लागि काम गर्दछन्। खाने, सुत्ने, घर बनाउने आदि सम्पूर्ण इच्छाहरू सुखकै इच्छाको अधीनमा हुन्छन्। तर 'सुख केका लागि चाहने ?' यसको उत्तर छैन। सुखको चाहना मान्छेको स्वभाव हो, सुख सबै मनुष्यहरूको अन्तिम लक्ष्य हो। मोक्ष भनेको त्यस्तो सुख हो जसमा दुःख कहिल्यै आउँदैन र आनन्द कहिल्यै पनि

जाँदैन। यद्यपि मनुष्य धर्म पनि गर्न चाहन्छ, सम्पत्ति पनि कमाउन चाहन्छ र त्यसको भोग पनि गर्न चाहन्छ तर यी सम्पूर्ण काम त्यही सुखप्राप्तिकै लागि गरिने भएकाले धर्म, अर्थ र काम (विषयभोग)भन्दा मोक्ष नै ठुलो पुरुषार्थ हो। **पुरुषैः अर्थ्यते इति पुरुषार्थः** अथवा मानिसहरू जे प्राप्त गर्न चाहन्छन् त्यही नै पुरुषार्थ हो। अरू तीन ओटै पुरुषार्थ क्रमशः क्षीण हुँदै जान्छन् तर मोक्ष अक्षय र अनन्त छ। त्यसैले मोक्षलाई सर्वोत्कृष्ट पुरुषार्थ मानिएको हो।

**परेऽवरे च ये भावा गुणव्यतिकरादनु।**

**न तेषां विद्यते क्षेममीशविध्वंसिताशिषाम्॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **गुणव्यतिकरात् अनु** = प्रकृतिमा सत्त्व आदि गुणको सञ्चलन भएपछि उत्पन्न भएका | **अवरे च** = मनुष्य आदि सामान्य | **तेषां** = तिनीहरूको |
| **ये** = जुन | **भावाः** = प्राणीहरू छन् | **क्षेमम्** = कल्याण |
| **परे** = ब्रह्मा आदि उत्तम र | **ईशविध्वंसिताशिषाम्** = कालरूप ईश्वरद्वारा कुशलता नष्ट गराइएका | **न विद्यते** = हुँदैन |

**वाक्यार्थ–** प्रकृतिमा सत्त्व आदि गुणको सञ्चलन भएपछि उत्पन्न भएका ब्रह्मा आदि उत्तम र मनुष्य आदि सामान्य प्राणीहरूको कालरूप ईश्वरद्वारा कुशलता नष्ट गराइएको छ अतः तिनीहरूको कल्याण हुँदैन।

**तत्त्वं नरेन्द्र जगतामथ तस्थूषां च**

**देहेन्द्रियासुधिषणात्मभिरावृतानाम्।**

**यः क्षेत्रवित्तपतया हृदि विश्वगाविः**

**प्रत्यक् चकास्ति भगवांस्तमवेहि सोऽस्मि॥ ३७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अथ** = यसपछि | **तस्थूषां** = स्थावर | **आविः** = प्रत्यक्ष |
| **तत्** = त्यसकारण | **जगताम् च** = जङ्गम प्राणीको पनि | **प्रत्यक्** = साक्षी भएर |
| **नरेन्द्र** = हे राजा | **हृदि** = हृदयमा | **विश्वग्** = सर्वत्र |
| **त्वं** = तपाईं | **यः** = जो | **चकास्ति** = प्रकाशित हुनुभएको छ |
| **देहेन्द्रियासुधिषणात्मभिरावृतानाम्** = शरीर, इन्द्रिय, प्राण, बुद्धि र अहङ्कारद्वारा ढाकिएका सम्पूर्ण | **भगवान्** = भगवान् | **तम्** = उहाँलाई |
| | **क्षेत्रवित्तपतया** = अन्तर्यामी रूपले | **सः** = त्यो |
| | | **अस्मि** = म नै हुँ भनेर |

**अवेहि** = जान्नुहोस्

**वाक्यार्थ–** यसपछि हे राजा ! तपाईं शरीर, इन्द्रिय, प्राण, बुद्धि र अहङ्कारद्धारा ढाकिएका सम्पूर्ण स्थावर र जङ्गम प्राणीको हृदयमा अन्तर्यामी रूपले प्रत्यक्ष साक्षी भएर सर्वत्र प्रकाशित हुनुभएका भगवान्‌लाई 'म हुँ' भनेर जान्नुहोस्।

**विवरण–** यहाँ राजा पृथुलाई सनक आदिले आत्मतत्त्वको विषयमा उपदेश दिनुभएको छ। जङ्गम, पशु, मनुष्य आदि प्राणीहरूमा र स्थावर वृक्ष आदि प्राणीहरूमा समेत परमात्मा रहनुभएको छ। सम्पूर्ण प्राणीहरू शरीर, इन्द्रिय, प्राण, बुद्धि र अहङ्कारद्धारा ढाकिएका छन्। उनीहरूको खास स्वरूप त हृदयभित्रै प्रकट हुन्छ। त्यही तत्त्वलाई म हुँ भनी जान्नुपर्दछ। हृदयमा त अहङ्काररूप जीव नै स्फुरित हुन्छ, त्यो आत्माको आभासलाई कसरी आफू मान्ने ? यस शङ्काको उत्तरमा भनिन्छ– **क्षेत्रवित्तपतया चकास्ति। क्षेत्रवित्तपतया** यस समस्त शब्दको विग्रह यस प्रकार छ– क्षेत्रं वेत्तीति क्षेत्रवित्, तं तपतीति क्षेत्रवित्तपः, तस्य भावः क्षेत्रवित्तपता, तया क्षेत्रवित्तपतया। यहाँ क्षेत्र भनेर शरीरलाई लिनुपर्छ। त्यसलाई 'म हुँ' भनी जान्ने जीव क्षेत्रवित् हो। त्यसलाई प्रकाशित र नियन्त्रण आत्मतत्त्वले गर्दछ। **क्षेत्रवित्तपतया** यो पूरा पदको अर्थ हुन्छ अन्तर्यामी रूपले। परमात्मा नै अन्तर्यामी साक्षीरूपले हृदयभित्र बसी आफ्नै आभासरूप जीवका सारा कर्महरूलाई प्रकाशित र कर्मफलभोगलाई नियमन गर्नुहुन्छ। जीवको नियन्त्रण त परमात्माले मात्र नभई कर्मले पनि गर्न सक्ने हुनाले कर्मलाई हटाई परमात्मालाई मात्र बुझाउन 'आविः' अर्थात् प्रत्यक्ष भन्ने पद थपिएको हो। कर्म अप्रत्यक्ष भएकाले त्यसलाई यहाँ जीवको नियन्त्रकको रूपमा लिन सकिन्न। बुद्धि पनि प्रत्यक्ष हुने हुँदा त्यसलाई हटाउन यहाँ 'प्रत्यक्' वा बुद्धिभिन्न भन्ने पद प्रयोग गरिएको छ। बुद्धि विषय हो र आत्मा विषयी हो। यद्यपि विषयी वा ज्ञाताको रूपमा त अहङ्कार पनि देखिन्छ तर त्यो विष्वक् अर्थात् सर्वव्यापक छैन। यसरी जीव, कर्म, बुद्धि र अहङ्कारभन्दा भिन्न परमात्मा नै हृदयभित्र साक्षी रूपले रहनुभएकाले उहाँलाई 'म त्यही हुँ' भनी अद्वैतभावले जान्नुपर्छ।

**यस्मिन्निदं सदसदात्मतया विभाति**
**माया विवेकविधुति स्रजि वाहिबुद्धिः।**
**तं नित्यमुक्तपरिशुद्धविबुद्धतत्त्वं**
**प्रत्यूढकर्मकलिलप्रकृतिं प्रपद्ये ॥ ३८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विवेकविधुति** = विवेकबाट हट्ने | कार्यकारणभावले | **यस्मिन्** = जुन भगवान्‌मा |
| **इदं** = यो प्रपञ्च | **स्रजि** = मालामा | **माया** = मायारूपले |
| **सदसदात्मतया** = | **अहिबुद्धिः वा** = सर्पजस्तै | **विभाति** = देखिन्छ |

| | | |
|---|---|---|
| **तं** = त्यस्ता | रहेका | भगवान्को शरणमा |
| **प्रत्यूढकर्मकलिलप्रकृतिं** = कर्मकलुषित प्रकृतिभन्दा पर | **नित्यमुक्तपरिशुद्धविबुद्धतत्त्वं** = नित्यमुक्त, निर्मल र ज्ञानस्वरूप | **प्रपद्ये** = जान्छु |

**वाक्यार्थ–** विवेकबाट हट्ने यो प्रपञ्च कार्यकारणभावले मालामा सर्पजस्तै जुन भगवान्मा मायारूपले देखिन्छ त्यस्ता कर्मकलुषित प्रकृतिभन्दा पर रहेका नित्यमुक्त, निर्मल र ज्ञानस्वरूप भगवान्को शरणमा म जान्छु।

**विवरण–** सम्पूर्ण प्राणीहरूको हृदयभित्र बस्दा तत्सम्बन्धी गुणदोषले पनि परमात्मा युक्त हुनुहुन्छ होला कि त भन्ने शङ्का हटाउन अर्को श्लोकले रज्जुसर्पको दृष्टान्त दिएको छ। जसरी चुँडाएर राखिएको मालामा भ्रमवशात् सर्पबुद्धि हुन्छ त्यसै गरी कार्यकारणरूपले सम्पूर्ण जगत् भ्रमवश नै देखिन्छ। यो भ्रान्तिले देखिएको जगत् आत्मा र अनात्माको विवेक अर्थात् भेदज्ञानद्वारा हट्नेखालको छ। जसरी डोरीको ज्ञान भइसकेपछि डोरीको सर्प त्यत्तिकै हराउँछ त्यसै गरी ब्रह्मको अज्ञानको कारणले ब्रह्ममा देखिएको जगत् पनि विवेकज्ञानपछि हराउँछ। अज्ञानको कारणले देखिने पदार्थलाई अध्यस्त वा अध्यासवशात् देखिएको भन्दछन्, जसको गुणदोषले अधिष्ठान अर्थात् आधार गुणदोषयुक्त हुँदैन। मरुभूमिमा देखिएको जलले मरुभूमि नभिजेजैँ ब्रह्ममा देखिएको प्रपञ्चबाट ब्रह्म संसर्गी हुँदैन भन्ने यो श्लोकको आशय हो।

**यत्पादपङ्कजपलाशविलासभक्त्या**
**कर्माशयं ग्रथितमुद्ग्रथयन्ति सन्तः।**
**तद्वन्न रिक्तमतयो यतयोऽपि रुद्ध-**
**स्रोतोगणास्तमरणं भज वासुदेवम्॥ ३९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यत्पादपङ्कजपलाशविलास-भक्त्या** = जुन भगवान्को चरणकमलका पत्ररूपी औँलाको कान्तिको सेवाले | **उद्ग्रथयन्ति** = (यसरी) कर्मवासनाद्वारा निर्मुक्त गर्दछन् | **यतयः अपि** = संन्यासीहरू पनि |
| **सन्तः** = सज्जनहरू | **तद्वत्** = त्यसरी | **न** = सक्दैनन् |
| **ग्रथितम्** = कर्मद्वारा ग्रथित | **रुद्धस्रोतोगणाः** = इन्द्रिय नियन्त्रण गर्ने | **तम्** = त्यस्ता |
| **कर्माशयं** = अहङ्कारलाई | **रिक्तमतयः** = अन्तःकरणलाई विषयवासनारहित बनाउने | **अरणं** = सर्वाश्रय |
| | | **वासुदेवम्** = वासुदेवलाई |
| | | **भज** = सेवा गर्नुहोस् |

**वाक्यार्थ–** जुन भगवान्को चरणकमलका पत्ररूपी औँलाको कान्तिको सेवाले सज्जनहरू कर्मद्वारा ग्रथित अहङ्कारलाई यसरी कर्मवासनाद्वारा निर्मुक्त गर्दछन् कि त्यसरी इन्द्रिय नियन्त्रण गर्न विषयवासनारहित अहङ्कार भएका संन्यासीहरू पनि सक्दैनन्। त्यस्ता सर्वाश्रय वासुदेवको सेवा

गर्नुहोस्।

**कृच्छ्रो महानिह भवार्णवमप्लवेशां**
**षड्वर्गनक्रमसुखेन तितीरषन्ति।**
**तत्त्वं हरेर्भगवतो भजनीयमङ्‌घ्रिं**
**कृत्वोडुपं व्यसनमुत्तर दुस्तरार्णम्॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **षड्वर्गनक्रम्** = मन र पाँच ज्ञानेन्द्रियरूप गोहीले युक्त | व्यक्ति नभएका तिनीहरूका लागि | **हरेः** = श्रीहरिको |
| **भवार्णवम्** = संसाररूपी सागरलाई (केही व्यक्तिहरू) | **इह** = यस तर्ने कार्यमा | **भजनीयम्** = सेवा गर्न योग्य |
| **असुखेन** = कष्टसाध्य योग आदि मार्गबाट | **महान्** = ठुलो | **अङ्‌घ्रिं** = चरणकमललाई |
| **तितीरषन्ति** = तर्न चाहन्छन् | **कृच्छ्रः** = दुःख हुन्छ | **उडुपं** = डुङ्गा |
| **अप्लवेशां** = डुङ्गा खियाउने | **तत्** = त्यसकारण | **कृत्वा** = बनाएर |
| | **त्वं** = तपाईं | **दुस्तरार्णम्** = तर्न कठिन |
| | **भगवतः** = भगवान् | **व्यसनम्** = सांसारिक दुःख |
| | | **उत्तर** = तर्नुहोस् |

**वाक्यार्थ–** मन र पाँच ज्ञानेन्द्रियरूप गोहीले युक्त संसाररूपी सागरलाई केही व्यक्तिहरू कष्टसाध्य योग आदि मार्गबाट तर्न चाहन्छन्। डुङ्गा खियाउने व्यक्ति नभएका तिनीहरूका लागि यस तर्ने कार्यमा ठुलो दुःख हुन्छ। त्यसकारण तपाईं भगवान् श्रीहरिको सेवा गर्न योग्य चरणकमललाई डुङ्गा बनाएर तर्न कठिन सांसारिक दुःख तर्नुहोस्।

**विवरण–** ३७ र ३८ यी दुई श्लोकमा जुन ज्ञानमार्गको उपदेश गरियो त्यो दुष्कर भएकाले ३९ र ४० यी दुई श्लोकद्वारा भक्तिको उपदेश गरिएको छ। भगवान्‌को चरणकमललाई सधैँ हृदयमा धारण गरिरहने सन्तहरू नै अहङ्काररूप हृदयग्रन्थिलाई फुकाउन सक्दछन्। योग आदि भक्तिविहीन साधनाको आश्रयले मनलाई निर्विषय गरेर रहनेहरू समेत यति सजिलै अहङ्कार नाश गर्न सक्दैनन्। भगवान्‌लाई कर्णधार नबनाउनेहरूका लागि संसारसागर तर्न अत्यन्त कठिन छ। उत्तम अधिकारी सीधै ज्ञान प्राप्त गर्न सक्छ तर मध्यम अधिकारी आफ्नै बलले संसार तर्न असमर्थ हुन्छ। उसले अनिवार्यतः भगवद्‌भक्तिको आश्रय ग्रहण गर्नुपर्छ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**स एवं ब्रह्मपुत्रेण कुमारेणात्ममेधसा।**

**दर्शितात्मगतिः सम्यक् प्रशस्योवाच तं नृपः ॥ ४१ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ब्रह्मपुत्रेण** = ब्रह्माजीका पुत्र | **दर्शितात्मगतिः** = आत्मज्ञानको उपदेश गरिएका | **तं** = सनत्कुमारलाई |
| **आत्ममेधसा** = आत्मज्ञानी | **सः** = उहाँ | **सम्यक्** = राम्रोसँग |
| **कुमारेण** = सनत्कुमारजीद्वारा | **नृपः** = पृथु राजाले | **प्रशस्य** = प्रशंसा गरेर |
| **एवं** = यसप्रकार | | **उवाच** = भन्नुभयो |

**वाक्यार्थ—** ब्रह्माजीका पुत्र आत्मज्ञानी सनत्कुमारजीद्वारा यसप्रकार आत्मज्ञानको उपदेश गरिएका राजा पृथुले सनत्कुमारलाई राम्रोसँग प्रशंसा गरेर भन्नुभयो।

**राजोवाच** (राजा पृथुले भन्नुभयो)

**कृतो मेऽनुग्रहः पूर्वं हरिणार्तानुकम्पिना।**

**तमापादयितुं ब्रह्मन् भगवन् यूयमागताः ॥ ४२ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ब्रह्मन्** = ब्रह्मज्ञानी | **मे** = ममाथि | **आपादयितुं** = सम्पन्न गर्न |
| **भगवन्** = हे सनत्कुमारजी | **पूर्वं** = पहिले नै | **यूयम्** = हजुरहरू |
| **आर्तानुकम्पिना** = दुःखीमाथि दया गर्ने | **अनुग्रहः** = कृपा | **आगताः** = आउनुभएको हो |
| **हरिणा** = भगवान् श्रीहरिले | **कृतः** = गर्नुभएको थियो | |
| | **तम्** = त्यसलाई | |

**वाक्यार्थ—** ब्रह्मज्ञानी हे सनत्कुमारजी ! दीनमाथि दया गर्ने भगवान् श्रीहरिले ममाथि पहिले नै कृपा गर्नुभएको थियो। त्यसलाई सम्पन्न गर्न हजुरहरू आउनुभएको हो।

**टिप्पणी—** यहाँ पहिले सनत्कुमारलाई मात्र सम्बोधन गरेर पछि त्यही वाक्यमा हजुरहरू भनी बहुवचनको प्रयोग गरिएको छ। यसर्थ यहाँ सनत्कुमारसँग आएका सनक, सनातन र सनन्दनलाई समेत बुझाउनको लागि बहुवचनको प्रयोग गरिएको हो।

**निष्पादितश्च कार्त्स्न्येन भगवद्भिर्घृणालुभिः।**

**साधूच्छिष्टं हि मे सर्वमात्मना सह किं ददे ॥ ४३ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **घृणालुभिः** = दयालु | **कार्त्स्न्येन** = पूर्ण रूपमा | **किं ददे** = म के दिऊँ |
| **भगवद्भिः** = हजुरहरूले (भगवान्‌ले दिनुभएको वचन) | **निष्पादितः** = सम्पन्न गर्नुभयो (यसको बदलामा) | **हि** = किनभने |
| | | **मे** = मेरो |

**आत्मना सह** = शरीरसँगै
**सर्वम्** = राज्य आदि समस्त वस्तु
**साधूच्छिष्टं** = हजुरहरूजस्ता महापुरुषको प्रसाद हो

**वाक्यार्थ–** दयालु हजुरहरूले भगवान्ले दिनुभएको वचन पूर्ण रूपमा सम्पन्न गर्नुभयो। यसको बदलामा हजुरहरूलाई म के दिऊँ ? किनभने मेरो शरीरसँगसँगै राज्य आदि समस्त वस्तु हजुरहरूजस्ता महापुरुषकै प्रसाद हो।

**प्राणा दाराः सुता ब्रह्मन् गृहाश्च सपरिच्छदाः।**
**राज्यं बलं मही कोश इति सर्वं निवेदितम्॥ ४४॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे सनत्कुमारजी
**प्राणाः** = प्राण
**दाराः** = पत्नी
**सुताः** = पुत्रहरू
**सपरिच्छदाः** = सम्पूर्ण सामग्रीले युक्त
**गृहाः** = घरहरू
**राज्यं** = राज्य
**बलं** = सेना
**मही** = पृथ्वी
**कोशः च** = कोश पनि
**इति** = यी (हजुरहरूका)
**सर्वं** = सम्पूर्ण वस्तु (हजुरहरूलाई नै)
**निवेदितम्** = समर्पित गरेँ

**वाक्यार्थ–** हे सनत्कुमारजी ! प्राण, पत्नी, पुत्रहरू, सम्पूर्ण सामग्रीले युक्त घरहरू, राज्य, सेना, पृथ्वी र कोश यी हजुरहरूका सम्पूर्ण वस्तु हजुरहरूलाई नै समर्पित गरेँ।

**सैनापत्यं च राज्यं च दण्डनेतृत्वमेव च।**
**सर्वलोकाधिपत्यं च वेदशास्त्रविदर्हति॥ ४५॥**

**पदार्थ–**
**सैनापत्यं च** = सेनापतित्व धारण
**राज्यं च** = राज्य सञ्चालन
**दण्डनेतृत्वम् च** = दण्डविधान एवं
**सर्वलोकाधिपत्यं च** = सम्पूर्ण लोकको शासन गर्ने कार्यमा
**वेदशास्त्रवित् एव** = वेदज्ञ मात्र
**अर्हति** = योग्य हुन्छ

**वाक्यार्थ–** सेनापतित्व धारण, राज्यसञ्चालन, दण्डविधान एवं सम्पूर्ण लोकको शासन गर्ने कार्यमा समेत वेदज्ञ मात्र योग्य हुन्छ।

**विवरण–** जसले ज्ञान दिएर अज्ञानअन्धकार नष्ट गऱ्यो र जन्ममरणको चक्रबाट छुटकारा दिलाइदियो त्यस्ता आप्तकाम महापुरुषहरूलाई सांसारिक वस्तुहरू अर्पण गरी ऋणमुक्त हुन नसकिने पृथुको धारणा छ। ब्रह्मज्ञानीहरू बलेको दियो जस्ता हुन्छन् जो आफ्ना नजिकमा आउने सबैलाई ज्ञानज्योतिले प्रकाशित गर्दछन्। उनीहरू अत्यन्त दयालु पनि हुन्छन्। महापुरुषहरूले नै कृपापूर्वक वेनको शरीर मन्थन गर्दा राजा पृथुको शरीर बनेको हो। त्यसैले राजा पृथु महापुरुषहरूलाई नै आफ्नो सर्वस्व ठान्दछन्। कृतज्ञताका लागि केही न केही समर्पण गर्नै पर्ने

भएकाले पृथु आफ्नो सम्पूर्ण राज्य, सम्पत्ति, पृथ्वी, सेना, आफ्नो शरीर, प्राण र दरबारसमेत सनक आदिलाई अर्पण गर्दछन्। राजा पृथु महापुरुषहरूकै सम्पत्ति उहाँहरूको सेवक भएर उहाँहरूलाई नै अर्पण गरेको ठान्दछन्। राज्य गर्न, सम्पूर्ण लोकको अधिपति हुन र दुष्टलाई दण्ड दिन समेत ब्रह्मज्ञानी नै योग्य हुन्छ भन्ने उनको धारणा छ। ब्रह्मज्ञानीहरू आफ्नै सत्कर्मबाट सन्तुष्ट रहन्छन्, आत्मानन्दमा नै उनीहरू मस्त हुन्छन्, त्यसैले प्रत्युपकारद्वारा उनीहरूलाई प्रसन्न गराउन खोज्नु हँस्सीको पात्र हुनु हो।

**स्वमेव ब्राह्मणो भुङ्क्ते स्वं वस्ते स्वं ददाति च।**
**तस्यैवानुग्रहेणान्नं भुञ्जते क्षत्रियादयः॥ ४६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्राह्मणः** = ब्राह्मण | **वस्ते** = लगाउँछ | **अनुग्रहेण** = अनुग्रहले |
| **स्वम् एव** = आफ्नै वस्तु | **स्वं** = आफ्नै वस्तु | **क्षत्रियादयः** = क्षत्रिय आदि |
| **भुङ्क्ते** = खान्छ | **ददाति च** = दान पनि गर्दछ | **अन्नं** = अन्न |
| **स्वं** = आफ्नै कपडा | **तस्य एव** = ब्राह्मणकै | **भुञ्जते** = खान्छन् |

**वाक्यार्थ–** ब्राह्मण आफ्नै वस्तु खान्छ, आफ्नै कपडा लगाउँछ, आफ्नै वस्तु दान पनि गर्दछ। ब्राह्मणकै अनुग्रहले क्षत्रिय आदि अन्न खान्छन्।

**यैरीदृशी भगवतो गतिरात्मवाद**
**एकान्ततो निगमिभिः प्रतिपादिता नः।**
**तुष्यन्त्वदभ्रकरुणाः स्वकृतेन नित्यं**
**को नाम तत् प्रतिकरोति विनोदपात्रम्॥ ४७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **निगमिभिः** = वेदका ज्ञाता | **ईदृशी** = यस्तो अपूर्व | **नित्यं** = सधैं |
| **यैः** = हजुरहरूले | **गतिः** = तत्त्व | **तुष्यन्तु** = खुसी हुनुहोस् |
| **आत्मवादे** = अध्यात्म तत्त्वको विचारका सम्बन्धमा | **प्रतिपादिता** = बताउनुभयो | **कः नाम** = (हामीमध्ये) कसले |
| **नः** = हामीलाई | **अदभ्रकरुणाः** = अति दयालु हजुरहरू | **विना उदपात्रम्** = हात जोड्नुबाहेक |
| **एकान्ततः** = निश्चयका साथ | **स्वकृतेन** = आफूले हामीलाई गरेको उपकारबाट नै | **तत्** = त्यस उपकारको बदलामा |
| **भगवतः** = भगवान् वासुदेवको | | **प्रतिकरोति** = प्रत्युपकार गर्न |

सक्छ र

**वाक्यार्थ–** वेदका ज्ञाता हजुरहरूले अध्यात्म तत्त्वको सम्बन्धमा हामीलाई निश्चयका साथ भगवान् वासुदेवको यस्तो अपूर्व तत्त्व बताउनुभयो। त्यस्ता अति दयालु हजुरहरू आफैँले गरेको उपकारबाट नै खुसी हुनुहोस्। हामीमध्ये हात जोड्नुबाहेक त्यसको प्रत्युपकार कसले गर्न सक्छ ? अर्थात् हामी हजुरहरूले दिएको ज्ञानको बदलामा अलिकति पनि प्रत्युपकार गर्न असमर्थ छौँ।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**त आत्मयोगपतय आदिराजेन पूजिताः।**
**शीलं तदीयं शंसन्तः खेऽभूवन् मिषतां नृणाम्॥ ४८॥**

**पदार्थ–**
**आदिराजेन** = आदिराज पृथुद्वारा
**पूजिताः** = पूजा गरिएका
**आत्मयोगपतयः** = आत्मज्ञानीमा श्रेष्ठ
**ते** = ती सनत्कुमार आदि मुनिहरू
**तदीयं** = ती पृथुको
**शीलं** = असल स्वभावको
**शंसन्तः** = प्रशंसा गर्दै (त्यहाँका)
**नृणाम्** = मानिसहरूले
**मिषतां** = हेर्दाहेर्दै
**खे** = आकाश मार्गबाट
**अभूवन्** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** आदिराज पृथुद्वारा पूजा गरिएका आत्मज्ञानीमा श्रेष्ठ ती सनत्कुमार आदि मुनिहरू पृथुको असल स्वभावको प्रशंसा गर्दै त्यहाँका मानिसहरूले हेर्दाहेर्दै आकाश मार्गबाट अन्तर्धान हुनुभयो।

**वैन्यस्तु धुर्यो महतां संस्थित्याध्यात्मशिक्षया।**
**आप्तकाममिवात्मानं मेन आत्मन्यवस्थितः॥ ४९॥**

**पदार्थ–**
**महतां** = महात्माहरूमा
**धुर्यः** = अग्रगण्य
**वैन्यः** = राजा पृथुले
**तु** = चाहिँ
**अध्यात्मशिक्षया** = सनत्कुमारादिबाट प्राप्त अध्यात्मज्ञानद्वारा
**संस्थित्य** = चित्तलाई एकाग्र बनाएर
**आत्मनि** = आत्मामा
**अवस्थितः** = स्थित भई
**आत्मानं** = आफूलाई
**आप्तकामम् इव** = कृतकृत्य भएको झैँ
**मेने** = ठान्नुभयो

**वाक्यार्थ–** महात्माहरूमा अग्रगण्य राजा पृथुले सनत्कुमारादिबाट प्राप्त अध्यात्मज्ञानद्वारा चित्तलाई एकाग्र बनाएर आत्मामा स्थित भई आफूलाई कृतकृत्य भएको ठान्नुभयो।

**कर्माणि च यथाकालं यथादेशं यथाबलम्।**

**यथोचितं यथावित्तमकरोद् ब्रह्मसात्कृतम्॥ ५० ॥**

**पदार्थ–**

(राजा पृथुले)
**ब्रह्मसात्कृतम्** = ब्रह्मार्पण बुद्धिले
**यथाकालं** = समयअनुरूप
**यथादेशं** = स्थानअनुरूप
**यथाबलम्** = शक्तिअनुरूप
**यथोचितं** = न्यायअनुरूप
**यथावित्तम् च** = धनअनुरूप
**कर्माणि** = कर्महरू
**अकरोत्** = गर्नुभयो

**वाक्यार्थ–** राजा पृथुले निष्काम भावनाले समय, स्थान, शक्ति, न्याय र धनअनुरूप कर्महरू गर्नुभयो।

**फलं ब्रह्मणि विन्यस्य निर्विषङ्गः समाहितः।**

**कर्माध्यक्षं च मन्वान आत्मानं प्रकृतेः परम्॥ ५१ ॥**

**पदार्थ–**

**समाहितः** = एकाग्र चित्त भएका (राजा पृथु)
**फलं** = समस्त कर्मफल
**ब्रह्मणि** = परमात्मामा
**विन्यस्य** = समर्पण गरी
**आत्मानं** = आत्मालाई
**कर्माध्यक्षं** = कर्मको साक्षी
**प्रकृतेः** = प्रकृतिभन्दा
**परम् च** = पर रहेको
**मन्वानः** = मान्दै (कर्म गरेर पनि)
**निर्विषङ्गः** = निर्लिप्त भएर रहनुभयो

**वाक्यार्थ–** राजा पृथु एकाग्र चित्त भएर समस्त कर्मफल परमात्मामा समर्पण गरी आत्मालाई कर्मको साक्षी एवं प्रकृतिभन्दा पर रहेको मान्दै कर्म गरेर पनि कर्मफलबाट निर्लिप्त भएर रहनुभयो।

**गृहेषु वर्तमानोऽपि स साम्राज्यश्रियान्वितः।**

**नासज्जतेन्द्रियार्थेषु निरहम्मतिरर्कवत्॥ ५२ ॥**

**पदार्थ–**

**साम्राज्यश्रिया** = राज्यलक्ष्मीले
**अन्वितः** = सहित भई
**गृहेषु** = गृहस्थाश्रममा
**वर्तमानः अपि** = रहेर पनि
**निरहम्मतिः** = अहङ्काररहित
**सः** = राजा पृथु
**अर्कवत्** = भगवान् सूर्य आफूले प्रकाशित गरेको ठाउँको गुण र दोषबाट निर्लिप्त रहेझैं
**इन्द्रियार्थेषु** = इन्द्रियका विषयमा
**न असज्जत** = आसक्त हुनुभएन

**वाक्यार्थ–** राज्यलक्ष्मीले सहित भई गृहस्थाश्रममा रहेर पनि राजा पृथु अहङ्काररहित भई भगवान् सूर्य आफूले प्रकाशित गरेको ठाउँको गुण र दोषबाट निर्लिप्त रहेझैं इन्द्रियका विषयमा आसक्त हुनुभएन।

**एवमध्यात्मयोगेन कर्माण्यनुसमाचरन्।**
**पुत्रानुत्पादयामास पञ्चार्चिष्यात्मसम्मतान्॥ ५३॥**
**विजिताश्वं धूम्रकेशं हर्यक्षं द्रविणं वृकम्।**
**सर्वेषां लोकपालानां दधारैकः पृथुर्गुणान्॥ ५४॥**
**गोपीथाय जगत्सृष्टेः काले स्वे स्वेऽच्युतात्मकः।**
**मनोवाग्वृत्तिभिः सौम्यैर्गुणैः संरञ्जयन् प्रजाः॥ ५५॥**
**राजेत्यधान्नामधेयं सोमराज इवापरः।**
**सूर्यवद्विसृजन् गृह्णन् प्रतपंश्च भुवो वसु॥ ५६॥**

पदार्थ–

**एवम्** = यसप्रकार
**अध्यात्मयोगेन** = आत्मनिष्ठामा रहेर
**कर्माणि** = कर्म
**अनुसमाचरन्** = गर्दै (राजा पृथुले)
**अर्चिषि** = आफ्नी पत्नी अर्चिमा
**विजिताश्वं** = विजिताश्व
**धूम्रकेशं** = धूम्रकेश
**हर्यक्षं** = हर्यक्ष
**द्रविणं** = द्रविण
**वृकम्** = वृक नामका
**आत्मसम्मतान्** = आफूजस्तै पराक्रमी
**पञ्च** = पाँच
**पुत्रान्** = छोरा
**उत्पादयामास** = जन्माउनुभयो
**अच्युतात्मकः** = भगवान्मा समर्पित
**पृथुः** = राजा पृथुले
**जगत्सृष्टेः** = जगत्का प्राणीको
**गोपीथाय** = रक्षाका लागि
**स्वे स्वे काले** = वर्षा, शरद आदि समयमा
**एकः** = एक्लै
**सर्वेषां** = सम्पूर्ण
**लोकपालानां** = लोकपालका
**गुणान्** = गुणहरू
**दधार** = धारण गर्नुभएको थियो
**अपरः** = दोस्रो
**सोमराजः इव** = चन्द्रमाजस्तै
**मनोवाग्वृत्तिभिः** = मन र वचनका
**सौम्यैः गुणैः** = सद्गुणद्वारा
**प्रजाः** = प्रजाहरूलाई
**संरञ्जयन्** = खुसी पार्दै
**राजा इति** = राजा भन्ने
**नामधेयं** = नाम
**अधात्** = धारण गर्नुभयो यस्तै
**गृह्णन्** = ग्रीष्म ऋतुमा जल खिँचेर अनि
**विसृजन्** = वर्षा ऋतुमा बर्साएर
**प्रतपन्** = शीतकालमा तातो प्रदान गर्ने
**सूर्यवत्** = सूर्यले जस्तै
**भुवः** = पृथ्वीवासी प्रजाबाट
**वसु** = करका रूपमा सम्पत्ति ग्रहण गरेर उचित समयमा उनीहरूलाई नै प्रदान गर्नुहुन्थ्यो

**वाक्यार्थ–** यसप्रकार आत्मनिष्ठामा रहेर कर्म गर्दै राजा पृथुले आफ्नी पत्नी अर्चिद्वारा विजिताश्व, धूम्रकेश, हर्यक्ष, द्रविण र वृक नामका आफूजस्तै पराक्रमी पाँच छोरा जन्माउनुभयो।

यस समयमा भगवान्मा समर्पित राजा पृथुले लोकको रक्षाका लागि एक्लै सम्पूर्ण लोकपालका गुणहरू धारण गर्नुभएको थियो। दोस्रो चन्द्रमाजस्तै मन र वचनका सद्‌गुणद्वारा प्रजाहरूलाई खुसी पार्दै उहाँले राजा भन्ने नाम सार्थक बनाउनुभयो। यस्तै ग्रीष्म ऋतुमा जल खिँचेर अनि वर्षा ऋतुमा बर्साएर शीतकालमा तातो प्रदान गर्ने सूर्यले जस्तै उहाँ पृथ्वीवासी प्रजाबाट करका रूपमा सम्पत्ति ग्रहण गरेर उचित समयमा उनीहरूलाई नै प्रदान गर्नुहुन्थ्यो।

**दुर्धर्षस्तेजसेवाग्निर्महेन्द्र इव दुर्जयः।**
**तितिक्षया धरित्रीव द्यौरिवाभीष्टदो नृणाम्॥ ५७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| (राजा पृथु) | **महेन्द्रः इव** = इन्द्रसमान | **द्यौः इव** = स्वर्गसमान |
| **तेजसा** = तेजमा | **दुर्जयः** = दुर्जय | **नृणाम्** = मानिसहरूका |
| **अग्निः इव** = अग्निसमान | **तितिक्षया** = सहनशीलतामा | **अभीष्टदः** = चाहना पूरा |
| **दुर्धर्षः** = अपराजित | **धरित्री** = पृथिवीसमान र | गर्नेवाला हुनुहुन्थ्यो |

**वाक्यार्थ–** राजा पृथु तेजमा अग्निसमान अपराजित, इन्द्रसमान दुर्जय, सहनशीलतामा पृथिवी र स्वर्गसमान एवं मानिसहरूका चाहना पूरा गर्नेवाला हुनुहुन्थ्यो।

**वर्षति स्म यथाकामं पर्जन्य इव तर्पयन्।**
**समुद्र इव दुर्बोधः सत्त्वेनाचलराडिव॥ ५८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यथाकामं** = इच्छाअनुरूपका | **पर्जन्यः इव** = मेघजस्तै | **दुर्बोधः** = गम्भीर र |
| वस्तुद्वारा | **वर्षति स्म** = सम्पत्तिको वर्षा | **सत्त्वेन** = धैर्यमा |
| **तर्पयन्** = प्रजाहरूलाई खुसी | गर्नुहुन्थ्यो | **अचलराट् इव** = पर्वतराज |
| पार्ने राजा पृथु | **समुद्रः इव** = समुद्रजस्तै | सुमेरुजस्तै स्थिर हुनुहुन्थ्यो |

**वाक्यार्थ–** इच्छाअनुरूपका वस्तुद्वारा प्रजाहरूलाई खुसी पार्ने राजा पृथु मेघजस्तै सम्पत्तिको वर्षा गर्नुहुन्थ्यो, समुद्रजस्तै गम्भीर र धैर्यमा पर्वतराज सुमेरुजस्तै स्थिर हुनुहुन्थ्यो।

**धर्मराडिव शिक्षायामाश्चर्ये हिमवानिव।**
**कुवेर इव कोशाढ्यो गुप्तार्थो वरुणो यथा॥ ५९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **शिक्षायाम्** = अनुशासनको शिक्षा | **धर्मराट् इव** = यमराजजस्तै | सङ्ग्रह गर्ने कार्यमा |
| दिने कार्यमा | **आश्चर्ये** = आश्चर्यपूर्ण वस्तुको | **हिमवान् इव** = हिमालयजस्तै |

| | | |
|---|---|---|
| **कुवेरः इव** = कुवेरजस्तै | **वरुणः यथा** = वरुणजस्तै | हुनुहुन्थ्यो |
| **कोशाढ्यः** = धनी र | **गुप्तार्थः** = धनको संरक्षणकर्ता | |

**वाक्यार्थ–** राजा पृथु अनुशासनको शिक्षा दिने कार्यमा यमराजजस्तै, आश्चर्यपूर्ण वस्तुको सङ्ग्रह गर्ने कार्यमा हिमालयजस्तै, धनीमा कुवेरजस्तै र धनको संरक्षण गर्ने कार्यमा वरुणजस्तै हुनुहुन्थ्यो।

**मातरिश्वेव सर्वात्मा बलेन महसौजसा।**

**अविषह्यतया देवो भगवान् भूतराडिव॥ ६०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **बलेन** = शारीरिक शक्ति | **मातरिश्वा इव** = वायुजस्तै | **भूतराड् देवः इव** = शङ्करजस्तै |
| **महसा** = मानसिक शक्ति र | **अविषह्यतया** = तेजको असह्यतामा | हुनुहुन्थ्यो |
| **ओजसा** = पराक्रममा | **भगवान्** = भगवान् | |
| **सर्वात्मा** = सर्वत्र गतिशील | | |

**वाक्यार्थ–** राजा पृथु शारीरिक शक्ति, मानसिक शक्ति र पराक्रममा सर्वत्र गतिशील वायुजस्तै र तेजको असह्यतामा भगवान् शङ्करजस्तै हुनुहुन्थ्यो।

**कन्दर्प इव सौन्दर्ये मनस्वी मृगराडिव।**

**वात्सल्ये मनुवन्नृणां प्रभुत्वे भगवानजः॥ ६१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सौन्दर्ये** = सुन्दरतामा | **वात्सल्ये** = वात्सल्यमा | **भगवान्** = भगवान् |
| **कन्दर्पः इव** = कामदेवजस्तै | **मनुवत्** = मनुजस्तै | **अजः** = ब्रह्माजीजस्तै हुनुहुन्थ्यो |
| **मनस्वी** = उत्साहमा | **नृणां प्रभुत्वे** = मनुष्यको शासनमा | |
| **मृगराड् इव** = सिंहजस्तै | | |

**वाक्यार्थ–** राजा पृथु सुन्दरतामा कामदेवजस्तै, उत्साहमा सिंहजस्तै, वात्सल्यमा मनुजस्तै र मनुष्यको शासनमा भगवान् ब्रह्माजीजस्तै हुनुहुन्थ्यो।

**बृहस्पतिर्ब्रह्मवादे आत्मवत्त्वे स्वयं हरिः।**

**भक्त्या गोगुरुविप्रेषु विष्वक्सेनानुवर्तिषु॥**

**ह्रिया प्रश्रयशीलाभ्यामात्मतुल्यः परोद्यमे॥ ६२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मवादे** = ब्रह्मचिन्तनमा | **बृहस्पतिः** = बृहस्पतिसमान | **आत्मवत्त्वे** = जितेन्द्रियमा |

**स्वयं** = साक्षात्
**हरिः** = श्रीहरिसमान
**गोगुरुविप्रेषु** = गाई, गुरु, ब्राह्मण र
**विष्वक्सेनानुवर्तिषु** = भगवद्‌भक्तहरूमा
**भक्त्या** = भक्ति
**ह्रिया** = लज्जा
**प्रश्रयशीलाभ्याम्** = विनय, असल स्वभाव र
**परोद्यमे** = परोपकारमा
**आत्मतुल्यः** = आफूजस्तै हुनुहुन्थ्यो अर्थात् अद्वितीय हुनुहुन्थ्यो

**वाक्यार्थ–** ब्रह्मचिन्तनमा बृहस्पतिसमान, जितेन्द्रियमा साक्षात् श्रीहरिसमान र गाई, गुरु, ब्राह्मण र भगवद्‌भक्तहरूमा भक्ति, लज्जा, विनय, असल स्वभाव भएका र परोपकार गर्ने कार्यमा आफूजस्तै अर्थात् अद्वितीय हुनुहुन्थ्यो।

**कीर्त्योर्ध्वगीतया पुम्भिस्त्रैलोक्ये तत्र तत्र ह।**
**प्रविष्टः कर्णरन्ध्रेषु स्त्रीणां रामः सतामिव ॥ ६३ ॥**

पदार्थ–
**पुम्भिः** = मानिसहरूले
**त्रैलोक्ये** = तीनै लोकका
**तत्र तत्र** = सम्पूर्ण ठाउँमा
**ऊर्ध्वगीतया कीर्त्या** = उच्च स्वरमा गरेको कीर्तिगानले
**स्त्रीणां** = स्त्रीहरूको
**कर्णरन्ध्रेषु** = कानमा
**सताम्** = सज्जनहरूको हृदयमा
**रामः इव** = रामझैं
**ह** = निश्चय नै
**प्रविष्टः** = प्रविष्ट हुनुभयो

**वाक्यार्थ–** मानिसहरूले तीनै लोकका सम्पूर्ण ठाउँमा उच्च स्वरमा गरेको कीर्तिगानले राजा पृथु स्त्रीहरूको कानमा र सज्जनहरूको हृदयमा रामझैं प्रविष्ट हुनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे**
**पृथुचरिते द्वाविंशोऽध्यायः ॥ २२ ॥**

# अथ त्रयोविंशोऽध्यायः

## राजा पृथुको तपस्या र परलोकगमन

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**दृष्ट्वात्मानं प्रवयसमेकदा वैन्य आत्मवान् ।**
**आत्मना वर्धिताशेषस्वानुसर्गः प्रजापतिः ॥ १ ॥**
**जगतस्तस्थुषश्चापि वृत्तिदो धर्मभृत् सताम् ।**
**निष्पादितेश्वरादेशो यदर्थमिह जज्ञिवान् ॥ २ ॥**
**आत्मजेष्वात्मजां न्यस्य विरहाद्रुदतीमिव ।**
**प्रजासु विमनःस्वेकः सदारोऽगात् तपोवनम् ॥ ३ ॥**

**पदार्थ–**

**सताम्** = सज्जनहरूको
**धर्मभृत्** = धर्म संरक्षक
**आत्मवान्** = जितेन्द्रिय
**प्रजापतिः** = राजा
**वैन्यः** = वेनका छोरा पृथु
**यदर्थम्** = जुन कामको लागि
**इह** = यस पृथ्वीलोकमा
**जज्ञिवान्** = जन्मनुभएको थियो त्यो
**निष्पादितेश्वरादेशः** = प्रजापालनरूप ईश्वरको आदेश सम्पन्न गरी
**तस्थुषः** = स्थावर र
**जगतः च अपि** = जङ्गम प्राणीको पनि
**वृत्तिदः** = जीविकाको व्यवस्था गरिसकेपछि
**एकदा** = एकदिन
**आत्मानं** = आफूलाई
**प्रवयसम्** = बुढो भएको
**दृष्ट्वा** = देखेर (महसुस गरी)
**आत्मना** = आफैँले
**वर्धिताशेषस्वानुसर्गः** = बढाएको सम्पूर्ण अन्न आदि र पुरग्राम आदि सृष्टिलाई व्यवस्थित गरेर
**विरहात्** = विछोडका कारण
**रुदतीम् इव** = रोइरहेकी
**आत्मजां** = पुत्रीरूप पृथिवीलाई
**आत्मजेषु** = छोराहरूको
**न्यस्य** = जिम्मा लगाएर
**प्रजासु** = प्रजाहरू
**विमनःसु** = चिन्तित हुँदा नै
**सदारः** = पत्नीका साथ
**एकः** = एक्लै
**तपोवनम्** = तपोवन
**अगात्** = जानुभयो

**वाक्यार्थ–** धर्मसंरक्षक जितेन्द्रिय राजा पृथु जुन कामको लागि यस पृथ्वीलोकमा जन्मनुभएको थियो उहाँले सर्वप्रथम त्यो प्रजापालनरूप ईश्वरको आदेश सम्पन्न गर्नुभयो। यसपछि स्थावर र जङ्गम प्राणीको जीविकाको समुचित व्यवस्था गर्नुका साथै आफैँले बढाएको सम्पूर्ण अन्न आदि र पुरग्राम आदि सृष्टिलाई पनि व्यवस्थित गर्नुभयो। एकदिन आफूलाई बुढो भएको महसुस गरी

विछोड हुने भयले रुन लागेकी आफ्नै छोरी जस्ती पृथिवीलाई छोराहरूको जिम्मा लगाई चिन्तित प्रजाहरूलाई छोडेर पत्नी मात्र साथमा लिएर तपोवन जानुभयो।

**तत्राप्यदाभ्यनियमो वैखानससुसम्मते।**
**आरब्ध उग्रतपसि यथा स्वविजये पुरा॥ ४॥**

पदार्थ–
**पुरा** = पहिले (पृथिवीमाथि) **स्वविजये** = आफ्नो विजयप्राप्तिमा **यथा** = जसरी नियमपूर्वक समर्पित हुनुभएको थियो त्यसै गरी **तत्र अपि** = तपोवनमा पनि **अदाभ्यनियमः** = नियम खण्डित नगरी **वैखानससुसम्मते** = वानप्रस्थ आश्रमको नियमसम्मत **उग्रतपसि** = कठोर तपस्या **आरब्धः** = सुरु गर्नुभयो

**वाक्यार्थ–** पहिले पृथिवीमाथि आफ्नो विजयप्राप्तिमा उहाँ जसरी नियमपूर्वक समर्पित हुनुभएको थियो त्यसै गरी उहाँले तपोवनमा पनि नियम खण्डित नगरी वानप्रस्थ आश्रमको नियमसम्मत कठोर तपस्या सुरु गर्नुभयो।

**कन्दमूलफलाहारः शुष्कपर्णाशनः क्वचित्।**
**अब्भक्षः कतिचित् पक्षान् वायुभक्षस्ततः परम्॥ ५॥**

पदार्थ–
**क्वचित्** = केही दिन **कन्दमूलफलाहारः** = कन्दमूल र फलाहार गर्नुभयो (त्यसपछि) **शुष्कपर्णाशनः** = सुकेको पात खानुभयो अनि **कतिचित्** = केही **पक्षान्** = पक्षसम्म **अब्भक्षः** = पानीमात्र पिउनुभयो **ततः परम्** = त्यसपछि **वायुभक्षः** = हावा मात्र लिन थाल्नुभयो

**वाक्यार्थ–** उहाँले केही दिन कन्दमूल र फलाहार गर्नुभयो, त्यसपछि सुकेको पात खानुभयो अनि केही पक्षसम्म पानीमात्र पिउनुभयो, त्यसपछि हावा मात्र लिन थाल्नुभयो।

**ग्रीष्मे पञ्चतपा वीरो वर्षास्वासारषाण्मुनिः।**
**आकण्ठमग्नः शिशिरे उदके स्थण्डिलेशयः॥ ६॥**

पदार्थ–
**वीरः** = वीरवर राजा पृथु **मुनिः** = मुनिजस्तै हुनुहुन्थ्यो (किनभने) **ग्रीष्मे** = ग्रीष्म ऋतुमा **पञ्चतपाः** = चार दिशामा आगो र माथितिर सूर्य गरी पाँचैतिरबाट आगो ताप्नुहुन्थ्यो **वर्षासु** = वर्षा ऋतुमा **आसारषाट्** = आकाशबाट

बर्सेको जलधारा सहन गर्नुहुन्थ्यो
**शिशिरे** = शिशिर ऋतुमा
**उदके** = जलमा
**आकण्ठमग्नः** = घाँटीसम्मको भाग डुबाएर बस्नुहुन्थ्यो र
**स्थण्डिलेशयः** = माटोको वेदीमा सुत्नुहुन्थ्यो

**वाक्यार्थ–** वीरवर राजा पृथु मुनिजस्तै हुनुहुन्थ्यो। उहाँ ग्रीष्म ऋतुमा चारैतिर आगो र माथितिर सूर्य गरी पाँचैतिरबाट आगो ताप्नुहुन्थ्यो, वर्षा ऋतुमा आकाशबाट बर्सेको जलधारा सहन गर्नुहुन्थ्यो, शिशिर ऋतुमा जलमा घाँटीसम्मको भाग डुबाएर बस्नुहुन्थ्यो, यस्तै सधैं नै माटोको वेदीमा सुत्नुहुन्थ्यो।

**तितिक्षुर्यतवाग्दान्त ऊर्ध्वरेता जितानिलः।**
**आरिराधयिषुः कृष्णमचरत् तप उत्तमम्॥ ७॥**

**पदार्थ–**
**तितिक्षुः** = चिसो, तातो आदि सम्पूर्ण दुःख सहेर
**यतवाक्** = बोलीलाई संयमित गरी
**दान्तः** = सम्पूर्ण इन्द्रियलाई वशमा गरी
**ऊर्ध्वरेताः** = ब्रह्मचर्य व्रतको पालन गर्दै
**जितानिलः** = प्राणवायुलाई आफ्नो अधीनमा राखेर
**कृष्णम्** = भगवान् श्रीकृष्णको
**आरिराधयिषुः** = आराधना गर्न चाहने पृथु राजाले
**उत्तमम्** = उत्तम
**तपः** = तपस्या
**अचरत्** = गर्नुभयो

**वाक्यार्थ–** राजा पृथुले चिसो, तातो आदि सम्पूर्ण दुःख सहेर बोलीलाई संयमित गर्नुका साथै सम्पूर्ण इन्द्रियलाई वशमा राखी ब्रह्मचर्य व्रतको पालन गर्दै प्राणवायुलाई आफ्नो अधीनमा राखेर भगवान् श्रीकृष्णको आराधना गर्ने इच्छाले उत्तम तपस्या गर्नुभयो।

**तेन क्रमानुसिद्धेन ध्वस्तकर्मामलाशयः।**
**प्राणायामैः सन्निरुद्धषड्वर्गश्छिन्नबन्धनः॥ ८॥**

**पदार्थ–**
**क्रमानुसिद्धेन** = बिस्तारै सिद्ध हुँदै गएको
**तेन** = उक्त तपस्याद्वारा
**ध्वस्तकर्ममलाशयः** = कर्मफल नष्ट भई चित्त शुद्ध भएका राजा पृथुले
**प्राणायामैः** = प्राणायामद्वारा
**सन्निरुद्धषड्वर्गः** = मन र इन्द्रिय नियन्त्रित भएपछि
**छिन्नबन्धनः** = वासनाजनित बन्धनलाई पनि नष्ट गर्नुभयो

**वाक्यार्थ–** बिस्तारै सिद्ध हुँदै गएको उक्त तपस्याद्वारा कर्मफल नष्ट भई चित्त शुद्ध भएका राजा पृथुले प्राणायामद्वारा मन र इन्द्रिय नियन्त्रित भएपछि वासनाजनित बन्धनलाई पनि नष्ट गर्नुभयो।

**सनत्कुमारो भगवान् यदाहाध्यात्मिकं परम्।**

**योगं तेनैव पुरुषमभजत् पुरुषर्षभः॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सनत्कुमारः** = सनत्कुमार | **आध्यात्मिकं** = आध्यात्मिक | **पुरुषर्षभः** = राजा पृथुले |
| **भगवान्** = भगवान्ले | **योगं** = योग | **पुरुषम्** = भगवान् श्रीहरिको |
| **यत्** = जुन | **आह** = बताउनुभएको थियो | **अभजत्** = आराधना गर्नुभयो |
| **परम्** = परम (उत्कृष्ट) | **तेन एव** = त्यही योगविधिद्वारा | |

**वाक्यार्थ–** सनत्कुमार भगवान्ले जुन परम उत्कृष्ट आध्यात्मिक योग बताउनुभएको थियो त्यही योगविधिद्वारा राजा पृथुले भगवान् श्रीहरिको आराधना गर्नुभयो।

**भगवद्धर्मिणः साधोः श्रद्धया यततः सदा।**

**भक्तिर्भगवति ब्रह्मण्यनन्यविषयाभवत्॥ १०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सदा** = सधैं | **भगवद्धर्मिणः** = भगवत्परायण राजा पृथुको | **अनन्यविषया भक्तिः** = अनन्य भक्ति |
| **श्रद्धया** = श्रद्धापूर्वक | **भगवति** = भगवान् | **अभवत्** = भयो |
| **यततः** = सदाचारको पालन गर्ने | **ब्रह्मणि** = नारायणमा | |
| **साधोः** = साधुस्वभाव भएका | | |

**वाक्यार्थ–** सधैं श्रद्धापूर्वक सदाचारको पालन गर्ने साधुस्वभाव भएका भगवत्परायण राजा पृथुको भगवान् नारायणमा अनन्य भक्तिभाव उत्पन्न भयो।

**तस्यानया भगवतः परिकर्मशुद्ध-**

**सत्त्वात्मनस्तदनुसंस्मरणानुपूर्त्त्या।**

**ज्ञानं विरक्तिमदभून्निशितेन येन**

**चिच्छेद संशयपदं निजजीवकोशम्॥ ११॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भगवतः** = भगवान्को | **तदनुसंस्मरणानुपूर्त्त्या** = निरन्तर भगवच्चिन्तन गर्नाले बढेको | **ज्ञानं** = ज्ञान |
| **परिकर्मशुद्धसत्त्वात्मनः** = सेवाले शुद्ध अन्तःकरण भएका | **अनया** = यो भक्तिबाट | **अभूत्** = भयो र |
| **तस्य** = ती राजा पृथुलाई | **विरक्तिमत्** = वैराग्ययुक्त | **येन** = जुन |
| | | **निशितेन** = धारिलो |

(तिखारिएको) ज्ञानद्वारा
**संशयपदं** = समस्त संशयको
आश्रय भएको
**निजजीवकोशम्** = जीवको
उपाधिभूत अहङ्कारलाई
**चिच्छेद** = नष्ट गर्नुभयो

**वाक्यार्थ–** भगवान्को सेवाले शुद्ध अन्तःकरण भएका राजा पृथुलाई निरन्तर भगवच्चिन्तन गर्नाले बढेको भक्तिबाट वैराग्ययुक्त ज्ञान भयो र जुन तिखारिएको ज्ञानद्वारा उहाँले समस्त संशयको आश्रय भएको जीवको उपाधिभूत अहङ्कारलाई नष्ट गर्नुभयो।

**छिन्नान्यधीरधिगतात्मगतिर्निरीह-**
**स्तत् तत्यजेऽच्छिनदिदं वयुनेन येन।**
**तावन्न योगगतिभिर्यतिरप्रमत्तो**
**यावद् गदाग्रजकथासु रतिं न कुर्यात्॥ १२॥**

**पदार्थ–**

**छिन्नान्यधीः** = देहात्मबुद्धि हटाई
**अधिगतात्मगतिः** = परमात्मस्वरूपको अनुभूति भएपछि
**निरीहः** = सबै प्रकारका सिद्धिको इच्छा त्यागेका राजा पृथुले
**येन** = जुन
**वयुनेन** = ज्ञानको सहायताले
**इदं** = यस अहङ्कारलाई
**अच्छिनत्** = नाश गर्नुभएको थियो
**तत्** = त्यस ज्ञानको इच्छालाई पनि
**तत्यजे** = छोडिदिनुभयो (किनभने)
**यतिः** = मुमुक्षुले
**यावत्** = जबसम्म
**योगगतिभिः** = योगमार्गद्वारा
**गदाग्रजकथासु** = भगवान् श्रीकृष्णका कथामा
**रतिं** = प्रेम
**न कुर्यात्** = गर्दैन
**तावत्** = त्यति वेलासम्म उसले
**न अप्रमत्तः** = मोहजनित प्रमाद नाश गर्न सक्दैन

**वाक्यार्थ–** देहात्मबुद्धिलाई हटाई परमात्मस्वरूपको अनुभूति भएपछि सबै प्रकारका सिद्धिको इच्छा त्यागेका राजा पृथुले जुन ज्ञानको सहायताले अहङ्कारलाई नाश गर्नुभएको थियो त्यस ज्ञानको इच्छालाई पनि छोडिदिनुभयो किनभने मुमुक्षुले जबसम्म योगमार्गद्वारा भगवान् श्रीकृष्णका कथामा प्रेम गर्दैन त्यतिवेलासम्म उसले मोहजनित प्रमाद नाश गर्न सक्दैन।

**एवं स वीरप्रवरः संयोज्यात्मानमात्मनि।**
**ब्रह्मभूतो दृढं काले तत्याज स्वं कलेवरम्॥ १३॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**ब्रह्मभूतः** = परमात्मस्वरूपको अनुभूति भएपछि
**वीरप्रवरः** = वीरप्रवर
**सः** = ती राजा पृथुले
**काले** = अन्तकाल उपस्थित हुँदा

**आत्मानम्** = मनलाई
**दृढं** = पूर्ण रूपले
**आत्मनि** = परमात्मामा
**संयोज्य** = मिलाएर
**स्वं** = आफ्नो
**कलेवरम्** = शरीर
**तत्याज** = त्यागनुभयो

**वाक्यार्थ–** यसप्रकार परमात्मस्वरूपको अनुभूति भएपछि वीरप्रवर राजा पृथुले अन्तकाल उपस्थित हुँदा मनलाई पूर्ण रूपले परमात्मामा मिलाएर आफ्नो शरीर त्यागनुभयो।

**सम्पीड्य पायुं पार्ष्णिभ्यां वायुमुत्सारयञ्छनैः।**
**नाभ्यां कोष्ठेष्ववस्थाप्य हृदुरःकण्ठशीर्षणि ॥ १४ ॥**
**उत्सर्पयंस्तु तं मूर्ध्नि क्रमेणावेश्य निःस्पृहः।**
**वायुं वायौ क्षितौ कायं तेजस्तेजस्ययूयुजत् ॥ १५ ॥**

**पदार्थ–**
(राजा पृथुले)
**पार्ष्णिभ्यां** = कुर्कुच्चाले
**पायुं** = गुदद्वारलाई
**सम्पीड्य** = दबाएर
**वायुम्** = प्राणवायुलाई
**शनैः** = बिस्तारै
**उत्सारयन्** = माथि उठाउँदै
**कोष्ठेषु** = प्राण रहने ठाउँ क्रमशः
**नाभ्यां** = नाभि (मणिपूरक चक्र)
**हृदुरःकण्ठशीर्षणि** = हृदय (अनाहत चक्र), वक्षःस्थल तथा कण्ठ (विशुद्ध चक्र) र आँखीभौँका बीच (आज्ञा चक्र)मा
**अवस्थाप्य** = राखेर
**तं तु** = त्यसलाई पनि
**क्रमेण** = बिस्तारै
**उत्सर्पयन्** = माथि लग्दै
**मूर्ध्नि** = ब्रह्मरन्ध्रमा
**आवेश्य** = राखिसकेपछि
**निःस्पृहः** = सम्पूर्ण कामनाको परित्याग गरी
**वायुं** = प्राणवायुलाई
**वायौ** = समष्टि वायुमा
**कायं** = शरीरलाई
**क्षितौ** = पृथिवीमा
**तेजः** = शरीरस्थ तेजलाई
**तेजसि** = समष्टि तेजमा
**अयूयुजत्** = मिलाउनुभयो

**वाक्यार्थ–** राजा पृथुले कुर्कुच्चाले गुदद्वारलाई दबाएर प्राणवायुलाई बिस्तारै माथि उठाउँदै प्राण रहने ठाउँ क्रमशः नाभि (मणिपूरक चक्र), हृदय (अनाहत चक्र), वक्षःस्थल तथा कण्ठ (विशुद्ध चक्र) र आँखीभौँका बीच (आज्ञा चक्र)मा राखेर त्यसलाई पनि बिस्तारै माथि लग्दै ब्रह्मरन्ध्रमा राखिसकेपछि सम्पूर्ण कामनाको परित्याग गरी प्राणवायुलाई समष्टि वायुमा, शरीरलाई पृथिवीमा र शरीरस्थ तेजलाई समष्टि तेजमा मिलाउनुभयो।

**खान्याकाशे द्रवं तोये यथास्थानं विभागशः।**
**क्षितिमम्भसि तत् तेजस्यदो वायौ नभस्यमुम् ॥ १६ ॥**

हुनुहन्छ
**सर्वदेहिनाम्** = सम्पूर्ण प्राणीहरूका लागि
**दुर्लभः** = दुर्लभ हजुर
**एकान्तेन** = अन्य विषयको आसक्तिको परित्याग गर्ने
**भक्तिमता** = भक्तद्वारा मात्र
**लभ्यः** = पाउन सकिने हुनुहुन्छ

**वाक्यार्थ–** हजुर स्वर्गका राजा इन्द्रद्वारा पनि खोजी गरिनुहुन्छ, आत्मज्ञानीहरूको गति पनि हजुर नै हुनुहन्छ। सम्पूर्ण प्राणीहरूका लागि दुर्लभ हजुर अन्य विषयको आसक्तिको परित्याग गर्ने भक्तद्वारा मात्र पाउन सकिने हुनुहुन्छ।

**तं दुराराध्यमाराध्य सतामपि दुरापया।**
**एकान्तभक्त्या को वाञ्छेत् पादमूलं विना बहिः॥ ५५॥**

**पदार्थ–**

**सताम् अपि** = सत्पुरुषहरूका लागि पनि
**दुरापया** = दुर्लभ
**एकान्तभक्त्या** = अनन्य भक्तिद्वारा
**दुराराध्यम्** = प्रसन्न पार्न कठिन
**तं** = ती भगवान्लाई
**आराध्य** = प्रसन्न पारेपछि
**कः** = कसले
**पादमूलं विना** = (उहाँको) चरणतल बाहेक
**बहिः** = बाहिरी विषयसुख
**वाञ्छेत्** = चाहला

**वाक्यार्थ–** सत्पुरुषहरूका लागि पनि प्रसन्न पार्न कठिन भगवान्लाई दुर्लभ अनन्य भक्तिद्वारा प्रसन्न पारेपछि कसले उहाँका चरणतलबाहेक बाहिरी विषयसुख चाहला ?

**यत्र निर्विष्टमरणं कृतान्तो नाभिमन्यते।**
**विश्वं विध्वंसयन् वीर्यशौर्यविस्फूर्जितभ्रुवा॥ ५६॥**

**पदार्थ–**

**कृतान्तः** = जुन काल
**वीर्यशौर्यविस्फूर्जितभ्रुवा** = आफ्नो अदम्य पराक्रम र उत्साहद्वारा फर्फराइरहेको आँखीभौँले मात्र
**विश्वं** = सम्पूर्ण विश्वलाई
**विध्वंसयन्** = संहार गर्दछ (त्यही कालले)
**यत्र** = हजुरको चरणतलको
**अरणं** = शरणमा
**निर्विष्टम्** = पुगेका व्यक्तिलाई
**न अभिमन्यते** = यो मेरो वशमा छ भन्ने कुरामा अभिमान गर्दैन (अर्थात् त्यस्ता व्यक्तिमा आफ्नो अधिकार नभएको ठान्दछ)

**वाक्यार्थ–** जुन काल आफ्नो अदम्य पराक्रम र उत्साहद्वारा फर्फराइरहेको आँखीभौँले मात्र सम्पूर्ण विश्वलाई संहार गर्दछ त्यही कालले हजुरको चरणतलको शरणमा पुगेका व्यक्तिलाई यो मेरो वशमा छ भन्ने कुरामा अभिमान गर्दैन अर्थात् त्यस्ता व्यक्तिमा आफ्नो अधिकार नभएको ठान्दछ।

**क्षणार्धेनापि तुलये न स्वर्गं नापुनर्भवम्।**

**भगवत्सङ्गिसङ्गस्य मर्त्यानां किमुताशिषः॥ ५७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भगवत्सङ्गिसङ्गस्य** = भगवान्का प्रेमी भक्तसितको सङ्गतको | **न स्वर्गं** = न स्वर्ग र | **आशिषः** = तुच्छ भोगको त |
| **क्षणार्धेन अपि** = आधी क्षणसँग पनि | **न अपुनर्भवम्** = न त मोक्षलाई | **किम् उत** = के कुरा |
| | **तुलये** = तुलना गर्न सक्छु भने | |
| | **मर्त्यानां** = मर्त्यलोकको | |

**वाक्यार्थ–** भगवान्का प्रेमी भक्तसितका सङ्गतको आधी क्षणसँग स्वर्ग र मोक्षको त तुलना गर्न सकिँदैन भने मर्त्यलोकका तुच्छ भोगको त के कुरा ?

**अथानघाङ्घ्रेस्तव कीर्तितीर्थयो-**

**रन्तर्बहिःस्नानविधूतपाप्मनाम्।**

**भूतेष्वनुक्रोशसुसत्त्वशीलिनां**

**स्यात् सङ्गमोऽनुग्रह एष नस्तव॥ ५८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अथ** = यस्तै | क्रमशः मानसिक र शारीरिक पाप हटाएका र | **स्यात्** = होस् |
| **अनघाङ्घ्रेः** = भक्तको पाप नाश गर्ने चरणकमल भएका | **भूतेषु** = प्राणीहरूमा | **नः** = हामीहरूका लागि |
| **तव** = हजुरको | **अनुक्रोशसुसत्त्वशीलिनां** = दया, रागद्वेषरहितता, सरलता आदि गुणले युक्त भएका भक्तजनहरूको | **तव** = हजुरको |
| **कीर्तितीर्थयोः** = यश र तीर्थ (गङ्गा)मा | **सङ्गमः** = सङ्गत | **एषः** = यही |
| **अन्तर्बहिःस्नानविधूतपाप्मनाम्** = आन्तरिक र बाह्य स्नानद्वारा | | **अनुग्रहः** = कृपा नै अत्यन्त ठुलो हुनेछ |

**वाक्यार्थ–** यसर्थ हामी के चाहन्छौँ भने चरणकमलद्वारा भक्तको पाप नाश गर्ने हजुरको यश र तीर्थ (गङ्गा)मा आन्तरिक र बाह्य रूपमा स्नान गरेर जसले क्रमशः मानसिक र शारीरिक पाप हटाएका छन् अनि जो प्राणीमा दया, रागद्वेषरहितता र सरलतापूर्ण भाव राख्दछन् यस्ता भक्तजनहरूको सङ्गत होस्। हामीहरूका लागि हजुरको यही कृपा नै अत्यन्त ठुलो हुनेछ।

**न यस्य चित्तं बहिरर्थविभ्रमं**

**तमोगुहायां च विशुद्धमाविशत् ।**

**यद् भक्तियोगानुगृहीतमञ्जसा**

**मुनिर्विचष्टे ननु तत्र ते गतिम् ॥ ५९ ॥**

**पदार्थ–**

**यस्य** = जुन भक्तको
**चित्तं** = मन
**यत्** = जुन वेला
**भक्तियोगानुगृहीतम्** = भक्तियोगले अनुगृहीत र
**विशुद्धम्** = विशुद्ध भएर
**न बहिरर्थविभ्रमं** = न बाह्य विषयमा घुम्दछ र
**तमोगुहायां च** = न त अज्ञानगुफारूप प्रकृतिमा नै
**आविशत्** = लीन हुन्छ
**तत्र** = त्यस वेला
**मुनिः** = त्यस मननशील भक्तले
**ननु** = निश्चय नै
**अञ्जसा** = सजिलै
**ते** = हजुरको
**गतिम् विचष्टे** = स्वरूपको दर्शन गर्दछ

**वाक्यार्थ–** जुन भक्तको मन जतिखेर भक्तियोगले अनुगृहीत र विशुद्ध भएर न बाह्य विषयमा घुम्दछ र न त अज्ञानगुफारूप प्रकृतिमा नै लीन हुन्छ त्यस वेला त्यस मननशील भक्तले सजिलै हजुरको स्वरूपको दर्शन गर्दछ।

**यत्रेदं व्यज्यते विश्वं विश्वस्मिन्नवभाति यत् ।**

**तत्त्वं ब्रह्म परं ज्योतिराकाशमिव विस्तृतम् ॥ ६० ॥**

**पदार्थ–**

**यत्र** = जसमा
**इदं विश्वं** = यो सम्पूर्ण विश्व
**व्यज्यते** = देखिन्छ र
**यत्** = जो स्वयं
**विश्वस्मिन्** = समग्र विश्वमा
**अवभाति** = प्रकाशित भइरहेको छ
**तत्** = त्यो
**आकाशम्** = आकाश
**इव** = जस्तै
**विस्तृतम्** = फराकिलो र
**परं ज्योतिः** = परम प्रकाशमय
**ब्रह्म** = ब्रह्मतत्त्व
**त्वं** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** जसमा यो सम्पूर्ण विश्व देखिन्छ र जो स्वयं समग्र विश्वमा प्रकाशित भइरहेको छ त्यो आकाशजस्तै फराकिलो र परम प्रकाशमय ब्रह्मतत्त्व हजुर नै हुनुहुन्छ।

**यो माययेदं पुरुरूपयासृजद्**

**बिभर्ति भूयः क्षपयत्यविक्रियः ।**

**यद्भेदबुद्धिः सदिवात्मदुःस्थया**

**तमात्मतन्त्रं भगवन् प्रतीमहि ॥ ६१ ॥**

पदार्थ–

**भगवन्** = हे भगवान्
**अविक्रियः** = अविकारी भएर पनि
**यः** = जो हजुरले
**आत्मदुःस्थया** = आफू (भगवान्)मा रहन नसक्ने तर
**पुरुरूपया** = अनेक प्रकारका रूप धारण गर्ने
**मायया** = मायाद्वारा
**सत् इव** = सत्य नभए तापनि सत्य जस्तै देखिने
**इदं** = यस जगत्को
**असृजत्** = रचना गर्नुभयो
**बिभर्ति** = पालन गर्नुहुन्छ र
**भूयः** = फेरि
**क्षपयति** = नाश गर्नुहुन्छ
**यत्** = जुन मायाबाट
**भेदबुद्धिः** = (अरूलाई) भेदबुद्धि हुन्छ (तर हजुरलाई कुनै किसिमको प्रभाव पर्दैन)
**तम्** = त्यस्ता
**आत्मतन्त्रं** = परम स्वतन्त्र हजुरलाई
**प्रतीमहि** = (हामी) जान्दछौँ

**वाक्यार्थ–** हे भगवान् ! अविकारी भएर पनि जो हजुरले आफू (भगवान्)मा रहन नसक्ने तर अनेक प्रकारका रूप धारण गर्ने सत्य नभए तापनि मायाद्वारा सत्य जस्तै देखिने यस जगत्को रचना गर्नुभयो, पालन गर्नुहुन्छ र फेरि नाश गर्नुहुन्छ। जुन मायाबाट अरूलाई भेदबुद्धि हुन्छ तर हजुरलाई कुनै किसिमको प्रभाव पर्दैन त्यस्ता परम स्वतन्त्र हजुरलाई हामी जान्दछौँ।

**क्रियाकलापैरिदमेव योगिनः**
**श्रद्धान्विताः साधु यजन्ति सिद्धये।**
**भूतेन्द्रियान्तःकरणोपलक्षितं**
**वेदे च तन्त्रे च त एव कोविदाः॥ ६२॥**

पदार्थ–

**योगिनः** = योगीहरू
**सिद्धये** = सिद्धि प्राप्त गर्नको लागि
**क्रियाकलापैः** = अनेक प्रकारका कर्मद्वारा
**श्रद्धान्विताः** = श्रद्धापूर्वक
**भूतेन्द्रियान्तःकरणोपलक्षितं** = पञ्चभूत, इन्द्रिय र अन्तःकरणको प्रेरकका रूपमा जानिने
**इदम् एव** = (हजुरको) यही सगुण रूपको
**साधु** = राम्रोसँग
**यजन्ति** = पूजा गर्दछन्
**ते एव** = ती योगीहरू नै
**वेदे च** = वेद र
**तन्त्रे च** = तन्त्रमा पनि
**कोविदाः** = पारङ्गत मानिन्छन् (न कि केवल ज्ञानमा मात्र प्रवृत्त भएकाहरू)

**वाक्यार्थ–** योगीहरू सिद्धि प्राप्त गर्नको लागि अनेक प्रकारका कर्मद्वारा श्रद्धापूर्वक पञ्चभूत, इन्द्रिय र अन्तःकरणको प्रेरकका रूपमा जानिने हजुरको यही सगुण रूपको राम्रोसँग पूजा गर्दछन्। ती योगीहरू नै वेद र तन्त्रमा पारङ्गत मानिन्छन्, केवल ज्ञानमा मात्र प्रवृत्त भएकाहरू चाहिँ शास्त्रमर्मज्ञ होइनन्।

**त्वमेक आद्यः पुरुषः सुप्तशक्ति-**
**स्तया रजःसत्त्वतमो विभिद्यते ।**
**महानहं खं मरुदग्निवार्धराः**
**सुरर्षयो भूतगणा इदं यतः ॥ ६३ ॥**

**पदार्थ–**

**त्वम्** = हजुर
**एकः** = अद्वितीय
**आद्यः पुरुषः** = आदिपुरुष हुनुहुन्छ
**सुप्तशक्तिः** = सृष्टिपूर्व आफ्नी मायाशक्तिलाई निष्क्रिय राख्नुहुन्छ र
**तया** = पछि त्यही शक्तिबाट
**रजःसत्त्वतमः** = सत्त्व, रज र तमोगुणको
**विभिद्यते** = भेद देखिन्छ
**यतः** = यी तीन गुणबाट
**महान्** = महत्तत्त्व
**अहं** = अहङ्कार
**खं** = आकाश
**मरुदग्निवार्धराः** = वायु, अग्नि, जल, पृथ्वी
**सुरर्षयः** = ऋषि र
**भूतगणाः** = समस्त प्राणीहरू उत्पन्न हुन्छन्
**इदं** = यसरी यो सम्पूर्ण जगत् (हजुरले नै सृष्टि गर्नुहुन्छ)

**वाक्यार्थ–** हजुर अद्वितीय आदिपुरुष हुनुहुन्छ। सृष्टि हुनुभन्दा पहिले आफ्नी मायाशक्तिलाई निष्क्रिय राख्नुहुन्छ र पछि त्यही शक्तिबाट सत्त्व, रज र तमोगुणको भेद देखिन्छ। यी तीन गुणबाट महत्तत्त्व, अहङ्कार, आकाश, वायु, अग्नि, जल, पृथ्वी, ऋषि र समस्त प्राणीहरू उत्पन्न हुन्छन्। यसरी यो सम्पूर्ण जगत्को सृष्टि हजुरले नै गर्नुहुन्छ।

**सृष्टं स्वशक्त्येदमनुप्रविष्ट-**
**श्चतुर्विधं पुरमात्मांशकेन ।**
**अथो विदुस्तं पुरुषं सन्तमन्त-**
**र्भुङ्क्ते हृषीकैर्मधु सारघं यः ॥ ६४ ॥**

**पदार्थ–**

**स्वशक्त्या** = आफ्नो मायाशक्तिबाट
**सृष्टं** = रचिएको
**इदम्** = यो
**चतुर्विधं** = जरायुज, अण्डज, स्वेदज र उद्भिज्ज गरी चार प्रकारको
**पुरम्** = शरीरमा
**आत्मांशकेन** = आफ्नो अंशको रूपमा
**अनुप्रविष्टः** = प्रवेश गर्नुहुन्छ
**अथो** = यसर्थ
**अन्तः** = शरीरभित्र
**सन्तम्** = रहेको
**तं** = (भगवान्को) त्यस अंशलाई

**पुरुषं** = जीवात्मा
**विदुः** = भन्दछन्
**यः** = जुन जीवात्माले
**सारघं** = मौरीले आफूले बनाएको
**मधु** = मह आफैँ भोग गरेजस्तै
**हृषीकैः** = इन्द्रियहरूद्वारा
**भुङ्क्ते** = (आफूबाट सृजना गरिएको विषयको) भोग गर्दछ

**वाक्यार्थ–** आफ्नो मायाशक्तिबाट रचिएको यो जरायुज, अण्डज, स्वेदज र उद्भिज्ज गरी चार प्रकारको शरीरमा आफ्नो अंशको रूपमा हजुर प्रवेश गर्नुहुन्छ। यसर्थ शरीरभित्र रहेको भगवान्को त्यस अंशलाई जीवात्मा भन्दछन्। जुन जीवात्माले मौरीले आफूले बनाएको मह आफैँ भोग गरेजस्तै इन्द्रियहरूद्वारा आफूबाट सृजना गरिएको विषयको भोग गर्दछ।

**स एष लोकानतिचण्डवेगो**
**विकर्षसि त्वं खलु कालयानः।**
**भूतानि भूतैरनुमेयतत्त्वो**
**घनावलीर्वायुरिवाविषह्यः॥ ६५॥**

पदार्थ–
**त्वं** = (हे भगवान्) हजुर
**अनुमेयतत्त्वः** = अनुमानबाट मात्र जानिने हुनुहुन्छ
**सः एषः** = (प्रलयकाल उपस्थित हुँदा) कालको स्वरूप लिने हजुरले नै
**अविषह्यः** = आफ्नो असह्य र
**अतिचण्डवेगः** = प्रचण्ड वेगबाट
**वायुः** = वायुले
**घनावलीः** = मेघमालालाई
**इव** = जस्तै
**भूतैः** = अन्य भूतद्वारा
**भूतानि** = पृथ्वी आदि भूतलाई
**कालयानः** = विचलित गराएर
**लोकान्** = लोकहरूलाई
**खलु** = निश्चय नै
**विकर्षसि** = संहार गर्नुहुन्छ

**वाक्यार्थ–** हे भगवान्! हजुर अनुमानबाट मात्र जानिने हुनुहुन्छ। प्रलयकाल उपस्थित हुँदा कालको स्वरूप लिने हजुरले नै आफ्नो असह्य र प्रचण्ड वेगबाट वायुले मेघमालालाई जस्तै पृथ्वी आदि भूतलाई अन्य भूतद्वारा विचलित गराएर लोकहरूलाई संहार गर्नुहुन्छ।

**प्रमत्तमुच्चैरितिकृत्यचिन्तया**
**प्रवृद्धलोभं विषयेषु लालसम्।**
**त्वमप्रमत्तः सहसाभिपद्यसे**
**क्षुल्लेलिहानोऽहिरिवाखुमन्तकः॥ ६६॥**

पदार्थ–
**त्वम्** = (हे भगवान्) हजुर
**इतिकृत्यचिन्तया** = 'यो काम गर्नुछ, ऊ काम गर्नुछ' जस्ता

| | | |
|---|---|---|
| कामको चिन्ताले | प्राप्तिमा मात्र लागिरहने (जीवलाई) | **अहिः** = सर्पले |
| **उच्चैः** = अत्यन्त | **अन्तकः** = कालको रूप लिएर | **आखुम् इव** = मूसालाई जस्तै |
| **प्रमत्तम्** = असावधान बनेको र | **क्षुल्लेलिहानः** = भोकले जिभ्रो लपलपाइरहेको | **सहसा** = तत्काल |
| **प्रवृद्धलोभं** = लोभ बढेकाले | | **अभिपद्यसे** = आक्रमण गर्नुहुन्छ |
| **विषयेषु लालसम्** = विषयको | | |

**वाक्यार्थ–** हे भगवान् ! हजुर 'यो काम गर्नुछ, ऊ काम गर्नुछ' जस्ता कामको चिन्ताले अत्यन्त असावधान बनेको र लोभ बढेकाले विषयको प्राप्तिमा मात्र लागिरहने जीवलाई कालको रूप लिएर भोकले जिभ्रो लपलपाइरहेको सर्पले मूसालाई जस्तै तत्काल आक्रमण गर्नुहुन्छ।

**कस्त्वत्पदाब्जं विजहाति पण्डितो**
**यस्तेऽवमानव्ययमानकेतनः।**
**विशङ्कयास्मद्गुरुरर्चति स्म यद्**
**विनोपपत्तिं मनवश्चतुर्दश ॥ ६७ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ते** = हजुरको | **विजहाति** = छोड्दछ | **यः** = जो ब्रह्माजीले पनि |
| **अवमानव्ययमानकेतनः** = अपमान गर्नाले शरीर (आयु) नष्ट भइरहेको सम्झने | **विशङ्कया** = कालको विनाशको शङ्काले | **उपपत्तिं विना** = कुनै विचार नगरीकन (केवल श्रद्धाले मात्र) |
| **कः पण्डितः** = कुन पण्डितले | **यत्** = जुन चरणलाई | **अर्चति स्म** = पूजा गर्नुहुन्थ्यो |
| **त्वत्पदाब्जं** = हजुरको चरणकमलको चिन्तनलाई | **अस्मद्गुरुः** = हामी सबै रुद्र आदिका पितामहका रूपमा पूज्य | **चतुर्दश** = चौध |
| | | **मनवः** = मनुले (पनि यसै गरी पूजा गर्नुहुन्थ्यो) |

**वाक्यार्थ–** हजुरको अपमान गर्नाले व्यर्थै शरीर (आयु) नष्ट भइरहेको सम्झने कुन पण्डितले हजुरको चरणकमलको चिन्तनलाई छोड्दछ ? कालको विनाशको शङ्काले जुन चरणलाई हामी सबै रुद्र आदिका पितामहका रूपमा पूज्य ब्रह्माजीले पनि कुनै विचार नगरीकन अर्थात् केवल श्रद्धाले मात्र पूजा गर्नुहुन्थ्यो र चौध मनुले पनि यसै गरी पूजा गर्नुहुन्थ्यो।

**अथ त्वमसि नो ब्रह्मन् परमात्मन् विपश्चिताम्।**
**विश्वं रुद्रभयध्वस्तमकुतश्चिद्भया गतिः ॥ ६८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे भगवान् | **परमात्मन्** = हे परमात्मा | **अथ** = यसप्रकार |

**विश्वं** = सम्पूर्ण जगत्
**रुद्रभयध्वस्तम्** = रुद्ररूप कालको भयले व्याकुल छ
**विपश्चिताम्** = यस कुरालाई जान्ने
**नः** = हामीहरूका लागि
**अकुतश्चिद्भया गतिः** = सर्वथा भयशून्य आश्रय
**त्वम्** = हजुर नै
**असि** = हुनुहुन्छ

**वाक्यार्थ—** हे भगवान् ! हे परमात्मा ! यसप्रकार सम्पूर्ण जगत् रुद्ररूप कालको भयले व्याकुल छ, यस कुरालाई जान्ने हामीहरूका लागि सर्वथा भयशून्य आश्रय हजुर नै हुनुहुन्छ।

**विवरण—** श्लोक ३३ देखि ६८ सम्ममा रहेको स्तुति भगवान् शङ्करले सर्वात्मा भगवान् वासुदेवलाई प्रसन्न गराउनका लागि प्रचेताहरूलाई सिकाउनुभएको हो। भगवान् स्वयंप्रकाश हुनुहुन्छ। स्वर्ग र मोक्ष दुबैको कारण उहाँ यज्ञस्वरूप हुनुहुन्छ। सम्पूर्ण प्राणीहरूलाई तृप्त गर्ने जल र समस्त देवताहरूलाई तृप्त गर्ने अमृतको जीवनतत्त्व भगवान् नै हुनुहुन्छ। यहाँ भगवान्लाई अधर्म र त्यसको फलको रूपमा पनि स्तुति गरिएको छ। पाप, दुर्वृत्ति र दुःख आदि पनि भगवान्बाटै उत्पन्न भएका हुन्। भगवान्बाहेक अन्य कोही छैन जो पापको उत्पत्तिस्थान होस्। भगवान्को पिठ्युँबाट पाप उत्पन्न भएकाले त्यसलाई पनि सिद्ध हुन ईश्वरकै सत्ता चाहिन्छ। ब्रह्मतत्त्व पाप र पुण्य दुबैदेखि टाढा र दुबैको उत्पत्तिस्थान पनि हो। **भीरपि यद्बिभेति** अर्थात् जुन कालदेखि सबै प्राणीहरू डराइरहन्छन् त्यो काल पनि भगवान्देखि डराइरहन्छ। परमात्माकै डरले मृत्यु आफ्नो कर्तव्यमा निरन्तर लागिरहन्छ। भगवत्तत्त्वलाई प्राप्त गर्न उहाँको भक्ति प्रमुख साधन हो। भगवान्को भक्ति गर्ने मनुष्यको चित्त स्वभावतः नै बाह्य विषयमा जाँदैन र ऊ अज्ञानमय संसारलाई छोडी ज्ञानस्वरूप भगवत्तत्त्वलाई प्राप्त गर्दछ। भगवान्द्वारा नै **रजःसत्त्वतमो विभिद्यते** सत्त्व, रज र तमोगुणको क्षोभको कारणले विविध रूपमा समस्त जगत्को सृष्टि, स्थिति र पालन हुन्छ। सबै थरी प्राणीहरूका हृदयभित्र पसी सबै व्यवहार चलाउने अन्तर्यामी तत्त्व परमात्मा नै हो। यहाँ विषयासक्त व्यक्तिलाई मुसाको रूपमा र कालस्वरूप भगवान्लाई सर्पको रूपमा चित्रण गरिएको छ। जसरी मुसा अन्न आदि कुटु-कुटु गरी खाइरहन्छ त्यसै गरी विषयी मनुष्य पनि अब मैले यी-यी कामहरू गर्नुछ भनी लोभपूर्वक सधैं विषयहरूको सङ्ग्रह गरिरहन्छ। आफ्नो मृत्युको सम्झना नै नगरी अन्तिम समयसम्म पनि नाशवान् पदार्थमा नै मन लगाउने त्यस्ता विवेकशून्य व्यक्तिहरूलाई कालस्वरूप भगवान् सर्पले मुसा निलेझैं निलिदिनुहुन्छ। अभय प्राप्त गर्न चाहनेले परमात्माको नै आश्रय लिनुपर्छ।

**इदं जपत भद्रं वो विशुद्धा नृपनन्दनाः।**
**स्वधर्ममनुतिष्ठन्तो भगवत्यर्पिताशयाः॥ ६९॥**

पदार्थ—

**नृपनन्दनाः** = हे राजपुत्रहरू (तिमीहरू)
**विशुद्धाः** = विशुद्ध भावले (राग, द्वेष आदिबाट रहित भएर)
**स्वधर्मम्** = स्वधर्मको
**अनुतिष्ठन्तः** = पालन गर्दै

**भगवति** = भगवान्मा
**अर्पिताशयाः** = मन लगाएर
**इदं** = यस स्तोत्रलाई
**जपत** = जप
**वः** = तिमीहरूको
**भद्रं** = कल्याण हुनेछ

**वाक्यार्थ–** हे राजपुत्रहरू ! तिमीहरू विशुद्ध भावले राग, द्वेष आदिबाट रहित भएर स्वधर्मको पालन गर्दै भगवान्मा मन लगाएर यस स्तोत्रलाई जप। तिमीहरूको कल्याण हुनेछ।

**तमेवात्मानमात्मस्थं सर्वभूतेष्ववस्थितम् ।**
**पूजयध्वं गृणन्तश्च ध्यायन्तश्चासकृद्धरिम् ॥ ७० ॥**

पदार्थ–
**आत्मस्थं** = आफ्नो अन्तःकरणमा रहेका र
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीका हृदयमा
**अवस्थितम्** = रहेका
**तम् आत्मानम्** = उहाँ परमात्मा
**हरिम् एव** = श्रीहरिलाई नै
**असकृत्** = निरन्तर
**ध्यायन्तः** = ध्यान र
**गृणन्तः च** = स्तुति गर्दै
**पूजयध्वं** = पूजा गर

**वाक्यार्थ–** हे राजपुत्र ! तिमीहरू आफ्नो र सम्पूर्ण प्राणीको हृदयमा रहेका उहाँ परमात्मा श्रीहरिलाई नै निरन्तर ध्यान र स्तुति गर्दै पूजा गर।

**योगादेशमुपासाद्य धारयन्तो मुनिव्रताः ।**
**समाहितधियः सर्व एतदभ्यसतादृताः ॥ ७१ ॥**

पदार्थ–
**योगादेशम्** = (मैले सुनाएको) योगादेश नामको
**एतत् सर्व** = यस सम्पूर्ण स्तोत्रलाई
**उपासाद्य** = प्राप्त गरी
**धारयन्तः** = मनमा राखेर
**मुनिव्रताः** = मुनिहरूको जस्तै आचरण गर्दै
**समाहितधियः** = एकाग्र भएर
**आदृताः** = आदरपूर्वक
**अभ्यसत** = अभ्यास गर

**वाक्यार्थ–** मैले सुनाएको योगादेश नामको यस सम्पूर्ण स्तोत्रलाई प्राप्त गरी मनमा राखेर मुनिहरूको जस्तै आचरण गर्दै एकाग्र भएर आदरपूर्वक अभ्यास गर।

**इदमाह पुरास्माकं भगवान् विश्वसृक्पतिः ।**
**भृग्वादीनामात्मजानां सिसृक्षुः संसिसृक्षताम् ॥ ७२ ॥**

पदार्थ–
**इदम्** = यो स्तोत्र
**पुरा** = पूर्वकालमा
**सिसृक्षुः** = सृष्टि गर्न इच्छा गर्ने
**विश्वसृक्पतिः** = प्रजापतिहरूका पति
**भगवान्** = भगवान्
ब्रह्माजीले
**संसिसृक्षताम्** = सन्तति उत्पादनको इच्छा गर्ने

**अस्माकं** = हामी
**भृग्वादीनाम्** = भृगु आदि
**आत्मजानां** = छोराहरूलाई
**आह** = भन्नुभएको हो

**वाक्यार्थ–** यो स्तोत्र पूर्वकालमा सृष्टि गर्न इच्छा गर्ने प्रजापतिहरूका पति भगवान् ब्रह्माजीले सन्तति उत्पादनको इच्छा गर्ने हामी भृगु आदि छोराहरूलाई भन्नुभएको हो।

**ते वयं नोदिताः सर्वे प्रजासर्गे प्रजेश्वराः।**

**अनेन ध्वस्ततमसः सिसृक्ष्मो विविधाः प्रजाः॥ ७३॥**

पदार्थ–

**प्रजासर्गे** = (ब्रह्माजीद्वारा) प्रजाको सृष्टिका लागि
**नोदिताः** = प्रेरित गरिएका
**ते** = ती
**सर्वे** = सबै
**वयं** = हामी भृगु आदि
**प्रजेश्वराः** = प्रजापतिहरू
**अनेन** = यही स्तोत्रको अभ्यासद्वारा
**ध्वस्ततमसः** = अज्ञान नाश गरेर
**विविधाः** = अनेक प्रकारका
**प्रजाः** = प्रजाहरूको
**सिसृक्ष्मः** = सृष्टि गर्दछौँ

**वाक्यार्थ–** ब्रह्माजीद्वारा प्रजाको सृष्टिका लागि प्रेरित गरिएका हामी भृगु आदि प्रजापतिहरू यही स्तोत्रको अभ्यासद्वारा अज्ञान नाश गरेर अनेक प्रकारका प्रजाहरूको सृष्टि गर्दछौँ।

**अथेदं नित्यदा युक्तो जपन्नवहितः पुमान्।**

**अचिराच्छ्रेय आप्नोति वासुदेवपरायणः॥ ७४॥**

पदार्थ–

**अथ** = यसपछि (अहिले पनि)
**वासुदेवपरायणः** = भगवान् वासुदेवमा समर्पित भएको
**पुमान्** = (कुनै पनि) व्यक्तिले
**अवहितः** = एकाग्र भएर
**युक्तः** = प्रयत्नपूर्वक
**नित्यदा** = सधैँ
**इदं** = यो स्तोत्र
**जपन्** = जप्दछ भने (त्यसले)
**अचिरात्** = चाँडै नै
**श्रेयः** = कल्याण
**आप्नोति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** अहिले पनि भगवान् वासुदेवमा समर्पित भएको कुनै पनि व्यक्तिले एकाग्र चित्तले प्रयत्नपूर्वक सधैँ यो स्तोत्र जप्दछ भने त्यसले चाँडै नै कल्याण प्राप्त गर्दछ।

**श्रेयसामिह सर्वेषां ज्ञानं निःश्रेयसं परम्।**

**सुखं तरति दुष्पारं ज्ञाननौर्व्यसनार्णवम्॥ ७५॥**

पदार्थ–

**इह** = यस लोकमा
**सर्वेषां** = सम्पूर्ण किसिमका
**श्रेयसाम्** = कल्याणका साधनमा
**निःश्रेयसं** = मोक्षदायक
**ज्ञानं** = ज्ञान नै
**परम्** = उत्कृष्ट (साधन हो)
**ज्ञाननौः** = ज्ञानरूपी डुङ्गामा चढेको मानिस
**दुष्पारं** = दुस्तर

**व्यसनार्णवम्** = संसारसागरलाई | **सुखं** = सजिलै | **तरति** = पार गर्दछ

**वाक्यार्थ–** यस लोकमा सम्पूर्ण किसिमका कल्याणका साधनमध्ये मोक्षदायक ज्ञान नै उत्कृष्ट साधन हो। ज्ञानरूपी डुङ्गामा चढेर मानिस दुस्तर संसारसागरलाई सजिलै पार गर्दछ।

**य इमं श्रद्धया युक्तो मद्गीतं भगवत्स्तवम्।**

**अधीयानो दुराराध्यं हरिमाराधयत्यसौ ॥ ७६ ॥**

**पदार्थ–**

**यः** = जो व्यक्ति
**श्रद्धया** = श्रद्धाले
**युक्तः** = युक्त भएर
**मद्गीतं** = मद्वारा गाइएको
**इमं** = यो
**भगवत्स्तवम्** = भगवत्स्तोत्र
**अधीयानः** = पढ्दछ
**असौ** = यसले
**दुराराध्यं** = जसको आराधना गर्न अत्यन्त कठिन छ यस्ता
**हरिम्** = भगवान् श्रीहरिलाई
**आराधयति** = प्रसन्न पार्न सक्दछ

**वाक्यार्थ–** जो व्यक्ति श्रद्धापूर्वक मद्वारा गाइएको यस भगवत्स्तोत्र पढ्दछ त्यसले जसको आराधना गर्न अत्यन्त कठिन छ यस्ता भगवान् श्रीहरिलाई प्रसन्न पार्न सक्दछ।

**विन्दते पुरुषोऽमुष्माद् यद् यदिच्छत्यसत्वरम्।**

**मद्गीतगीतात् सुप्रीताच्छ्रेयसामेकवल्लभात् ॥ ७७ ॥**

**पदार्थ–**

**मद्गीतगीतात्** = मैले गाएको यस स्तोत्रको गान गरेर
**सुप्रीतात्** = प्रसन्न भएका
**श्रेयसाम्** = धर्म आदि कल्याण साधनका
**एकवल्लभात्** = एक मात्र प्रिय (आश्रय भएका)
**अमुष्मात्** = भगवान् श्रीहरिबाट
**पुरुषः** = मान्छेले
**यत् यत्** = जे-जे
**इच्छति** = चाहन्छ (त्यही-त्यही कुरा)
**असत्वरम्** = चाँडै नै
**विन्दते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** मैले गाएको यस स्तोत्रको गान गरेर प्रसन्न भएका धर्म आदि कल्याण साधनका एक मात्र आश्रय भएका भगवान् श्रीहरिबाट मान्छेले जेजे चाहन्छ त्यही-त्यही कुरा चाँडै नै प्राप्त गर्दछ।

**इदं यः कल्य उत्थाय प्राञ्जलिः श्रद्धयान्वितः।**

**शृणुयाच्छ्रावयेन्मर्त्यो मुच्यते कर्मबन्धनैः ॥ ७८ ॥**

**पदार्थ–**

**यः** = जो पुरुष
**कल्ये** = प्रातःकालमा
**उत्थाय** = उठेर
**श्रद्धया अन्वितः** = श्रद्धापूर्वक
**प्राञ्जलिः** = हात जोडेर
**इदं** = यो स्तोत्र
**शृणुयात्** = सुन्दछ र
**श्रावयेत्** = सुनाउँदछ भने
**मर्त्यः** = त्यो मानिस

**कर्मबन्धनैः** = कर्मबन्धनबाट | **मुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** जो मानिस प्रातःकालमा उठेर श्रद्धापूर्वक हात जोडेर यो स्तोत्र सुन्दछ र सुनाउँछ ऊ कर्मबन्धनबाट मुक्त हुन्छ।

**गीतं मयेदं नरदेवनन्दनाः**
**परस्य पुंसः परमात्मनः स्तवम्।**
**जपन्त एकाग्रधियस्तपो महच्-**
**चरध्वमन्ते तत आप्स्यथेप्सितम्॥ ७९॥**

पदार्थ–

**नरदेवनन्दनाः** = हे राजपुत्र (तिमीहरू)
**मया** = मैले
**गीतं** = गाएको
**परस्य पुंसः** = परम पुरुष
**परमात्मनः** = परमात्माको
**इदं** = यो
**स्तवम्** = स्तोत्र
**एकाग्रधियः** = एकाग्रतापूर्वक
**जपन्तः** = जप गर्दै
**महत्** = ठुलो
**तपः** = तपस्या
**चरध्वम्** = गर
**ततः** = तपस्या पूर्ण भएपछि
**अन्ते** = अन्त्यमा
**ईप्सितम्** = चिताएको कुरा
**आप्स्यथ** = प्राप्त गर्नेछौ

**वाक्यार्थ–** हे राजपुत्र ! तिमीहरू मैले गाएको परम पुरुष परमात्माको यो स्तोत्र एकाग्रतापूर्वक जप गर्दै ठुलो तपस्या गर। तपस्या पूर्ण भएपछि अन्त्यमा तिमीहरूले चिताएको कुरा प्राप्त गर्नेछौ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे**
**रुद्रगीतं नाम चतुर्विंशोऽध्यायः॥ २४॥**

# अथ पञ्चविंशोऽध्यायः

## पुरञ्जनोपाख्यानको प्रारम्भ

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**इति सन्दिश्य भगवान् बार्हिषदैरभिपूजितः।**
**पश्यतां राजपुत्राणां तत्रैवान्तर्दधे हरः॥ १॥**

पदार्थ—

**इति** = यसप्रकार
**सन्दिश्य** = उपदेश दिएपछि
**बार्हिषदैः** = प्रचेताहरूद्वारा
**अभिपूजितः** = पूजित
**भगवान्** = भगवान्
**हरः** = शिव
**राजपुत्राणां** = राजपुत्रहरूले
**पश्यतां** = हेर्दाहेर्दै
**तत्र एव** = त्यहीं नै
**अन्तर्दधे** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ—** यसप्रकार भगवान् शिवले उपदेश दिनुभयो। त्यसपछि प्रचेताहरूद्वारा पूजा गरिनुभएका भगवान् शिव राजपुत्रहरूले हेर्दाहेर्दै त्यहीं नै अन्तर्धान हुनुभयो।

**रुद्रगीतं भगवतः स्तोत्रं सर्वे प्रचेतसः।**
**जपन्तस्ते तपस्तेपुर्वर्षाणामयुतं जले॥ २॥**

पदार्थ—

**ते सर्वे** = ती सबै
**प्रचेतसः** = प्रचेताहरूले
**रुद्रगीतं** = रुद्रद्वारा गाइएको
**भगवतः** = भगवान्को
**स्तोत्रं** = स्तोत्र
**जपन्तः** = जप्दै
**वर्षाणाम् अयुतं** = दशहजार वर्षसम्म
**जले** = जलमा रहेर
**तपः तेपुः** = तपस्या गरे

**वाक्यार्थ—** ती सबै प्रचेताहरूले रुद्रद्वारा गाइएको भगवान्को स्तोत्र जप्दै दशहजार वर्षसम्म जलमा रहेर तपस्या गरे।

**प्राचीनबर्हिषं क्षत्तः कर्मस्वासक्तमानसम्।**
**नारदोऽध्यात्मतत्त्वज्ञः कृपालुः प्रत्यबोधयत्॥ ३॥**

पदार्थ—

**क्षत्तः** = हे विदुरजी (प्रचेताहरूले तपस्या गरिहँदा यता)
**कर्मसु** = कर्ममा
**आसक्तमानसम्** = मन आसक्त गराएका (उनीहरूका पिता)
**प्राचीनबर्हिषं** = राजा

| | | |
|---|---|---|
| प्राचीनबर्हिलाई | तत्त्व जान्ने | **नारदः** = नारदजीले |
| **अध्यात्मतत्त्वज्ञः** = अध्यात्म- | **कृपालुः** = परम कृपालु | **प्रत्यबोधयत्** = उपदेश दिनुभयो |

**वाक्यार्थ–** हे विदुरजी ! प्रचेताहरूले तपस्या गरिहँदा यता कर्ममा आसक्त भएका उनीहरूका पिता राजा प्राचीनबर्हिलाई अध्यात्मतत्त्व जान्ने परम कृपालु नारदजीले उपदेश दिनुभयो।

**श्रेयस्त्वं कतमद् राजन् कर्मणात्मन ईहसे ।**

**दुःखहानिः सुखावाप्तिः श्रेयस्तन्नेह चेष्यते ॥ ४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **राजन्** = हे राजा | **श्रेयः** = कल्याण | प्राप्तिको नाम नै |
| **त्वं** = तपाईं | **ईहसे** = प्राप्त गर्न चाहनुहुन्छ | **श्रेयः** = कल्याण हो |
| **कर्मणा** = कर्मद्वारा | **दुःखहानिः** = दुःखको | **तत्** = त्यो कल्याण |
| **आत्मनः** = आफ्नो | आत्यन्तिक नाश | **इह** = यी कर्महरूबाट |
| **कतमत्** = कुन | **सुखावाप्तिः** = परमानन्द | **न च इष्यते** = प्राप्त हुँदैन |

**वाक्यार्थ–** हे राजा ! कर्मद्वारा तपाईं आफ्नो कुन चाहिँ कल्याण प्राप्त गर्न चाहनुहुन्छ ! दुःखको आत्यन्तिक नाश र परमानन्द प्राप्तिको नाम नै कल्याण हो। त्यो कल्याण यी कर्महरूबाट प्राप्त हुँदैन।

**राजोवाच** (राजाले भन्नुभयो)

**न जानामि महाभाग परं कर्मापविद्धधीः ।**

**ब्रूहि मे विमलं ज्ञानं येन मुच्येय कर्मभिः ॥ ५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **महाभाग** = हे महाभाग नारदजी | **मे** = मलाई | **येन** = जसबाट म |
| **कर्मापविद्धधीः** = कर्ममा बुद्धि | **विमलं** = विशुद्ध | **कर्मभिः** = कर्मबन्धनबाट |
| आसक्त भएकाले म | **ज्ञानं** = ज्ञान | **मुच्येय** = मुक्त हुन सकूँ |
| **परं** = परम कल्याणको विषयमा | **ब्रूहि** = भन्नुहोस् (उपदेश | |
| **न जानामि** = केही पनि जान्दिनँ | गर्नुहोस्) | |

**वाक्यार्थ–**हे महाभाग नारदजी ! कर्ममा बुद्धि आसक्त भएकाले म परम कल्याणको विषयमा केही पनि जान्दिनँ, मलाई विशुद्ध ज्ञानको उपदेश गर्नुहोस् जसबाट म कर्मबन्धनबाट मुक्त हुन सकूँ।

**गृहेषु कूटधर्मेषु पुत्रदारधनार्थधीः ।**
**न परं विन्दते मूढो भ्राम्यन् संसारवर्त्मसु ॥ ६ ॥**

**पदार्थ–**
**कूटधर्मेषु** = कपट धर्ममय
**गृहेषु** = गृहस्थाश्रममा रहेर
**पुत्रदारधनार्थधीः** = पुत्र, पत्नी र धनलाई नै परम पुरुषार्थ मान्ने
**मूढः** = मूर्ख व्यक्ति
**संसारवर्त्मसु** = संसारमार्गमा
**भ्राम्यन्** = घुम्दाघुम्दै
**परं** = परम कल्याण
**न विन्दते** = प्राप्त गर्न सक्दैन

**वाक्यार्थ–** कपट धर्ममय गृहस्थाश्रममा रहेर पुत्र, पत्नी र धनलाई नै परम पुरुषार्थ मान्ने मूर्ख व्यक्ति संसारमार्गमा घुम्दाघुम्दै परम कल्याण प्राप्त गर्न सक्दैन।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**भो भोः प्रजापते राजन् पशून् पश्य त्वयाध्वरे ।**
**संज्ञापिताञ्जीवसङ्घान्निर्घृणेन सहस्रशः ॥ ७ ॥**

**पदार्थ–**
**भो भोः प्रजापते** = हे राजा प्राचीनबर्हि
**निर्घृणेन** = दयाहीन
**त्वया** = तपाईंद्वारा
**अध्वरे** = यज्ञमा
**संज्ञापितान्** = बलि दिइएका
**जीवसङ्घान्** = प्राणीहरूको समूहलाई
**सहस्रशः** = हजारौँ
**पशून्** = पशुहरूलाई
**पश्य** = हेर्नुहोस्

**वाक्यार्थ–** हे राजा प्राचीनबर्हि ! दयाहीन भएका तपाईंद्वारा यज्ञमा बलि दिइएका प्राणीहरूको समूह र हजारौँ पशुहरूलाई हेर्नुहोस्।

**एते त्वां सम्प्रतीक्षन्ते स्मरन्तो वैशसं तव ।**
**सम्परेतमयःकूटैश्छिन्दन्त्युत्थितमन्यवः ॥ ८ ॥**

**पदार्थ–**
**एते** = यी सबै पशुहरू
**तव वैशसं** = तपाईंले दिएको पीडा
**स्मरन्तः** = सम्झँदै
**त्वां** = तपाईंलाई
**सम्प्रतीक्षन्ते** = पर्खिरहेका छन्
**उत्थितमन्यवः** = अत्यन्त क्रुद्ध भएका यी पशुहरूले
**सम्परेतम्** = मरेर त्यहाँ गएपछि तपाईंलाई
**अयःकूटैः** = फलामजस्ता सिङ्ले
**छिन्दन्ति** = छेड्नेछन्

**वाक्यार्थ–** यी सबै पशुहरू तपाईंले दिएको पीडा सम्झँदै तपाईंलाई पर्खिरहेका छन्। अत्यन्त क्रुद्ध भएका यी पशुहरूले मरेर त्यहाँ गएपछि तपाईंलाई फलामजस्ता सिङ्ले छेड्नेछन्।

**अत्र ते कथयिष्येऽमुमितिहासं पुरातनम्।**
**पुरञ्जनस्य चरितं निबोध गदतो मम॥ ९॥**

**पदार्थ–**

**अत्र** = यस (ज्ञानप्रश्नको) विषयमा (म)
**ते** = तपाईंलाई
**पुरातनम्** = प्राचीन
**इतिहासं** = उपाख्यान
**कथयिष्ये** = भन्दछु
**मम** = मैले
**पुरञ्जनस्य** = पुरञ्जनको
**अमुम्** = यो
**चरितं** = चरित्र
**गदतः** = बताउँदा
**निबोध** = राम्रोसँग बुझ्नुहोस् (सावधान भएर सुन्नुहोस्)

**वाक्यार्थ–** म यस (ज्ञानप्रश्नको) विषयमा तपाईंलाई प्राचीन उपाख्यान भन्दछु। मैले पुरञ्जनको यो चरित्र बताउँदा सावधान भएर सुन्नुहोस्।

**आसीत् पुरञ्जनो नाम राजा राजन् बृहच्छ्रवाः।**
**तस्याविज्ञातनामासीत् सखाविज्ञातचेष्टितः॥ १०॥**

**पदार्थ–**

**राजन्** = हे राजा (प्राचीन कालमा)
**पुरञ्जनः नाम** = पुरञ्जन नामका
**बृहच्छ्रवाः** = परम यशस्वी
**राजा** = राजा
**आसीत्** = थिए
**तस्य** = तिनको
**अविज्ञातचेष्टितः** = जसको चेष्टा कसैले बुझ्न सक्दैनथ्यो त्यस्ता
**अविज्ञातनामा** = अविज्ञात नामका
**सखा** = साथी
**आसीत्** = थिए

**वाक्यार्थ–** हे राजा ! प्राचीन कालमा पुरञ्जन नामका परमयशस्वी राजा थिए। जसको चेष्टा कसैले बुझ्न सक्दैनथ्यो त्यस्ता अविज्ञात नामका तिनको साथी थिए।

**सोऽन्वेषमाणः शरणं बभ्राम पृथिवीं प्रभुः।**
**नानुरूपं यदाविन्ददभूत् स विमना इव॥ ११॥**

**पदार्थ–**

**सः** = ती राजा पुरञ्जनले
**शरणं** = (आफ्नो योग्य) वासस्थान
**अन्वेषमाणः** = खोज्दै
**पृथिवीं** = सम्पूर्ण पृथ्वी
**बभ्राम** = घुमे
**प्रभुः** = समर्थ भएर पनि
**सः** = उनले
**यदा** = जब
**अनुरूपं** = आफ्नो योग्य स्थान
**न अविन्दत्** = भेट्टाएनन् (त्यस वेला)
**विमनाः इव** = केही खिन्न जस्ता
**अभूत्** = भए

**वाक्यार्थ–** ती राजा पुरञ्जनले आफ्नो योग्य वासस्थान खोज्दै सम्पूर्ण पृथ्वी घुमे। समर्थ भएर पनि उनले जब आफ्नो योग्य वासस्थान भेट्टाएनन् त्यस वेला उनी केही खिन्न जस्ता भए।

**न साधु मेने ताः सर्वा भूतले यावतीः पुरः।**
**कामान् कामयमानोऽसौ तस्य तस्योपपत्तये ॥ १२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कामान्** = विषय | **उपपत्तये** = भोग्नको लागि | **ताः** = ती |
| **कामयमानः** = भोग्न चाहने | **भूतले** = पृथ्वीमा | **सर्वाः** = सबै नै |
| **असौ** = यी राजा पुरञ्जनले | **यावतीः** = जति पनि | **साधु** = ठिक |
| **तस्य तस्य** = ती-ती विषयभोग | **पुरः** = नगर देखे | **न मेने** = मानेनन् |

**वाक्यार्थ–** विषय भोग्न चाहने यी राजा पुरञ्जनले ती-ती विषयभोग भोग्नका लागि पृथ्वीमा जति पनि नगर देखे, उनले तीमध्ये कुनै पनि ठिक मानेनन्।

**स एकदा हिमवतो दक्षिणेष्वथ सानुषु।**
**ददर्श नवभिर्द्वार्भिः पुरं लक्षितलक्षणाम् ॥ १३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अथ** = यसपछि | **दक्षिणेषु** = दक्षिणतर्फका | **लक्षितलक्षणाम्** = सम्पूर्ण लक्षण (भोगसाधन)ले युक्त |
| **सः** = ती राजा पुरञ्जनले | **सानुषु** = थुम्काहरूमा | **पुरं** = नगर |
| **एकदा** = एक दिन | **नवभिः** = नौओटा | **ददर्श** = देखे |
| **हिमवतः** = हिमालयको | **द्वार्भिः** = ढोकाहरूले युक्त | |

**वाक्यार्थ–** यसपछि राजा पुरञ्जनले एक दिन हिमालयको दक्षिणतर्फका थुम्काहरूमा नौओटा ढोका भएको सम्पूर्ण भोगसाधनले युक्त नगर देखे।

**प्राकारोपवनाट्टालपरिखैरक्षतोरणैः।**
**स्वर्णरौप्यायसैः शृङ्गैः सङ्कुलां सर्वतो गृहैः ॥ १४ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सर्वतः** = (त्यो नगर) सबैतिर | **अक्षतोरणैः** = आँखीझ्याल, बाहिरी राजद्वार भएको एवं | **शृङ्गैः** = शिखर (गजुर) भएका |
| **प्राकारोपवनाट्टालपरिखैः** = पर्खाल, बगैंचा, कौसी, पानीपोखरी | **स्वर्णरौप्यायसैः** = सुन, चाँदी र फलामका | **गृहैः** = घरहरूले |
| | | **सङ्कुलां** = भरिएको थियो |

**वाक्यार्थ–** त्यो नगर सबैतिर पर्खाल, बगैंचा, कौसी, पानीपोखरी, आँखीझ्याल, बाहिरी राजद्वार

भएका एवं सुन, चाँदी र फलामका गजुर भएका घरहरूले भरिएको थियो।

**नीलस्फटिकवैदूर्यमुक्तामरकतारुणैः।**

**क्लृप्तहर्म्यस्थलीं दीप्तां श्रिया भोगवतीमिव॥ १५॥**

पदार्थ–

**नीलस्फटिकवैदूर्यमुक्ता-मरकतारुणैः** = नीलम, स्फटिक, वैदूर्य, मोती, पन्ना र रक्त मणिद्वारा

**क्लृप्तहर्म्यस्थलीं** = महलका विभिन्न भाग सुशोभित (त्यो नगर)

**श्रिया** = आफ्नो कान्तिले

**भोगवतीम् इव** = नागको राजधानी भोगवती जस्तै

**दीप्तां** = उज्ज्वल (थियो)

**वाक्यार्थ–** नीलम, स्फटिक, वैदूर्य, मोती, पन्ना र रक्त मणिद्वारा महलका विभिन्न भाग सुशोभित भएको त्यो नगर आफ्नो कान्तिले नागको राजधानी भोगवती जस्तै उज्ज्वल थियो।

**सभाचत्वररथ्याभिराक्रीडायतनापणैः।**

**चैत्यध्वजपताकाभिर्युक्तां विद्रुमवेदिभिः॥ १६॥**

पदार्थ–

**सभाचत्वररथ्याभिः** = सभाभवन, चउर, सडक

**आक्रीडायतनापणैः** = क्रीडा-भवन, बजार

**चैत्यध्वजपताकाभिः** = विश्राम-स्थान, ध्वजा-पताका

**विद्रुमवेदिभिः** = मुगाजडित वेदीले

**युक्तां** = युक्त

**वाक्यार्थ–** त्यो नगर सभाभवन, चउर, सडक, क्रीडाभवन, बजार, विश्रामस्थान, ध्वजा-पताका र मुगाजडित वेदीले युक्त थियो।

**पुर्यास्तु बाह्योपवने दिव्यद्रुमलताकुले।**

**नदद्विहङ्गालिकुलकोलाहलजलाशये॥ १७॥**

पदार्थ–

**दिव्यद्रुमलताकुले** = दिव्य वृक्ष र लताहरूले पूर्ण

**नदद्विहङ्गालिकुलकोलाहल-जलाशये** = आवाज निकालिरहने अनेक प्रकारका पक्षी र भँवराको कलरवले पूर्ण जलाशय भएको

**पुर्याः** = नगरको

**बाह्योपवने तु** = बाहिरी बगैँचामा चाहिँ (उनले एउटी युवती देखे)

**वाक्यार्थ–** दिव्य वृक्ष, लताहरू र अनेक प्रकारका पक्षी र भँवराको कलरवले पूर्ण जलाशय भएको नगरको बाहिरी बगैँचामा उनले एउटी युवती देखे।

**हिमनिर्झरविप्रुष्मत्कुसुमाकरवायुना ।**
**चलत्प्रवालविटपनलिनीतटसम्पदि ॥ १८ ॥**

**पदार्थ–**
**हिमनिर्झरविप्रुष्मत्कुसुमाकर-वायुना** = शीतल झरनाका जलकण मिसिएको वसन्तको वायुद्वारा
**चलत्प्रवालविटपनलिनीतट-सम्पदि** = तलाउका किनारका वृक्ष र तिनका हाँगा हल्लिरहेका

**वाक्यार्थ–** शीतल झरनाका जलकण मिसिएको वसन्त ऋतुको वायुले तलाउका किनारका वृक्ष र तिनका हाँगा हल्लिरहेका थिए।

**नानारण्यमृगव्रातैरनाबाधे मुनिव्रतैः ।**
**आहूतं मन्यते पान्थो यत्र कोकिलकूजितैः ॥ १९ ॥**

**पदार्थ–**
**मुनिव्रतैः** = मुनिको जस्तो शील स्वभाव भएका
**नानारण्यमृगव्रातैः** = वनका अनेक किसिमका मृगहरूद्वारा
**अनाबाधे** = बाधा नगरिएको
**यत्र** = त्यस बगैँचामा
**कोकिलकूजितैः** = कोइलीको कुहू-कुहू ध्वनिद्वारा
**पान्थः** = कुनै पनि बटुवाले
**आहूतं** = (विश्रामका लागि) आफू बोलाइएको जस्तो
**मन्यते** = ठान्दथ्यो

**वाक्यार्थ–** मुनिको जस्तो शील स्वभाव भएका वनका अनेक किसिमका मृगहरूद्वारा बाधा नगरिएको त्यस बगैँचामा कोइलीको कुहू-कुहू ध्वनिद्वारा कुनै पनि बटुवाले विश्रामका लागि आफूलाई बोलाएको जस्तो ठान्दथ्यो।

**यदृच्छयागतां तत्र ददर्श प्रमदोत्तमाम् ।**
**भृत्यैर्दशभिरायान्तीमेकैकशतनायकैः ॥ २० ॥**

**पदार्थ–**
**तत्र** = त्यस बगैँचामा (राजा पुरञ्जनले)
**यदृच्छया** = स्वेच्छाले
**आगतां** = आएकी
**प्रमदोत्तमाम्** = एउटी सुन्दरीलाई
**ददर्श** = देखे (उनी)
**एकैकशतनायकैः** = सय-सय नायिका भएका
**दशभिः भृत्यैः** = दश जना सेवकका साथ
**आयान्तीम्** = आएकी (थिइन्)

**वाक्यार्थ–** त्यस बगैँचामा राजा पुरञ्जनले स्वेच्छाले आउँदै गरेकी एउटी सुन्दरीलाई देखे। उनी छुट्टाछुट्टै सय-सय नायिका भएका दश जना सेवकका साथ आएकी थिइन्।

**पञ्चशीर्षाहिना गुप्तां प्रतीहारेण सर्वतः।**
**अन्वेषमाणामृषभमप्रौढां कामरूपिणीम्॥ २१॥**

**पदार्थ–**

**प्रतीहारेण** = द्वारपालका रूपमा रहेको
**पञ्चशीर्षाहिना** = पाँच फणा भएको सर्पद्वारा
**सर्वतः** = सबैतिर
**गुप्तां** = रक्षा गरिएकी
**कामरूपिणीम्** = इच्छानुसारको रूप बनाएकी
**ऋषभम्** = पति
**अन्वेषमाणाम्** = खोज्दै गरेकी
**अप्रौढां** = किशोरी

**वाक्यार्थ–** द्वारपालका रूपमा रहेको पाँच फणा भएको सर्पद्वारा सबैतिर रक्षा गरिएकी, इच्छानुसारको रूप बनाएकी एवं विवाहको लागि पति खोज्दै गरेकी ती किशोरीलाई उनले देखे।

**सुनासां सुदतीं बालां सुकपोलां वराननाम्।**
**समविन्यस्तकर्णाभ्यां बिभ्रतीं कुण्डलश्रियम्॥ २२॥**

**पदार्थ–**

**सुनासां** = राम्रो नाक
**सुदतीं** = राम्रा दाँत
**सुकपोलां** = राम्रा गाला
**वराननाम्** = सुन्दर मुख
**समविन्यस्तकर्णाभ्यां** = समान किसिमका कानमा लगाइएका
**कुण्डलश्रियम्** = कुण्डलको सौन्दर्य
**बिभ्रतीं** = धारण गरेकी
**बालां** = किशोरी

**वाक्यार्थ–** अत्यन्त सुन्दर नाक, दाँत, गाला र मुख भएकी एवं समान किसिमका कानमा अत्यन्त सुन्दर कुण्डल धारण गरेकी ती किशोरीलाई उनले देखे।

**पिशङ्गनीवीं सुश्रोणीं श्यामां कनकमेखलाम्।**
**पद्भ्यां क्वणद्भ्यां चलन्तीं नूपुरैर्देवतामिव॥ २३॥**

**पदार्थ–**

**सुश्रोणीं** = सुन्दर कम्मर भएकी
**पिशङ्गनीवीं** = पहेलो वस्त्र (सारी) र
**कनकमेखलाम्** = सुनको मेखला लगाएकी
**नूपुरैः** = पाउजु
**क्वणद्भ्यां** = बजिरहेका
**पद्भ्यां** = गोडाद्वारा
**चलन्तीं** = हिँडिरहेकी
**देवताम् इव** = देवीजस्तै
**श्यामां** = श्याम वर्णकी

**वाक्यार्थ–** सुन्दर कम्मर भएकी, पहेलो वस्त्र (सारी) र सुनको मेखला लगाएकी, गोडामा पाउजु लगाएर हिँडिरहेकी देवीजस्तै श्याम वर्णकी ती युवतीलाई पुरञ्जनले देखे।

**स्तनौ व्यञ्जितकैशोरौ समवृत्तौ निरन्तरौ।**
**वस्त्रान्तेन निगूहन्तीं व्रीडया गजगामिनीम्॥ २४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **व्यञ्जितकैशोरौ** = किशोर अवस्थालाई सूचित गर्ने | **निरन्तरौ** = परस्पर सटेका | **निगूहन्तीं** = ढाकिरहेकी |
| **समवृत्तौ** = वर्तुलाकारका समान र | **स्तनौ** = स्तनलाई | **गजगामिनीम्** = हात्तीको जस्तै हिँडाइ भएकी (ती युवतीलाई देखे) |
| | **व्रीडया** = लज्जावश | |
| | **वस्त्रान्तेन** = आँचलले | |

**वाक्यार्थ–** किशोर अवस्थालाई सूचित गर्ने वर्तुलाकारका समान र परस्पर सटेका स्तनलाई लज्जावश आँचलले ढाकिरहेकी र हात्तीको जस्तै हिँडाइ भएकी ती युवतीलाई उनले देखे।

**तामाह ललितं वीरः सव्रीडस्मितशोभनाम्।**
**स्निग्धेनापाङ्गपुङ्खेन स्पृष्टः प्रेमोद्भ्रमद्भ्रुवा॥ २५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रेमोद्भ्रमद्भ्रुवा** = प्रेमले गर्दा बटारिएका आँखीभौँयुक्त | **स्पृष्टः** = घायल भएका | **ताम्** = ती युवतीलाई |
| **स्निग्धेन अपाङ्गपुङ्खेन** = प्रेमपूर्ण कटाक्षरूप बाणद्वारा | **वीरः** = वीर पुरञ्जन राजाले | **ललितं** = मिठो बोलीमा |
| | **सव्रीडस्मितशोभनाम्** = लजालु मुस्कानले अत्यन्त सुन्दर भएकी | **आह** = भने |

**वाक्यार्थ–** प्रेमले गर्दा बटारिएका आँखीभौँयुक्त प्रेमपूर्ण कटाक्षरूप बाणद्वारा घायल भएका ती वीर पुरञ्जन राजाले लजालु मुस्कानले अत्यन्त सुन्दर भएकी ती युवतीलाई मिठो बोलीमा भने।

**का त्वं कञ्जपलाशाक्षि कस्यासीह कुतः सति।**
**इमामुप पुरीं भीरु किं चिकीर्षसि शंस मे॥ २६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कञ्जपलाशाक्षि** = कमलको पातजस्तै आँखा भएकी हे सुन्दरी | **असि** = हौ | **कुतः** = कहाँबाट आयौ |
| **त्वं** = तिमी | **मे** = मलाई | **सति** = हे साध्वी |
| **का** = को हौ | **शंस** = भन | **इमाम्** = यस |
| **कस्य** = कसकी (कन्या) | **भीरु** = सुकोमल हृदय भएकी (तिमी) | **उप पुरीं** = नगरको नजिकै |
| | **इह** = यहाँ | **किं चिकीर्षसि** = के गर्न चाहन्छ्यौ |

**वाक्यार्थ–** कमलको पातजस्तै आँखा भएकी हे सुन्दरी ! तिमी को हौ ? कसकी कन्या हौ ?

मलाई भन। सुकोमल हृदय भएकी तिमी यहाँ कहाँबाट आयौ ? हे साध्वी ! यस नगरको नजिकै के गर्न चाहन्छ्यौ ?

**क एतेऽनुपथा ये त एकादश महाभटाः।**

**एता वा ललनाः सुभ्रु कोऽयं तेऽहिः पुरःसरः ॥ २७ ॥**

**पदार्थ–**

**सुभ्रु** = सुन्दर आँखीभौं भएकी हे युवती (तिम्रो साथ)
**ये** = जो
**एकादश** = एघारौं
**महाभटाः** = शूरवीरबाट सञ्चालित छन्
**ते एते** = ती यी (दश)
**अनुपथाः** = अनुचरहरू
**के** = को हुन्
**वा** = र
**एताः** = यी
**ललनाः** = स्त्रीहरू को हुन्
**ते** = तिम्रो
**पुरःसरः** = अगाडि हिँड्ने
**अयं** = यो
**अहिः** = सर्प
**कः** = को हो

**वाक्यार्थ–** सुन्दर आँखीभौं भएकी हे युवती ! तिम्रो साथ एघारौं शूरवीरबाट सञ्चालित यी दश अनुचरहरू को हुन् ? यी स्त्रीहरू को हुन् ? तिम्रो अगाडि हिँड्ने यो सर्प को हो ?

**त्वं ह्रीर्भवान्यस्यथ वाग्रमा पतिं**

**विचिन्वती किं मुनिवद्रहो वने।**

**त्वदङ्घ्रिकामाप्तसमस्तकामं**

**क्व पद्मकोशः पतितः कराग्रात् ॥ २८ ॥**

**पदार्थ–**

(हे सुन्दरी)
**रहः** = एकान्त
**वने** = वनमा
**मुनिवत्** = मुनिजस्तै संयमित भएर रहेकी
**त्वं** = तिमी
**त्वदङ्घ्रिकामाप्तसमस्तकामं** = तिम्रो चरणको प्राप्तिबाट समस्त इच्छा पूरा भएको ठान्ने
**पतिं** = आफ्नो पति धर्मराजलाई
**विचिन्वती** = खोज्दै हिँड्ने
**किं** = के
**ह्रीः** = साक्षात् लज्जादेवी हौ
**अथ** = अथवा
**भवानी** = (शिवजीलाई खोज्दै हिँड्ने) पार्वती
**वाक्** = (ब्रह्माजीलाई खोज्दै हिँड्ने) सरस्वती
**रमा** = (विष्णुलाई खोज्दै हिँड्ने) लक्ष्मीमध्ये
**असि** = को हौ (यदि तिमी लक्ष्मी हौ भने)
**पद्मकोशः** = कमल
**कराग्रात्** = तिम्रो हातबाट
**क्व** = कहाँ
**पतितः** = खस्यो

**वाक्यार्थ–** हे सुन्दरी ! एकान्त वनमा मुनिजस्तै संयमित भएर रहेकी तिमी तिम्रो चरणको

प्राप्तिबाट समस्त इच्छा पूरा भएको ठान्ने आफ्नो पति धर्मराजलाई खोज्दै हिँड्ने के साक्षात् लज्जादेवी हौ कि अथवा शिवजीलाई खोज्दै हिँड्ने पार्वती, ब्रह्माजीलाई खोज्दै हिँड्ने सरस्वती, विष्णुलाई खोज्दै हिँड्ने लक्ष्मीमध्ये को हौ ? यदि तिमी विष्णुलाई खोज्दै हिँड्ने लक्ष्मी हौ भने तिम्रो हातबाट कमल कहाँ खस्यो ?

**नासां वरोर्वन्यतमा भुविस्पृक्**
**पुरीमिमां वीरवरेण साकम्।**
**अर्हस्यलङ्कर्तुमदभ्रकर्मणा**
**लोकं परं श्रीरिव यज्ञपुंसा॥ २९॥**

**पदार्थ–**

**वरोरु** = हे सुन्दरी
**भुविस्पृक्** = भुईंमा स्पर्श गर्ने भएकीले तिमी
**आसां** = यी देवीमध्ये
**अन्यतमा न** = कोही पनि होइनौ (यसैले यदि तिमी मानवकन्या हौ भने)
**यज्ञपुंसा** = यज्ञपुरुष भगवान् विष्णुका साथ
**परं लोकं** = वैकुण्ठ लोकमा
**श्रीः इव** = लक्ष्मी रहे जस्तै गरी
**वीरवरेण** = वीरवर र
**अदभ्रकर्मणा साकम्** = पराक्रमी मसँग (रहेर)
**इमां** = यस
**पुरीम्** = नगरीलाई
**अलङ्कर्तुम्** = अलङ्कृत गराउन
**अर्हसि** = तिमी योग्य छ्यौ

**वाक्यार्थ–** हे सुन्दरी ! भुईंमा स्पर्श गर्ने भएकीले तिमी यी देवीमध्ये कोही पनि होइनौ। यसैले यदि तिमी मानवकन्या हौ भने यज्ञपुरुष भगवान् विष्णुका साथ वैकुण्ठ लोकमा लक्ष्मी रहे जस्तै गरी वीरवर र पराक्रमी मसँग रही यस नगरीलाई अलङ्कृत गराउन तिमी योग्य छ्यौ।

**यदेष मापाङ्गविखण्डितेन्द्रियं**
**सव्रीडभावस्मितविभ्रमद्भ्रुवा।**
**त्वयोपसृष्टो भगवान्मनोभवः**
**प्रबाधतेऽथानुगृहाण शोभने॥ ३०॥**

**पदार्थ–**

**शोभने** = हे सुन्दरी (तिम्रो)
**अपाङ्गविखण्डितेन्द्रियं** = कटाक्षले विचलित मन भएको
**मा** = मलाई
**सव्रीडभावस्मितविभ्रमद्भ्रुवा** = लजालु र प्रेमपूर्ण मुस्कानका साथ आँखीभौँ घुमाउने
**त्वया** = तिमीद्वारा
**उपसृष्टः** = छोडिएका
**यत् एषः** = यी
**भगवान् मनोभवः** = भगवान् कामदेवले (मलाई)

| | | |
|---|---|---|
| **प्रबाधते** = बाधा गरिहेका छन् | **अथ** = यसर्थ | **अनुगृहाण** = ममाथि कृपा गर |

**वाक्यार्थ–** हे सुन्दरी ! तिम्रो कटाक्षले विचलित भएको मलाई तिम्रो लजालु र प्रेमपूर्ण मुस्कानको साथ कर्के आँखीभौंको सङ्केत पाएर यी कामदेवले मलाई बाधा गरिहेका छन्। यसर्थ ममाथि कृपा गर।

**त्वदाननं सुभ्रु सुतारलोचनं**
**व्यालम्बिनीलालकवृन्दसंवृतम्।**
**उन्नीय मे दर्शय वल्गुवाचकं**
**यद् व्रीडया नाभिमुखं शुचिस्मिते ॥ ३१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **शुचिस्मिते** = पवित्र मुस्कान भएकी हे सुन्दरी | घेरिएको | **यत्** = जुन |
| **सुभ्रु** = सुन्दर आँखीभौं | **वल्गुवाचकं** = मधुर बोली बोल्ने | **व्रीडया** = लज्जाले गर्दा |
| **सुतारलोचनं** = सुन्दर नेत्र भएको | **त्वदाननं** = तिम्रो मुख | **न अभिमुखं** = मतिर फर्केको छैन |
| **व्यालम्बिनीलालकवृन्दसंवृतम्** = लामा-लामा काला केशराशिले | **उन्नीय** = उठाएर | |
| | **मे** = मलाई | |
| | **दर्शय** = देखाऊ | |

**वाक्यार्थ–** पवित्र मुस्कान भएकी हे सुन्दरी ! सुन्दर आँखीभौं एवं सुन्दर नेत्र भएको लामा-लामा काला केशराशिले घेरिएको मधुर बोली बोल्ने तिम्रो मुख उठाएर मलाई देखाऊ जुन लज्जाले गर्दा मतिर फर्केको छैन।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**इत्थं पुरञ्जनं नारी याचमानमधीरवत्।**
**अभ्यनन्दत तं वीरं हसन्ती वीर मोहिता ॥ ३२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **वीर** = हे वीर राजा प्राचीनबर्हि | **तं** = ती | **नारी** = ती नारीले |
| **इत्थं** = यसप्रकार | **वीरं** = वीर | **हसन्ती** = हाँस्दै |
| **अधीरवत्** = अधीर जस्तै भएर | **पुरञ्जनं** = पुरञ्जनलाई (देखेर) | **अभ्यनन्दत** = स्वीकार गरिन् |
| **याचमानम्** = याचना गरिरहेका | **मोहिता** = मोहित भएकी | |

**वाक्यार्थ–** हे वीर राजा प्राचीनबर्हि ! यसप्रकार अधीर जस्तै भएर याचना गरिरहेका ती वीर पुरञ्जनलाई देखेर मोहित भएकी ती नारीले पनि हाँस्दै उनको याचनालाई स्वीकार गरिन्।

**न विदाम वयं सम्यक् कर्तारं पुरुषर्षभ।**
**आत्मनश्च परस्यापि गोत्रं नाम च यत्कृतम्॥ ३३॥**

पदार्थ–

**पुरुषर्षभ** = हे नरश्रेष्ठ
**वयं** = हामीहरू
**आत्मनः** = आफ्नो
**कर्तारं** = उत्पन्न गर्नेवालालाई
**सम्यक्** = राम्ररी
**न विदाम** = जान्दैनौँ
**यत्कृतम्** = उत्पन्न गर्नेवालाले बनाएको
**परस्य** = अरू कसैको
**नाम च अपि** = नाम र
**गोत्रं च** = गोत्र पनि (हामीलाई थाहा छैन)

**वाक्यार्थ–** हे नरश्रेष्ठ ! हामीहरू आफ्नो उत्पन्न गर्नेवालालाई राम्ररी जान्दैनौँ र उत्पन्न गर्नेवालाले बनाएको अरू कसैको नाम र गोत्र पनि हामीलाई थाहा छैन।

**इहाद्य सन्तमात्मानं विदाम न ततः परम्।**
**येनेयं निर्मिता वीर पुरी शरणमात्मनः॥ ३४॥**

पदार्थ–

**वीर** = हे वीर
**अद्य** = आज हामी सबै
**इह** = यस नगरीमा
**सन्तम्** = रहेको
**आत्मानं** = आफूलाई मात्र जान्दछौँ
**ततः परम्** = यस बाहेक
**येन** = जसले
**आत्मनः** = हाम्रो
**शरणम्** = वासस्थानका रूपमा
**इयं** = यो
**पुरी** = नगर
**निर्मिता** = बनायो त्यसलाई
**न विदाम** = जान्दैनौँ

**वाक्यार्थ–** हे वीर ! आज हामी सबै यस नगरीमा रहेको आफ्नो शरीरलाई मात्र जान्दछौँ। यस बाहेक जसले हाम्रो वासस्थानका रूपमा यो नगर बनायो त्यसलाई पनि जान्दैनौँ।

**एते सखायः सख्यो मे नरा नार्यश्च मानद।**
**सुप्तायां मयि जागर्ति नागोऽयं पालयन् पुरीम्॥ ३५॥**

पदार्थ–

**मानद** = हे अरूलाई सम्मान गर्ने राजा
**एते** = यी
**नराः** = मानिसहरू
**मे** = मेरा
**सखायः** = साथीहरू हुन्
**नार्यः च** = नारीहरू पनि
**सख्यः** = सङ्गिनीहरू हुन्
**मयि** = म
**सुप्तायां** = सुतेको वेलामा
**अयं** = यो
**नागः** = नाग
**पुरीम्** = नगरको
**पालयन्** = सुरक्षा गर्दै
**जागर्ति** = जागा रहन्छ

**वाक्यार्थ–** हे अरूलाई सम्मान गर्ने राजा ! यी नर-नारीहरू मेरा साथी-सङ्गी हुन्। म सुतेको

वेलामा यो नाग नगरको सुरक्षा गर्दै जागा रहन्छ।

**दिष्ट्यागतोऽसि भद्रं ते ग्राम्यान् कामानभीप्ससे।**

**उद्वहिष्यामि तांस्तेऽहं स्वबन्धुभिररिन्दम॥ ३६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अरिन्दम** = हे शत्रुदमनकर्ता | **भद्रं** = कल्याण होस् | **तान्** = ती विषयभोग |
| **दिष्ट्या** = भाग्यले | **ग्राम्यान् कामान्** = जुन जुन विषयभोग | **अहं** = म |
| **आगतः** = आउनुभएको | **अभीप्ससे** = चाहनुहुन्छ | **स्वबन्धुभिः** = आफ्ना साथीहरूसहित भएर |
| **असि** = छ | **ते** = तपाईंलाई | **उद्वहिष्यामि** = पूरा गराउनेछु |
| **ते** = तपाईंको | | |

**वाक्यार्थ–** हे शत्रुदमनकर्ता ! तपाईं भाग्यले आउनुभएको छ। तपाईंको कल्याण होस्। जुन-जुन विषयभोग चाहनुहुन्छ तपाईंलाई ती विषयभोग म आफ्ना साथीहरूसहित भएर पूरा गराउनेछु।

**इमां त्वमधितिष्ठस्व पुरीं नवमुखीं विभो।**

**मयोपनीतान् गृह्णानः कामभोगान् शतं समाः॥ ३७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विभो** = हे प्रभु | **पुरीं** = नगरमा | **गृह्णानः** = भोग्दै |
| **त्वम्** = तपाईं | **मया** = मैले | **शतं समाः** = सयौं वर्षसम्म |
| **नवमुखीं** = नौ ढोका भएको | **उपनीतान्** = प्राप्त गराएका | **अधितिष्ठस्व** = निवास गर्नुहोस् |
| **इमां** = यस | **कामभोगान्** = विषयभोग | |

**वाक्यार्थ–** हे प्रभु ! तपाईं नौ ढोका भएको यस नगरमा मैले प्राप्त गराएका विषयभोग भोग्दै सयौं वर्षसम्म निवास गर्नुहोस्।

**कं नु त्वदन्यं रमये ह्यरतिज्ञमकोविदम्।**

**असम्परायाभिमुखमश्वस्तनविदं पशुम्॥ ३८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **त्वदन्यं** = तपाईंबाहेक अर्को | **अकोविदम्** = विहित भोगको विषयमा पनि ज्ञान नभएका | **पशुम्** = पशुतुल्य |
| **अरतिज्ञम्** = रतिसुख नजान्ने | **अश्वस्तनविदं** = भविष्यको विचार नगर्ने | **कं** = कुन व्यक्तिसित |
| **असम्परायाभिमुखम्** = परलोकको चिन्ताशून्य | | **नु हि** = निश्चय नै |
| | | **रमये** = रमण गरूँ |

**वाक्यार्थ–** तपाईंबाहेक अर्को कुन व्यक्तिसित रमण गरूँ जो रतिसुख जान्दैन, जो परलोकको

विषयमा चिन्ताशून्य छ, जसलाई गर्न हुने भोगको विषयमा पनि ज्ञान छैन, जो भविष्यको विचार पनि गर्दैन र जो पशुतुल्य छ।

**धर्मो ह्यत्रार्थकामौ च प्रजानन्दोऽमृतं यशः।**

**लोका विशोका विरजा यान् न केवलिनो विदुः॥ ३९॥**

पदार्थ–

**अत्र** = यस गृहस्थाश्रममा
**हि** = नै
**धर्मः** = धर्म,
**अर्थकामौ** = अर्थ, काम
**प्रजानन्दः** = सन्तान सुख
**अमृतं** = मोक्ष
**यशः** = कीर्ति
**विशोकाः** = आनन्ददायक
**विरजाः** = शुद्ध
**लोकाः च** = स्वर्ग आदि लोकको पनि प्राप्ति हुन्छ
**यान्** = जुन कुरा
**केवलिनः** = संसार त्याग्ने संन्यासीहरूले
**न विदुः** = प्राप्त गर्न सक्दैनन्

**वाक्यार्थ–** यस गृहस्थाश्रममा नै धर्म, अर्थ, काम, सन्तान सुख, मोक्ष, कीर्ति र आनन्ददायक शुद्ध स्वर्ग आदि लोकको प्राप्ति हुन्छ, जुन कुरा संसार त्याग्ने संन्यासीहरूले प्राप्त गर्न सक्दैनन्।

**पितृदेवर्षिमर्त्यानां भूतानामात्मनश्च ह।**

**क्षेम्यं वदन्ति शरणं भवेऽस्मिन् यद्गृहाश्रमः॥ ४०॥**

पदार्थ–

**अस्मिन्** = यस
**भवे** = संसारमा
**यद्गृहाश्रमः** = जुन गृहस्थाश्रम
**पितृदेवर्षिमर्त्यानां** = पितृ, देवता, ऋषि, मनुष्य
**भूतानाम्** = सम्पूर्ण प्राणी र
**आत्मनः च** = आफ्नो पनि
**ह** = निश्चय नै
**क्षेम्यं** = कल्याणको
**शरणं** = स्थान हो भनेर
**वदन्ति** = (महापुरुषहरू) भन्दछन्

**वाक्यार्थ–** यस संसारमा गृहस्थाश्रम पितृ, देवता, ऋषि, मनुष्य, सम्पूर्ण प्राणी र आफू स्वयंको पनि कल्याणको स्थान हो भनेर महापुरुषहरू भन्दछन्।

**का नाम वीर विख्यातं वदान्यं प्रियदर्शनम्।**

**न वृणीत प्रियं प्राप्तं मादृशी त्वादृशं पतिम्॥ ४१॥**

पदार्थ–

**वीर** = हे वीर
**मादृशी** = मजस्ती
**का नाम** = कुन स्त्री होली जसले
**प्राप्तं** = स्वयं प्राप्त भएको
**त्वादृशं** = तपाईंजस्तो
**विख्यातं** = सुप्रसिद्ध
**वदान्यं** = उदार
**प्रियदर्शनम्** = सुन्दर
**प्रियं** = प्रिय
**पतिम्** = पतिलाई
**न वृणीत** = वरण नगर्ली

**वाक्यार्थ–** हे वीर ! मजस्ती कुन स्त्री होली जसले स्वयं प्राप्त भएको तपाईंजस्तो सुप्रसिद्ध, उदार, सुन्दर र प्रिय पतिलाई वरण नगर्ली ।

**कस्या मनस्ते भुवि भोगिभोगयोः**
**स्त्रिया न सज्जेद् भुजयोर्महाभुज ।**
**योऽनाथवर्गाधिमलं घृणोद्धत-**
**स्मितावलोकेन चरत्यपोहितुम् ॥ ४२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **महाभुज** = हे महाबाहु (पराक्रमी राजा) | **कस्याः** = कुन | मुस्कानसहितको हेराइद्वारा |
| **भोगिभोगयोः** = सर्पको शरीरजस्तो सुडौल र कोमल | **स्त्रियाः** = स्त्रीको | **अनाथवर्गाधिमलं** = अनाथ-हरूको मानसिक सन्ताप |
| **ते** = तपाईंको | **मनः** = मन | **अपोहितुम्** = शान्त गर्न |
| **भुजयोः** = हातमा (स्थान पाउनको लागि) | **न सज्जेत्** = नलाग्ला | **भुवि** = यस पृथिवीमा |
| | **यः** = जो (तपाईं) | **चरति** = हिँड्नुहुन्छ |
| | **घृणोद्धतस्मितावलोकेन** = कृपापूर्ण र मन्द | |

**वाक्यार्थ–** हे पराक्रमी राजा ! सर्पको शरीरजस्तो सुडौल र कोमल तपाईंको हातमा स्थान पाउनको लागि कुन स्त्रीको मन नलाग्ला ? तपाईं त कृपापूर्ण र मन्द मुस्कानसहितको हेराइद्वारा अनाथहरूको मानसिक सन्ताप शान्त गर्न यस पृथिवीमा हिँड्नुहुन्छ ।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**इति तौ दम्पती तत्र समुद्य समयं मिथः ।**
**तां प्रविश्य पुरीं राजन् मुमुदाते शतं समाः ॥ ४३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राजन्** = हे राजा | **मिथः** = एक-अर्काको | **पुरीं** = नगरमा |
| **इति** = यसप्रकार | **समयं** = कुरा | **प्रविश्य** = प्रवेश गरी |
| **तौ दम्पती** = ती दुई स्त्रीपुरुषले | **समुद्य** = समर्थन गरेर | **शतं समाः** = सय वर्षसम्म |
| **तत्र** = त्यस बगैँचामा | **तां** = त्यस | **मुमुदाते** = आनन्दका साथ रहे |

**वाक्यार्थ–** हे राजा ! यसप्रकार ती दुई स्त्रीपुरुषले त्यस बगैँचामा एक-अर्काको कुरा समर्थन गरेर त्यस नगरमा प्रवेश गरी सय वर्षसम्म आनन्दका साथ रहे ।

**उपगीयमानो ललितं तत्र तत्र च गायकैः ।**
**क्रीडन् परिवृतः स्त्रीभिर्ह्रदिनीमाविशच्छुचौ ॥ ४४ ॥**

**पदार्थ–**

**तत्र तत्र** = जहाँतहीं
**गायकैः** = गायकहरूद्वारा
**ललितं** = सुमधुर स्वरमा
**उपगीयमानः** = (कीर्ति) गाइएका राजा पुरञ्जन
**शुचौ** = ग्रीष्म ऋतु आएपछि
**क्रीडन् च** = जलक्रीडाका लागि
**ह्रदिनीम्** = तलाउमा
**आविशत्** = प्रवेश गर्दथे

**वाक्यार्थ–** जहाँतहीं गायकहरूद्वारा सुमधुर स्वरमा कीर्ति गाइएका राजा पुरञ्जन ग्रीष्म ऋतु आएपछि जलक्रीडाका लागि तलाउमा प्रवेश गर्दथे।

**सप्तोपरि कृता द्वारः पुरस्तस्यास्तु द्वे अधः ।**
**पृथग्विषयगत्यर्थं तस्यां यः कश्चनेश्वरः ॥ ४५ ॥**

**पदार्थ–**

**तस्यां** = त्यस नगरमा
**यः कः च** = जो कोही
**ईश्वरः** = राजा हुन्छ उसलाई
**पृथग्विषयगत्यर्थं** = फरक-फरक ठाउँमा जानका लागि
**तस्याः** = त्यस
**पुरः** = नगरका
**उपरि** = माथि
**सप्त** = सात
**द्वारः** = ढोकाहरू
**कृताः** = बनाइएका थिए र
**अधः** = तल
**तु** = चाहिँ
**द्वे** = दुईओटा थिए

**वाक्यार्थ–** त्यस नगरमा रहने राजालाई फरक-फरक ठाउँमा जानका लागि माथि सात र तल दुईओटा गरी नौओटा ढोका बनाइएका थिए।

**पञ्च द्वारस्तु पौरस्त्या दक्षिणैका तथोत्तरा ।**
**पश्चिमे द्वे अमूषां ते नामानि नृप वर्णये ॥ ४६ ॥**

**पदार्थ–**

**नृप** = हे राजा (ती नौओटा ढोकामध्ये)
**पञ्च** = पाँचओटा
**द्वारः तु** = ढोका चाहिँ
**पौरस्त्याः** = पूर्व
**एका** = एउटा
**दक्षिणा** = दक्षिण
**तथा** = त्यस्तै
**उत्तरा** = एउटा उत्तर र
**द्वे** = दुई ओटा
**पश्चिमे** = पश्चिमतर्फ फर्केका थिए
**ते** = तपाईंलाई
**अमूषां** = यिनका
**नामानि** = नामहरू
**वर्णये** = बताउँछु

**वाक्यार्थ–** हे राजा ! ती नौओटा ढोकामध्ये पाँचओटा ढोका चाहिँ पूर्व, एउटा दक्षिण, एउटा

उत्तर र दुईओटा पश्चिमतर्फ फर्केका थिए। तपाईंलाई यिनका नामहरू बताउँछु।

**खद्योताविर्मुखी च प्राग्द्वारावेकत्र निर्मिते।**

**विभ्राजितं जनपदं याति ताभ्यां द्युमत्सखः॥ ४७॥**

**पदार्थ–**

**एकत्र** = एकै ठाउँमा
**निर्मिते** = बनाइएका
**प्राग्द्वारौ** = पूर्वका ढोका
**खद्योताविर्मुखी** = खद्योत र आविर्मुखी हुन्
**ताभ्यां** = ती दुई ढोकाबाट
**द्युमत्सखः** = द्युमान् नामका मित्रका साथ राजा पुरञ्जन
**विभ्राजितं** = विभ्राजित नामको
**जनपदं च** = देशमा
**याति** = जान्छन्

**वाक्यार्थ–** एकै ठाउँमा बनाइएका पूर्वका ढोका खद्योत र आविर्मुखी हुन्। ती दुई ढोकाबाट द्युमान् नामका मित्रका साथ राजा पुरञ्जन विभ्राजित नामको देशमा जान्छन्।

**नलिनी नालिनी च प्राग्द्वारावेकत्र निर्मिते।**

**अवधूतसखस्ताभ्यां विषयं याति सौरभम्॥ ४८॥**

**पदार्थ–**

**एकत्र** = एकै ठाउँमा
**निर्मिते** = बनाइएका
**प्राग्द्वारौ** = पूर्वका ढोका
**नलिनी** = नलिनी र
**नालिनी च** = नालिनी हुन्
**ताभ्यां** = ती दुई ढोकाबाट
**अवधूतसखः** = अवधूत नामका मित्रका साथ राजा पुरञ्जन
**सौरभम्** = सौरभ
**विषयं** = देशमा
**याति** = जान्छन्

**वाक्यार्थ–** एकै ठाउँमा बनाइएका पूर्वका ढोका नलिनी र नालिनी हुन्। ती दुई ढोकाबाट अवधूत नामका मित्रका साथ राजा पुरञ्जन सौरभ नामको देशमा जान्छन्।

**मुख्या नाम पुरस्ताद् द्वास्तयापणबहूदनौ।**

**विषयौ याति पुरराड् रसज्ञविपणान्वितः॥ ४९॥**

**पदार्थ–**

**पुरस्तात्** = पूर्वतर्फ
**मुख्या** = मुख्या
**नाम** = नामको
**द्वाः** = ढोका छ
**तया** = त्यो ढोकाबाट
**पुरराट्** = राजा पुरञ्जन
**रसज्ञविपणान्वितः** = रसज्ञ र विपण नामका मित्रका साथ
**आपणबहूदनौ** = आपण र बहूदन नामका
**विषयौ** = देशमा
**याति** = जान्छन्

**वाक्यार्थ–** पूर्वतर्फ मुख्या नामको ढोका छ। त्यस ढोकाबाट राजा पुरञ्जन रसज्ञ र विपण नामका मित्रका साथ आपण र बहूदन नामका देशमा जान्छन्।

**दुहितृः पुत्रपौत्रांश्च जामिजामातृपार्षदान्।**
**स्वत्वावशिष्टं यत्किञ्चिद् गृहकोशपरिच्छदम्॥ १६॥**
**अहं ममेति स्वीकृत्य गृहेषु कुमतिर्गृही।**
**दध्यौ प्रमदया दीनो विप्रयोग उपस्थिते॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रमदया** = पत्नी आदिबाट | **अहं मम इति** = म र मेरो भन्ने भावना | **यत्किञ्चित्** = जे जति |
| **विप्रयोगे** = वियोग | **स्वीकृत्य** = लिएर | **स्वत्वावशिष्टं** = ममत्वले भरिएका |
| **उपस्थिते** = हुन लाग्दा | **दुहितृः** = छोरी | **गृहकोशपरिच्छदम् च** = घर, खजाना र घरका सामग्रीहरू थिए (तिनीहरूका बारेमा पनि) |
| **गृही** = गृहासक्त | **पुत्रपौत्रान्** = छोरा, नाति | **दध्यौ** = चिन्ता गर्न लागे |
| **दीनः** = दुःखी | **जामिजामातृपार्षदान्** = बुहारी, ज्वाइँ, सेवक आदि | |
| **कुमतिः** = बुद्धिहीन (पुरञ्जन) | | |
| **गृहेषु** = गृह आदिमा | | |

**वाक्यार्थ–** पत्नी आदिबाट वियोग हुन लाग्दा गृहासक्त, दुःखी एवं बुद्धिहीन पुरञ्जन शरीर, घर आदिमा म र मेरो भन्ने भावना लिएर छोरी, छोरा, नाति, बुहारी, ज्वाइँ, सेवक एवं जे-जति ममत्वले भरिएका घर, खजाना र घरका सामग्रीहरू थिए, तिनीहरूका बारेमा चिन्ता गर्न लागे।

**लोकान्तरं गतवति मय्यनाथा कुटुम्बिनी।**
**वर्तिष्यते कथं त्वेषा बालकाननुशोचती॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मयि** = म | **अनाथा** = असहाय भएकी | **अनुशोचती** = चिन्ता गर्दै |
| **लोकान्तरं** = परलोक | **कुटुम्बिनी** = मेरी पत्नी | **कथं तु** = कसरी चाहिँ |
| **गतवति** = गएपछि | **बालकान्** = बालकहरूको बारेमा | **वर्तिष्यते** = रहलिन् |
| **एषा** = यी | | |

**वाक्यार्थ–** म परलोक गएपछि यी असहाय भएकी मेरी पत्नी बालकहरूको बारेमा चिन्ता गर्दै कसरी रहलिन् ?

**न मय्यनाशिते भुङ्क्ते नास्नाते स्नाति मत्परा।**
**मयि रुष्टे सुसन्त्रस्ता भर्त्सिते यतवाग् भयात्॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मत्परा** = मलाई सर्वस्व ठान्ने | (यी मेरी पत्नी) | **मयि** = मैले |

| | | |
|---|---|---|
| **अनाशिते** = नखाँदा | **मयि** = म | **भर्त्सिते** = गाली गर्दा |
| **न भुङ्क्ते** = खान्नन् | **रुष्टे** = रिसाउँदा | **भयात्** = डरले |
| **अस्नाते** = ननुहाउँदा | **सुसन्त्रस्ता** = अत्यन्त भयभीत हुन्छिन् | **यतवाक्** = बोली नियन्त्रण गर्दछिन् |
| **न स्नाति** = नुहाउँदिनन् | | |

**वाक्यार्थ–** मलाई सर्वस्व ठान्ने यी मेरी पत्नी मैले नखाँदा खान्नन्, ननुहाउँदा नुहाउँदिनन्, म रिसाउँदा अत्यन्त भयभीत हुन्छिन्, गाली गर्दा डरले चुप लाग्छिन्।

**प्रबोधयति माविज्ञं व्युषिते शोककर्शिता।**
**वर्त्मैतद् गृहमेधीयं वीरसूरपि नेष्यति॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मा** = मैले | **शोककर्शिता** = मेरो वियोगजन्य शोकले दुब्लाउँछिन् | **गृहमेधीयं वर्त्म** = गृहस्थाश्रमको मार्ग (व्यवहार) |
| **अविज्ञं** = नजान्दा (बिर्सँदा) | **वीरसूः** = वीर पुत्र जन्माइसकेकी भए पनि (म विना) | **नेष्यति** = लैजानेछिन् (चलाउलिन्) |
| **प्रबोधयति** = बुझाउँछिन् (सम्झाउँछिन्) | **एतत्** = (कसरी) यो | |
| **व्युषिते** = विदेश जाँदा | | |

**वाक्यार्थ–** मैले केही कुरा बिर्सँदा सम्झाउँछिन्। म विदेश जाँदा मेरो वियोगजन्य शोकले दुब्लाउँछिन्। वीर पुत्र जन्माइसकेकी भए पनि म विना यी मेरी पत्नीले कसरी यो गृहस्थाश्रमको व्यवहार चलाउलिन् ?

**कथं नु दारका दीना दारकीर्वा परायणाः।**
**वर्तिष्यन्ते मयि गते भिन्ननाव इवोदधौ॥ २१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मयि** = म | **दारकाः** = छोरा | **दीनाः इव** = दुःखी भएका व्यक्ति झैं |
| **गते** = गइसकेपछि | **दारकीः** = छोरी | **कथं नु वा** = कसरी |
| **परायणाः** = अर्काको आश्रयमा रहेका | **उदधौ** = समुद्रको माझमा | **वर्तिष्यन्ते** = रहलान् |
| | **भिन्ननावः** = डुङ्गा भत्किँदा | |

**वाक्यार्थ–** म परलोक गइसकेपछि मेरो आश्रयमा रहेका छोरा र छोरीहरू समुद्रको माझमा डुङ्गा भत्किँदा दुःखी भएका व्यक्ति झैं कसरी रहलान् ?

**एवं कृपणया बुद्ध्या शोचन्तमतदर्हणम्।**
**ग्रहीतुं कृतधीरेनं भयनामाभ्यपद्यत॥ २२॥**

पदार्थ–

**एवं** = यसप्रकार
**कृपणया बुद्ध्या** = मोहित बुद्धिले
**शोचन्तम्** = चिन्ता गरिरहेका (तर राजा भएकाले)
**अतदर्हणम्** = चिन्ता गर्न योग्य नभएका
**एनं** = यी राजा पुरञ्जनलाई
**ग्रहीतुं** = लानका लागि
**कृतधीः** = निश्चय गरी
**भयनामा** = भय नामको यवनराजा
**अभ्यपद्यत** = आइपुग्यो

**वाक्यार्थ–** यसप्रकार बुद्धि मोहित भएर चिन्ता गरिरहेका तर राजा भएकाले वास्तवमा चिन्ता गर्न योग्य नभएका राजा पुरञ्जनलाई लैजान भय नामको यवनराजा आइपुग्यो।

**पशुवद् यवनैरेष नीयमानः स्वकं क्षयम्।**
**अन्वद्रवन्ननुपथाः शोचन्तो भृशमातुराः॥ २३॥**

पदार्थ–

**यवनैः** = यवनहरूद्वारा
**पशुवत्** = पशुजस्तै गरी
**एषः** = यी राजा पुरञ्जन
**स्वकं** = आफ्नो
**क्षयम्** = स्थानमा
**नीयमानः** = लान लागिए (त्यस वेला)
**अनुपथाः** = यिनका अनुचरहरू
**भृशम्** = अत्यन्त
**आतुराः** = व्याकुल भएर
**शोचन्तः** = चिन्ता गर्दै
**अन्वद्रवन्** = पछि लागे

**वाक्यार्थ–** जब यवनहरूद्वारा पशुजस्तै गरी बाँधिएर यी राजा पुरञ्जन आफ्नो स्थानमा लान लागिए त्यस वेला यिनका अनुचरहरू अत्यन्त व्याकुल भएर चिन्ता गर्दै पछि लागे।

**पुरीं विहायोपगत उपरुद्धो भुजङ्गमः।**
**यदा तमेवानु पुरी विशीर्णा प्रकृतिं गता॥ २४॥**

पदार्थ–

**उपरुद्धः** = यवनद्वारा रोकिएको
**भुजङ्गमः** = नाग
**यदा** = जब
**पुरीं** = नगर
**विहाय** = छोडेर
**उपगतः** = बाहिर निस्क्यो (तब)
**तम् एव अनु** = त्यही नाग सँगसँगै
**पुरी** = नगर
**विशीर्णा** = छिन्न-भिन्न भएर
**प्रकृतिं** = प्रकृति (आफ्नो कारण पृथिवी आदि)मा
**गता** = लीन भयो

**वाक्यार्थ–** पहिले यवनद्वारा रोकिएको नाग जब नगर छोडेर बाहिर निस्क्यो त्यही नाग सँगसँगै नगर छिन्नभिन्न भएर आफ्नो कारण पृथिवी आदिमा लीन भयो।

**विकृष्यमाणः प्रसभं यवनेन बलीयसा।**
**नाविन्दत् तमसाविष्टः सखायं सुहृदं पुरः॥ २५॥**

पदार्थ–

**बलीयसा** = बलियो
**यवनेन** = यवनद्वारा
**प्रसभं** = बलपूर्वक
**विकृष्यमाणः** = तानिएका राजा पुरञ्जनले
**तमसा** = अज्ञानले
**आविष्टः** = ग्रस्त भएर
**पुरः** = पहिलेका (आफ्नै)
**सखायं** = साथी
**सुहृदं** = मित्र
**न अविन्दत्** = (थाहा पाएनन् (सम्झन सकेनन्)

**वाक्यार्थ–** बलियो यवनद्वारा बलपूर्वक तानिएका राजा पुरञ्जनले अज्ञानवश पहिलेका आफ्नै साथी र मित्रलाई सम्झन सकेनन्।

**तं यज्ञपशवोऽनेन संज्ञप्ता येऽदयालुना।**
**कुठारैश्चिच्छिदुः क्रुद्धाः स्मरन्तोऽमीवमस्य तत्॥ २६॥**

पदार्थ–

**अदयालुना** = निर्दयी
**अनेन** = यी राजा पुरञ्जनद्वारा
**ये** = जुन
**यज्ञपशवः** = यज्ञपशुहरू
**संज्ञप्ताः** = बलि दिइएका थिए
**क्रुद्धाः** = रिसाएका (ती पशुहरूले)
**अस्य** = यी राजा पुरञ्जनले दिएको
**तत्** = त्यस
**अमीवम्** = पीडालाई
**स्मरन्तः** = सम्झँदै
**तं** = तिनलाई
**कुठारैः** = बन्चराले
**चिच्छिदुः** = काट्न लागे

**वाक्यार्थ–** निर्दयी यी राजा पुरञ्जनद्वारा जुन यज्ञपशुहरू मारिएका थिए ती रिसाएका पशुहरूले राजा पुरञ्जनले दिएको त्यस पीडालाई सम्झँदै तिनलाई बन्चराले काट्न लागे।

**अनन्तपारे तमसि मग्नो नष्टस्मृतिः समाः।**
**शाश्वतीरनुभूयार्तिं प्रमदासङ्गदूषितः॥ २७॥**
**तामेव मनसा गृह्णन् बभूव प्रमदोत्तमा।**
**अनन्तरं विदर्भस्य राजसिंहस्य वेश्मनि॥ २८॥**

पदार्थ–

**प्रमदासङ्गदूषितः** = स्त्रीको आसक्तिबाट दुर्गति प्राप्त गरेका
**नष्टस्मृतिः** = स्मरण शक्ति नष्ट भएका राजा पुरञ्जनले
**अनन्तपारे** = अपार
**तमसि** = अन्धकारमा
**मग्नः** = डुबेर
**शाश्वतीः** = अनन्त
**समाः** = वर्षसम्म
**आर्तिं** = पीडाको
**अनुभूय** = अनुभव गरेर
**ताम् एव** = तिनै स्त्रीलाई
**मनसा** = मनले
**गृह्णन्** = ग्रहण गर्दै (सम्झँदै)
**अनन्तरं** = अर्को जन्ममा
**विदर्भस्य** = विदर्भ देशका
**राजसिंहस्य** = राजाको
**वेश्मनि** = घरमा

**प्रमदोत्तमा** = सुन्दरी कन्याको रूपमा
**बभूव** = उत्पन्न भए

**वाक्यार्थ–** स्त्रीको आसक्तिबाट दुर्गति प्राप्त गरेका र स्मरणशक्ति कमजोर भएका राजा पुरञ्जन अपार अन्धकारमा डुबेर अनन्त वर्षसम्म पीडाको अनुभव गर्दा पनि तिनै स्त्रीलाई मनले सम्झेकाले अर्को जन्ममा विदर्भ देशका राजाको घरमा सुन्दरी कन्याको रूपमा उत्पन्न भए।

**उपयेमे वीर्यपणां वैदर्भीं मलयध्वजः।**
**युधि निर्जित्य राजन्यान् पाण्ड्यः परपुरञ्जयः॥ २९॥**

पदार्थ–

**परपुरञ्जयः** = शत्रुनगर विजेता
**पाण्ड्यः** = पाण्ड्य देशका राजा
**मलयध्वजः** = मलयध्वजले
**युधि** = युद्धमा
**राजन्यान्** = अरू राजाहरूलाई
**निर्जित्य** = जितेर
**वीर्यपणां** = शक्तिलाई नै विवाहको सर्तका रूपमा राखिएकी
**वैदर्भीं** = विदर्भपुत्री ती सुन्दरीलाई
**उपयेमे** = विवाह गरे

**वाक्यार्थ–** शत्रुनगर विजेता पाण्ड्य देशका राजा मलयध्वजले युद्धमा अरू राजाहरूलाई जितेर शक्तिलाई नै विवाहको सर्तका रूपमा राखिएकी विदर्भपुत्री ती सुन्दरीलाई विवाह गरे।

**तस्यां स जनयाञ्चक्र आत्मजामसितेक्षणाम्।**
**यवीयसः सप्त सुतान् सप्त द्रविडभूभृतः॥ ३०॥**

पदार्थ–

**सः** = ती राजा मलयध्वजले
**तस्यां** = ती सुन्दरीबाट
**असितेक्षणाम्** = कालाकाला आँखा भएकी
**आत्मजाम्** = छोरी
**यवीयसः** = (तिनीभन्दा) कान्छा
**सप्त** = सात
**सुतान्** = छोरा
**जनयाञ्चक्रे** = जन्माए (तिनीहरू)
**सप्त** = सातै जना
**द्रविडभूभृतः** = द्रविड देशका राजा भए

**वाक्यार्थ–** ती राजा मलयध्वजले ती सुन्दरीबाट कालाकाला आँखा भएकी छोरी र तिनीभन्दा कान्छा सात छोरा जन्माए। तिनीहरू सातै जना द्रविड देशका राजा भए।

**एकैकस्याभवत् तेषां राजन्नर्बुदमर्बुदम्।**
**भोक्ष्यते यद्वंशधरैर्मही मन्वन्तरं परम्॥ ३१॥**

पदार्थ–

**राजन्** = हे राजा प्राचीनबर्हि
**तेषां** = ती सात जना राजामध्ये
**एकैकस्य** = एउटा-एउटा छोराका
**अर्बुदम् अर्बुदम्** = दश-दश करोड (धेरै धेरै) छोराको जन्म

| | | |
|---|---|---|
| **अभवत्** = भयो | **मही** = पृथिवी | **भोक्ष्यते** = भोग गरिनेछिन् |
| **यद्वंशधरैः** = जसका वंशधरहरूद्वारा | **परम्** = अन्तिम | |
| | **मन्वन्तरं** = मन्वन्तरसम्म | |

**वाक्यार्थ–** हे राजा प्राचीनबर्हि ! ती सात जना राजामध्ये एउटा-एउटा छोराकै धेरै-धेरै छोरा भए, तिनकै वंशजहरूद्वारा अन्तिम मन्वन्तरसम्म पृथिवी भोग गरिनेछिन्।

**अगस्त्यः प्राग्दुहितरमुपयेमे धृतव्रताम्।**
**यस्यां दृढच्युतो जात इध्मवाहात्मजो मुनिः॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अगस्त्यः** = अगस्त्य ऋषिले | पहिली छोरीलाई | नामका मुनि |
| **धृतव्रताम्** = शम दम आदि व्रत लिएकी | **उपयेमे** = विवाह गरे | **जातः** = जन्मिए |
| | **यस्यां** = जसबाट | **इध्मवाहात्मजः** = जसको छोराको रूपमा इध्मवाह जन्मिए |
| **प्राग्दुहितरम्** = मलयध्वजकी | **दृढच्युतः मुनिः** = दृढच्युत | |

**वाक्यार्थ–** अगस्त्य ऋषिले मलयध्वजकी पहिली छोरी व्रतशीलासित विवाह गरे। तिनबाट दृढच्युत नामका मुनि जन्मिए र तिनका पनि छोराको रूपमा इध्मवाह जन्मिए।

**विभज्य तनयेभ्यः क्ष्मां राजर्षिर्मलयध्वजः।**
**आरिराधयिषुः कृष्णं स जगाम कुलाचलम्॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कृष्णं** = भगवान् श्रीकृष्णको | **राजर्षिः** = राजर्षि | **विभज्य** = भाग लगाइदिएर |
| **आरिराधयिषुः** = आराधना गर्ने इच्छा लिई | **मलयध्वजः** = मलयध्वजले | **कुलाचलम्** = कुलपर्वत (मलयपर्वत)मा |
| | **तनयेभ्यः** = छोराहरूलाई | |
| **सः** = ती | **क्ष्मां** = पृथिवी | **जगाम** = गए |

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको आराधना गर्ने इच्छा लिई ती राजर्षि मलयध्वजले छोराहरूलाई पृथिवी भाग लगाइदिएर मलयपर्वतमा गए।

**हित्वा गृहान् सुतान् भोगान् वैदर्भी मदिरेक्षणा।**
**अन्वधावत पाण्ड्येशं ज्योत्स्नेव रजनीकरम्॥ ३४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मदिरेक्षणा** = मदिराले झैं उन्मत्त गराउने आँखा भएकी | **वैदर्भी** = विदर्भपुत्री पनि | **सुतान्** = छोरा |
| | **गृहान्** = घर | **भोगान्** = सम्पूर्ण भोग |

**हित्वा** = परित्याग गरी
**ज्योत्स्ना** = चन्द्र-किरणले
**रजनीकरम् इव** = चन्द्रमालाई जस्तै
**पाण्ड्येशं** = पाण्ड्य नरेश मलयध्वजको
**अन्वधावत** = पछि लागिन्

**वाक्यार्थ–** मदिराले झैं उन्मत्त गराउने आँखा भएकी विदर्भपुत्री पनि घर, छोरा र सम्पूर्ण भोगको परित्याग गरी चन्द्र-किरणले चन्द्रमालाई पछ्याएजस्तै पाण्ड्य नरेश मलयध्वजको पछि लागिन्।

**तत्र चन्द्रवसा नाम ताम्रपर्णी वटोदका।**
**तत्पुण्यसलिलैर्नित्यमुभयत्रात्मनो मृजन्॥ ३५॥**
**कन्दाष्टिभिर्मूलफलैः पुष्पपर्णैस्तृणोदकैः।**
**वर्तमानः शनैर्गात्रकर्शनं तप आस्थितः॥ ३६॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**चन्द्रवसा** = चन्द्रवसा
**ताम्रपर्णी** = ताम्रपर्णी
**वटोदका** = वटोदका
**नाम** = नामका (तीन नदी थिए)
**तत्पुण्यसलिलैः** = ती नदीका पवित्र जलद्वारा
**नित्यम्** = सधैं
**उभयत्र** = दुबैतिर (आन्तरिक र बाह्य)को
**आत्मनः** = आफ्नो (मल)
**मृजन्** = पखाल्दै
**कन्दाष्टिभिः** = कन्द, बीज
**मूलफलैः** = मूल, फल
**पुष्पपर्णैः** = फूल, पात
**तृणोदकैः** = घाँस र जलद्वारा
**वर्तमानः** = जीवन निर्वाह गर्दै (मलयध्वजले)
**शनैः** = बिस्तारै-बिस्तारै
**गात्रकर्शनं** = शरीर सुकाउने किसिमको
**तपः** = तपस्या
**आस्थितः** = गरे

**वाक्यार्थ–** त्यहाँ चन्द्रवसा, ताम्रपर्णी र वटोदका नामका तीन नदी थिए। ती नदीका पवित्र जलले सधैं आफ्नो शरीरको आन्तरिक र बाह्य मल पखाल्दै एवं कन्द, बीज, मूल, फल, फूल, पात, घाँस र जलद्वारा जीवन निर्वाह गर्दै मलयध्जले बिस्तारै-बिस्तारै शरीर सुकाउने किसिमको तपस्या गरे।

**शीतोष्णवातवर्षाणि क्षुत्पिपासे प्रियाप्रिये।**
**सुखदुःखे इति द्वन्द्वान्यजयत् समदर्शनः॥ ३७॥**

**पदार्थ–**
**समदर्शनः** = समदर्शी ती मलयध्वजले
**शीतोष्णवातवर्षाणि** = चिसो-तातो, हावा-वर्षा
**क्षुत्पिपासे** = भोक-प्यास
**प्रियाप्रिये** = प्रिय-अप्रिय
**सुखदुःखे** = सुख-दुःख
**इति** = यी सबै किसिमका
**द्वन्द्वानि** = द्वन्द्वहरूलाई

**अजयत्** = जिते

**वाक्यार्थ–** समदर्शी ती मलयध्वजले चिसो-तातो, हावा-वर्षा, भोक-प्यास, प्रिय-अप्रिय र सुख-दुःख यी सबै किसिमका द्वन्द्वहरूलाई जिते।

**तपसा विद्यया पक्वकषायो नियमैर्यमैः।**

**युयुजे ब्रह्मण्यात्मानं विजिताक्षानिलाशयः॥ ३८॥**

पदार्थ–

**तपसा** = तपस्या
**विद्यया** = विद्याद्वारा
**पक्वकषायः** = गेरु आदि रङ्गजस्तै हट्न नसक्ने काम, क्रोध आदि वासना डढाएर (निर्मूल पारेर)
**यमैः नियमैः** = यम र नियमद्वारा
**विजिताक्षानिलाशयः** = प्राण र मनलाई जितेर (वशमा गरेर)
**आत्मानं** = आत्मा (आफू)लाई
**ब्रह्मणि** = ब्रह्म (परमात्मा)मा
**युयुजे** = मिलाए

**वाक्यार्थ–** तपस्या र विद्याद्वारा गेरु आदि रङ्गजस्तै हट्न नसक्ने काम, क्रोध आदि वासना निर्मूल पारेर एवं यम र नियमद्वारा प्राण र मनलाई वशमा गरेर उनले आफू (आत्मा)लाई ब्रह्म (परमात्मा)मा मिलाए अर्थात् आत्मा र परमात्माको एकत्वको अनुभव गरे।

**आस्ते स्थाणुरिवैकत्र दिव्यं वर्षशतं स्थिरः।**

**वासुदेवे भगवति नान्यद् वेदोद्वहन् रतिम्॥ ३९॥**

पदार्थ–

**दिव्यं** = (यसप्रकार) दिव्य
**वर्षशतं** = सय वर्षसम्म
**स्थाणुः इव** = ठुटो झैँ
**स्थिरः** = निश्चल भएर
**एकत्र** = एउटै ठाउँमा
**आस्ते** = रहे
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**रतिम्** = सुदृढ प्रेम
**उद्वहन्** = धारण गरेर (भएपछि)
**अन्यत्** = अरू देह आदि प्रपञ्च
**न वेद** = जानेनन् (बिर्से)

**वाक्यार्थ–** यसप्रकार दिव्य सय वर्षसम्म उनी ठुटो झैँ निश्चल भएर एउटै ठाउँमा बसिरहे, भगवान् वासुदेवमा सुदृढ प्रेम भएपछि उनले अरू देह आदि प्रपञ्च बिर्से।

**स व्यापकतयात्मानं व्यतिरिक्ततयात्मनि।**

**विद्वान् स्वप्न इवामर्शसाक्षिणं विरराम ह॥ ४०॥**

**साक्षाद् भगवतोक्तेन गुरुणा हरिणा नृप।**

**विशुद्धज्ञानदीपेन स्फुरता विश्वतोमुखम्॥ ४१॥**

पदार्थ–

**नृप** = हे राजा
**सः** = ती मलयध्वजले
**गुरुणा** = गुरुरूप
**साक्षात्** = साक्षात्
**भगवता** = भगवान्
**हरिणा** = श्रीहरिद्वारा
**उक्तेन** = बताइएको उपदेश र
**विश्वतोमुखम्** = अन्तःकरणमा सबैतिर
**स्फुरता** = स्फुरित भएको
**विशुद्धज्ञानदीपेन** = विशुद्ध ज्ञान दीपद्वारा
**आत्मनि** = आफूमा रहेको
**आमर्शसाक्षिणं** = अन्तःकरणको वृत्तिको प्रकाशक
**आत्मानं** = आत्मालाई
**स्वप्ने इव** = स्वप्नमा (स्वप्नमा देखिएको वस्तु) झैं
**व्यतिरिक्ततया** = देह आदिबाट भिन्न र
**व्यापकतया** = व्यापक रूपमा रहेको
**विद्वान्** = जानेर
**ह** = निश्चय नै
**विरराम** = रोकिए (अन्य सांसारिक वस्तुबाट विरक्त भए)

**वाक्यार्थ–** हे राजा ! ती मलयध्वजले गुरुरूप साक्षात् भगवान् श्रीहरिद्वारा बताइएको उपदेश र अन्तःकरणमा सबैतिर स्फुरित भएको विशुद्ध ज्ञानदीपद्वारा आफूमा रहेको अन्तःकरणका वृत्तिको प्रकाशक आत्मालाई स्वप्नमा देखिएको वस्तु झैं देहादिबाट भिन्न र व्यापक रूपमा रहेको जानेर अन्य सांसारिक वस्तुबाट विरक्त भए।

**परे ब्रह्मणि चात्मानं परं ब्रह्म तथात्मनि।**
**वीक्षमाणो विहायेक्षामस्मादुपरराम ह ॥ ४२ ॥**

पदार्थ–
**आत्मानं** = (यसप्रकार) आत्मालाई
**परे ब्रह्मणि** = परब्रह्ममा
**तथा** = त्यस्तै
**परं ब्रह्म च** = परब्रह्मलाई
**आत्मनि** = आफूमा रहेको
**वीक्षमाणः** = देखेर (अन्तमा)
**ईक्षाम्** = देख्ने कार्यलाई पनि
**विहाय** = त्यागेर
**अस्मात्** = यस संसारबाट
**ह** = निश्चय नै
**उपरराम** = शान्त भए (बिदा भए)

**वाक्यार्थ–** यसप्रकार आत्मालाई परब्रह्ममा र त्यस्तै परब्रह्मलाई आफूमा अभिन्न रूपले रहेको देखेर अन्तमा देख्ने कार्यलाई पनि त्यागेर उनी यस संसारबाट बिदा भए।

**पतिं परमधर्मज्ञं वैदर्भी मलयध्वजम्।**
**प्रेम्णा पर्यचरद्धित्वा भोगान् सा पतिदेवता ॥ ४३ ॥**

पदार्थ–
**पतिदेवता** = पतिलाई नै देवता मान्ने
**सा** = ती
**वैदर्भी** = वैदर्भी
**भोगान्** = सम्पूर्ण किसिमका भोगलाई
**हित्वा** = छोडेर
**परमधर्मज्ञं** = परम धर्मज्ञ
**पतिं** = पति

**मलयध्वजम्** = मलयध्वजको
**प्रेम्णा** = प्रेमपूर्वक
**पर्यचरत्** = सेवा गर्दथिन्

**वाक्यार्थ–** पतिलाई नै देवता मान्ने ती वैदर्भी पनि सम्पूर्ण किसिमका भोगलाई छोडेर परम धर्मज्ञ पति मलयध्वजको प्रेमपूर्वक सेवा गर्दथिन्।

**चीरवासा व्रतक्षामा वेणीभूतशिरोरुहा।**

**बभावुपपतिं शान्ता शिखा शान्तमिवानलम्॥ ४४॥**

**पदार्थ–**

**चीरवासा** = पुराना वस्त्र लगाएकी
**व्रतक्षामा** = व्रतका कारण दुब्ली
**वेणीभूतशिरोरुहा** = कपालमा लट्टा परेकी वैदर्भी
**उपपतिं** = पतिको नजिकै
**शान्तम्** = (धुवाँ नहुनाले) शान्त भएका
**अनलम्** = आगोसँग
**शान्ता** = शान्त भएर रहेकी
**शिखा इव** = ज्वाला जस्तै
**बभौ** = सुशोभित भइन्

**वाक्यार्थ–** पुराना वस्त्र लगाएकी, व्रतका कारण दुब्ली एवं कपालमा लट्टा परेकी वैदर्भी पतिको नजिकै रहँदा धुवाँ नहुनाले शान्त भएका आगोसँग शान्त भएर रहेकी ज्वाला जस्तै सुशोभित भइन्।

**अजानती प्रियतमं यदोपरतमङ्गना।**

**सुस्थिरासनमासाद्य यथापूर्वमुपाचरत्॥ ४५॥**

**पदार्थ–**

**अङ्गना** = ती स्त्री (वैदर्भी)ले
**यदा** = जुन वेला
**अजानती** = पति दिवङ्गत भइसकेको थाहा नपाएर
**सुस्थिरासनम्** = स्थिर आसनमा रहेका
**प्रियतमं** = प्रिय पतिसमक्ष
**आसाद्य** = पुगेर
**यथापूर्वम्** = पहिले जस्तै गरी
**उपाचरत्** = सेवा गरिन्

**वाक्यार्थ–** वैदर्भीले त्यस वेला पति दिवङ्गत भइसकेको थाहा नपाएर स्थिर आसनमा रहेका प्रिय पतिसमक्ष पुगेर पहिले जस्तै गरी उनको सेवा गरिन्।

**यदा नोपलभेताङ्घ्रावूष्माणं पत्युरर्चती।**

**आसीत् संविग्नहृदया यूथभ्रष्टा मृगी यथा॥ ४६॥**

**पदार्थ–**

**अर्चती** = चरणसेवामा लागिरहेकी ती वैदर्भीले
**यदा** = जुन वेला
**पत्युः** = पतिको
**अङ्घ्रौ** = चरणमा
**ऊष्माणं** = तातोपन
**न उपलभेत** = पाइनन् (त्यस वेला)
**यथा** = जसरी

**यूथभ्रष्टा** = बथानबाट छुटेकी
**मृगी** = मृगी हुन्छे त्यसरी
**संविग्नहृदया** = अत्यन्त व्याकुल
**आसीत्** = भइन्

**वाक्यार्थ–** पतिको चरणसेवामा लागिरहेकी ती वैदर्भीले जुन वेला उनको चरणमा तातोपन पाइनन् त्यस वेला बथानबाट छुटेकी मृगी झैँ अत्यन्त व्याकुल भइन्।

**आत्मानं शोचती दीनमबन्धुं विक्लवाश्रुभिः।**
**स्तनावासिच्य विपिने सुस्वरं प्ररुरोद सा ॥ ४७ ॥**

**पदार्थ–**

**विपिने** = त्यस जङ्गलमा
**आत्मानं** = आफूलाई
**अबन्धुं** = बन्धुबान्धवहीन र
**दीनम्** = दुःखी
**शोचती** = (देखेर) शोकाकुल भएकी
**सा** = ती वैदर्भीले
**विक्लवाश्रुभिः** = शोकाश्रुले
**स्तनौ** = स्तन
**आसिच्य** = भिजाएर
**सुस्वरं** = आवाजका साथ (बेसरी)
**प्ररुरोद** = रुन लागिन्

**वाक्यार्थ–** त्यस जङ्गलमा आफूलाई बन्धुबान्धवहीन र दुःखी देखेर शोकाकुल भएकी ती वैदर्भी शोकाश्रुले स्तन भिजाउँदै बेसरी रुन लागिन्।

**उत्तिष्ठोत्तिष्ठ राजर्षे इमामुदधिमेखलाम्।**
**दस्युभ्यः क्षत्रबन्धुभ्यो बिभ्यतीं पातुमर्हसि ॥ ४८ ॥**

**पदार्थ–**

**राजर्षे** = हे राजर्षि
**उत्तिष्ठ उत्तिष्ठ** = उठ्नुहोस् उठ्नुहोस्
**दस्युभ्यः** = चोर
**क्षत्रबन्धुभ्यः** = क्षत्रियबन्धु (राजाहरू)बाट
**बिभ्यतीं** = डराइरहेकी
**उदधिमेखलाम्** = समुद्र नै मेखला भएकी (समुद्रवेष्टित)
**इमाम्** = यी पृथिवीलाई
**पातुम्** = रक्षा गर्न
**अर्हसि** = (तपाईं नै) समर्थ हुनुहुन्छ

**वाक्यार्थ–** हे राजर्षि ! उठ्नुहोस्, उठ्नुहोस् ! चोर राजाहरूबाट डराइरहेकी समुद्रवेष्टित यी पृथिवीलाई रक्षा गर्न तपाईं नै समर्थ हुनुहन्छ।

**एवं विलपती बाला विपिनेऽनुगता पतिम्।**
**पतिता पादयोर्भर्तू रुदत्यश्रूण्यवर्तयत् ॥ ४९ ॥**

**पदार्थ–**

**पतिम् अनुगता** = पतिका साथ वन गएकी
**बाला** = बालस्वभाव भएकी ती वैदर्भी
**एवं** = यसप्रकार
**विपिने** = जङ्गलमा
**विलपती** = बिलौना गर्दै
**भर्तुः** = पतिको
**पादयोः** = चरणमा
**पतिता** = परिन् र
**रुदती** = रुँदै
**अश्रूणि** = आँसु
**अवर्तयत्** = खसालिन्

**वाक्यार्थ–** पतिका साथ वन गएकी बालस्वभाव भएकी ती वैदर्भी यसप्रकार जङ्गलमा बिलौना गर्दै पतिको चरणमा परिन् र उनले रुँदै आँसु खसालिन्।

**चितिं दारुमयीं चित्वा तस्यां पत्युः कलेवरम्।**
**आदीप्य चानुमरणे विलपन्ती मनो दधे॥ ५०॥**

पदार्थ–

**दारुमयीं** = दाउराको
**चितिं** = चिता
**चित्वा** = बनाएर
**तस्यां** = त्यस चितामा
**पत्युः** = पतिको
**कलेवरम्** = शरीर (राखेर)
**आदीप्य च** = आगो लगाएर
**विलपन्ती** = बिलौना गर्दै
**अनुमरणे** = सँगसँगै मर्ने (सती जाने)
**मनः दधे** = मन गरिन् (निश्चय गरिन्)

**वाक्यार्थ–** त्यस वेला ती वैदर्भीले दाउराको चिता बनाएर त्यस चितामा पतिको शरीर राखेर त्यसमाथि आगो लगाएर बिलौना गर्दै सती जाने निश्चय गरिन्।

**तत्र पूर्वतरः कश्चित् सखा ब्राह्मण आत्मवान्।**
**सान्त्वयन् वल्गुना साम्ना तामाह रुदतीं प्रभो॥ ५१॥**

पदार्थ–

**प्रभो** = हे राजा
**तत्र** = त्यहाँ
**पूर्वतरः** = पहिलेको
**सखा** = साथी
**कश्चित्** = कोही
**आत्मवान्** = आत्मज्ञानी
**ब्राह्मणः** = ब्राह्मणले
**रुदतीं** = रोइरहेकी
**ताम्** = ती वैदर्भीलाई
**वल्गुना** = मधुर
**साम्ना** = प्रिय बोलीले
**सान्त्वयन्** = सान्त्वना दिँदै (सम्झाउँदै)
**आह** = भने

**वाक्यार्थ–** हे राजा ! त्यहाँ पहिलेको साथी कोही आत्मज्ञानी ब्राह्मण आएर रोइरहेकी ती वैदर्भीलाई मधुर र प्रिय बोलीले सम्झाउँदै भने।

**ब्राह्मण उवाच** (ब्राह्मणले भने)

**का त्वं कस्यासि को वायं शयानो यस्य शोचसि।**

**जानासि किं सखायं मां येनाग्रे विचचर्थ ह ॥ ५२ ॥**

**पदार्थ–**

**त्वं** = तिमी
**का** = को हौ
**कस्य** = कसकी कन्या
**असि** = हौ
**यस्य** = जसका लागि
**शोचसि** = शोक गरिरहेकी छ्यौ
**शयानः** = सुतिरहेको
**अयं** = यो
**कः वा** = को हो
**अग्रे** = पहिले
**येन** = जसका साथ
**विचचर्थ** = हिँड्दथ्यौ
**सखायं** = तिम्रो त्यो साथी
**मां** = मलाई
**किं** = के
**जानासि ह** = चिन्दछ्यौ

**वाक्यार्थ–** तिमी को हौ ? कसकी कन्या हौ ? जसका लागि शोक गरिरहेकी छ्यौ, सुतिरहेको यो को हो ? पहिले जसका साथ हिँड्दथ्यौ म तिम्रो त्यही साथी हुँ, के मलाई चिन्दछ्यौ ?

**अपि स्मरसि चात्मानमविज्ञातसखं सखे ।**
**हित्वा मां पदमन्विच्छन् भौमभोगरतो गतः ॥ ५३ ॥**

**पदार्थ–**

**सखे** = हे साथी
**अविज्ञातसखं** = अविज्ञात नामको साथी भएको
**आत्मानम्** = आफूलाई
**अपि स्मरसि च** = के सम्झन्छौ
**मां** = मलाई
**हित्वा** = छोडेर
**भौमभोगरतः** = पृथ्वीको भोग भोग्ने इच्छा लिई
**पदम्** = ठाउँ
**अन्विच्छन्** = खोज्दै
**गतः** = गएका थियौ

**वाक्यार्थ– हे साथी ! के तिमी आफ्नो अविज्ञात नामको साथी भएको सम□न्छौ ? तिमीले म अविज्ञात नामको साथीलाई छोडेर पृथ्वीको भोग भोग्ने इच्छा लिई ठाउँ खोज्दै गएका थियौ ?**

**हंसावहं च त्वं चार्य सखायौ मानसायनौ ।**
**अभूतामन्तरा वौकः सहस्रपरिवत्सरान् ॥ ५४ ॥**

**पदार्थ–**

**आर्य** = हे मान्यवर साथी
**अहं च** = म र
**त्वं च** = तिमी
**मानसायनौ** = मानस सरोवरमा बस्ने
**सखायौ** = एकअर्काका मित्र
**हंसौ** = हाँस
**अभूताम्** = थियौँ
**औकः अन्तरा** = निवासस्थान विना
**वा** = नै
**सहस्रपरिवत्सरान्** = हजार वर्षसम्म (त्यहाँ रह्यौँ)

**वाक्यार्थ–** हे मान्यवर साथी ! म र तिमी एकअर्काका मित्र थियौँ। हामी हाँसको रूपमा मानस सरोवरमा बस्दथ्यौँ। निवासस्थान विना नै हजार वर्षसम्म हामी त्यहाँ रह्यौँ।

**स त्वं विहाय मां बन्धो गतो ग्राम्यमतिर्महीम् ।**

**विचरन् पदमद्राक्षीः कयाचिन्निर्मितं स्त्रिया ॥ ५५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **बन्धो** = हे बन्धु | **विहाय** = छोडेर | **स्त्रिया** = स्त्रीद्वारा |
| **सः त्वं** = त्यही (हाँस) तिमी | **महीम्** = पृथिवीमा | **निर्मितं** = बनाइएको |
| **ग्राम्यमतिः** = विषयसुखको इच्छा लिएर | **गतः** = गयौ | **पदम्** = नगर |
| **मां** = मलाई | **विचरन्** = (त्यहाँ) घुम्दै जाँदा | **अद्राक्षीः** = देख्यौ |
| | **कयाचित्** = कुनै | |

**वाक्यार्थ–** हे बन्धु ! त्यही (हाँस) तिमी विषयसुखको इच्छा लिएर मलाई छोडेर पृथिवीमा गयौ। त्यहाँ घुम्दै जाँदा तिमीले कुनै स्त्रीले बनाएको नगर देख्यौ।

**पञ्चारामं नवद्वारमेकपालं त्रिकोष्ठकम् ।**

**षट्कुलं पञ्चविपणं पञ्चप्रकृति स्त्रीधवम् ॥ ५६ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पञ्चारामं** = पाँच बगैँचा | **त्रिकोष्ठकम्** = तीन कोठा | **पञ्चप्रकृति** = पाँच कारण |
| **नवद्वारम्** = नौ ढोका | **षट्कुलं** = छ वैश्यकुल | **स्त्रीधवम्** = स्त्री स्वामिनी |
| **एकपालं** = एक द्वारपाल | **पञ्चविपणं** = पाँच बजार | |

**वाक्यार्थ–** त्यस नगरमा पाँच बगैँचा, नौ ढोका, एक द्वारपाल, तीन कोठा, छ वैश्यकुल, पाँच बजार थिए र त्यो पाँच उपादान कारणबाट बनाइएको थियो। त्यसकी स्वामिनी स्त्री थिइन्।

**पञ्चेन्द्रियार्था आरामा द्वारः प्राणा नव प्रभो ।**

**तेजोऽबन्नानि कोष्ठानि कुलमिन्द्रियसङ्ग्रहः ॥ ५७ ॥**

**विपणस्तु क्रियाशक्तिर्भूतप्रकृतिरव्यया ।**

**शक्त्यधीशः पुमांस्त्वत्र प्रविष्टो नावबुध्यते ॥ ५८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **प्रभो** = हे प्रभु (हे साथी) | **द्वारः** = ढोका | र मन गरी छ ओटा |
| **पञ्चेन्द्रियार्थाः** = इन्द्रियका पाँच विषय | **तेजः** = तेज | **कुलम्** = व्यापारी कुल |
| **आरामाः** = बगैँचा हुन् | **अबन्नानि** = जल र अन्न | **क्रियाशक्तिः तु** = क्रियाशक्तिरूप कर्मेन्द्रिय चाहिँ |
| **नव प्राणाः** = नौ प्राण | **कोष्ठानि** = कोठा | **विपणः** = बजार |
| | **इन्द्रियसङ्ग्रहः** = पाँच ज्ञानेन्द्रिय | |

**भूतप्रकृतिः** = पाँच भूत उपादान कारण
**अव्यया** = कहिल्यै नाश नहुने
**शक्तिः** = बुद्धि शक्ति
**अधीशः** = स्वामी हुन्
**अत्र** = यहाँ
**प्रविष्टः** = प्रवेश गरेको
**पुमान् तु** = पुरुष चाहिँ
**न अवबुध्यते** = आफ्नो स्वरूप जान्दैन

**वाक्यार्थ–** हे राजा प्राचीनबर्हि ! इन्द्रियका पाँच विषय बगैँचा हुन्, नौ प्राण ढोका हुन्, तेज, जल र अन्न कोठा हुन्, पाँच ज्ञानेन्द्रिय र मन गरी छ व्यापारी हुन्, क्रियाशक्तिरूप कर्मेन्द्रिय चाहिँ बजार हो। पाँच भूत उपादान कारण हुन् र कहिल्यै नाश नहुने बुद्धि स्वामी हो। यहाँ प्रवेश गरेको पुरुषले चाहिँ आफ्नो स्वरूप जान्दैन।

**तस्मिंस्त्वं रामया स्पृष्टो रममाणोऽश्रुतस्मृतिः।**
**तत्सङ्गादीदृशीं प्राप्तो दशां पापीयसीं प्रभो॥ ५९॥**

पदार्थ–
**प्रभो** = हे प्रभु (हे साथी)
**तस्मिन्** = त्यस शरीररूपी नगरमा
**त्वं** = तिमी
**रामया** = बुद्धिरूपी स्त्रीद्वारा
**स्पृष्टः** = मोहित भएर
**रममाणः** = रमाउँदै
**अश्रुतस्मृतिः** = आफ्नो स्वरूपभूत ब्रह्मको स्मरण नगरी
**तत्सङ्गात्** = ती स्त्रीको सङ्गतले
**ईदृशीं** = यस्तो
**पापीयसीं** = पापमय (दुःखी)
**दशां** = अवस्थामा
**प्राप्तः** = पुगेका छौ

**वाक्यार्थ–** हे साथी ! त्यस शरीररूपी नगरमा तिमी बुद्धिरूपी स्त्रीद्वारा मोहित भएर रमाउँदै आफ्नो स्वरूपभूत ब्रह्मको स्मरण नगरी ती स्त्रीको सङ्गतले यस्तो पापमय (दुःखी) अवस्थामा पुगेका छौ।

**न त्वं विदर्भदुहिता नायं वीरः सुहृत् तव।**
**न पतिस्त्वं पुरञ्जन्या रुद्धो नवमुखे यया॥ ६०॥**

पदार्थ–
**त्वं** = तिमी
**विदर्भदुहिता न** = विदर्भ राजाकी छोरी होइनौ
**अयं** = यी
**वीरः** = वीर
**तव** = तिम्रा
**न सुहृत्** = सहृदयी (पति) होइनन्
**यया** = जुन
**पुरञ्जन्या** = पुरञ्जनीद्वारा
**नवमुखे** = नौ ढोका भएको नगरमा
**रुद्धः** = रोकियौ (त्यस पुरञ्जनीको)
**त्वं** = तिमी
**पतिः न** = पति होइनौ

**वाक्यार्थ–** तिमी विदर्भ राजाकी छोरी होइनौ। यी वीर तिम्रा पति पनि होइनन्। जुन

पुरञ्जनीद्वारा नौ ढोका भएको नगरमा रोकियौ तिमी त्यस पुरञ्जनीका पति पनि होइनौ।

**माया ह्येषा मया सृष्टा यत् पुमांसं स्त्रियं सतीम्।**
**मन्यसे नोभयं यद् वै हंसौ पश्यावयोर्गतिम्॥ ६१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्** = जुन (पूर्वजन्ममा तिमी आफूलाई) | **एषा** = यो | **न उभयं** = दुबै कुरा होइनौ |
| **पुमांसं** = पुरुष (यस जन्ममा) | **मया** = मद्वारा | **हंसौ** = हामी हंस हौँ |
| **सतीम् स्त्रियं** = सती स्त्री | **माया** = माया | **आवयोः** = हामी दुईको |
| **मन्यसे** = मान्दछ्यौ | **सृष्टा** = फैलाइएको हो | **गतिम्** = गति (वास्तविक स्वरूप) |
| **हि** = निश्चय नै | **यत्** = जो तिमी | **पश्य** = हेर (अनुभव गर) |
| | **वै** = निश्चय नै | |

**वाक्यार्थ–** पूर्वजन्ममा तिमी आफूलाई पुरुष मान्दथ्यौ, अहिले सती स्त्री मान्दछ्यौ। वस्तुतः यो मैले रचेको माया हो। तिमी न त पुरुष हौ न त स्त्री नै हौ। हामी दुबै हंस हौँ। यो आफ्नो वास्तविक हंस स्वरूपको अनुभव गर।

**अहं भवान्न चान्यस्त्वं त्वमेवाहं विचक्ष्व भोः।**
**न नौ पश्यन्ति कवयश्छिद्रं जातु मनागपि॥ ६२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भोः** = हे मित्र | **अहं** = म हुँ | **मनाक् अपि** = अलिकति पनि |
| **अहं एव** = म (ईश्वर) नै | **त्वं** = तिमी | **छिद्रं** = अन्तर (भेद) |
| **भवान्** = तिमी (जीव) हौ | **विचक्ष्व** = (यस्तो) विचार गर | **जातु** = कहिल्यै पनि |
| **न च अन्यः** = अरू होइनौ | **कवयः** = ज्ञानीहरू | **न पश्यन्ति** = देख्दैनन् |
| **त्वम्** = तिमी | **नौ** = हामी दुईको | |

**वाक्यार्थ–** हे मित्र ! 'म (ईश्वर) नै तिमी (जीव) हौ, अरू होइनौ। तिमी (जीव) म (ईश्वर) हुँ' यस्तो विचार गर। ज्ञानीहरू कहिल्यै पनि हामी दुईमा भिन्नता देख्दैनन्।

**यथा पुरुष आत्मानमेकमादर्शचक्षुषोः।**
**द्विधाभूतमवेक्षेत तथैवान्तरमावयोः॥ ६३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यथा** = जसरी | **एकम्** = एउटै | **आदर्शचक्षुषोः** = ऐनामा (राम्रो) र अन्य व्यक्तिको आँखामा |
| **पुरुषः** = मानिसले | **आत्मानम्** = आफूलाई | |

(नराम्रो) गरी
**द्विधाभूतम्** = दुई थरी भएको
**अवेक्षेत** = देख्दछ
**आवयोः** = हामी दुईको
**अन्तरम्** = भेद
**तथा एव** = त्यस्तै नै हो

**वाक्यार्थ–** जसरी मानिसले एउटै आफूलाई ऐनामा असल र अन्य व्यक्तिको आँखामा नराम्रो गरी दुई थरी भएको देख्दछ। हामी दुईको भेद त्यस्तै नै हो।

**एवं स मानसो हंसो हंसेन प्रतिबोधितः।**
**स्वस्थस्तद्व्यभिचारेण नष्टामाप पुनः स्मृतिम्॥ ६४॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**हंसेन** = हंस (ईश्वरद्वारा)
**प्रतिबोधितः** = बुझाइएको (सम्झाइएको)
**सः** = त्यो (पहिलो जन्ममा पुरञ्जन राजा र अर्को जन्ममा वैदर्भी भएको)
**मानसः** = मानस सरोवरवासी
**स्वस्थः** = आफ्नो स्वरूपमा स्थित भएको
**हंसः** = हंस (जीव)ले
**तद्व्यभिचारेण** = त्यस साथी (ईश्वर)सँग वियोग हुनाले
**नष्टाम्** = नष्ट भएको
**स्मृतिम्** = स्मृति (स्वरूपज्ञान)
**पुनः** = फेरि
**आप** = प्राप्त गर्‍यो

**वाक्यार्थ–** नारदजीले भन्नुभयो– हे प्राचीनबर्हि ! यसप्रकार साथी हंस (ईश्वर)द्वारा सम्झाइएको त्यो (पहिलो जन्ममा पुरञ्जन राजा र अर्को जन्ममा वैदर्भी भएको) मानस सरोवरवासी हंस (जीव)ले आफ्नो वास्तविक स्वरूपको अनुभव गर्‍यो र त्यस साथी (ईश्वर)सँग वियोग हुनाले नष्ट भएको स्वरूपज्ञान फेरि प्राप्त गर्‍यो।

**बर्हिष्मन्नेतदध्यात्मं पारोक्ष्येण प्रदर्शितम्।**
**यत् परोक्षप्रियो देवो भगवान् विश्वभावनः॥ ६५॥**

**पदार्थ–**
**बर्हिष्मन्** = हे प्राचीनबर्हि
**पारोक्ष्येण** = परोक्ष रूपमा (पुरञ्जन राजाको कथाका माध्यमले)
**एतत्** = यो
**अध्यात्मं** = आत्मज्ञान
**प्रदर्शितम्** = बताएँ
**यत्** = किनभने
**विश्वभावनः** = जगत्कर्ता
**देवः** = देवता
**भगवान्** = भगवान्
**परोक्षप्रियः** = परोक्ष वर्णन प्रिय मान्नुहुन्छ

**वाक्यार्थ–** हे प्राचीनबर्हि ! मैले परोक्ष रूपमा (पुरञ्जन राजाको कथाका माध्यमले) यो आत्मज्ञान बताएँ किनभने जगत्कर्ता देवता भगवान् परोक्ष वर्णन प्रिय मान्नुहुन्छ।

**विवरण–** जरा नामकी कालकन्याले पुरञ्जनको सहरमा आक्रमण गरिन् र त्यस आक्रमणबाट निःसार अनि बलहीन भएको सहरभित्र यवनराज मृत्युका सैनिकका रूपमा रोगहरू सजिलै छिरे।

अकल्पनीय र अनायासको आक्रमणबाट अनन्त जीवन जिउने आशामा मख्ख परिरहेका पुरञ्जन भयभीत भए, आफ्नो सारा नगर र मन्त्री, सेवक अनि बान्धवहरूसमेत आफूबाट टाढा भएको अनुभव गर्दै उनी परिवारको चिन्ता गर्न थाले। नष्ट–भ्रष्ट भएको पुरमा पनि अझै उनको आसक्ति बाँकी नै थियो, अन्तिममा उनको समीपमा रहस्यमय मृत्युभय आइहाल्यो र आफ्ना नित्यसखा अविज्ञात परमात्मालाई भुली पत्नीकै चिन्तनले गर्दा उनी स्त्रीरूपमा नै जन्मिए।

**भाग्यवश अर्को जन्ममा पाण्ड्य नरेश मलयध्वजसँग उनको विवाह भयो। पाण्ड्यसँगको विवाहलाई भक्तहरूको सङ्गत भनी बताइएको छ। उनले बिर्सेका पुराना साथी अन्तिममा रहस्यमय स्वरूपमा उनैको नजिक आइपुगे र राजाको मृत्यु हुनाले विलाप गरिरहेको स्त्रीरूप पुरञ्जनलाई पूर्वजन्मको स्मरण गराउन थाले। उनले स्त्रीरूप पुरञ्जनलाई भने– 'हे साथी ! तिमी र म एउटै हौँ भन्ने जान, मैरै मायाको कारणले खडा भएको राजपाठमा आसक्त भई तिमीले समय बितायौ र दुःख पायौ। अब आफूलाई चिन र जीवात्मा र परमात्माको एकताको अनुभव गर।'**

यो कथा वास्तवमा सबै जीवात्माहरूको कथा हो। आफ्नो परमात्मरूपतालाई बिर्सनु समस्त दुःखहरूको कारण हो भने त्यसलाई सम्झिनु अनन्त आनन्दको कारण हो भन्ने कुरा यस कथाको माध्यमले स्पष्ट गरिएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां चतुर्थस्कन्धे**

**पुरञ्जनोपाख्यानेऽष्टाविंशोऽध्यायः ॥ २८ ॥**

# अथ एकोनत्रिंशोऽध्यायः

## पुरञ्जनोपाख्यानको तात्पर्य

**प्राचीनबर्हिरुवाच** (प्राचीनबर्हिले भने)

**भगवंस्ते वचोऽस्माभिर्न सम्यगवगम्यते ।**

**कवयस्तद् विजानन्ति न वयं कर्ममोहिताः ॥ १ ॥**

पदार्थ–

**भगवन्** = हे भगवान् नारदजी
**ते** = हजुरको
**वचः** = वचन
**अस्माभिः** = हामीद्वारा
**सम्यक्** = राम्ररी
**न अवगम्यते** = बुझिँदैन
**कवयः** = कवि (विवेकी मानिस)हरू
**तत्** = त्यस्तो वचन
**विजानन्ति** = जान्दछन्
**वयं** = हामी
**कर्ममोहिताः** = कर्ममोहित जीव
**न** = जान्दैनौँ

**वाक्यार्थ–** हे भगवान् नारदजी ! हजुरको वचन मैले राम्ररी बुझिनँ। विवेकी पुरुषहरू मात्र त्यस्तो कुरा बुझ्दछन्, हामीजस्ता कर्ममोहित जीवहरू बुझ्न सक्दैनौँ।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**पुरुषं पुरञ्जनं विद्याद् यद् व्यनक्त्यात्मनः पुरम् ।**

**एकद्वित्रिचतुष्पादं बहुपादमपादकम् ॥ २ ॥**

पदार्थ–

**पुरञ्जनं** = पुरञ्जन
**पुरुषं** = पुरुष (जीव)
**विद्यात्** = हो भनेर जान्नुपर्दछ
**यत्** = जसले
**आत्मनः** = आफ्ना लागि (आफ्नो कर्मअनुसार)
**एकद्वित्रिचतुष्पादं** = एक, दुई, तीन र चार खुट्टा भएको
**बहुपादम्** = धेरै खुट्टा भएको वा
**अपादकम्** = खुट्टा नभएको
**पुरम्** = शरीररूप नगर
**व्यनक्ति** = प्रकट गर्दछ

**वाक्यार्थ–** पुरञ्जन पुरुष (जीव) हो, जसले आफ्नो लागि आफूले गरेको कर्मअनुसार क्रमशः एक, दुई, तीन र चार खुट्टा भएको अथवा धेरै खुट्टा भएको अथवा खुट्टा नै नभएको शरीररूप नगर प्रकट गर्दछ।

**योऽविज्ञाताहृतस्तस्य पुरुषस्य सखेश्वरः ।**

**यन्न विज्ञायते पुम्भिर्नामभिर्वा क्रियागुणैः ॥ ३ ॥**

पदार्थ—
**तस्य** = त्यस
**पुरुषस्य** = पुरुष (जीव)को
**अविज्ञाताह्वतः** = अविज्ञात नामले बोलाइएको
**यः** = जो
**सखा** = साथी छ
**ईश्वरः** = त्यो ईश्वर हो
**यत्** = किनभने
**पुम्भिः** = पुरुष (जीव)
**नामभिः** = नाम
**वा** = अथवा
**क्रियागुणैः** = कर्म र गुणद्वारा
**न विज्ञायते** = (जसलाई) जान्न सक्दैन

**वाक्यार्थ—** त्यस पुरुष (जीव)को अविज्ञात नामको जो साथी छ त्यो ईश्वर हो किनभने जसलाई पुरुष (जीव) नाम अथवा कर्म र गुणद्वारा जान्न सक्दैन।

**यदा जिघृक्षन् पुरुषः कार्त्स्न्येन प्रकृतेर्गुणान्।**
**नवद्वारं द्विहस्ताङ्घ्रि तत्रामनुत साध्विति ॥ ४ ॥**

पदार्थ—
**यदा** = जब
**पुरुषः** = जीवले
**कार्त्स्न्येन** = सम्पूर्ण रूपमा
**प्रकृतेः** = प्रकृतिका
**गुणान्** = गुण (विषय)हरू
**जिघृक्षन्** = ग्रहण गर्ने (भोग गर्ने) इच्छा गऱ्यो (त्यस वेला)
**तत्र** = ती (पहिले बताइएका) विभिन्न शरीरमध्ये
**नवद्वारं** = नौ इन्द्रियद्वार
**द्विहस्ताङ्घ्रि** = दुई हात र दुई खुट्टा भएको (मनुष्य शरीरलाई)
**साधु इति** = राम्रो हो भन्ने
**अमनुत** = ठान्यो

**वाक्यार्थ—** जब जीवले सम्पूर्ण रूपमा प्रकृतिका विषयहरू भोग गर्ने इच्छा गऱ्यो त्यस वेला उसले ती (पहिले बताइएका) विभिन्न शरीरमध्ये नौ इन्द्रियद्वार, दुई हात र दुई खुट्टा भएको मनुष्य शरीरलाई राम्रो हो भन्ने ठान्यो।

**बुद्धिं तु प्रमदां विद्यान्ममाहमिति यत्कृतम्।**
**यामधिष्ठाय देहेऽस्मिन् पुमान् भुङ्क्तेऽक्षभिर्गुणान् ॥ ५ ॥**

पदार्थ—
**बुद्धिं तु** = बुद्धिलाई चाहिँ
**प्रमदां** = पुरञ्जन नामकी स्त्री
**विद्यात्** = जान्नुपर्दछ (हो)
**मम अहम् इति** = देह आदिमा म र मेरो भन्ने भावना
**यत्कृतम्** = जुन बुद्धिले नै गरेको हो
**याम्** = जसलाई
**अधिष्ठाय** = आधार बनाएर
**पुमान्** = जीवले
**अस्मिन्** = यस
**देहे** = शरीरमा
**अक्षभिः** = इन्द्रियहरूद्वारा
**गुणान्** = गुणहरू (विषयहरू)को
**भुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ—** बुद्धि चाहिँ पुरञ्जन नामकी स्त्री हो। देह आदिमा म र मेरो भन्ने भावना बुद्धिले नै

गरेको हो। बुद्धिकै आधारमा जीवले यस शरीरमा इन्द्रियहरूद्वारा विषयहरूको भोग गर्दछ।

**सखाय इन्द्रियगणा ज्ञानं कर्म च यत्कृतम्।**
**सख्यस्तद्वृत्तयः प्राणः पञ्चवृत्तिर्यथोरगः॥ ६॥**

पदार्थ–

**इन्द्रियगणाः** = इन्द्रियसमूह
**सखायः** = साथीहरू हुन्
**ज्ञानं** = ज्ञान
**कर्म च** = कर्म
**यत्कृतम्** = जुन इन्द्रियबाट सम्पन्न हुन्छन्
**तद्वृत्तयः** = ती इन्द्रियका वृत्तिहरू
**सख्यः** = सङ्गिनी हुन्
**उरगः यथा** = पाँच फणा भएको सर्प झैँ
**पञ्चवृत्तिः** = पाँच वृत्ति (प्राण, अपान, व्यान, समान, उदान) वाला
**प्राणः** = प्राण (नगरको रक्षक हो)

**वाक्यार्थ–** इन्द्रियसमूह साथीहरू हुन् जसबाट ज्ञान र कर्म सम्पन्न हुन्छन्। ती इन्द्रियका वृत्तिहरू सङ्गिनी हुन्। पाँच वृत्ति (प्राण, अपान, व्यान, समान, उदान)वाला प्राण नै नगरको रक्षा गर्ने पाँच फणा भएको सर्प हो।

**बृहद्बलं मनो विद्यादुभयेन्द्रियनायकम्।**
**पञ्चालाः पञ्च विषया यन्मध्ये नवखं पुरम्॥ ७॥**

पदार्थ–

**उभयेन्द्रियनायकम्** = ज्ञानेन्द्रिय र कर्मेन्द्रिय दुबै किसिमका इन्द्रियको नायक
**मनः** = मन नै
**बृहद्बलं** = महाबली योद्धा भनेर
**विद्यात्** = जान्नुपर्दछ
**पञ्च विषयाः** = शब्द आदि पाँच विषय
**पञ्चालाः** = पञ्चाल देश हो
**यन्मध्ये** = जसको बीचमा
**नवखं** = नौ ढोका भएको
**पुरम्** = नगर रहेको छ

**वाक्यार्थ–** ज्ञानेन्द्रिय र कर्मेन्द्रिय दुबै किसिमका इन्द्रियको नायक मन नै महाबली योद्धा हो। शब्द आदि पाँच विषय पञ्चाल देश हो जसको बीचमा नौ ढोका भएको नगर रहेको छ।

**अक्षिणी नासिके कर्णौ मुखं शिश्नगुदाविति।**
**द्वे द्वे द्वारौ बहिर्याति यस्तदिन्द्रियसंयुतः॥ ८॥**

पदार्थ–

**अक्षिणी** = आँखा
**नासिके** = नाक
**कर्णौ** = कान
**इति** = यी
**द्वे द्वे द्वारौ** = दुई-दुई ढोका गरी ६ ओटा र
**मुखं** = मुख
**शिश्नगुदौ** = लिङ्ग र गुदद्वार (यी तीन छुट्टाछुट्टै गरी नौ ढोका

हुन्)
**यः** = जुन जीव
**तदिन्द्रियसंयुतः** = तत्तत् इन्द्रियले सहित भएर (ती–ती ढोकाबाट)
**बहिः** = बाहिरी विषयमा
**याति** = जान्छ

**वाक्यार्थ–** आँखा, नाक, कान यी एकै ठाउँमा भएका दुई–दुई ढोका गरी ६ ओटा र मुख, लिङ्ग र गुदद्वार यी छुट्टाछुट्टै ठाउँमा भएका तीन ढोका गरी जम्मा नौ ढोका छन्। जीव तत्तत् इन्द्रियले सहित भएर ती–ती ढोकाबाट बाहिरी विषयमा जान्छ।

**अक्षिणी नासिके आस्यमिति पञ्च पुरः कृताः।**
**दक्षिणा दक्षिणः कर्ण उत्तरा चोत्तरः स्मृतः॥ ९॥**

पदार्थ–
**अक्षिणी** = दुई आँखा
**नासिके** = नाकका दुई प्वाल
**आस्यम्** = मुख
**इति** = यी
**पञ्च** = पाँच
**पुरः** = पूर्वका ढोका
**कृताः** = बनाइए
**दक्षिणः** = दाहिने
**कर्णः** = कान
**दक्षिणा** = दक्षिणतर्फको ढोका हो
**उत्तरा च** = उत्तरतर्फको ढोका
**उत्तरः** = उत्तर (बायाँ) तर्फको कान
**स्मृतः** = सम्झिइन्छ

**वाक्यार्थ–** दुई आँखा, नाकका दुई प्वाल र मुख यी पाँच पूर्वका ढोका हुन्। दाहिने कान दक्षिणतर्फको ढोका हो। बायाँ कान चाहिँ उत्तरतर्फको ढोका हो।

**पश्चिमे इत्यधो द्वारौ गुदं शिश्नमिहोच्यते।**
**खद्योताविर्मुखी चात्र नेत्रे एकत्र निर्मिते॥**
**रूपं विभ्राजितं ताभ्यां विचष्टे चक्षुषेश्वरः॥ १०॥**

पदार्थ–
**गुदं** = गुदद्वार
**शिश्नम्** = जननेन्द्रियद्वार
**इति** = यी
**अधः** = तलका
**द्वारौ** = दुई ढोकालाई
**इह** = यस शरीरमा
**पश्चिमे** = पश्चिमतर्फका ढोका
**उच्यते** = भनिन्छ
**एकत्र** = एकै ठाउँमा
**निर्मिते** = बनाइएका
**खद्योताविर्मुखी च** = खद्योता र आविर्मुखी चाहिँ
**अत्र** = यस शरीरमा
**नेत्रे** = आँखा हुन्
**ईश्वरः** = जीव
**ताभ्यां** = ती दुई नेत्रगोलकको सहायताले
**चक्षुषा** = चक्षु इन्द्रियद्वारा
**विचष्टे** = हेर्दछ
**विभ्राजितं** = विभ्राजित नाम गरेको देशचाहिँ
**रूपं** = रूप हो

**वाक्यार्थ–** गुदद्वार र जननेन्द्रियद्वार यी तलका दुई ढोका पश्चिमतर्फका हुन्। एकै ठाउँमा बनाइएका खद्योता र आविर्मुखी चाहिँ आँखा हुन्। जीव ती दुई नेत्रगोलकको सहायताले चक्षु

इन्द्रियद्वारा हेर्दछ। विभ्राजित नाम गरेको देशचाहिँ रूप हो।

**नलिनी नालिनी नासे गन्धः सौरभ उच्यते।**
**घ्राणोऽवधूतो मुख्यास्यं विपणो वाग्रसविद्रसः॥ ११॥**

**पदार्थ–**

**नासे** = नाकका दुई प्वाल
**नलिनी** = नलिनी र
**नालिनी** = नालिनी नामका ढोका हुन्
**गन्धः** = गन्ध
**सौरभः** = सौरभ देश
**उच्यते** = भनिन्छ (हो)
**घ्राणः** = घ्राण इन्द्रिय (नाक)
**अवधूतः** = अवधूत नामको मित्र हो
**मुख्यास्यं** = मुख मुख्य द्वार हो
**वाक्** = वाक् इन्द्रिय
**विपणः** = विपण नामको मित्र हो
**रसः** = रसना इन्द्रिय (जिभ्रो)
**रसवित्** = रसविद् (रसज्ञ) नाम गरेको मित्र हो

**वाक्यार्थ–** नाकका दुई प्वाल नलिनी र नालिनी नामका ढोका हुन्। गन्ध सौरभ देश हो। घ्राणेन्द्रिय (नाक) अवधूत नामको मित्र हो। मुख मुख्य द्वार हो। वाक्इन्द्रिय विपण नामको मित्र हो। रसना इन्द्रिय (जिभ्रो) रसविद् (रसज्ञ) नाम गरेको मित्र हो।

**आपणो व्यवहारोऽत्र चित्रमन्धो बहूदनम्।**
**पितृहूर्दक्षिणः कर्ण उत्तरो देवहूः स्मृतः॥ १२॥**

**पदार्थ–**

**व्यवहारः** = वाक्व्यवहार
**आपणः** = आपण हो
**अत्र** = यस शरीरमा रहेका
**चित्रम्** = अनेक प्रकारका
**अन्धः** = जलीय पदार्थ
**बहूदनम्** = बहूदन नामको देश हो
**दक्षिणः** = दाहिने
**कर्णः** = कान
**पितृहूः** = पितृहू
**उत्तरः** = उत्तर (बायाँ)तर्फको कान
**देवहूः** = देवहू नामको देश
**स्मृतः** = बताइएको छ

**वाक्यार्थ–** बोलीको व्यवहार आपण नामको देश हो। यस शरीरमा रहेका अनेक प्रकारका जलीय पदार्थ बहूदन नामको देश हो। दाहिने कान पितृहू र बायाँ कान देवहू नामको देश हो।

**प्रवृत्तं च निवृत्तं च शास्त्रं पञ्चालसंज्ञितम्।**
**पितृयानं देवयानं श्रोत्राच्छ्रुतधराद् व्रजेत्॥ १३॥**

**पदार्थ–**

**प्रवृत्तं च** = कर्मकाण्डात्मक प्रवृत्ति मार्ग
**निवृत्तं च** = उपासनात्मक निवृत्ति मार्गका
**शास्त्रं** = शास्त्र
**पञ्चालसंज्ञितम्** = क्रमशः

दक्षिण र उत्तरतर्फका पञ्चाल देश हुन्

**श्रोत्रात्** = श्रवणेन्द्रियरूप

**श्रुतधरात्** = श्रुतधर मित्रको सहायताबाट (जीव)

**पितृयानं** = पितृयान र

**देवयानं** = देवयान मार्ग (हुँदै उक्त देशमा)

**व्रजेत्** = जान्छ

**वाक्यार्थ–** कर्मकाण्डात्मक प्रवृत्ति मार्ग र उपासनात्मक निवृत्ति मार्गका शास्त्र क्रमशः दक्षिण र उत्तरतर्फका पञ्चाल देश हुन्। श्रवणेन्द्रियरूप श्रुतधर मित्रको सहायताबाट जीव पितृयान र देवयान मार्गमा जान्छ।

**आसुरी मेढ्रमर्वाग्द्वार्व्यवायो ग्रामिणां रतिः।**

**उपस्थो दुर्मदः प्रोक्तो निर्ऋतिर्गुद उच्यते ॥ १४ ॥**

**पदार्थ–**

**मेढ्रम्** = लिङ्ग

**आसुरी** = आसुरी नामको

**अर्वाक्** = पश्चिमतर्फको

**द्वाः** = ढोका हो

**व्यवायः** = मैथुन

**ग्रामिणां रतिः** = ग्रामक नामको देश हो

**उपस्थः** = जननेन्द्रिय

**दुर्मदः** = दुर्मद नामको मित्र

**प्रोक्तः** = भनिन्छ

**गुदः** = गुदद्वार

**निर्ऋतिः** = निर्ऋति नामको पश्चिमी ढोका

**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** लिङ्ग आसुरी नामको पश्चिमतर्फको ढोका हो। मैथुन ग्रामक नामको देश हो। जननेन्द्रिय दुर्मद नामको मित्र हो। गुदद्वार निर्ऋति नामको पश्चिमी ढोका हो।

**वैशसं नरकं पायुर्लुब्धकोऽन्धौ तु मे शृणु।**

**हस्तपादौ पुमांस्ताभ्यां युक्तो याति करोति च ॥ १५ ॥**

**पदार्थ–**

**नरकं** = नरक

**वैशसं** = वैशस नामको देश हो

**पायुः** = गुदद्वारमा रहेको पायुरिन्द्रिय

**लुब्धकः** = लुब्धक नामको मित्र हो

**अन्धौ तु** = अन्ध पुरुषचाहिँ (को हुन् भन्ने कुरा)

**मे** = मबाट

**शृणु** = सुन

**हस्तपादौ** = हात र खुट्टा नै अन्धपुरुष हुन्

**पुमान्** = जीव

**ताभ्यां** = ती दुईले

**युक्तः** = युक्त भएर

**याति** = जान्छ

**करोति च** = गर्छ पनि

**वाक्यार्थ–** नरक वैशस नामको देश हो। गुदद्वारमा रहेको पायुरिन्द्रिय लुब्धक नामको मित्र हो। हात र खुट्टा अन्धपुरुष हुन्। जीव हात र खुट्टाको सहायताले क्रमशः हिँड्ने र कार्यसम्पादन गर्ने गर्दछ।

**अन्तःपुरं च हृदयं विषूचिर्मन उच्यते।**

## तत्र मोहं प्रसादं वा हर्षं प्राप्नोति तद्गुणैः ॥ १६ ॥

पदार्थ–

**हृदयं च** = हृदय चाहिँ
**अन्तःपुरं** = अन्तःपुर हो
**मनः** = मन
**विषूचिः** = विषूचि (विषुचीन) नामको मित्र
**उच्यते** = भनिन्छ
**तद्गुणैः** = त्यस मनका सत्त्व आदि गुणहरूद्वारा
**तत्र** = त्यस शरीरमा
**प्रसादं** = प्रसन्नता
**मोहं** = मोह
**वा** = अथवा
**हर्षं** = हर्ष
**प्राप्नोति** = पाउँदछ (अनुभव गर्दछ)

**वाक्यार्थ–** हृदय चाहिँ अन्तःपुर हो। मन विषुचीन नामको मित्र हो। मनका सत्त्व आदि गुणहरूद्वारा जीव प्रसन्नता, मोह अथवा हर्षको अनुभव गर्दछ।

## यथा यथा विक्रियते गुणाक्तो विकरोति वा ।
## तथा तथोपद्रष्टात्मा तद्वृत्तीरनुकार्यते ॥ १७ ॥

पदार्थ–

**यथा यथा** = जसरी-जसरी (बुद्धिरूप रानी)
**विक्रियते** = (स्वप्नावस्थामा) विकृत हुन्छे
**वा** = अथवा
**विकरोति** = (जाग्रत अवस्थामा) विकृत गराउँछे
**तथा तथा** = त्यसरी-त्यसरी
**गुणाक्तः** = सत्त्व आदि गुणबाट लिप्त भएर
**उपद्रष्टा** = साक्षीरूप (निर्विकार)
**आत्मा** = जीवात्मा
**तद्वृत्तीः** = त्यस बुद्धिका वृत्तिहरूको
**अनुकार्यते** = अनुकरण गर्न बाध्य हुन्छ

**वाक्यार्थ–** जसरी-जसरी बुद्धिरूप रानी स्वप्नावस्थामा विकृत हुन्छे अथवा जाग्रत् अवस्थामा इन्द्रियहरूलाई विकृत गराउँछे त्यसरी-त्यसरी सत्त्व आदि गुणबाट लिप्त भएर साक्षीरूप (निर्विकार) जीवात्मा बुद्धिका वृत्तिहरूको अनुकरण गर्न बाध्य हुन्छ।

## देहो रथस्त्विन्द्रियाश्वः संवत्सररयोऽगतिः ।
## द्विकर्मचक्रस्त्रिगुणध्वजः पञ्चासुबन्धुरः ॥ १८ ॥

पदार्थ–

**इन्द्रियाश्वः** = पाँच ज्ञानेन्द्रियहरू घोडा
**संवत्सररयः** = संवत्सर रूप काल वेग
**द्विकर्मचक्रः** = पुण्य र पापरूप कर्म पाङ्ग्रा
**त्रिगुणध्वजः** = सत्त्व आदि तीन गुण ध्वजा
**पञ्चासुबन्धुरः** = पाँच प्राण डोरी भएको
**अगतिः** = (आफू स्वयं चाहिँ) गतिहीन
**देहः तु** = शरीर चाहिँ
**रथः** = रथ हो

**वाक्यार्थ–** पाँच ज्ञानेन्द्रियहरू घोडा, संवत्सररूप काल वेग, पुण्य र पापरूप कर्म पाङ्ग्रा, सत्त्व आदि तीन गुण ध्वजा र पाँच प्राणरूप डोरी भएको तर आफू स्वयं चाहिँ गतिहीन भएको शरीर नै रथ हो।

**मनोरश्मिर्बुद्धिसूतो हृन्नीडो द्वन्द्वकूबरः।**

**पञ्चेन्द्रियार्थप्रक्षेपः सप्तधातुवरूथकः॥ १९॥**

**पदार्थ–**

**मनोरश्मिः** = मन लगाम
**बुद्धिसूतः** = बुद्धि सारथि
**हृन्नीडः** = हृदय बस्ने ठाउँ
**द्वन्द्वकूबरः** = सुख-दुःख आदि द्वन्द्व जुवा अड्याउने ठाउँ
**पञ्चेन्द्रियार्थप्रक्षेपः** = इन्द्रियका शब्द आदि पाँच विषय शस्त्र
**सप्तधातुवरूथकः** = त्वचा आदि सात धातु सुरक्षा आवरण छन्

**वाक्यार्थ–** त्यस रथमा मन लगाम, बुद्धि सारथि, हृदय बस्ने ठाउँ, सुख-दुःख आदि द्वन्द्व जुवा अड्याउने ठाउँ, इन्द्रियका शब्द आदि पाँच विषय शस्त्र र त्वचा आदि सात धातु सुरक्षा आवरणका रूपमा रहेका छन्।

**आकूतिर्विक्रमो बाह्यो मृगतृष्णां प्रधावति।**

**एकादशेन्द्रियचमूः पञ्चसूनाविनोदकृत्॥ २०॥**

**पदार्थ–**

**आकूतिः** = पाँच कर्मेन्द्रियको समूह
**बाह्यः** = बाहिरी
**विक्रमः** = गति
**एकादशेन्द्रियचमूः** = एघार इन्द्रिय सेना
**पञ्चसूनाविनोदकृत्** = पाँच ज्ञानेन्द्रियद्वारा तत्तत् इन्द्रियको विषयलाई अन्यायपूर्वक उपभोग गर्ने रथको स्वामी जीव
**मृगतृष्णां** = मृगतृष्णासमान (मिथ्या विषयहरूको प्राप्तिका लागि)
**प्रधावति** = दौडन्छ

**वाक्यार्थ–** पाँच कर्मेन्द्रियको समूह बाहिरी गति र एघार इन्द्रिय सेना भएको एवं पाँच ज्ञानेन्द्रियद्वारा तत्तत् इन्द्रियको विषयलाई अन्यायपूर्वक उपभोग गर्ने रथको स्वामी जीव मृगतृष्णासमान मिथ्या विषयहरूको प्राप्तिका लागि दौडिरहन्छ।

**टिप्पणी–** जीवले ज्ञानेन्द्रियलाई सत् वस्तु (परमात्मा)तर्फ लगाउनुपर्नेमा केवल मिथ्या विषयको प्राप्तिमा मात्र केन्द्रित गराउने भएकाले यहाँ 'अन्यायपूर्वक विषयभोगलाई उपभोग गर्ने' भनिएको हो।

**संवत्सरश्चण्डवेगः कालो येनोपलक्षितः।**

**तस्याहानीह गन्धर्वा गन्धर्व्यो रात्रयः स्मृताः॥**

**हरन्त्यायुः परिक्रान्त्या षष्ट्युत्तरशतत्रयम्॥ २१॥**

पदार्थ–

**येन** = जसद्वारा
**कालः** = कालको
**उपलक्षितः** = ज्ञान हुन्छ त्यो
**संवत्सरः** = संवत्सर
**चण्डवेगः** = चण्डवेग नामको गन्धर्व राजा हो
**षष्ट्युत्तरशतत्रयम्** = तीन सय साठी
**अहानि** = दिनहरू नै
**इह** = यस कथामा
**तस्य** = ती गन्धर्व राजाका
**गन्धर्वाः** = गन्धर्वहरू हुन्
**रात्रयः** = रातहरू
**गन्धर्व्यः** = गन्धर्वीहरू
**स्मृताः** = बताइएका छन् (यिनीहरू)
**परिक्रान्त्या** = बारम्बार घुमेर
**आयुः** = प्राणीको आयु
**हरन्ति** = हरण गर्दछन्

**वाक्यार्थ–** जसद्वारा कालको ज्ञान हुन्छ त्यो संवत्सर चण्डवेग नामको गन्धर्व राजा हो। तीन सय साठी दिन र रात ती गन्धर्व राजाका क्रमशः गन्धर्व र गन्धर्वी हुन्। यिनीहरू बारम्बार घुमेर प्राणीको आयु हरण गर्दछन्।

**कालकन्या जरा साक्षाल्लोकस्तां नाभिनन्दति।**
**स्वसारं जगृहे मृत्युः क्षयाय यवनेश्वरः॥ २२॥**

पदार्थ–

**जरा** = वृद्धावस्था
**कालकन्या** = कालकन्या हो
**लोकः** = संसारले
**साक्षात्** = प्रत्यक्ष रूपमा
**तां** = ती कालकन्यालाई
**न अभिनन्दति** = स्वीकार गर्दैन
**मृत्युः** = मृत्युरूप
**यवनेश्वरः** = यवनराजाले
**क्षयाय** = संसारको संहार गर्नका लागि (तिनलाई)
**स्वसारं** = बहिनीको रूपमा
**जगृहे** = ग्रहण (स्वीकार) गर्‍यो

**वाक्यार्थ–** वृद्धावस्था कालकन्या हो। संसारले प्रत्यक्ष रूपमा ती कालकन्यालाई स्वीकार गर्दैन। मृत्युरूप यवनराजाले संसारको संहार गर्नका लागि तिनलाई बहिनीको रूपमा स्वीकार गरेको हो।

**आधयो व्याधयस्तस्य सैनिका यवनाश्चराः।**
**भूतोपसर्गाशुरयः प्रज्वारो द्विविधो ज्वरः॥ २३॥**

पदार्थ–

**आधयः** = मानसिक रोग
**व्याधयः** = शारीरिक रोगहरू
**तस्य** = ती यवनराजाका
**चराः** = पैदल हिँड्ने
**सैनिकाः** = सैनिक
**यवनाः** = यवनहरू हुन्
**भूतोपसर्गाशुरयः** = प्राणीलाई पीडित बनाएर चाँडै मृत्यु गराउन सक्ने वेग (शक्ति) भएको
**द्विविधः** = चिसो र तातोका भेदले दुई प्रकारको
**ज्वरः** = ज्वरो नै
**प्रज्वारः** = प्रज्वार नामको यवन राजाको भाइ हो

**वाक्यार्थ–** मानसिक र शारीरिक रोग यवनराजाका पैदल हिँड्ने सैनिक हुन्। प्राणीलाई पीडित बनाएर चाँडै मृत्यु गराउन सक्ने शक्ति भएको चिसो र तातोका भेदले दुई प्रकारको ज्वरो नै प्रज्वार नामको यवनराजाको भाइ हो।

**एवं बहुविधैर्दुःखैर्दैवभूतात्मसम्भवैः।**
**क्लिश्यमानः शतं वर्षं देहे देही तमोवृतः॥ २४॥**
**प्राणेन्द्रियमनोधर्मानात्मन्यध्यस्य निर्गुणः।**
**शेते कामलवान् ध्यायन् ममाहमिति कर्मकृत्॥ २५॥**

पदार्थ–

**एवं** = यसप्रकार
**देही** = देहभिमानी जीव
**तमोवृतः** = अज्ञानले ढाकिएर (ग्रस्त भएर)
**बहुविधैः** = धेरै प्रकारका
**दैवभूतात्मसम्भवैः** = देवता, भूत र आफूबाट उत्पन्न भएका (आधिदैविक, आधिभौतिक र आध्यात्मिक)
**दुःखैः** = दुःखहरूद्वारा
**क्लिश्यमानः** = पीडित हुँदै
**निर्गुणः** = स्वयं निर्गुण भएर पनि
**अहम् मम इति** = म र मेरो भन्ने भावनाले
**कर्मकृत्** = कर्म गर्दै
**प्राणेन्द्रियमनोधर्मान्** = प्राण, इन्द्रिय र मनका धर्मलाई
**आत्मनि** = आत्मामा
**अध्यस्य** = आरोपित गरेर
**कामलवान्** = क्षुद्र विषयसुखको
**ध्यायन्** = चिन्तन गर्दै
**देहे** = यस मनुष्य शरीरमा
**शतं वर्षं** = सय वर्षसम्म
**शेते** = सुत्दछ (रहिरहन्छ)

**वाक्यार्थ–** यसप्रकार देहभिमानी जीव अज्ञानले ग्रस्त भएर आधिदैविक, आधिभौतिक र आध्यात्मिक दुःख भोग्दै एवं स्वयं निर्गुण भएर पनि म र मेरो भन्ने भावनाद्वारा प्रेरित भएर कर्म गरी प्राण, इन्द्रिय र मनका धर्मलाई आत्मामा आरोपित गरेर क्षुद्र विषयसुखको चिन्तन गर्दै यस मनुष्य शरीरमा सय वर्षसम्म रहिरहन्छ।

**यदात्मानमविज्ञाय भगवन्तं परं गुरुम्।**
**पुरुषस्तु विषज्जेत गुणेषु प्रकृतेः स्वदृक्॥ २६॥**
**गुणाभिमानी स तदा कर्माणि कुरुतेऽवशः।**
**शुक्लं कृष्णं लोहितं वा यथाकर्माभिजायते॥ २७॥**

पदार्थ–

**पुरुषः** = जीव
**स्वदृक्** = स्वयं प्रकाश छ
(तैपनि)

**यदा तु** = जबसम्म
**परं** = परम
**गुरुम्** = गुरु
**आत्मानम्** = आत्मस्वरूप
**भगवन्तं** = भगवान्लाई
**अविज्ञाय** = नजानेर
**प्रकृतेः** = प्रकृतिका
**गुणेषु** = गुण (विषय)मा
**विषज्जेत** = आसक्त भइरहन्छ
**तदा** = त्यस वेलासम्म
**सः** = ऊ
**गुणाभिमानी** = गुणको अभिमानी भएर
**अवशः** = आफ्नो वशमा नरही (देह आदिको अधीनमा भई)
**शुक्लं** = सात्त्विक
**लोहितं** = राजस
**कृष्णं** = तामस
**वा** = अथवा
**कर्माणि** = कर्महरू
**कुरुते** = गर्दछ
**यथाकर्म** = कर्मअनुसार
**अभिजायते** = भिन्न-भिन्न योनिमा) जन्मन्छ

**वाक्यार्थ–** जीव स्वयं प्रकाश छ तैपनि जबसम्म परम गुरु आत्मस्वरूप भगवान्लाई नजानेर प्रकृतिका गुण (विषय)मा आसक्त भइरहन्छ त्यस वेलासम्म ऊ गुणको अभिमानी भएर देहादिको अधीनमा भई सात्त्विक, राजस वा तामस कर्महरू गर्दछ र उक्त कर्मअनुसार भिन्न-भिन्न योनिमा जन्मिरहन्छ।

**शुक्लात् प्रकाशभूयिष्ठाँल्लोकानाप्नोति कर्हिचित्।**
**दुःखोदर्कान् क्रियायासांस्तमःशोकोत्कटान् क्वचित्॥ २८॥**

पदार्थ–
**कर्हिचित्** = कहिलेकाहीँ
**शुक्लात्** = सात्त्विक कर्मबाट
**प्रकाशभूयिष्ठान्** = प्रकाशबहुल
**लोकान्** = स्वर्ग आदि लोक
**आप्नोति** = प्राप्त गर्दछ
**क्वचित्** = कहिलेकाहीँ
**दुःखोदर्कान्** = (राजस कर्मबाट) दुःखमय
**क्रियायासान्** = विभिन्न कर्मक्लेशले युक्त मनुष्य आदि योनिमा (पुग्दछ) (तामस कर्मबाट)
**तमःशोकोत्कटान्** = तमोमय शोकबहुल पशुपक्षी आदिको योनिमा पुग्दछ

**वाक्यार्थ–** जीव कहिलेकाहीँ सात्त्विक कर्मबाट प्रकाशबहुल स्वर्ग आदि लोक प्राप्त गर्दछ। यस्तै कहिलेकाहीँ राजस कर्मबाट दुःखमय एवं विभिन्न कर्मक्लेशले युक्त मनुष्य आदि योनिमा र तामस कर्मबाट तमोमय एवं शोकबहुल पशुपक्षी आदिको योनिमा पुग्दछ।

**क्वचित् पुमान् क्वचिच्च स्त्री क्वचिन्नोभयमन्धधीः।**
**देवो मनुष्यस्तिर्यग्वा यथाकर्मगुणं भवः॥ २९॥**

पदार्थ–
**अन्धधीः** = अन्धबुद्धिवाला (अज्ञानी जीव)
**यथाकर्मगुणं** = आफ्नो कर्म र गुणअनुसार
**क्वचित्** = कहिले
**पुमान्** = पुरुष
**क्वचित्** = कहिले
**स्त्री** = स्त्री
**क्वचित् च** = कहिले
**न उभयम्** = दुबै नभएको अर्थात् नपुंसक
**देवः** = (कहिले) देवता

**मनुष्यः** = मनुष्य
**वा** = अथवा
**तिर्यक्** = पशुपक्षीको योनिमा
**भवः** = जन्म हुन्छ

**वाक्यार्थ–** अज्ञानी जीव आफ्नो कर्म र गुणअनुसार कहिले स्त्री, कहिले पुरुष र कहिले नपुंसक भएर जन्मन्छ। यस्तै ऊ कहिले देवता, कहिले मनुष्य अथवा कहिले पशुपक्षी भएर जन्मन्छ।

**टिप्पणी–** जीव आफूले गरेका कर्मअनुसार देवता, मनुष्य र पशुपक्षी तथा आफ्ना गुणअनुसार स्त्री, पुरुष आदिका रूपमा जन्म लिन्छ।

**क्षुत्परीतो यथा दीनः सारमेयो गृहं गृहम्।**
**चरन् विन्दति यद् दिष्टं दण्डमोदनमेव वा॥ ३०॥**
**तथा कामाशयो जीव उच्चावचपथा भ्रमन्।**
**उपर्यधो वा मध्ये वा याति दिष्टं प्रियाप्रियम्॥ ३१॥**

पदार्थ–
**यथा** = जसरी
**क्षुत्परीतः** = भोकले व्याकुल भएकाले
**दीनः** = दुःखी भएको
**सारमेयः** = कुकुर
**गृहं गृहम्** = घर-घरमा
**चरन्** = जाँदा (धाउँदा)
**दण्डम्** = दण्ड
**ओदनम्** = भात
**वा** = अथवा
**यत् दिष्टं** = प्रारब्धअनुसार जुन (पाउनुपर्ने हो त्यही)
**विन्दति** = पाउँछ
**तथा एव** = त्यसरी नै
**कामाशयः** = अनेक वासनाले भरिएको चित्त भएको
**जीवः** = जीव पनि
**उच्चावचपथा** = अग्लो (वेदविहित) र होचो (वेदनिषिद्ध) मार्गबाट
**उपरि** = माथि स्वर्ग लोकमा
**अधः** = तल नरक आदि लोक
**मध्ये** = बीचको मनुष्य लोकमा
**वा** = अथवा
**भ्रमन्** = घुम्दै
**दिष्टं** = आफ्नो प्रारब्धअनुसार
**प्रियाप्रियम्** = प्रिय (सुख) र अप्रिय (दुःख)मा
**याति** = पुग्दछ (भोग गर्दछ)

**वाक्यार्थ–** जसरी भोकले व्याकुल भएको कुकुरले घर-घरमा धाउँदा दण्ड अथवा भोजनमध्ये आफ्नो प्रारब्धअनुसार जुन पाउनुपर्ने हो त्यही पाउँछ त्यसरी नै अनेक वासनामय चित्त भएको जीवले पनि शास्त्रविहित वा निषिद्ध मार्गबाट स्वर्ग, नरक वा मनुष्य लोकमा घुम्दै आफ्नो प्रारब्धअनुसार सुख वा दुःखको भोग गर्दछ।

**दुःखेष्वेकतरेणापि दैवभूतात्महेतुषु।**
**जीवस्य न व्यवच्छेदः स्याच्चेत् तत्तत्प्रतिक्रिया॥ ३२॥**

पदार्थ–
**दैवभूतात्महेतुषु** = आधिदैविक, आधिभौतिक र आध्यात्मिक
**दुःखेषु** = दुःखमध्ये

पदार्थ–

| | | |
|---|---|---|
| **त्वया** = तिमीले | **अक्षिणी** = दुबै आँखालाई | **लम्पटः** = तिमीप्रति आसक्त |
| **करसरोजहतः** = करकमलद्वारा धपाइएको | **एजयते** = चञ्चल बनाइदिएको छ | **एषः** = यो |
| **दिक्षु** = सबै दिशामा (वरिपरि) | **ते** = तिम्रो | **कष्टः** = धूर्त |
| **भ्रमन्** = घुम्दै गरेको | **मुक्तं** = फैलिएको (बन्धनमुक्त) | **अनिलः** = हावाले |
| **यः असौ** = जुन यो | **वक्रजटावरूथं** = घुम्रिएको केशपुञ्जलाई | **नीवीम्** = (तिम्रो) वस्त्र |
| **पतङ्गः** = भँवराले | **न स्मरसि** = वास्ता गर्दिनौ (किन सम्हाल्दिनौ) | **हरति** = उडाउँदैछ (त्यसलाई पनि किन सम्हाल्दिनौ) |
| **भ्रमतः** = भौँतारिएका | | |
| **मे** = मेरा | | |

**वाक्यार्थ–** तिमीले आफ्नो करकमलद्वारा धपाउँदा पनि तिम्रै वरिपरि घुमिरहेको यस भँवराले भौँतारिएको मेरा दुबै आँखालाई चञ्चल बनाइदिएको छ। फैलिएको र घुम्रिएको आफ्नो केशपुञ्जलाई तिमी किन सम्हाल्दिनौ ? तिमीमा आसक्त धूर्त यो हावाले तिम्रो वस्त्र उडाउँदैछ, त्यसलाई पनि तिमी किन सम्हाल्दिनौ ?

**रूपं तपोधन तपश्चरतां तपोघ्नं**
**ह्येतत्तु केन तपसा भवतोपलब्धम्।**
**चर्तुं तपोऽर्हसि मया सह मित्र मह्यं**
**किं वा प्रसीदति स वै भवभावनो मे ॥ १५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तपोधन** = तपस्या नै धन भएका (हे तपस्वी) | **तपसा** = तपस्याबाट | **वै** = निश्चय नै |
| **तपः चरतां** = तपस्या गर्ने मजस्ताको | **हि** = निश्चय नै | **सः** = ती |
| **तपोघ्नं** = तपस्या नष्ट गर्ने | **उपलब्धम्** = प्राप्त गर्‍यौ | **भवभावनः** = सृष्टिकर्ता ब्रह्माजी |
| **एतत्** = यो | **मित्र** = हे साथी | **मे** = मप्रति (तिमीलाई साथी बनाउने कार्यमा) |
| **रूपं तु** = रूपलाई चाहिँ | **मह्यं** = मलाई सुख दिन | **किं प्रसीदति** = के प्रसन्न हुनुहुन्छ (प्रसन्न भएर नै यहाँ पठाउनुभएको होला) |
| **भवता** = तिमीले | **मया सह** = मसँग | |
| **केन** = कुन | **तपः चर्तुं** = तपस्या गर्न | |
| | **अर्हसि** = योग्य छ्यौ (सक्छ्यौ) | |
| | **वा** = अथवा | |

**वाक्यार्थ–** हे तपस्वी ! मजस्ताको तपस्या नष्ट गर्ने यो रूप तिमीले कुन तपस्याबाट प्राप्त गर्‍यौ ? हे साथी ! तिमी मलाई सुख दिन मसँग तपस्या गर्न सक्छ्यौ। सृष्टिकर्ता ब्रह्माजीले मप्रति प्रसन्न भएर तिमीलाई मेरो साथीका रूपमा यहाँ पठाउनुभएको त होइन ?

**न त्वां त्यजामि दयितं द्विजदेवदत्तं**
**यस्मिन् मनो दृगपि नो न वियाति लग्नम्।**
**मां चारुशृङ्ग्यर्हसि नेतुमनुव्रतं ते**
**चित्तं यतः प्रतिसरन्तु शिवाः सचिव्यः॥ १६॥**

**पदार्थ–**

**द्विजदेवदत्तं** = ब्रह्माजीद्वारा दिइएका
**दयितं** = प्यारा
**त्वां** = तिमीलाई
**न त्यजामि** = छोड्दिनँ
**यस्मिन्** = जुन तिमीमा
**नः** = (हाम्रो) मेरो
**मनः** = मन र
**दृग् अपि** = आँखा पनि
**लग्नम्** = खिचिएका छन् (यसैले यहाँबाट)
**न वियाति** = हट्न सक्दैनन्
**चारुशृङ्गि** = हे सुन्दर सिँगजस्ता स्तन भएकी
**अनुव्रतं** = तिम्रो अनुसरण गर्ने
**मां** = मलाई
**यतः** = जहाँ
**ते** = तिम्रो
**चित्तं** = मन छ (त्यहीँ)
**नेतुम्** = लैजान
**अर्हसि** = योग्य छ्यौ (सक्छ्यौ)
**शिवाः** = अनुकूल
**सचिव्यः** = साथीहरू पनि
**प्रतिसरन्तु** = (तिमीसँग नै) आऊन्

**वाक्यार्थ–** हे प्यारी ! तिमी ब्रह्माजीको आदेशबाट यहाँ आएकी हौ। यसैले म तिमीलाई छोड्न सक्दिनँ। तिमीमा मेरो मन र आँखा दुबै आकृष्ट भइसकेका छन् त्यसैले तिनीहरू त्यहाँबाट हट्न पनि सक्दैनन्। हे सुन्दरस्तनी ! म तिम्रो अनुचर हुँ, तिमी मलाई जहाँ चाहन्छ्यौ त्यहीँ लैजान सक्छ्यौ र तिम्रा अनुकूल साथीहरू पनि तिमीसँगै आउन सक्छन्।

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**इति ललनानुनयातिविशारदो ग्राम्यवैदग्ध्यया परिभाषया तां विबुधवधूं विबुधमतिरधिसभाजयामास॥ १७॥**

**पदार्थ–**

**इति** = यसप्रकार
**विबुधमतिः** = देवताहरूको जस्तो उत्कृष्ट बुद्धि भएका
**ललनानुनयातिविशारदः** = स्त्रीलाई फकाउनमा अत्यन्त सिपालु आग्नीध्रले
**ग्राम्यवैदग्ध्यया** = रति आदि विषयभोगोचित अपरिष्कृत
**परिभाषया** = वचनद्वारा
**तां** = ती
**विबुधवधूं** = देवनारी अप्सरालाई
**अधिसभाजयामास** = सत्कारपूर्वक प्रसन्न गराए

**वाक्यार्थ–** यसप्रकार देवताहरूको जस्तो उत्कृष्ट बुद्धि भएका एवं स्त्रीलाई फकाउनमा अत्यन्त सिपालु आग्नीध्रले रति आदि विषयभोगोचित अपरिष्कृत वचनद्वारा ती देवनारी अप्सरालाई सत्कारपूर्वक प्रसन्न गराए।

**सा च ततस्तस्य वीरयूथपतेर्बुद्धिशीलरूपवयःश्रियौदार्येण पराक्षिप्तमनास्तेन सहायुतायुतपरिवत्सरोपलक्षणं कालं जम्बूद्वीपपतिना भौमस्वर्गभोगान् बुभुजे ॥ १८ ॥**

**पदार्थ–**

**ततः** = त्यसपछि
**सा च** = ती पूर्वचित्ति अप्सराले पनि
**तस्य** = ती
**वीरयूथपतेः** = वीर समाजका अग्रणी आग्नीध्रको
**बुद्धिशीलरूपवयःश्रियौदार्येण** = बुद्धि, शील, रूप, उमेर, ऐश्वर्य र उदारताले
**पराक्षिप्तमनाः** = मोहितचित्त भई
**तेन** = ती
**जम्बूद्वीपपतिना सह** = जम्बूद्वीपका मालिक आग्नीध्रका साथ रहेर
**अयुतायुतपरिवत्सरोपलक्षणं कालं** = हजारौँ हजार वर्षसम्म
**भौमस्वर्गभोगान्** = पृथ्वी र स्वर्गका भोगहरू
**बुभुजे** = भोग गरिन्

**वाक्यार्थ–** त्यसपछि ती पूर्वचित्ति अप्सराले पनि वीरहरूका अग्रणी आग्नीध्रको बुद्धि, शील, रूप, उमेर, ऐश्वर्य र उदारताले मोहित भई तिनका साथ रहेर हजारौँ हजार वर्षसम्म पृथ्वी र स्वर्गका भोगहरू भोग गरिन्।

**तस्यामु ह वा आत्मजान् स राजवर आग्नीध्रो नाभिकिम्पुरुष-हरिवर्षेलावृतरम्यकहिरण्मयकुरुभद्राश्वकेतुमालसंज्ञान् नव पुत्रा-नजनयत् ॥ १९ ॥**

**पदार्थ–**

**सः** = ती
**राजवरः** = श्रेष्ठ राजा
**आग्नीध्रः** = आग्नीध्रले
**उ ह वा** = निश्चय नै
**तस्याम्** = ती पूर्वचित्तिमा
**नाभिकिम्पुरुषहरिवर्षेलावृत-रम्यकहिरण्मयकुरुभद्राश्व-केतुमालसंज्ञान्** = नाभि, किम्पुरुष, हरिवर्ष, इलावृत, रम्यक, हिरण्मय, कुरु, भद्राश्व र केतुमाल नाम भएका
**आत्मजान्** = आफूबाटबाट उत्पन्न
**नव पुत्रान्** = नौ जना छोरा
**अजनयत्** = जन्माए

**वाक्यार्थ–** ती श्रेष्ठ राजा आग्नीध्रले पनि पूर्वचित्तिबाट नाभि, किम्पुरुष, हरिवर्ष, इलावृत, रम्यक, हिरण्मय, कुरु, भद्राश्व र केतुमाल नामका नौ जना छोरा जन्माए।

**सा सूत्वाथ सुतान् नवानुवत्सरं गृह एवापहाय पूर्वचित्तिर्भूय एवाजं देवमुपतस्थे ॥ २० ॥**

पदार्थ–

**अथ** = यसपछि
**सा** = ती
**पूर्वचित्तिः** = पूर्वचित्ति अप्सराले
**अनुवत्सरं** = प्रत्येक वर्ष (एक-एकजना गरी)
**नव** = नौजना
**सुतान्** = छोराहरू
**सूत्वा** = जन्माएर (तिनीहरूलाई)
**गृहे एव** = घरमा नै
**अपहाय** = छोडेर
**भूयः एव** = फेरि पनि
**अजं देवम्** = ब्रह्माजीको सेवामा
**उपतस्थे** = उपस्थित भइन्

**वाक्यार्थ–** यसपछि ती पूर्वचित्ति अप्सराले प्रत्येक वर्ष एक-एक जना गरी नौजना छोरा जन्माएर तिनीहरूलाई घरमा नै छोडेर फेरि ब्रह्माजीकै सेवामा उपस्थित भइन्।

**आग्नीध्रसुतास्ते मातुरनुग्रहादौत्पत्तिकेनैव संहननबलोपेताः पित्रा विभक्ता आत्मतुल्यनामानि यथाभागं जम्बूद्वीपवर्षाणि बुभुजुः ॥ २१ ॥**

पदार्थ–

**मातुः** = आमा पूर्वचित्ति अप्सराको
**अनुग्रहात्** = (स्तनपान आदि) अनुग्रहका कारण
**औत्पत्तिकेन** = जन्मसिद्ध (स्वाभाविक)
**संहननबलोपेताः** = दृढ अङ्ग र बलले युक्त भएका
**पित्रा** = पिता आग्नीध्रद्वारा
**विभक्ताः** = छुट्टाछुट्टै भूमिविभागद्वारा राज्यमा स्थापित भएका
**ते** = ती
**आग्नीध्रसुताः** = आग्नीध्रका छोराहरूले
**आत्मतुल्यनामानि** = आफूसँग मिल्दो नाम भएका
**जम्बूद्वीपवर्षाणि** = जम्बूद्वीपका भूखण्डहरू
**यथाभागं एव** = आफ्नो भागमा प्राप्त भएअनुसार नै
**बुभुजुः** = भोग गर्न थाले

**वाक्यार्थ–** आमा पूर्वचित्ति अप्सराको स्तनपान आदि अनुग्रहका कारण जन्मसिद्ध रूपमा स्वाभाविक हृष्टपुष्ट अङ्ग र बलले युक्त भएका एवं पिता आग्नीध्रद्वारा छुट्टाछुट्टै भूमिविभागद्वारा राज्यमा स्थापित गरिएका उनका छोराहरूले आफूसँग मिल्दो नाम भएका जम्बूद्वीपका भूखण्डहरू आफ्नो भागमा प्राप्त भएअनुसार नै भोग गर्न थाले।

**आग्नीध्रो राजातृप्तः कामानामप्सरसमेवानुदिनमधिमन्यमान-स्तस्याः सलोकतां श्रुतिभिरवारुन्ध यत्र पितरो मादयन्ते ॥ २२ ॥**

पदार्थ–

**कामानाम्** = विषयभोगबाट
**अतृप्तः** = तृप्त नभएका
**राजा** = राजा
**आग्नीध्रः** = आग्नीध्रले
**अनुदिनम्** = दिनदिनै
**अप्सरसम् एव** = पूर्वचित्ति अप्सरालाई नै
**अधिमन्यमानः** = परम पुरुषार्थका रूपमा मान्दै

**श्रुतिभिः** = वेदोक्त कर्मद्वारा
**तस्याः सलोकतां** = ती अप्सराकै लोक
**अवारुन्धे** = प्राप्त गरे
**यत्र** = जुन लोकमा
**पितरः** = पितृहरू
**मादयन्ते** = भोगमा मस्त भएर रहन्छन्

**वाक्यार्थ–** विषयभोगबाट तृप्त नभएका राजा आग्नीध्रले दिनदिनै पूर्वचित्ति अप्सरालाई नै परम पुरुषार्थका रूपमा मानेकाले उनले वेदोक्त कर्मद्वारा ती अप्सराकै लोक प्राप्त गरे जुन लोकमा पितृहरू भोगमा मस्त भएर रहन्छन्।

**सम्परेते पितरि नव भ्रातरो मेरुदुहितॄर्मेरुदेवीं प्रतिरूपामुग्रदंष्ट्रीं लतां**
**रम्यां श्यामां नारीं भद्रां देववीतिमिति संज्ञा नवोदवहन्॥ २३॥**

**पदार्थ–**

**पितरि** = पिता आग्नीध्र
**सम्परेते** = परलोक गएपछि
**नव** = नाभि आदि नौ
**भ्रातरः** = दाजुभाइहरूले
**मेरुदेवीं** = मेरुदेवी
**प्रतिरूपाम्** = प्रतिरूपा
**उग्रदंष्ट्रीं** = उग्रदंष्ट्री
**लतां** = लता
**रम्यां** = रम्या
**श्यामां** = श्यामा
**नारीं** = नारी
**भद्रां** = भद्रा
**देववीतिम्** = देववीति
**इति संज्ञाः** = यी नामका
**नव** = नौवटीलाई
**मेरुदुहितॄः** = मेरुकी कन्यासँग
**उदवहन्** = विवाह गरे

**वाक्यार्थ–** पिता आग्नीध्रको परलोक गमनपछि नाभि आदि नौ दाजुभाइहरूले मेरुकी कन्या क्रमशः मेरुदेवी, प्रतिरूपा, उग्रदंष्ट्री, लता, रम्या, श्यामा, नारी, भद्रा र देववीति नामका नौवटी कन्यालाई विवाह गरे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे**
**आग्नीध्रवर्णनं नाम द्वितीयोऽध्यायः॥ २॥**

# अथ तृतीयोऽध्यायः

## राजा नाभिको चरित्र

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**नाभिरपत्यकामोऽप्रजया मेरुदेव्या भगवन्तं यज्ञपुरुषमवहितात्मा-
यजत ॥ १ ॥**

पदार्थ–

**अपत्यकामः** = सन्तानको इच्छा गर्ने
**नाभिः** = नाभि राजाले
**अवहितात्मा** = एक चित्त भई
**अप्रजया** = सन्तानहीन
**मेरुदेव्या** = मेरुदेवीका साथ
**भगवन्तं** = भगवान्
**यज्ञपुरुषम्** = यज्ञपुरुषलाई
**अयजत** = पूजा गरे

**वाक्यार्थ–** सन्तानको इच्छा गर्ने नाभि राजाले एक चित्त भई सन्तानहीन मेरुदेवीका साथ भगवान् यज्ञपुरुषको पूजा गरे।

**तस्य ह वाव श्रद्धया विशुद्धभावेन यजतः प्रवर्ग्येषु प्रचरत्सु द्रव्यदेशकालमन्त्रर्त्विग्दक्षिणाविधानयोगोपपत्त्या दुरधिगमोऽपि भगवान् भागवतवात्सल्यतया सुप्रतीक आत्मानमपराजितं निजजनाभिप्रेतार्थविधित्सया गृहीतहृदयो हृदयङ्गमं मनोनयना-
नन्दनावयवाभिराममाविश्चकार ॥ २ ॥**

पदार्थ–

**श्रद्धया** = श्रद्धापूर्वक
**विशुद्धभावेन** = पवित्र भावनाले
**यजतः** = यज्ञ गर्ने
**तस्य** = ती नाभिले
**ह वाव** = निश्चय नै
**प्रवर्ग्येषु** = प्रवर्ग्य (सोमयागभन्दा पहिले गरिने अनुष्ठान) कर्मको
**प्रचरत्सु** = अनुष्ठान गर्दा
**द्रव्यदेशकालमन्त्रर्त्विग्दक्षिणा-विधानयोगोपपत्त्या** = द्रव्य, देश, काल, मन्त्र, ऋत्विक्, दक्षिणा र विधि गरी सात अङ्गले युक्त यज्ञद्वारा पनि
**दुरधिगमः** = सहज रूपमा प्राप्त नहुने
**सुप्रतीकः** = सुन्दर अङ्ग भएका
**भागवतवात्सल्यतया** = भक्तहरूप्रतिको प्रेमभावका कारण
**गृहीतहृदयः** = भक्तको अधीनमा चित्त भएका
**भगवान्** = भगवान्ले
**अपि** = पनि
**निजजनाभिप्रेतार्थविधित्सया** = आफन्त (भक्त)ले चिताएको कुरा पूरा गरिदिने इच्छाले
**मनोनयनानन्दनावयवाभिरामम्** = मन र नेत्रलाई आनन्द दिने सुन्दर रूपमा
**अपराजितं** = अपराजित

**हृदयङ्गमं** = चित्ताकर्षक
**आत्मानम्** = आफूलाई
**आविश्चकार** = प्रकट गराउनुभयो

**वाक्यार्थ–** यद्यपि भगवान् द्रव्य, देश, काल, मन्त्र, ऋत्विक्, दक्षिणा र विधि गरी सात अङ्गले युक्त यज्ञद्वारा पनि सहज रूपमा प्राप्त हुनुहुन्न; तर पनि श्रद्धापूर्वक पवित्र भावनाले यज्ञ गर्ने ती नाभिले प्रवर्ग्य कर्मको अनुष्ठान गर्दा सुन्दर अङ्ग भएका, भक्तहरूप्रतिको प्रेमभावका कारण भक्तको अधीनमा रहनुहुने भगवान्ले भक्तले चिताएको कुरा पूरा गरिदिने इच्छाले मन र नेत्रलाई आनन्द दिने चित्ताकर्षक रूपमा आफूलाई प्रकट गराउनुभयो।

**अथ ह तमाविष्कृतभुजयुगलद्वयं हिरण्मयं पुरुषविशेषं कपिशकौशेयाम्बरधरमुरसि विलसच्छ्रीवत्सललामं दरवरवनरुह-वनमालाच्छूर्यमृतमणिगदादिभिरुपलक्षितं स्फुटकिरणप्रवरमुकुट-कुण्डलकटककटिसूत्रहारकेयूरनूपुराद्यङ्गभूषणविभूषितमृत्विक्सदस्य-गृहपतयोऽधना इवोत्तमधनमुपलभ्य सबहुमानमर्हणेनावनतशीर्षाण उपतस्थुः ॥ ३ ॥**

पदार्थ–

**अथ** = यसपछि
**ह** = निश्चय नै
**अवनतशीर्षाणः** = शिर झुकाएका
**ऋत्विक्सदस्यगृहपतयः** = ऋत्विक्, अन्य उपस्थित सभासद् र यजमानहरूले
**कपिशकौशेयाम्बरधरम्** = पहेँलो रेशमी वस्त्र लगाएका
**उरसि** = छातीमा
**विलसच्छ्रीवत्सललामं** = श्रीवत्सचिह्न सुशोभित भएका
**दरवरवनरुहवनमालाच्छूर्यमृत-मणिगदादिभिः** = शङ्ख, कमल, वनमाला, चक्र, अमृतमणि, गदा आदिद्वारा
**उपलक्षितं** = युक्त भएका
**स्फुटकिरणप्रवरमुकुटकुण्डल-कटककटिसूत्रहारकेयूरनूपुराद्यङ्ग-भूषणविभूषितम्** = अत्यन्त प्रकाशमय मुकुट, कुण्डल, बाला, कन्धनी, हार, बाजुबन्ध, पाउजु आदि विभिन्न अङ्गमा लगाइने गहनाद्वारा विभूषित
**आविष्कृतभुजयुगलद्वयं** = चतुर्भुजका रूपमा प्रकट हुनुभएका
**हिरण्मयं** = स्वर्णमय (तेजोमय)
**पुरुषविशेषं** = परम पुरुष भगवान्लाई
**अधनाः** = दरिद्रहरूले
**उत्तमधनम् इव** = स्वर्ण आदि उत्तम धन प्राप्त गरेझैँ
**उपलभ्य** = प्राप्त गरेर
**सबहुमानम्** = आदरपूर्वक
**अर्हणेन** = अर्घ्य आदिले पूजा गरी
**उपतस्थुः** = स्तुति गर्न लागे

**वाक्यार्थ–** भगवान्को दर्शन पाएपछि शिर झुकाएका ऋत्विक्, अन्य उपस्थित सदस्य र यजमानहरूले पहेँलो रेशमी वस्त्र लगाएका, छातीमा श्रीवत्सचिह्न सुशोभित भएका, शङ्ख, कमल, वनमाला, चक्र, अमृतमणि, गदा आदिद्वारा युक्त भएका, अत्यन्त प्रकाशमय मुकुट,

कुण्डल, बाला, कन्धनी, हार, बाजुबन्ध, पाउजु आदि विभिन्न अङ्गमा लगाइने गहनाद्वारा विभूषित एवं चतुर्भुजयुक्त रूप लिएर प्रकट हुनुभएका तेजोमय परम पुरुष भगवान्लाई प्राप्त गरेर दरिद्रहरूले उत्तम धन स्वर्णादिलाई प्राप्त गर्दा झैँ खुसी भई आदरपूर्वक अर्घ्यादिले पूजा गरी स्तुति गर्न लागे।

**ऋत्विज ऊचुः** (ऋत्विक्हरूले भने)

**अर्हसि मुहुरर्हत्तमार्हणमस्माकमनुपथानां नमो नम इत्येतावत् सदुपशिक्षितं कोऽर्हति पुमान् प्रकृतिगुणव्यतिकरमतिरनीश ईश्वरस्य परस्य प्रकृतिपुरुषयोरर्वाक्तनाभिर्नामरूपाकृतिभी रूप-निरूपणम् ॥४ ॥**

**सकलजननिकायवृजिननिरसनशिवतमप्रवरगुणगणैकदेशकथना-दृते ॥ ५ ॥**

पदार्थ–

**अर्हत्तम** = हे पूज्यतम
**अनुपथानां** = अनुसरण गर्ने
**अस्माकम्** = हाम्रो
**अर्हणम्** = पूजालाई
**मुहुः** = बारम्बार स्वीकार गर्न
**अर्हसि** = योग्य हुनुहुन्छ (सक्नुहुन्छ)
**नमः नमः** = (हामी) बारम्बार नमस्कार
**इति एतावत्** = यति मात्र गर्न
**सदुपशिक्षितं** = सज्जनहरूद्वारा सिकाइएका छौँ
**प्रकृतिपुरुषयोः** = प्रकृति र पुरुषभन्दा पनि
**परस्य** = पर (टाढा) रहनुभएका
**ईश्वरस्य** = सर्वसमर्थ परमात्मा हजुरको
**सकलजननिकायवृजिननिरसन-शिवतमप्रवरगुणगणैकदेश-कथनात् ऋते** = सम्पूर्ण मानिसको पापलाई नाश गर्ने श्रेष्ठ गुणले सम्पन्न हजुरको थोरै मात्र गुणको वर्णन गर्नु बाहेक
**अर्वाक्तनाभिः** = हजुरको स्वरूपलाई स्पर्श गर्न असमर्थ
**नामरूपाकृतिभिः** = नाम, रूप र आकृतिद्वारा
**रूपनिरूपणम्** = रूप निर्धारण गर्न
**प्रकृतिगुणव्यतिकरमतिः** = प्रकृतिका सत्त्व आदि गुणले विक्षिप्त भएको
**अनीशः** = असमर्थ
**कः** = कुन
**पुमान्** = मान्छेले
**अर्हति** = सक्दछ

**वाक्यार्थ–** हे पूज्यतम ! हजुर हाम्रो पूजालाई बारम्बार स्वीकार गर्नुहोस्। हामीले हजुरको बारम्बार नमस्कार मात्र गर्न जानेका छौँ। प्रकृति र पुरुषभन्दा पर रहनुभएका एवं सम्पूर्ण मानिसको पापलाई नाश गर्ने श्रेष्ठ गुणले सम्पन्न हजुरको थोरै मात्र गुणको वर्णन गर्नुबाहेक हामी के गर्न सक्छौँ र ? हजुरको स्वरूपलाई स्पर्श गर्न असमर्थ नाम, रूप र आकृतिद्वारा हजुरलाई चिनाउन प्रकृतिका गुणले विक्षिप्त भएको कुन मान्छेले सक्दछ र ?

**परिजनानुरागविरचितशबलसंशब्दसलिलसितकिसलयतुलसिका-**
**दूर्वाङ्कुरैरपि सम्भृतया सपर्यया किल परम परितुष्यसि ॥ ६ ॥**

**पदार्थ–**

**परम** = परमपुरुष हे भगवान्
**परिजनानुरागविरचितशबल-**
**संशब्दसलिलसितकिसलय-**
**तुलसिकादूर्वाङ्कुरैः** = आफ्ना
भक्तहरूले भक्तिपूर्वक चढाएको
शब्दस्तुति, जल, शुद्ध पालुवा,
तुलसीपत्र र दूबोका
अङ्कुरहरूद्वारा
**सम्भृतया** = सम्पादित
**सपर्यया अपि** = पूजाले पनि
**किल** = निश्चय नै
**परितुष्यसि** = खुसी हुनुहुन्छ

**वाक्यार्थ–** परमपुरुष हे भगवान् ! हजुर आफ्ना भक्तहरूले भक्तिपूर्वक चढाएको शब्दस्तुति, जल, शुद्ध पालुवा, तुलसीपत्र र दूबोका अङ्कुरहरूद्वारा सम्पादित पूजाले मात्र पनि खुसी हुनुहुन्छ।

**अथानयापि न भवत इज्ययोरुभारभरया समुचितमर्थ-**
**मिहोपलभामहे ॥ ७ ॥**
**आत्मन एवानुसवनमञ्जसाव्यतिरेकेण बोभूयमानाशेषपुरुषार्थ-**
**स्वरूपस्य किन्तु नाथाशिष आशासानानामेतदभिसंराधनमात्रं**
**भवितुमर्हति ॥ ८ ॥**

**पदार्थ–**

**अथ** = यस्तै
**इह** = यहाँ सम्पन्न
**अनया अपि** = यस
**उरुभारभरया** = धेरै
साधनसम्पन्न
**इज्यया** = यज्ञद्वारा पनि
**अनुसवनम्** = निरन्तर
**अञ्जसा** = साक्षात्
**अव्यतिरेकेण** = अभिन्नरूपले
**बोभूयमानाशेषपुरुषार्थ-**
**स्वरूपस्य** = सम्पूर्ण पुरुषार्थका
प्रतिमूर्तिका रूपमा रहनुहुने
**भवतः** = हजुरको
**आत्मनः एव** = आफ्नो नै
**समुचितम्** = अभीष्ट
**अर्थम्** = प्रयोजन
**न उपलभामहे** = केही पनि
देख्दैनौं
**किन्तु** = तर पनि
**नाथ** = हे भगवान्
**आशिषः** = आशीर्वाद (भोग)
**आशासानानाम्** = चाहने
हामीजस्ता भक्तहरूको
**एतत्** = यो पूजा
**अभिसंराधनमात्रं** = मनोरथ
सिद्धिको एक मात्र साधन
**भवितुम्** = हुन
**अर्हति** = सक्दछ

**वाक्यार्थ–** यहाँ भएको सम्पूर्ण साधनसम्पन्न यज्ञद्वारा पनि सम्पूर्ण पुरुषार्थका प्रतिमूर्ति हुनुभएका हजुरको आफ्नो अभीष्ट प्रयोजन सिद्ध हुने कुरा देखिँदैन। तर पनि हे भगवान् ! आशीर्वाद (भोग) चाहने हामीजस्ता भक्तहरूको यो पूजा हाम्रो मनोरथ सिद्धिको एक मात्र साधन हुन सक्दछ।

**तद्यथा बालिशानां स्वयमात्मनः श्रेयः परमविदुषां परमपरमपुरुष प्रकर्षकरुणया स्वमहिमानं चापवर्गाख्यमुपकल्पयिष्यन् स्वयं नापचित एवेतरवदिहोपलक्षितः ॥ ९ ॥**

**पदार्थ–**
**परमपरमपुरुष** = ब्रह्मा आदि परमदेवभन्दा पनि श्रेष्ठ हे भगवान्
**तत्** = त्यसकारण
**यथा** = जसरी
**बालिशानां** = अज्ञानी केटाकेटी-हरूको (कल्याण गर्न उसका पिता स्वयं आउँछन् त्यसै गरी)
**स्वयम् आत्मनः** = आफैं आफ्नो
**परम् श्रेयः** = परम कल्याण (मोक्ष)
**अविदुषां** = नजान्ने अज्ञानी व्यक्तिका लागि
**प्रकर्षकरुणया** = अत्यन्त कृपापूर्वक
**अपवर्गाख्यम्** = मोक्षरूप
**स्वमहिमानं** = आफ्नो परम पद (ब्रह्मानन्द)
**उपकल्पयिष्यन्** = प्रदान गर्नका लागि
**न अपचितः एव** = पूजाको अपेक्षा नगरी
**इतरवत्** = सामान्य मनुष्य झैं
**स्वयं** = आफैं
**इह** = यस यज्ञमा
**उपलक्षितः च** = उपस्थित हुनुभयो

**वाक्यार्थ–** ब्रह्मा आदि परमदेवभन्दा पनि श्रेष्ठ हे भगवान् ! जसरी अज्ञानी केटाकेटीहरूको कल्याण गर्न उनीहरूका पिता स्वयं आउँछन् त्यसै गरी आफ्नो परम कल्याण (मोक्ष) आफैं नजान्ने अज्ञानी व्यक्तिका लागि अत्यन्त कृपापूर्वक मोक्षरूप आफ्नो परमपद (ब्रह्मानन्द) प्रदान गर्नका लागि पूजाको अपेक्षा नगरी सामान्य मनुष्य झैं हजुर आफैं यस यज्ञमा उपस्थित हुनुभयो।

**अथायमेव वरो ह्यर्हत्तम यर्हि बर्हिषि राजर्षेर्वरदर्षभो भवान् निजपुरुषेक्षणविषय आसीत् ॥ १० ॥**

**पदार्थ–**
**अर्हत्तम** = हे पूज्यवर
**वरदर्षभः** = वरदाता ब्रह्मादि देवभन्दा पनि श्रेष्ठ
**भवान्** = हजुर
**अथ** = तैपनि
**यर्हि** = अहिले
**राजर्षेः** = राजर्षि नाभिको
**बर्हिषि** = यज्ञमा
**निजपुरुषेक्षणविषयः** = आफ्ना भक्तको दृष्टिविषय
**आसीत्** = हुनुभयो
**अयम् एव** = यही दर्शन नै (हाम्रा लागि)
**हि** = निश्चय नै
**वरः** = वर हो

**वाक्यार्थ–** हे पूज्यवर ! वरदाता ब्रह्मादि देवभन्दा पनि श्रेष्ठ हजुर अहिले राजर्षि नाभिको यस यज्ञमा आफ्ना भक्तका सामु दर्शन दिन प्रकट हुनुभयो। यही दर्शन नै हाम्रा लागि वर हो।

**असङ्गनिशितज्ञानानलविधूताशेषमलानां भवत्स्वभावानामात्मा-**

**रामाणां मुनीनामनवरतपरिगुणितगुणगण परममङ्गलायनगुणगण-कथनोऽसि ॥ ११ ॥**

**पदार्थ–**

**अनवरतपरिगुणितगुणगण** = निरन्तर अभ्यासद्वारा गुणहरूको वर्णन गरिएका हे प्रभु (हजुर)
**असङ्गनिशितज्ञानानलविधूताशेष-मलानां** = वैराग्यद्वारा तिखारिएको ज्ञानरूपी अग्निले सम्पूर्ण राग आदि मल नष्ट भएका
**भवत्स्वभावानाम्** = हजुरकै जस्तो शान्त स्वभाव भएका
**आत्मारामाणां** = आफैँमा रमाउने
**मुनीनाम्** = ऋषिहरूको लागि
**परममङ्गलायनगुणगणकथनः** = परम मङ्गलजनक गुणहरूले पूर्ण स्तुतिका लागि योग्य
**असि** = हुनुहुन्छ

**वाक्यार्थ–** निरन्तर गरिएको अभ्यासद्वारा गुणहरूको वर्णन गरिएका हे प्रभु ! हजुर वैराग्यद्वारा तिखारिएको ज्ञानरूपी अग्निले सम्पूर्ण राग आदि मल नष्ट भएका, हजुरकै जस्तो शान्त स्वभाव भएका एवं आफैँमा रमाउने ऋषिहरूका लागि परम मङ्गलजनक गुणहरूद्वारा स्तुतिका लागि योग्य हुनुहुन्छ।

**अथ कथञ्चित् स्खलनक्षुत्पतनजृम्भणदुरवस्थानादिषु विवशानां नः स्मरणाय ज्वरमरणदशायामपि सकलकश्मलनिरसनानि तव गुणकृतनामधेयानि वचनगोचराणि भवन्तु ॥ १२ ॥**

**पदार्थ–**

**अथ** = (अहिले हामी हजुरको दर्शनले नै कृतार्थ भयौँ) तर पनि
**सकलकश्मलनिरसनानि** = सम्पूर्ण पापहरूलाई नष्ट गर्ने
**तव** = हजुरको
**गुणकृतनामधेयानि** = गुणका कारण रहेका 'दीनबन्धु' 'भक्तवत्सल' आदि नामहरू
**स्खलनक्षुत्पतनजृम्भण-दुरवस्थानादिषु** = लड्दा, हाच्छ्यूँ आउँदा, खाल्टोमा खस्दा, हाइ आउँदा, सङ्कटको समयमा
**ज्वरमरणदशायाम् अपि** = ज्वरो आउँदा र मर्न लाग्दा पनि
**विवशानां** = असक्त भएका
**नः** = हामीहरूको
**स्मरणाय** = सम्झनका लागि
**कथञ्चित्** = केही गरी पनि
**वचनगोचराणि** = वचनको विषय
**भवन्तु** = होऊन्

**वाक्यार्थ–** हजुरको दर्शनले नै अहिले हामी कृतार्थ भयौँ, तर पनि सम्पूर्ण पापहरूलाई नष्ट गर्न सक्षम एवं गुणका कारण रहेका 'दीनबन्धु' 'भक्तवत्सल' आदि हजुरका नामहरू लड्दा, हाच्छ्यूँ आउँदा, खाल्टोमा खस्दा, हाइ आउँदा, सङ्कटको समयमा तथा ज्वरो आउँदा र मर्न लाग्दा असक्त भएका हामी सम्झन सकौँ र ती नामहरू कुनै पनि हालतमा हामी उच्चारण गर्न सकौँ।

**किञ्चायं राजर्षिरपत्यकामः प्रजां भवादृशीमाशासान ईश्वरमाशिषां**

**स्वर्गापवर्गयोरपि भवन्तमुपधावति प्रजायामर्थप्रत्ययो धनदमिवाधनः फलीकरणम् ॥ १३ ॥**

**पदार्थ–**

**किञ्च** = तर पनि
**प्रजायाम्** = सन्तानलाई नै
**अर्थप्रत्ययः** = पुरुषार्थ ठान्ने
**अपत्यकामः** = सन्तानको इच्छा गर्ने
**अयं** = यी
**राजर्षिः** = राजर्षि नाभि
**भवादृशीम्** = हजुरजस्तै
**प्रजां** = सन्तानको
**आशासानः** = चाहना गर्दै
**अधनः** = दरिद्र व्यक्ति
**फलीकरणम्** = भुस र कनिका चाहँदै
**धनदम् इव** = धनदाताकहाँ गए जैं
**आशिषां** = ऐहिक भोग
**स्वर्गापवर्गयोः अपि** = स्वर्ग र मोक्षको पनि
**ईश्वरम्** = स्वामी
**भवन्तम्** = हजुरकहाँ
**उपधावति** = आएका छन्

**वाक्यार्थ–** तर पनि हे प्रभु ! दरिद्र व्यक्ति भुस र कनिकाको चाहना राख्दै धनदाताकहाँ गए जैं सन्तानलाई नै पुरुषार्थ ठानेर सन्तानको इच्छा गर्ने यी राजर्षि नाभि हजुरजस्तै सन्तानको चाहना गर्दै ऐहिक भोग, स्वर्ग र अपवर्गको पनि स्वामी हजुरकहाँ आएका छन्। (जसरी धनदाताकहाँ गएर पनि मूर्खतावश कुनै गरिबले तुच्छ वस्तु माग्दछ त्यसरी नै सम्पूर्ण पुरुषार्थदाता हजुरकहाँ आएर पनि यी राजाले सन्तान नै मागेका छन्।)

**को वा इह तेऽपराजितोऽपराजितया माययानवसितपदव्यानावृतमतिर्विषयविषरयानावृतप्रकृतिरनुपासितमहच्चरणः ॥ १४ ॥**

**पदार्थ–**

**अनुपासितमहच्चरणः** = महापुरुषको चरणसेवा नगर्ने
**कः वा** = कुन चाहिँ मान्छे
**इह** = यस संसारमा
**अनवसितपदव्या** = आउने मार्ग अज्ञात भएकी
**अपराजितया** = कोहीद्वारा पनि जित्न नसकिने
**ते** = हजुरकी
**मायया** = मायाद्वारा
**अनावृतमतिः** = चित्त मोहित नहुने
**अपराजितः** = मायाद्वारा नजितिने
**विषयविषरयानावृतप्रकृतिः** = विषयविषरूपी वेगद्वारा नढाकिएको चित्त भएको होला र

**वाक्यार्थ–** महापुरुषको चरणसेवा नगर्ने कुन चाहिँ मान्छे मार्ग अज्ञात भएकी एवं हजुरकी अपराजिता मायाद्वारा मोहित नहुने विषयविषरूपी वेगद्वारा चित्त नढाकिएको हुन सक्छ र ?

**यदु ह वाव तव पुनरदभ्रकर्तरिह समाहूतस्तत्रार्थधियां मन्दानां नस्तद् यद् देवहेलनं देवदेवार्हसि साम्येन सर्वान् प्रतिवोढुमविदुषाम् ॥ १५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अदभ्रकर्तः** = हे ठुला-ठुला कर्म गर्ने प्रभु | **तत्र** = सन्तानप्राप्तिमा नै | **देवहेलनं** = देवत्वमा अनादर भएको छ |
| **यत् उ ह वाव** = निश्चय नै | **अर्थधियां** = परमार्थबुद्धि भएका | **देवदेव** = हे देवाधिदेव |
| **पुनः** = हजुर दुष्प्राप्य भए पनि | **मन्दानां** = मूर्ख | **साम्येन** = कृपापूर्वक |
| **इह** = यस यज्ञमा | **अविदुषाम्** = अज्ञानी | **सर्वान्** = ती सबै अनादरलाई |
| **समाहूतः** = पुत्रप्राप्तिका लागि निमन्त्रित हुनुहुन्छ | **नः** = हामीबाट | **प्रतिवोढुम्** = क्षमा गर्न |
| | **यत् तत्** = जुन त्यो | **अर्हसि** = योग्य हुनुहुन्छ |
| | **तव** = हजुरको | |

**वाक्यार्थ–** हे ठुला-ठुला कर्म गर्ने प्रभु ! निश्चय नै हजुर दुष्प्राप्य भए पनि यस यज्ञमा पुत्रप्राप्तिका लागि निमन्त्रित हुनुहुन्छ। सन्तानप्राप्तिमा नै परमार्थबुद्धि भएका मूर्ख अज्ञानी हामीबाट हजुरको देवत्वमा जुन अनादर भएको छ, हे देवाधिदेव ! हजुर कृपापूर्वक ती सबै अनादरलाई क्षमा गरिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**इति निगदेनाभिष्टूयमानो भगवाननिमिषर्षभो वर्षधराभिवादिता-**
**भिवन्दितचरणः सदयमिदमाह ॥ १६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इति** = यसप्रकारको | **चरणः** = भारतवर्षका राजा नाभिका पूज्य ऋत्विक्हरूद्वारा पनि पूजित हुनुभएका | **भगवान्** = भगवान्ले |
| **निगदेन** = वाणीद्वारा | **अनिमिषर्षभः** = देवताहरूका पनि पालक | **सदयम्** = कृपापूर्वक |
| **अभिष्टूयमानः** = स्तुति गरिनुभएका | | **इदम्** = यसो |
| **वर्षधराभिवादिताभिवन्दित-** | | **आह** = भन्नुभयो |

**वाक्यार्थ–** यसप्रकारको वाणीद्वारा स्तुति गरिनुभएका एवं भारतवर्षका राजा नाभिका पनि पूज्य ऋत्विक्हरूद्वारा पूजित हुनुभएका एवं देवताहरूका पनि पालक भगवान्ले कृपापूर्वक यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**अहो बताहमृषयो भवद्भिरवितथगीर्भिर्वरमसुलभमभियाचितो यदमुष्यात्मजो मया सदृशो भूयादिति ममाहमेवाभिरूपः कैवल्यादथापि ब्रह्मवादो न मृषा भवितुमर्हति ममैव हि मुखं यद् द्विजदेवकुलम् ॥ १७ ॥**

**पदार्थ–**

**अहो** = आश्चर्य
**ऋषयः** = हे ऋषिहरू
**अमुष्य** = यी नाभिको
**मया सदृशः** = मजस्तै
**आत्मजः** = पुत्र
**भूयात् इति** = होस् भन्ने
**यत्** = जुन
**अवितथगीर्भिः** = सत्यवचन भएका
**भवद्भिः** = तपाईं ऋषिहरूद्वारा
**अहम्** = म
**असुलभम्** = अत्यन्त दुर्लभ
**वरम्** = वर
**अभियाचितः** = मागिएँ
**कैवल्यात्** = मजस्तै अर्को पुरुषको अभाव भएको कारण
**मम अभिरूपः** = मजस्तै रूप भएको
**अहम् एव** = म नै छु (अर्को छैन)
**अथ अपि** = यो वरदान दुर्लभ भए पनि
**ब्रह्मवादः** = तपाईंहरूजस्ता ब्राह्मणहरूको वचन
**मृषा** = झुटो
**भवितुम्** = हुन
**न अर्हति** = सक्दैन
**हि बत** = निश्चय नै
**द्विजदेवकुलम्** = ब्राह्मणहरूको कुल
**मम एव** = मेरै
**मुखं** = मुख हो

**वाक्यार्थ–** हे ऋषिहरू ! यी नाभिको मजस्तै पुत्र होस् भनी सत्यवचन भएका तपाईंहरूले मसित अत्यन्त दुर्लभ वर माग्नुभयो। मजस्तै अर्को पुरुषको अभाव भएको कारण मजस्तै रूप भएको म नै छु, अर्को छैन। यो वरदान दुर्लभ भए पनि तपाईंहरूजस्ता ब्राह्मणहरूको वचन झुटो हुन सक्दैन किनभने ब्राह्मणहरूको कुल त मेरै मुख हो।

**तत आग्नीध्रीयेंऽशकलयावतरिष्याम्यात्मतुल्यमनुप-**
**लभमानः ॥ १८ ॥**

**पदार्थ–**

**ततः** = ब्राह्मणवचन व्यर्थ नहुने हुनाले
**आत्मतुल्यम्** = आफूजस्तो
**अनुपलभमानः** = नभेटेकोले (म नै)
**अंशकलया** = आफ्नो अंशद्वारा
**आग्नीध्रीये** = आग्नीध्रपुत्र नाभिमा
**अवतरिष्यामि** = अवतीर्ण हुनेछु

**वाक्यार्थ–** ब्राह्मणवचन व्यर्थ नहुने हुनाले आफूजस्तो अन्य व्यक्ति नभेटेकाले म आफ्नो अंशद्वारा आग्नीध्रपुत्र नाभिको सन्ततिको रूपमा अवतीर्ण हुनेछु।

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**इति निशामयन्त्या मेरुदेव्याः पतिमभिधायान्तर्दधे भगवान् ॥ १९ ॥**

**पदार्थ–**

**निशामयन्त्याः** = सुनिरहेकी
**मेरुदेव्याः** = मेरुदेवीको
**पतिम्** = स्वामी नाभिलाई
**इति** = यी कुराहरू
**अभिधाय** = भनेर
**भगवान्** = भगवान्
**अन्तर्दधे** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** यसप्रकार सुनिरहेकी मेरुदेवीका स्वामी नाभिलाई यी कुराहरू भनेर भगवान् अन्तर्धान हुनुभयो।

**बर्हिषि तस्मिन्नेव विष्णुदत्त भगवान् परमर्षिभिः प्रसादितो नाभेः प्रियचिकीर्षया तदवरोधायने मेरुदेव्यां धर्मान् दर्शयितुकामो वातरशनानां श्रमणानामृषीणामूर्ध्वमन्थिनां शुक्लया तनुवा-वततार ॥ २० ॥**

पदार्थ–

**विष्णुदत्त** = भगवान् विष्णुबाट रक्षा गरिएका हे परीक्षित्
**तस्मिन् एव बर्हिषि** = नाभिको त्यही यज्ञमा (यसप्रकार)
**परमर्षिभिः** = महर्षिहरूद्वारा
**प्रसादितः** = प्रसन्न गराइएका
**ऊर्ध्वमन्थिनां** = ऊर्ध्वरेता मुनिहरूको
**वातरशनानां** = दिगम्बरहरूको
**श्रमणानाम्** = तपस्यामा श्रम गर्ने
**ऋषीणाम्** = ऋषिहरूको
**धर्मान्** = धर्मलाई
**दर्शयितुकामः** = आफैँले आचरण गरेर लोकमा प्रचार गर्ने चाहना राखी
**भगवान्** = भगवान्
**नाभेः** = नाभिको
**प्रियचिकीर्षया** = अभीष्ट पूरा गर्ने इच्छाले
**तदवरोधायने** = उनको अन्तःपुरमा
**मेरुदेव्यां** = नाभिकी महारानी मेरुदेवीमा
**शुक्लया** = शुद्ध सत्त्वगुणात्मक
**तनुवा** = शरीर लिएर
**अवततार** = प्रकट हुनुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! त्यस यज्ञमा यसप्रकार महर्षिहरूद्वारा प्रसन्न गराइएका भगवान्‌ले ऋषिहरूको धर्मलाई आफैँले आचरण गरेर लोकमा प्रचार गर्ने चाहना राखी नाभिको अभीष्ट पूरा गर्ने इच्छाले उनको अन्तःपुरमा नाभिकी महारानी मेरुदेवीबाट शुद्ध सत्त्वगुणात्मक शरीर लिएर प्रकट हुनुभयो ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे नाभिचरिते ऋषभावतारो नाम तृतीयोऽध्यायः ॥ ३ ॥**

# अथ चतुर्थोऽध्यायः

## ऋषभदेवको राज्यशासन

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**अथ ह तमुत्पत्त्यैवाभिव्यज्यमानभगवल्लक्षणं साम्योपशमवैराग्यै-
श्वर्यमहाविभूतिभिरनुदिनमेधमानानुभावं प्रकृतयः प्रजा ब्राह्मणा
देवताश्चावनितलसमवनायातितरां जगृधुः ॥ १ ॥**

**पदार्थ–**

**अथ** = यसपछि
**ह** = निश्चय नै
**प्रकृतयः** = मन्त्रीवर्ग
**प्रजाः** = नागरिकहरू
**ब्राह्मणाः** = ब्राह्मणहरू
**देवताः च** = देवताहरू पनि
**उत्पत्त्या एव** = जन्मदेखि नै
**अभिव्यज्यमानभगवल्लक्षणं** = भगवान्‌को शङ्ख, चक्र आदि चिह्न भएका
**साम्योपशमवैराग्यैश्वर्यमहा-विभूतिभिः** = समता, शान्ति, वैराग्य, ऐश्वर्य आदि विशिष्ट सम्पत्तिले युक्त भई
**अनुदिनम्** = प्रतिदिन
**एधमानानुभावं** = प्रभाव बढ्दै गएका
**तम्** = नाभिको पुत्र रूपमा जन्मिनुभएका ती भगवान्‌लाई
**अवनितलसमवनाय** = पृथ्वीको रक्षा गर्ने राजा बनाउन
**अतितरां** = अत्यन्त
**जगृधुः** = इच्छा गरे

**वाक्यार्थ–** यसपछि मन्त्री, नागरिक, ब्राह्मण र देवताहरूले जन्मदेखि नै शङ्ख, चक्र आदि चिह्न भएका एवं समता, शान्ति, वैराग्य, ऐश्वर्य आदि विशिष्ट सम्पत्तिले युक्त भई नाभिको पुत्र रूपमा जन्मिनुभएका भगवान्‌लाई राजा बनाउने इच्छा गरे।

**तस्य ह वा इत्थं वर्ष्मणा वरीयसा बृहच्छ्लोकेन चौजसा बलेन
श्रिया यशसा वीर्यशौर्याभ्यां च पिता ऋषभ इतीदं नाम
चकार ॥ २ ॥**

**पदार्थ–**

**इत्थं** = यसरी जन्म लिनुभएका
**तस्य** = ती भगवान्‌को
**ह वा** = निश्चय नै
**वरीयसा** = श्रेष्ठतम
**बृहच्छ्लोकेन** = महायशस्वी
**वर्ष्मणा** = पुष्ट शरीर
**ओजसा** = पराक्रम
**बलेन** = शक्ति
**श्रिया** = शोभा
**यशसा** = कीर्ति
**वीर्यशौर्याभ्यां च** = प्रताप र शूरता आदि सामर्थ्यका कारण पनि
**पिता** = पिता नाभिले
**ऋषभः इति** = ऋषभ भन्ने
**इदं** = यो
**नाम** = नाम
**चकार** = गरे

**वाक्यार्थ–** यसरी जन्म लिनुभएका भगवान्‌को परम यश, पुष्ट शरीर, पराक्रम, शक्ति, शोभा, कीर्ति, प्रताप र शूरता आदि सामर्थ्यका कारण नाभिले ऋषभ भन्ने नाम राखे।

**तस्य हीन्द्रः स्पर्धमानो भगवान् वर्षे न ववर्ष तदवधार्य भगवानृषभदेवो योगेश्वरः प्रहस्यात्मयोगमायया स्ववर्षमजनाभं नामाभ्यवर्षत्॥ ३॥**

**पदार्थ–**

**स्पर्धमानः** = ऋषभदेवसँग सेखी गर्ने
**भगवान्** = ऐश्वर्यशाली
**इन्द्रः** = इन्द्रले
**तस्य** = ती ऋषभदेवको (राज्य)
**वर्षे** = अजनाभ द्वीपमा
**ह** = निश्चय नै
**न ववर्ष** = वर्षा गरेनन्
**तदवधार्य** = त्यो (इन्द्रले ईर्ष्यावश पानी नबर्साएको) थाहा पाएर)
**योगेश्वरः** = महायोगी
**भगवान्** = भगवान्
**ऋषभदेवः** = ऋषभदेवले
**प्रहस्य** = (इन्द्रको मूर्खतालाई) उपहास गर्दै
**आत्मयोगमायया** = आफ्नो योगमायाद्वारा
**अजनाभं नाम** = अजनाभ नामको
**स्ववर्षम्** = आफ्नो द्वीपमा
**अभ्यवर्षत्** = वर्षा गराउनुभयो

**वाक्यार्थ–** ऋषभदेवसँग सेखी गर्ने ऐश्वर्यशाली इन्द्रले ऋषभदेवको राज्य अजनाभ द्वीपमा वर्षा गरेनन्। इन्द्रले ईर्ष्यावश पानी नबर्साएको थाहा पाएर महायोगी भगवान् ऋषभदेवले इन्द्रको मूर्खतालाई उपहास गर्दै आफ्नो योगमायाद्वारा अजनाभ नामको आफ्नो द्वीपमा वर्षा गराउनुभयो।

**नाभिस्तु यथाभिलषितं सुप्रजस्त्वमवरुध्यातिप्रमोदभरविह्वलो गद्‌गदाक्षरया गिरा स्वैरं गृहीतनरलोकसधर्मं भगवन्तं पुराणपुरुषं मायाविलसितमतिर्वत्स तातेति सानुरागमुपलालयन् परां निर्वृतिमुपगतः॥ ४॥**

**पदार्थ–**

**मायाविलसितमतिः** = ('यो मेरो छोरो हो' भनेर छोरामा हुने) मायाले मोहितबुद्धि भएका
**नाभिः तु** = राजा नाभिचाहिँ
**यथाभिलषितं** = आफ्नो इच्छाअनुसार
**सुप्रजस्त्वम्** = भगवान्‌लाई नै असल पुत्रको रूपमा
**अवरुध्य** = प्राप्त गरेर
**अतिप्रमोदभरविह्वलः** = हर्षातिशयले आनन्दित भई
**वत्स तात इति** = हे बाबु ! हे प्रिय ! यसप्रकार
**गद्‌गदाक्षरया गिरा** = गद्‌गद् (अतिहर्षयुक्त) वचनद्वारा
**स्वैरं** = आफ्नै इच्छाले
**गृहीतनरलोकसधर्मं** = मनुष्यको देह धारण गरी मनुष्यवत् व्यवहार गर्ने
**पुराणपुरुषं** = पुराणपुरुष
**भगवन्तं** = भगवान्‌को
**सानुरागम्** = प्रेमपूर्वक
**उपलालयन्** = सेवा गर्दै
**परां** = अत्यन्त

**निर्वृतिम्** = आनन्द
**उपगतः** = प्राप्त गरे

**वाक्यार्थ–** 'यो मेरो छोरो हो' भनी छोरामा हुने मायाले मोहितबुद्धि भएका राजा नाभिले आफ्नो इच्छाअनुसार भगवान्लाई नै असल पुत्रको रूपमा प्राप्त गरेर ज्यादै हर्षले आनन्दित भई आफ्नै इच्छाले मनुष्यको देह धारण गरी मनुष्यवत् व्यवहार गर्ने पुराणपुरुष भगवान्लाई 'हे बाबु ! हे प्रिय !' भनी गद्गद् वचनद्वारा बोलाउँदै र प्रेमपूर्वक सेवा गर्दै आनन्दको अनुभूति गर्न थाले।

**विदितानुरागमापौरप्रकृति जनपदो राजा नाभिरात्मजं समयसेतु-रक्षायामभिषिच्य ब्राह्मणेषूपनिधाय सह मेरुदेव्या विशालायां प्रसन्ननिपुणेन तपसा समाधियोगेन नरनारायणाख्यं भगवन्तं वासुदेवमुपासीनः कालेन तन्महिमानमवाप ॥ ५ ॥**

**यस्य ह पाण्डवेय श्लोकावुदाहरन्ति-**

पदार्थ–

**आपौरप्रकृति** = पुरवासी जनतादेखि (मन्त्रीसम्मका सबै)
**जनपदः** = जनसमुदायको (अभिप्राय बुझ्ने)
**राजा** = राजा
**नाभिः** = नाभिले
**विदितानुरागम्** = सबैको प्रेम पाएका
**आत्मजं** = पुत्र ऋषभदेवलाई
**समयसेतुरक्षायाम्** = सदाचार र मर्यादाको रक्षामा (राज्यासनमा)
**अभिषिच्य** = अभिषिक्त गरेर
**ब्राह्मणेषु** = (नीतिधर्मको शिक्षाका लागि) ब्राह्मणहरूसँगै
**उपनिधाय** = राखेर
**मेरुदेव्या सह** = रानी मेरुदेवीका साथ
**विशालायां** = विशाला (बदरिकाश्रम)मा
**प्रसन्ननिपुणेन** = सर्वसुखप्रद र फल प्राप्त गराउन समर्थ
**समाधियोगेन** = समाधिसहितको
**तपसा** = तपस्याद्वारा
**नरनारायणाख्यं** = नरनारायण नामका
**भगवन्तं** = भगवान्
**वासुदेवम्** = वासुदेवको
**उपासीनः** = उपासना गर्दै
**कालेन** = उचित समय आएपछि
**तन्महिमानम्** = भगवान्कै स्वरूप (जीवन्मुक्ति)
**अवाप** = प्राप्त गरे
**पाण्डवेय** = हे (पाण्डुका सन्तान) परीक्षित्
**यस्य** = जसको विषयमा (विद्वान्हरू)
**ह** = निश्चय नै
**श्लोकौ** = निम्नलिखित दुई श्लोक
**उदाहरन्ति** = उदाहरण दिन्छन्

**वाक्यार्थ–** पुरवासी जनतादेखि मन्त्रीसम्मका सबै जनसमुदायको अभिप्राय बुझ्ने राजा नाभिले सबैको प्रेम पाएका पुत्र ऋषभदेवलाई राज्यासनमा अभिषिक्त गरेर नीतिधर्मको शिक्षाका लागि ब्राह्मणहरूसँगै राखेर रानी मेरुदेवीका साथ बदरिकाश्रममा सर्वसुखप्रद र फल प्राप्त गराउन समर्थ समाधिसहितको तपस्याद्वारा नरनारायण भगवान् वासुदेवको उपासना गर्दै उचित समय आएपछि भगवान्कै स्वरूप (जीवन्मुक्ति) प्राप्त गरे। हे परीक्षित् ! जसको विषयमा निम्नलिखित दुई श्लोकको उदाहरण दिइन्छ।

**को नु तत्कर्म राजर्षेर्नाभेरन्वाचरेत् पुमान्।**
**अपत्यतामगाद् यस्य हरिः शुद्धेन कर्मणा॥ ६॥**

**पदार्थ–**

**राजर्षेः** = राजर्षि
**नाभेः** = नाभिको
**तत्कर्म** = त्यस्तो उदार कर्मलाई
**नु** = निश्चय नै
**कः** = कुन
**पुमान्** = मानिसले
**अन्वाचरेत्** = गर्न सक्दछ
**यस्य** = जुन नाभिको
**शुद्धेन** = पवित्र
**कर्मणा** = कर्मद्वारा
**हरिः** = भगवान् श्रीहरि
**अपत्यताम्** = सन्तानको रूपमा
**अगात्** = प्राप्त हुनुभयो

**वाक्यार्थ–** राजर्षि नाभिको जस्तो उदार कर्म कुन मानिसले गर्न सक्दछ ? जुन नाभिको पवित्र कर्मद्वारा भगवान् श्रीहरि सन्तानको रूपमा प्राप्त हुनुभयो।

**ब्रह्मण्योऽन्यः कुतो नाभेर्विप्रा मङ्गलपूजिताः।**
**यस्य बर्हिषि यज्ञेशं दर्शयामासुरोजसा॥ ७॥**

**पदार्थ–**

**नाभेः अन्यः** = नाभिदेखि भिन्न अर्को मानिस
**ब्रह्मण्यः** = ब्राह्मणभक्त
**कुतः** = कहाँ छ
**यस्य** = जुन नाभिको
**बर्हिषि** = यज्ञमा
**मङ्गलपूजिताः** = दक्षिणा आदिद्वारा सन्तुष्ट
**विप्राः** = ब्राह्मणहरूले
**ओजसा** = मन्त्रबलले
**यज्ञेशं** = यज्ञपति भगवान्लाई
**दर्शयामासुः** = साक्षात्कार गराइदिए

**वाक्यार्थ–** नाभिदेखि भिन्न अर्को मानिस नाभि जत्तिको ब्राह्मणभक्त कहाँ छ ? जुन नाभिको यज्ञमा दक्षिणा आदिद्वारा सन्तुष्ट भएका ब्राह्मणहरूले मन्त्रबलले यज्ञपति भगवान्को साक्षात्कार गराइदिए।

**अथ ह भगवानृषभदेवः स्ववर्षं कर्मक्षेत्रमनुमन्यमानः प्रदर्शित-गुरुकुलवासो लब्धवरैर्गुरुभिरनुज्ञातो गृहमेधिनां धर्माननुशिक्षमाणो जयन्त्यामिन्द्रदत्तायामुभयलक्षणं कर्म समाम्नायाम्नातमभि-युञ्जन्नात्मजानामात्मसमानानां शतं जनयामास॥ ८॥**

**पदार्थ–**

**अथ** = पिता नाभिको शेषपछि
**ह** = निश्चय नै
**भगवान्** = भगवान्
**ऋषभदेवः** = ऋषभदेवले
**स्ववर्षं** = आफ्नो राज्य अजनाभ खण्डलाई
**कर्मक्षेत्रम्** = कर्मक्षेत्र
**अनुमन्यमानः** = मानेर
**प्रदर्शितगुरुकुलवासः** =

लोकशिक्षाका लागि गुरुकुलमा बसेपछि
**लब्धवरैः** = गुरुदक्षिणा पाएका
**गुरुभिः** = गुरुहरूद्वारा
**अनुज्ञातः** = गृहस्थ जीवनका लागि अनुमति पाएका ऋषभदेवले
**गृहमेधिनां** = गृहस्थहरूको
**धर्मान्** = धर्महरूलाई
**अनुशिक्षमाणः** = सिकाउँदै
**उभयलक्षणं** = श्रुति, स्मृति दुबै
**समाम्नायाम्नातम्** = शास्त्रसम्मत
**कर्म** = कर्म
**अभियुञ्जन्** = गर्दै
**इन्द्रदत्तायाम्** = देवराज इन्द्रद्वारा दिइएकी कन्या
**जयन्त्याम्** = जयन्तीबाट
**आत्मसमानानां** = आफूसमान
**आत्मजानाम् शतं** = सय छोरा
**जनयामास** = जन्माउनुभयो

**वाक्यार्थ–** पिता नाभिको शेषपछि भगवान् ऋषभदेवले आफ्नो राज्य अजनाभ खण्डलाई कर्मक्षेत्र मानेर लोकशिक्षाका लागि गुरुकुलमा बसी जसको निग्रहस्वरूप गुरुदक्षिणा पाएका गुरुहरूद्वारा गृहस्थ जीवनका लागि अनुमति लिएर गृहस्थहरूका धर्महरू सिकाउँदै श्रुति, स्मृति दुबै शास्त्रसम्मत कर्म गर्दै देवराज इन्द्रद्वारा दिइएकी कन्या जयन्तीबाट आफूसमान सय छोरा जन्माउनुभयो।

**येषां खलु महायोगी भरतो ज्येष्ठः श्रेष्ठगुण आसीद् येनेदं वर्षं भारतमिति व्यपदिशन्ति ॥ ९ ॥**

**पदार्थ–**

**येषां** = ऋषभदेवका सय छोरामध्ये
**खलु** = अवश्य नै
**श्रेष्ठगुणः** = उत्तम गुणसम्पन्न
**महायोगी** = आत्मज्ञानी
**भरतः** = भरत
**ज्येष्ठः** = जेठा
**आसीत्** = थिए
**येन** = जसको नामबाट
**इदं वर्षं** = यस भूखण्डलाई
**भारतम् इति** = भारत वर्ष भनेर
**व्यपदिशन्ति** = भन्दछन्

**वाक्यार्थ–** ऋषभदेवका सय भाइ छोरामध्ये सर्वगुणसम्पन्न आत्मज्ञानी भरत जेठा थिए, जसको नामबाट यस भूखण्डलाई भारत वर्ष भनिन्छ।

**तमनु कुशावर्त इलावर्तो ब्रह्मावर्तो मलयः केतुर्भद्रसेन इन्द्रस्पृग् विदर्भः कीकट इति नव नवतिप्रधानाः ॥ १० ॥**

**पदार्थ–**

**तमनु** = भरतका भाइहरूमा
**कुशावर्तः** = कुशावर्त
**इलावर्तः** = इलावर्त
**ब्रह्मावर्तः** = ब्रह्मावर्त
**मलयः** = मलय
**केतुः** = केतु
**भद्रसेनः** = भद्रसेन
**इन्द्रस्पृक्** = इन्द्रस्पृक्
**विदर्भः** = विदर्भ र
**कीकटः** = कीकट
**इति** = यी
**नव** = नौ
**नवतिप्रधानाः** = अरू नब्बे भाइभन्दा ज्येष्ठ र श्रेष्ठ थिए

**वाक्यार्थ–** भरतका भाइहरूमा कुशावर्त, इलावर्त, ब्रह्मावर्त, मलय, केतु, भद्रसेन, इन्द्रस्पृक्, विदर्भ र कीकट यी नौ भाइ अरू नब्बे भाइहरूभन्दा ज्येष्ठ र श्रेष्ठ थिए।

**कविर्हरिरन्तरिक्षः प्रबुद्धः पिप्पलायनः।**
**आविर्होत्रोऽथ द्रुमिलश्चमसः करभाजनः॥ ११॥**

**इति भागवतधर्मदर्शना नव महाभागवतास्तेषां सुचरितं भगवन्महिमोपबृंहितं वसुदेवनारदसंवादमुपशमायनमुपरिष्टाद् वर्णयिष्यामः॥ १२॥**

**पदार्थ–**

**अथ** = यसै गरी
**कविः** = कवि
**हरिः** = हरि
**अन्तरिक्षः** = अन्तरिक्ष
**प्रबुद्धः** = प्रबुद्ध
**पिप्पलायनः** = पिप्पलायन
**आविर्होत्रः** = आविर्होत्र
**द्रुमिलः** = द्रुमिल
**चमसः** = चमस
**करभाजनः** = करभाजन
**इति** = यी
**नव** = नौ कुमारहरू
**भागवतधर्मदर्शनाः** = भागवत धर्मका प्रचारक र
**महाभागवताः** = भगवान्का परम भक्त थिए
**तेषां** = कवि आदि ती नौ राजकुमारको
**भगवन्महिमोपबृंहितं** = भगवान्को महिमाले शोभायमान
**उपशमायनम्** = परम शान्तिपूर्ण
**सुचरितं** = पवित्र चरित्रले युक्त
**वसुदेवनारदसंवादम्** = वसुदेव र नारदको संवाद
**उपरिष्टात्** = माथि (एकादश स्कन्धमा)
**वर्णयिष्यामः** = वर्णन गरौँला

**वाक्यार्थ–** यसै गरी कवि, हरि, अन्तरिक्ष, प्रबुद्ध, पिप्पलायन, आविर्होत्र, द्रुमिल, चमस, करभाजन यी नौ कुमारहरू भागवत धर्मका प्रचारक र भगवान्का परम भक्त थिए। कवि आदि नौ राजकुमारको भगवान्को महिमाले शोभायमान, परमशान्तिपूर्ण तथा पवित्र चरित्रले युक्त वसुदेव र नारदको संवाद यसै शास्त्रको एकादश स्कन्धमा वर्णन गरौँला।

**यवीयांस एकाशीतिर्जायन्तेयाः पितुरादेशकरा महाशालीना महाश्रोत्रिया यज्ञशीलाः कर्मविशुद्धा ब्राह्मणा बभूवुः॥ १३॥**

**पदार्थ–**

**यवीयांसः** = (पहिले बताइएका भन्दा) कान्छा
**एकाशीतिः जायन्तेयाः** = जयन्तीका एकासी भाइ छोराहरू
**पितुः** = पिता ॠषभदेवको
**आदेशकराः** = आज्ञाकारी
**महाशालीनाः** = अत्यन्त विनम्र
**महाश्रोत्रियाः** = महान् वेदज्ञ
**यज्ञशीलाः** = सधैँ यज्ञ गरिरहने
**कर्मविशुद्धाः** = यज्ञ आदि कर्मको अनुष्ठानद्वारा शुद्ध चित्त भएका
**ब्राह्मणाः** = ब्रह्मज्ञानी
**बभूवुः** = भए

**वाक्यार्थ–** पहिले बताइएका उन्नाईस भाइ छोराभन्दा कान्छा अन्य एकासी छोराहरू पिता ॠषभदेवको आज्ञा पालन गर्ने, अत्यन्त नम्र, महान् वेदज्ञ, सधैँ यज्ञ गरिरहने तथा यज्ञ आदि

कर्मको अनुष्ठानद्वारा शुद्ध चित्त भएका ब्रह्मज्ञानी भए।

**भगवानृषभसंज्ञ आत्मतन्त्रः स्वयं नित्यनिवृत्तानर्थपरम्परः केवलानन्दानुभव ईश्वर एव विपरीतवत् कर्माण्यारभमाणः कालेनानुगतं धर्ममाचरणेनोपशिक्षयन्नतद्विदां सम उपशान्तो मैत्रः कारुणिको धर्मार्थयशःप्रजानन्दामृतावरोधेन गृहेषु लोकं नियमयत्॥ १४॥**

**पदार्थ–**

**स्वयं** = आफैँमा
**आत्मतन्त्रः** = स्वतन्त्र (कर्मको अधीनमा नरहने)
**ईश्वरः** = सर्वशासक परमात्मा
**ऋषभसंज्ञः** = ऋषभ
**भगवान्** = भगवान्
**केवलानन्दानुभवः** = केवल आनन्दबाट अनुभूति गर्न सकिने
**नित्यनिवृत्तानर्थपरम्परः** = जन्म, मरण आदि अनर्थ परम्पराबाट सदा निर्मुक्त
**समः** = सम्पूर्ण प्राणीमा समदृष्टि राख्ने
**उपशान्तः** = शान्त
**मैत्रः** = मैत्रीभाव सम्पन्न
**कारुणिकः एव** = दयालु नै हुनुहुन्थ्यो (तर पनि)
**विपरीतवत्** = यी गुणभन्दा विपरीत (सामान्य मान्छेले) झैँ
**कर्माणि** = कर्महरू
**आरभमाणः** = गर्दै
**कालेन** = समयक्रमसँगै
**अनुगतं** = नष्ट हुन लागेको
**धर्मम्** = धर्मलाई
**आचरणेन** = आफैँ पालन गरेर
**अतद्विदां** = धर्माचरण नजान्ने मान्छेलाई
**उपशिक्षयन्** = धर्म सिकाउँदै
**धर्मार्थयशःप्रजानन्दामृतावरोधेन** = धर्म, अर्थ, यश, सन्तान, सुखभोग र मोक्षको सङ्ग्रहद्वारा
**गृहेषु** = घरमा रहने (गृहस्थ)
**लोकं** = मान्छेलाई (स्वेच्छाचारबाट निवृत्त गराई शास्त्राचारमा)
**नियमयत्** = नियन्त्रित गर्नुभयो

**वाक्यार्थ–** आफैँमा स्वतन्त्र वा कर्मको अधीनमा नरहने सर्वशासक परमात्मा ऋषभ भगवान् केवल आनन्दबाट अनुभूति गर्न सकिने, जन्म, मरण आदि अनर्थ परम्पराबाट सदा निर्मुक्त, सम्पूर्ण प्राणीमा समदृष्टि राख्ने, शान्त एवं मैत्रीभाव सम्पन्न दयालु हुनुहुन्थ्यो तर पनि माथि बताइएको भन्दा विपरीत सामान्य मान्छेले झैँ कर्महरू गर्दै समयक्रमसँगै नष्ट हुन लागेको धर्मलाई आफैँ पालन गरेर धर्माचरण नजान्ने मान्छेलाई धर्माचार सिकाउँदै धर्म, अर्थ, यश, सन्तान, सुखभोग र मोक्षको सङ्ग्रहद्वारा गृहस्थहरूलाई स्वेच्छाचारबाट निवृत्त गराई शास्त्राचारमा लगाउनुभयो।

**यद्यच्छीर्षण्याचरितं तत्तदनुवर्तते लोकः॥ १५॥**

**पदार्थ–**

**यत् यत्** = जुन-जुन (राम्रा वा नराम्रा कर्म)
**शीर्षण्याचरितं** = श्रेष्ठ व्यक्तिले आचरण गरेको छ
**लोकः** = अन्य सामान्य मानिसहरूले
**तत् तत्** = त्यही-त्यही कर्मको
**अनुवर्तते** = अनुसरण गर्दछन्

**वाक्यार्थ–** श्रेष्ठ व्यक्तिले जस्ता-जस्ता (राम्रा वा नराम्रा) आचरण गरेको छ अन्य सामान्य मानिसहरूले त्यही-त्यही कर्मको अनुसरण गर्दछन्।

**यद्यपि स्वविदितं सकलधर्मं ब्राह्मं गुह्यं ब्राह्मणैर्दर्शितमार्गेण सामादिभिरुपायैर्जनतामनुशशास ॥ १६ ॥**

पदार्थ–

**यद्यपि** = यद्यपि
**सकलधर्मं** = सम्पूर्ण धर्मको स्रोतका रूपमा रहेको
**ब्राह्मं गुह्यं** = वेदको रहस्य
**स्वविदितं** = आफैँले बुझ्नुभएको थियो (तापनि)
**ब्राह्मणैः** = ब्राह्मणहरूद्वारा
**दर्शितमार्गेण** = बताइएको मार्गको अनुसरण गर्दै
**सामादिभिः** = साम, दान, भेद र दण्ड यी
**उपायैः** = उपायहरूद्वारा
**जनताम्** = जनतालाई
**अनुशशास** = शासन गर्नुभयो

**वाक्यार्थ–** ऋषभदेवले यद्यपि सम्पूर्ण धर्मको स्रोतका रूपमा रहेको वेदको रहस्य आफैँले बुझ्नुभएको थियो तापनि ब्राह्मणहरूद्वारा बताइएको शास्त्रीय मार्गको अनुसरण गर्दै साम, दान, भेद र दण्ड यी उपायहरूद्वारा जनताको शासन गर्नुभयो।

**द्रव्यदेशकालवयःश्रद्धर्त्विग्विविधोद्देशोपचितैः सर्वैरपि क्रतुभिर्यथोपदेशं शतकृत्व इयाज ॥ १७ ॥**

पदार्थ–

**द्रव्यदेशकालवयःश्रद्धर्त्विग्विविधोद्देशोपचितैः** = द्रव्य, देश, काल, उमेर, श्रद्धा र ऋत्विक्‌हरूद्वारा विभिन्न देवतालाई उद्देश्य गरेर गरिएका
**सर्वैः** = सम्पूर्ण
**क्रतुभिः अपि** = यज्ञहरूद्वारा पनि
**यथोपदेशं** = ब्राह्मणको उपदेशअनुरूप
**शतकृत्वः** = सयौँ पटक
**इयाज** = यज्ञ गर्नुभयो

**वाक्यार्थ–** ब्राह्मणको उपदेशअनुरूप द्रव्य, देश, काल, उमेर, श्रद्धा र ऋत्विक्‌हरूद्वारा विभिन्न देवतालाई उद्देश्य गरी उहाँले सयौँ पटक यज्ञ गर्नुभयो।

**भगवतर्षभेण परिरक्ष्यमाण एतस्मिन् वर्षे न कश्चन पुरुषो वाञ्छत्यविद्यमानमिवात्मनोऽन्यस्मात् कथञ्चन किमपि कर्हिचिदवेक्षते भर्तर्यनुसवनं विजृम्भितस्नेहातिशयमन्तरेण ॥ १८ ॥**

पदार्थ–

**भगवता ऋषभेण** = भगवान् ऋषभदेवद्वारा
**परिरक्ष्यमाणे** = रक्षा गरिएको (शासन गरिएको)
**एतस्मिन्** = यस
**वर्षे** = अजनाभ राज्यमा
**कश्चन** = कोही पनि
**पुरुषः** = मानिस
**भर्तरि** = पालक ऋषभदेवमा

**अनुसवनं** = प्रत्येक क्षण
**विजृम्भितस्नेहातिशयम्** = बढ्दै गएको अतिशय प्रेमदेखि
**अन्तरेण** = बाहेक
**कथञ्चन** = कुनै पनि प्रकारले
**कर्हिचित्** = कहिल्यै पनि
**अविद्यमानम् इव** = हुँदै नभएको वस्तु (आकाशको फूल आदि)लाई झैं
**किम् अपि** = कुनै पनि वस्तु
**अन्यस्मात्** = अरूबाट
**आत्मनः** = आफ्नो प्रयोजनका लागि
**न वाञ्छति** = इच्छा गर्दैनथ्यो
**न अवेक्षते** = देख्दैनथ्यो

**वाक्यार्थ–** जसरी हुँदै नभएको (आकाशको फूल आदि) वस्तुलाई कुनै मान्छेले पनि प्राप्त गर्ने इच्छा गर्दैन त्यसै गरी भगवान् ऋषभदेवले शासन गरेको यस अजनाभ राज्यमा कोही पनि मानिस पालक ऋषभदेवमा प्रत्येक क्षण बढ्दै गएको अतिशय प्रेमदेखि बाहेक अन्य कुनै पनि वस्तु कुनै प्रकारले र कहिल्यै पनि अरूबाट आफ्नो प्रयोजनका लागि इच्छा गर्दैनथ्यो।

**स कदाचिदटमानो भगवानृषभो ब्रह्मावर्तगतो ब्रह्मर्षिप्रवरसभायां प्रजानां निशामयन्तीनामात्मजानवहितात्मनः प्रश्रयप्रणयभर-सुयन्त्रितानप्युपशिक्षयन्निति होवाच॥ १९॥**

**पदार्थ–**

**कदाचित्** = कुनै एकदिन
**अटमानः** = घुम्दाघुम्दै
**ब्रह्मावर्तगतः** = ब्रह्मावर्त देशमा पुगेका
**सः** = ती
**भगवान् ऋषभः** = भगवान् ऋषभदेवले
**ब्रह्मर्षिप्रवरसभायां** = श्रेष्ठ-श्रेष्ठ ब्रह्मर्षिहरूको सभामा
**निशामयन्तीनाम्** = सुनेर बसिरहेका
**प्रजानां** = प्रजाहरूको अगाडि
**अवहितात्मनः** = सावधान भएका
**प्रश्रयप्रणयभरसुयन्त्रितान्** = पूर्ण नम्रता र स्नेहका कारण आफ्नो वशमा भएका
**आत्मजान्** = छोराहरूलाई
**उपशिक्षयन्** = उपदेश दिँदै
**ह** = निश्चय नै
**इति** = यसो (पाँचौं अध्यायमा भनिएको कुरा)
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** कुनै एकदिन घुम्दाघुम्दै ब्रह्मावर्त देशमा पुग्नुभएका ऋषभदेवले श्रेष्ठ-श्रेष्ठ ब्रह्मर्षिहरूको सभामा सुनेर बसिरहेका प्रजाहरूको अगाडि सावधान भएका पूर्ण नम्रता र स्नेहका कारण आफ्नो वशमा भएका छोराहरूलाई उपदेश दिँदै यसो (पाँचौ अध्यायमा भनिएको कुरा) भन्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे चतुर्थोऽध्यायः॥ ४॥**

# अथ पञ्चमोऽध्यायः

## ऋषभदेवद्वारा छोराहरूलाई उपदेश एवं उहाँको अवधूतवृत्ति

**ऋषभ उवाच** (ऋषभदेवले भन्नुभयो)

**नायं देहो देहभाजां नृलोके**
**कष्टान् कामानर्हते विड्भुजां ये।**
**तपो दिव्यं पुत्रका येन सत्त्वं**
**शुद्ध्येद् यस्माद् ब्रह्मसौख्यं त्वनन्तम्॥ १॥**

**पदार्थ–**

**पुत्रकाः** = हे छोराहरू
**नृलोके** = मनुष्यलोकमा
**देहभाजां** = प्राणीहरूमा
**अयं** = यो
**देहः** = मनुष्य शरीर
**विड्भुजां** = विष्ठाभोजी कुकुर, सुँगुर आदिको योग्य
**ये** = जे-जति विषयहरू छन्
**कष्टान्** = ती कष्टप्रद
**कामान्** = विषयभोग भोग्न
**न अर्हते** = योग्य छैन (तर)
**दिव्यं** = उत्कृष्ट
**तपः** = तपस्या (-का लागि मात्र मनुष्य शरीर योग्य छ)
**येन** = जुन दिव्य तपस्याद्वारा
**सत्त्वं** = अन्तःकरण
**शुद्ध्येत्** = शुद्ध हुन्छ
**यस्मात् तु** = जुन शद्ध अन्तःकरणद्वारा त
**अनन्तम्** = अविनाशी
**ब्रह्मसौख्यं** = ब्रह्मानन्दको प्राप्ति हुन्छ

**वाक्यार्थ–** हे छोराहरू ! मनुष्यलोकका प्राणीहरूमध्ये श्रेष्ठ यो मनुष्य शरीर विष्ठाभोजी कुकुर, सुँगुर आदिले भोग्न योग्य कष्टप्रद विषयभोग भोग्नका लागि प्राप्त भएको होइन, यो शरीर त उत्कृष्ट तपस्याका लागि प्राप्त भएको हो। तपस्याद्वारा मानिसको अन्तःकरण शुद्ध हुन्छ र शुद्ध अन्तःकरणद्वारा नै अविनाशी ब्रह्मानन्दको प्राप्ति हुन्छ।

**विवरण–** सामान्य विषयभोगहरू प्राप्त गर्नुमा मनुष्य जीवनको सार्थकता छैन। विषयभोगबाट आउने आनन्द त सुँगुर र कुकुर आदिलाई पनि मिलेको हुन्छ। तिनै प्राणीहरूले गर्ने जस्तो काम गर्दा मानिस अरू प्राणीहरूभन्दा उत्कृष्ट हुन सक्दैन। उसले त आफ्नो अन्तःकरणलाई शुद्ध गर्ने प्रयास गर्नुपर्छ।

अन्तःकरणमा तीन किसिमका दोष हुन्छन्– मलदोष, विक्षेपदोष र आवरणदोष। मलदोष भनेको स्थूल पाप हो। विक्षेप भनेको मनको चञ्चलता हो। आवरण भनेको आफ्नो असली स्वरूपलाई नजान्नु हो। मलदोष अर्थात् पाप हटाउन निष्काम कर्मयोगको पालना गर्नुपर्छ। वेदका असी हजार मन्त्रहरूमा कर्म गर्ने विधि बताइएको छ। यी सबै कर्महरूलाई निष्काम भावले सम्पन्न गरेपछि मात्र मनुष्यको चित्त उपासनाका लागि योग्य हुन्छ। मनमा भएको चञ्चलता

अर्थात् विक्षेपदोष हटाउन भगवान् विष्णु, राम, कृष्ण, शिव, गणेश, दुर्गा आदि कुनै इष्टदेवको निरन्तर चिन्तन र स्मरण गर्नुपर्छ। वेदका सोह्र हजार मन्त्रहरूले परमात्माको उपासनासम्बन्धी रहस्यलाई प्रकट गरेका छन्। बाँकी रहेका चार हजार मन्त्रले युक्त वेदको उपनिषद् भागले आत्मा र परमात्माको एकतालाई चिनाएको छ, जसलाई ब्रह्मज्ञान वा भगवत्तत्त्व-साक्षात्कार भनिन्छ। निष्काम कर्म र दृढ भक्तिद्वारा चित्त शुद्ध भएको व्यक्ति नै परमात्माको कृपाले मानव जीवनको अन्तिम लक्ष्य परमानन्दलाई प्राप्त गर्न समर्थ हुन्छ।

जसरी मैलिएको र हल्लिइरहेको ऐनामा अनुहारको प्रतिबिम्ब राम्ररी देखिँदैन र त्यसलाई पुछी नहल्लिने गरेपछि मात्र अनुहारको प्रतिबिम्ब देखिन्छ त्यसै गरी निष्काम कर्मद्वारा मैलो हटाइएको र भक्तिद्वारा निश्चल गरिएको चित्तमा आफ्नो परमात्मास्वरूपलाई छर्लङ्ग देख्न सकिन्छ। मन शुद्ध नहुन्जेल केही गरे पनि ज्ञान हुँदैन र कर्म, वैराग्य, उपासना आदिबाट मन शुद्ध भएपछि जसरी पनि ज्ञान हुन्छ। ज्ञान हुनुलाई आवरण हट्नु अर्थात् जीवात्मा र परमात्माबीचको पर्दा हट्नु पनि भनिन्छ। केवल मनुष्यलोकमा मात्र सम्पन्न गर्न सकिने अन्यत्र स्वर्ग आदि लोकमा सम्पन्न गर्न नसकिने त्यस्ता दिव्य तपस्याहरू, कर्म, वैराग्य, परमात्मामा गरिएको भक्ति आदि साधनहरूद्वारा मनुष्यले आफ्नो जीवनलाई सार्थक गराउनुपर्छ भनी ऋषभदेवले ब्रह्मावर्तक्षेत्रमा प्रजाहरूका अगाडि आफ्ना सय भाइ छोराहरूलाई उपदेश दिनुभएको छ।

**महत्सेवां द्वारमाहुर्विमुक्ते-**
**स्तमोद्वारं योषितां सङ्गिसङ्गम्।**
**महान्तस्ते समचित्ताः प्रशान्ता**
**विमन्यवः सुहृदः साधवो ये॥ २॥**

**पदार्थ–**

**महत्सेवां** = महापुरुषको सेवालाई
**विमुक्तेः** = संसारबाट मुक्त हुने
**द्वारम्** = ढोका
**आहुः** = भन्दछन्
**योषितां** = स्त्रीहरूको
**सङ्गिसङ्गम्** = सङ्गत गर्ने पुरुषहरूसितको सङ्गतलाई
**तमोद्वारं** = अन्धकारमय संसारको ढोका (भन्दछन्)
**ये** = जुन पुरुषहरू
**समचित्ताः** = समचित्त भएका
**प्रशान्ताः** = परमशान्त
**विमन्यवः** = क्रोधहीन
**सुहृदः** = सबैका हितचिन्तक (मित्र)
**साधवः** = सदाचारसम्पन्न छन्
**ते** = तिनीहरू
**महान्तः** = महापुरुष हुन्

**वाक्यार्थ–** महापुरुषको सेवालाई संसारबाट मुक्त हुने ढोका भनिन्छ भने स्त्रीहरूको सङ्गत गर्ने पुरुषहरूसितको सङ्गतलाई चाहिँ अन्धकारमय संसारको ढोका भनिन्छ। जुन मानिसहरू समचित्त भएका, परमशान्त, क्रोधहीन, सबैका हितचिन्तक एवं सदाचारसम्पन्न छन् तिनीहरू महापुरुष हुन्।

**ये वा मयीशे कृतसौहृदार्था**
**जनेषु देहम्भरवार्तिकेषु।**
**गृहेषु जायात्मजरातिमत्सु**
**न प्रीतियुक्ता यावदर्थाश्च लोके ॥ ३ ॥**

**पदार्थ–**

**ये** = जुन मानिसहरू
**मयि ईशे** = म परमात्मामा
**कृतसौहृदार्थाः** = गरिएको निष्काम प्रेमलाई पुरुषार्थ ठान्ने
**वा** = अथवा
**देहम्भरवार्तिकेषु** = शरीरपोषणका लागि मात्र कर्म गर्ने
**जनेषु** = मानिसहरूमा र
**जायात्मजरातिमत्सु** = पत्नी, पुत्र र धनले सम्पन्न
**गृहेषु** = गृहस्थाश्रममा
**न प्रीतियुक्ताः** = अरुचि भएका हुन्छन् (त्यसै गरी)
**लोके** = लोकमा
**यावदर्थाः च** = शरीरनिर्वाहको लागि मात्र (सङ्ग्रहका लागि होइन) प्रवृत्त हुन्छन् तिनीहरू पनि महापुरुष नै हुन्

**वाक्यार्थ–** जुन मानिसहरू म परमात्मामा गरिएको निष्काम प्रेमलाई पुरुषार्थ ठान्दछन्, शरीरपोषणका लागि मात्र कर्म गर्दछन्, पत्नी, पुत्र र धनले सम्पन्न गृहस्थाश्रममा कुनै किसिमको स्नेहभाव राख्दैनन्, एवं सङ्ग्रहका लागि नभई शरीरनिर्वाहका लागि मात्र जसले कर्म गर्दछन् तिनीहरू पनि महापुरुष नै हुन्।

**नूनं प्रमत्तः कुरुते विकर्म**
**यदिन्द्रियप्रीतय आपृणोति।**
**न साधु मन्ये यत आत्मनोऽय-**
**मसन्नपि क्लेशद आस देहः ॥ ४ ॥**

**पदार्थ–**

**यत्** = जब
**इन्द्रियप्रीतये** = इन्द्रियको तृप्तिका लागि
**आपृणोति** = विषयभोगमा मुग्ध हुन्छ (तब)
**नूनं** = निश्चय पनि
**प्रमत्तः** = प्रमत्त (विवेकशून्य) व्यक्तिले
**विकर्म** = पाप नै
**कुरुते** = गर्दछ (यसलाई म)
**साधु** = राम्रो
**न मन्ये** = मान्दिनँ (किनभने)
**यतः** = जुन पापकर्मको आचरणबाट नै
**अयम्** = यो
**असन्** = हुँदै नभएको (कल्पित)
**देहः अपि** = शरीर पनि
**आत्मनः** = आफ्नो
**क्लेशदः** = दुःखदायी
**आस** = हुन पुग्दछ

**वाक्यार्थ–** जो व्यक्ति इन्द्रियको तृप्तिका लागि विषयभोगमा मुग्ध हुन्छ त्यसले पाप नै गर्दछ।

यस्तो व्यक्तिलाई म राम्रो मान्दिनँ किनभने पापकर्मको आचरणबाट नै यो हुँदै नभएको (कल्पित) आफ्नो शरीर पनि दुःखदायी हुन पुग्दछ।

**पराभवस्तावदबोधजातो**
**यावन्न जिज्ञासत आत्मतत्त्वम्।**
**यावत् क्रियास्तावदिदं मनो वै**
**कर्मात्मकं येन शरीरबन्धः॥ ५॥**

**पदार्थ–**

**यावत्** = जबसम्म
**आत्मतत्त्वम्** = आफ्नो यथार्थरूप आत्मतत्त्वलाई
**न जिज्ञासते** = जान्ने इच्छा गर्दैन
**तावत्** = तबसम्म
**अबोधजातः** = अज्ञानद्वारा उत्पन्न
**पराभवः** = (आत्माको) तिरस्कार भइरहन्छ
**यावत्** = जबसम्म
**क्रियाः** = (मनुष्यले अज्ञानबाट प्रेरित भई) कर्म गरिरहन्छ
**तावत्** = तबसम्म
**इदं** = यो
**मनः** = मन
**कर्मात्मकं** = क्रियाशील भइरहन्छ
**येन** = जुन (कर्ममा क्रियाशील) मनद्वारा
**वै** = निश्चय नै
**शरीरबन्धः** = शरीरप्राप्ति र यसद्वारा बन्धन भइरहन्छ

**वाक्यार्थ–** मानिस जबसम्म आफ्नो यथार्थ रूप आत्मतत्त्वलाई जान्ने इच्छा गर्दैन तबसम्म अज्ञानद्वारा आत्माको तिरस्कार भइरहन्छ। जबसम्म मानिस अज्ञानबाट प्रेरित भई कर्म गरिरहन्छ तबसम्म यो मन क्रियाशील भइरहन्छ र यही मनद्वारा शरीरप्राप्ति र यसद्वारा बन्धन भइरहन्छ।

**विवरण–** अज्ञानले गर्दा आफ्नो वास्तविक स्वरूपलाई नजान्नु सबैभन्दा ठुलो पराजय हो। शरीरलाई नै म हुँ भनी सोचेकाले त्यसैको प्रीतिको लागि मनुष्यले कैयौँ जन्मदेखि कर्महरू गर्दैआएको हो, अनि तिनै कर्मवासनाहरूका कारणले बारम्बार संसारमा जन्मिएर मृत्यु, रोग र बुढ्याइँ आदि भयङ्कर दुःखहरूलाई झेल्नुपरेको हो। त्यसैले मानिस जबसम्म विषयासक्त भई कर्म गरिरहन्छ तबसम्म वासनाको कारणले शरीररूपी बन्धन रहिरहन्छ।

**एवं मनः कर्मवशं प्रयुङ्क्ते**
**अविद्ययात्मन्युपधीयमाने।**
**प्रीतिर्न यावन्मयि वासुदेवे**
**न मुच्यते देहयोगेन तावत्॥ ६॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**अविद्यया** = अज्ञानद्वारा
**आत्मनि** = आत्मालाई

**उपधीयमाने** = (देह, इन्द्रिय आदिको तादात्म्याध्यासले) ढाकिसकेपछि
**मनः** = मनले
**कर्मवशं** = कर्मवासनाले वशीभूत मानिसलाई
**प्रयुङ्क्ते** = कर्ममा प्रवृत्त गराउँछ (त्यसैले)
**यावत्** = जबसम्म (जीवको)
**मयि** = म
**वासुदेवे** = वासुदेवमा
**प्रीतिः न** = प्रेम हुँदैन
**तावत्** = तबसम्म (ऊ)
**देहयोगेन** = शरीरसँगको सम्बन्धबाट
**न मुच्यते** = मुक्त हुन सक्दैन

**वाक्यार्थ–** यसप्रकार अज्ञानले (देह, इन्द्रिय आदिको तादात्म्याध्यासले) आत्मालाई ढाकिसकेपछि मनले कर्मवासनाद्वारा वशीभूत मानिसलाई कर्ममा प्रवृत्त गराउँछ। त्यसैले जबसम्म जीवको भगवान् वासुदेवमा प्रेम हुँदैन तबसम्म ऊ शरीरसँगको सम्बन्धबाट मुक्त हुन सक्दैन।

**यदा न पश्यत्ययथा गुणेहां**
**स्वार्थे प्रमत्तः सहसा विपश्चित्।**
**गतस्मृतिर्विन्दति तत्र तापा-**
**नासाद्य मैथुन्यमगारमज्ञः॥ ७॥**

पदार्थ–
**विपश्चित्** = विद्वान् मानिस
**यदा** = जब (स्त्री-पुरुषसङ्ग आदि विषयबाट मोहित भई)
**गुणेहां** = विषयप्राप्तिका लागि हुने इन्द्रियका चेष्टालाई
**अयथा** = मिथ्या हो भनेर
**न पश्यति** = देख्दैन (जान्दैन) तबसम्म
**सहसा** = अनायास (तुरुन्त)
**गतस्मृतिः** = स्वरूपको स्मृतिले शून्य भई
**स्वार्थे** = परम पुरुषार्थ गर्नमा
**प्रमत्तः** = प्रवृत्तिशून्य (पुरुषार्थच्युत) हुन्छ र
**अज्ञः** = अज्ञानी भएर
**मैथुन्यम्** = मैथुनसुख प्रधान
**अगारम्** = गार्हस्थ्य जीवन
**आसाद्य** = प्राप्त गरेर
**तत्र** = त्यहाँ
**तापान्** = विभिन्न प्रकारका दुःखहरू
**विन्दति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** विद्वान् मानिस जब स्त्री-पुरुषसङ्ग आदि विषयबाट मोहित भई विषयप्राप्तिका लागि हुने इन्द्रियका चेष्टालाई मिथ्या हो भनेर जान्दैन तबसम्म स्वस्वरूपको स्मृतिले शून्य त्यो व्यक्ति परम पुरुषार्थ गर्न अग्रसर हुँदैन र अज्ञानी भएर मैथुनसुखप्रधान गृहस्थाश्रममा रहेर विभिन्न प्रकारका दुःखहरू प्राप्त गर्दछ।

**पुंसः स्त्रिया मिथुनीभावमेतं**
**तयोर्मिथो हृदयग्रन्थिमाहुः।**
**अतो गृहक्षेत्रसुताप्तवित्तै-**
**र्जनस्य मोहोऽयमहं ममेति॥ ८॥**

पद्मार्थ–

**पुंसः** = पुरुषको र
**स्त्रियाः** = स्त्रीको
**एतं** = यो
**मिथुनीभावम्** = एक-अर्काप्रतिको आकर्षणलाई
**तयोः** = ती दुई स्त्रीपुरुषको
**मिथः** = एक-अर्कामा हुने
**हृदयग्रन्थिम्** = हृदयग्रन्थि हो भनेर
**आहुः** = भन्दछन्
**अतः** = यसैबाट
**जनस्य** = मानिसलाई
**गृहक्षेत्रसुताप्तवित्तैः** = घर, खेत, छोरा, आफन्त र धनसम्पत्तिमा
**अहं मम इति** = म र मेरो भन्ने
**अयम्** = यो
**मोहः** = मोह हुन्छ

**वाक्यार्थ–** विद्वान्हरू पुरुष र स्त्रीको यो एक-अर्काप्रतिको आकर्षणलाई ती दुई स्त्रीपुरुषको एक-अर्कामा हुने हृदयग्रन्थि हो भनेर भन्दछन्। यसैबाट मानिसलाई घर, खेत, छोरा, आफन्त र धनसम्पत्तिमा म र मेरो भन्ने मोह हुन्छ।

**यदा मनोहृदयग्रन्थिरस्य**
**कर्मानुबद्धो दृढ आश्लथेत।**
**तदा जनः सम्परिवर्ततेऽस्माद्**
**मुक्तः परं यात्यतिहाय हेतुम्॥ ९॥**

पद्मार्थ–

**यदा** = जुन समयमा
**अस्य** = म र मेरो भन्ने भावले बाँधिएको त्यस मानिसको
**कर्मानुबद्धः** = कर्ममा जेलिएको
**दृढः** = बलियो
**मनोहृदयग्रन्थिः** = मनरूप हृदयग्रन्थि
**आश्लथेत** = शिथिल हुन्छ
**तदा** = त्यस वेला
**अस्मात्** = यस मिथुनीभावबाट
**जनः** = मानिस
**सम्परिवर्तते** = मुक्त हुन्छ (त्यसपछि)
**हेतुम्** = अनर्थको कारण म र मेरो भन्ने भावलाई
**अतिहाय** = त्यागेर
**मुक्तः** = जीवन्मुक्त भई
**परं** = मोक्षपद
**याति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** जुन समयमा म र मेरो भन्ने भावनाले बाँधिएको त्यस मानिसको कर्ममा जेलिएको बलियो मनरूप हृदयको गाँठो फुक्छ त्यस वेला ऊ यस मिथुनीभावबाट मुक्त हुन्छ र त्यसपछि अनर्थको कारण म र मेरो भन्ने भावलाई त्यागेर जीवन्मुक्त भई उसले मोक्षपद प्राप्त गर्दछ।

**विवरण–** शरीरमा अहङ्कार गर्नु हृदयको पहिलो गाँठो हो भने पति-पत्नी आदि सम्बन्धहरूमा आफूलाई जोड्दै र त्यसमा अभिमान गर्दैजानु दोस्रो गाँठो हो। जब-जब सत्सङ्ग र शास्त्रचिन्तनद्वारा आफू र आफ्ना सम्बन्धीहरूमा हुने अहन्त्व र ममत्वरूपी ग्रन्थि बिस्तारै खुकुलो हुँदै अन्त्यमा नष्ट हुन्छ तब नै ऊ समस्त अनर्थहरूको कारणभूत अहङ्कारलाई छोड्न समर्थ हुन्छ अनि मात्र उसले मुक्ति प्राप्त गर्न सक्छ।

**हंसे गुरौ मयि भक्त्यानुवृत्या**
**वितृष्णया द्वन्द्वतितिक्षया च ।**
**सर्वत्र जन्तोर्व्यसनावगत्या**
**जिज्ञासया तपसेहानिवृत्त्या ॥ १० ॥**
**मत्कर्मभिर्मत्कथया च नित्यं**
**मद्देवसङ्गाद् गुणकीर्तनान्मे ।**
**निर्वैरसाम्योपशमेन पुत्रा**
**जिहासया देहगेहात्मबुद्धेः ॥ ११ ॥**

**पदार्थ–**

**पुत्राः** = हे छोराहरू
**हंसे** = हाँस झैं विवेकशील
**गुरौ** = गुरुजनमा
**मयि च** = म परमात्मामा पनि (गरिएको)
**भक्त्या** = भक्तिद्वारा
**अनुवृत्या** = ममा लागिरहनाले
**वितृष्णया** = तृष्णाको त्यागद्वारा
**द्वन्द्वतितिक्षया** = सुख-दुःख आदि द्वन्द्वको सहनद्वारा
**सर्वत्र** = सबैतिर (यस लोक र परलोकमा)
**जन्तोः** = जीवलाई
**व्यसनावगत्या** = दुःख हुन्छ भन्ने कुराको ज्ञानद्वारा
**जिज्ञासया** = सत् र असत्को विचारद्वारा
**तपसा** = तपस्याद्वारा
**ईहानिवृत्त्या** = सकाम कर्मको त्यागद्वारा
**मत्कर्मभिः** = ममा समर्पित कर्महरूद्वारा
**मत्कथया** = मेरो कथाश्रवणद्वारा
**नित्यं** = सधैं (गरिएको)
**मद्देवसङ्गात्** = मेरा भक्तहरूसँगको सङ्गतद्वारा
**मे** = मेरो
**गुणकीर्तनात्** = गुणकीर्तनद्वारा
**निर्वैरसाम्योपशमेन** = वैरभाव रहित समानता र शान्तिभावद्वारा
**देहगेहात्मबुद्धेः** = शरीर र घरमा हुने म र मेरो भन्ने भावको
**जिहासया च** = परित्याग गरेर (अहङ्कारात्मक लिङ्ग शरीरलाई त्याग गर्नुपर्दछ)

**वाक्यार्थ–** हे छोराहरू ! हाँस झैं विवेकशील गुरुजन एवं परमात्मामा गरिएको भक्तिभाव, समर्पण, तृष्णाको त्याग, सुख-दुःख आदि द्वन्द्वको सहन, सबैतिर (यस लोक र परलोकमा) जीवलाई दुःख हुन्छ भन्ने कुराको ज्ञान, सत् र असत्को विचार, तपस्या, सकाम कर्मको त्याग, ममा समर्पित कर्महरू, मेरो कथाश्रवण, सधैं गरिएको मेरा भक्तहरूसँगको सङ्गत, मेरो गुणकीर्तन एवं वैरभाव त्यागी राखिएको समानता र शान्तिभावद्वारा शरीर र घरमा हुने म र मेरो भन्ने भावको परित्याग गरी अहङ्कारात्मक लिङ्ग शरीरलाई त्याग गर्नुपर्दछ।

**अध्यात्मयोगेन विविक्तसेवया**
**प्राणेन्द्रियात्माभिजयेन सध्र्यक् ।**
**सच्छ्रद्धया ब्रह्मचर्येण शश्व-**
**दसम्प्रमादेन यमेन वाचाम् ॥ १२ ॥**
**सर्वत्र मद्भावविचक्षणेन**
**ज्ञानेन विज्ञानविराजितेन ।**
**योगेन धृत्युद्यमसत्त्वयुक्तो**
**लिङ्गं व्यपोहेत् कुशलोऽहमाख्यम् ॥ १३ ॥**

पदार्थ–

**अध्यात्मयोगेन** = अध्यात्म-शास्त्रको अनुशीलन गर्नाले
**विविक्तसेवया** = एकान्त सेवन गर्नाले
**सध्र्यक्** = राम्रोसँग
**प्राणेन्द्रियात्माभिजयेन** = प्राण, इन्द्रिय र मनलाई जित्नाले
**सच्छ्रद्धया** = सज्जनहरूमा श्रद्धा गर्नाले
**ब्रह्मचर्येण** = ब्रह्मचर्यले
**शश्वत्** = सधैँ
**असम्प्रमादेन** = प्रमत्त नहुनाले (कर्तव्यको पालन गर्नाले)
**वाचाम् यमेन** = बोलीलाई नियन्त्रित गर्नाले
**सर्वत्र** = सबैतिर
**मद्भावविचक्षणेन** = मेरो भाव (उपस्थिति) देखनाले
**विज्ञानविराजितेन** = विज्ञान (अनुभव)ले युक्त
**ज्ञानेन** = ज्ञानले
**योगेन** = ध्यानले
**धृत्युद्यमसत्त्वयुक्तः** = धैर्य, प्रयत्न र विवेकले युक्त भएको
**कुशलः** = निपुण व्यक्तिले
**अहमाख्यम्** = (संसारको कारणभूत) अहङ्कारात्मक
**लिङ्गं** = लिङ्गशरीरलाई
**व्यपोहेत्** = त्याग गरोस्

**वाक्यार्थ–** अध्यात्मशास्त्रको अनुशीलन, एकान्तको सेवन, प्राण, इन्द्रिय र मनमाथिको विजय, सज्जनहरूमा श्रद्धा, ब्रह्मचर्यको पालन, बोलीमाथि नियन्त्रण, सबैतिर भगवान्‌को उपस्थितिको अनुभूति, अनुभवले युक्त ज्ञान, ध्यान, धैर्य, प्रयत्न र विवेकले युक्त भएको निपुण व्यक्तिले संसारको कारणभूत अहङ्कारात्मक लिङ्गशरीरलाई त्याग गरोस्।

**विवरण–** अहङ्काररूप लिङ्गशरीरलाई नाश गर्नको लागि शास्त्रमा विविध उपायहरू बताइएका छन्। साधनहरूको पालनाविना साध्य ब्रह्म वस्तुको सिधै ज्ञान गर्न खोज्नु अनुभवमूलक नभई सूचनामूलक हुन्छ। शास्त्रहरूद्वारा परोक्ष रूपमा उत्पन्न हुने ज्ञानले अपरोक्ष अज्ञानलाई हटाउन नसक्ने भएकाले शास्त्रसम्मत प्रत्यक्ष व्यवहारद्वारा मात्र अपरोक्ष आत्मज्ञान उत्पन्न हुन्छ। त्यसका लागि सर्वात्मा भगवान् र गुरुमा भक्ति, उहाँहरूको सेवामा तत्परता, तृष्णाको त्याग, सुख र दुःखको सहन, सबैतिर दुःखदर्शन, तत्त्वजिज्ञासा, तपस्या, सकाम कर्मको त्याग, कथाश्रवण, कर्मको भगवान्‌मा अर्पण, सत्सङ्ग, कीर्तन, वैरभावको त्याग, समभाव, शान्ति, घर आदिमा

आसक्तिको परित्याग, अध्यात्मनिष्ठा, आलस्यत्याग, वाणीको संयम, सबैतिर भगवद्दृष्टि, अनुभवात्मक ज्ञान र योगसाधना आदि पच्चीस साधनहरूको यहाँ उपदेश गरिएको छ। यी सबै कर्तव्यहरू अहङ्कार वा जीवभावलाई नष्ट गर्ने उपायहरू हुन्। सम्पूर्ण उपायहरूले **विज्ञानविराजित** अर्थात् अनुभवरूप ब्रह्मज्ञानलाई उत्पन्न गर्दछन् अनि त्यसबाट जीवभाव निवृत्त हुन्छ।

**कर्माशयं हृदयग्रन्थिबन्ध-**
**मविद्ययासादितमप्रमत्तः।**
**अनेन योगेन यथोपदेशं**
**सम्यग् व्यपोह्योपरमेत योगात्॥ १४॥**

**पदार्थ–**

**अप्रमत्तः** = सावधान व्यक्तिले
**अविद्ययासादितम्** = अज्ञानका कारण प्राप्त
**कर्माशयं** = कर्मको आधार
**हृदयग्रन्थिबन्धम्** = हृदयग्रन्थि-रूप बन्धनलाई
**अनेन** = यस (१०-१३ श्लोकमा बताइएको)
**योगेन** = योग (उपाय)द्वारा
**यथोपदेशं** = बताएअनुरूप
**सम्यक्** = सजिलै
**व्यपोह्य** = हटाएर
**योगात्** = यी उपायहरूबाट पनि
**उपरमेत** = निवृत्त हुनुपर्छ

**वाक्यार्थ–** सावधान व्यक्तिले अज्ञानका कारण प्राप्त कर्मको आधार हृदयग्रन्थिरूप बन्धनलाई यस (१०-१३ श्लोकमा बताइएको) योगविधिद्वारा हटाइसकेपछि उक्त हृदयग्रन्थिरूप बन्धनलाई हटाउनका लागि उपयोगमा ल्याइएका ती उपायहरूबाट पनि आफू निवृत्त हुनुपर्छ।

**पुत्रांश्च शिष्यांश्च नृपो गुरुर्वा**
**मल्लोककामो मदनुग्रहार्थः।**
**इत्थं विमन्युरनुशिष्यादतज्ज्ञान्**
**न योजयेत् कर्मसु कर्ममूढान्॥**
**कं योजयन् मनुजोऽर्थं लभेत**
**निपातयन् नष्टदृशं हि गर्ते॥ १५॥**

**पदार्थ–**

**विमन्युः** = क्रोध परित्याग गरेको
**मदनुग्रहार्थः** = मेरो अनुग्रह चाहने
**मल्लोककामः** = मेरो लोकको अभिलाषा गर्ने (पिता)
**नृपः** = राजा
**वा** = अथवा
**गुरुः** = गुरुले
**पुत्रान् च** = पुत्रहरूलाई र
**शिष्यान् च** = शिष्य (प्रजा)हरूलाई पनि

**इत्थं** = यसप्रकार
**अनुशिष्यात्** = शिक्षा देओस् र
**अतज्ज्ञान्** = तत्त्व नजान्ने
**कर्ममूढान्** = कर्ममा आसक्त भएका तिनीहरूलाई
**कर्मसु** = काम्य कर्ममा
**न योजयेत्** = नलगाओस्
**योजयन्** = (तिनीहरूलाई काम्य कर्ममा) प्रवृत्त गर्ने
**मनुजः** = मनुष्यले (जसरी )
**नष्टदृशं** = अन्धोलाई
**गर्ते** = खाडलमा
**निपातयन्** = खसाउने व्यक्तिले
**हि** = निश्चय नै (केवल पाप मात्र प्राप्त गर्दछ) त्यसै गरी
**कं अर्थं** = के प्रयोजन
**लभेत** = प्राप्त गर्ला (केवल पापको भागी मात्र बन्दछ)

**वाक्यार्थ–** क्रोध परित्याग गरी मेरो अनुग्रह चाहने कुनै पनि पिता, राजा अथवा गुरुले क्रमशः पुत्र, शिष्य एवं प्रजालाई यसप्रकारको शिक्षा देओस् र तत्त्व नजान्ने भएकाले कर्ममा आसक्त भएका तिनीहरूलाई काम्य कर्ममा पनि नलगाओस्। अन्धोलाई खाडलमा खसाउने व्यक्तिले केवल पाप मात्र प्राप्त गरेझैँ लोकलाई काम्य कर्ममा प्रवृत्त गर्ने मनुष्य पनि केवल पापको भागी मात्र बन्दछ।

**लोकः स्वयं श्रेयसि नष्टदृष्टि-**
**र्योऽर्थान् समीहेत निकामकामः।**
**अन्योन्यवैरः सुखलेशहेतो-**
**रनन्तदुःखं च न वेद मूढः॥ १६॥**

**पदार्थ–**
**श्रेयसि** = कल्याणको साधनमा
**नष्टदृष्टिः** = विवेकहीन
**निकामकामः** = अत्यन्त भोगाभिलाषी
**यः** = जो
**लोकः** = प्राणी
**स्वयं** = आफैँ
**अर्थान्** = भोग्य विषयहरू
**समीहेत** = चाहन्छ
**सुखलेशहेतोः** = थोरै सुखका लागि
**अन्योन्यवैरः** = परस्परमा द्रोह गर्ने
**मूढः** = त्यो मूर्ख मनुष्यले
**अनन्तदुःखं च** = (नरकमा पर्दा प्राप्त हुने) महान् दुःख पनि
**न वेद** = जान्दैन

**वाक्यार्थ–** श्रेयसाधनमा नलागी भोगमा मात्र रमाउने व्यक्ति आफैँ भोग्य विषयहरूको खोजी गर्दछ। अलिकति मात्र पनि सुखका लागि परस्परमा द्रोह गर्ने त्यो मूर्ख व्यक्ति पछि आइपर्ने ठुलो दुःखको पनि विचार गर्दैन।

**कस्तं स्वयं तदभिज्ञो विपश्चि-**
**दविद्यायामन्तरे वर्तमानम्।**
**दृष्ट्वा पुनस्तं सघृणः कुबुद्धिं**
**प्रयोजयेदुत्पथगं यथान्धम्॥ १७॥**

पदार्थ–

**उत्पथगं** = (खाडल भिर आदि भएको) खराब बाटोबाट हिँड्ने
**अन्धम्** = अन्धोलाई (विवेकी मान्छेले त्यसलाई उक्त बाटोबाट जान प्रवृत्त नगराए)
**यथा** = झैं
**अविद्यायाम् अन्तरे** = अविद्याको बीचमा
**वर्तमानम्** = रहेको
**कुबुद्धिं** = कुबुद्धि (विषयासक्त बुद्धि) भएको
**तं** = त्यस संसारी व्यक्तिलाई
**दृष्ट्वा** = देखेर
**पुनः** = फेरि
**सघृणः** = दयालु
**तदभिज्ञः** = त्यो जान्ने (सकाम कर्म गर्नाले पछि ठुलो दुःख पाइन्छ भन्ने कुरा जान्ने)
**कः** = कुन
**विपश्चित्** = ज्ञानी व्यक्तिले
**तं** = त्यस मान्छेलाई
**स्वयं** = आफैं
**प्रयोजयेत्** = काम्य कर्ममा प्रवृत्त गराउला (गराउँदैन)

**वाक्यार्थ–** ज्ञानी व्यक्तिले खाडल, भिर आदि भएको बाटोबाट हिँड्ने अन्धोलाई त्यस्तो बाटोबाट जान रोकेझैं अज्ञानी एवं विषयासक्त संसारी व्यक्तिलाई देखेर दयालु एवं सकाम कर्म गर्नाले पछि ठुलो दुःख पाइन्छ भन्ने कुरा जान्ने कुन ज्ञानी व्यक्तिले उसलाई काम्य कर्ममा प्रवृत्त गराउला र ? अर्थात् कसैले पनि प्रवृत्त गराउँदैन।

**गुरुर्न स स्यात् स्वजनो न स स्यात्**
**पिता न स स्याज्जननी न सा स्यात्।**
**दैवं न तत् स्यान्न पतिश्च स स्यान्-**
**न मोचयेद् यः समुपेतमृत्युम्॥ १८॥**

पदार्थ–

**यः** = जसले
**समुपेतमृत्युम्** = (जन्ममरणात्मक संसाररूप) मृत्युको नजिकमा पुगेको व्यक्तिलाई
**न मोचयेत्** = (ज्ञान र भक्तिको उपदेशद्वारा) मुक्त गराउँदैन
**सः** = ती
**गुरुः** = गुरु
**न स्यात्** = होइनन्
**सः** = ती
**स्वजनः** = आफन्त
**न स्यात्** = होइनन्
**सः** = ती
**पिता** = पिता
**न स्यात्** = होइनन्
**सा** = तिनी
**जननी** = आमा
**न स्यात्** = होइनन्
**तत्** = ती
**दैवं** = देवता
**न स्यात्** = होइनन्
**सः** = ती
**पतिः च** = पति पनि
**न स्यात्** = होइनन्

**वाक्यार्थ–** जसले जन्ममरणात्मक संसाररूप मृत्यु प्राप्त गर्न लागेको व्यक्तिलाई ज्ञान र भक्तिको उपदेशद्वारा मुक्त गराउँदैन ती गुरु होइनन्, ती आफन्त होइनन्, ती पिता होइनन्, तिनी आमा होइनन्, ती देवता होइनन् र ती पति पनि होइनन्।

**इदं शरीरं मम दुर्विभाव्यं**
**सत्त्वं हि मे हृदयं यत्र धर्मः।**
**पृष्ठे कृतो मे यदधर्म आरा-**
**दतो हि मामृषभं प्राहुरार्याः॥ १९॥**

**पदार्थ–**

**इदं** = यो मनुष्य रूपको
**मम** = मेरो
**शरीरं** = शरीर
**दुर्विभाव्यं** = (बुद्धिद्वारा) अगम्य छ
**हि** = किनभने
**सत्त्वं** = शुद्ध सत्त्वगुणमय
**मे** = मेरो
**हृदयं** = हृदय छ
**यत्र** = जुन हृदयमा
**धर्मः** = धर्म रहेको छ
**यत्** = जसद्वारा
**मे** = मैले
**अधर्मः** = अधर्मलाई
**आरात्** = टाढैबाट
**पृष्ठे** = पछाडि
**कृतः** = गरिदिएको छु (धकेलिदिएको छु)
**अतः** = यसैले
**आर्याः** = सज्जनहरू
**हि** = निश्चय नै
**माम्** = मलाई
**ऋषभं** = ऋषभदेव
**प्राहुः** = भन्दछन्

**वाक्यार्थ–** मनुष्य रूपमा देखा परेको मेरो यो शरीर बुद्धिद्वारा अगम्य छ किनभने शुद्ध सत्त्वगुणमय मेरो जुन हृदय छ त्यसमा धर्म रहेको छ जसद्वारा मैले अधर्मलाई टाढैबाट पछाडि पारिदिएको छु। यसैले सज्जनहरू मलाई ऋषभदेव भन्दछन्।

**तस्माद् भवन्तो हृदयेन जाताः**
**सर्वे महीयांसममुं सनाभम्।**
**अक्लिष्टबुद्ध्या भरतं भजध्वं**
**शुश्रूषणं तद् भरणं प्रजानाम्॥ २०॥**

**पदार्थ–**

**तस्मात्** = त्यसकारण
**हृदयेन** = (मेरो सत्त्वगुणी) हृदयबाट
**जाताः** = उत्पन्न भएका
**सर्वे** = सबै
**भवन्तः** = तिमी छोराहरू
**अक्लिष्टबुद्ध्या** = शुद्धबुद्धिले (मत्सर आदि दोष त्यागेर)
**महीयांसम्** = जेठा
**अमुं** = यी
**सनाभम्** = नाभिका सन्तान
**भरतं** = भरतलाई
**भजध्वं** = सेवा गर
**तत् शुश्रूषणं** = त्यो (भरतको) सेवा गर्ने काम नै
**प्रजानाम्** = प्रजाहरूको
**भरणं** = पालन गर्नु हो

**वाक्यार्थ–** त्यसकारण मेरो सत्त्वगुणी हृदयबाट उत्पन्न भएका तिमी सबै छोराहरू शुद्धबुद्धिले मत्सरादि दोष त्यागेर नाभिका सन्तान भरतको सेवा गर। यही काम नै तिमीहरूका लागि

प्रजाहरूको पालन गर्नु हो।

**भूतेषु वीरुद्भ्य उदुत्तमा ये**
**सरीसृपास्तेषु सबोधनिष्ठाः।**
**ततो मनुष्याः प्रमथास्ततोऽपि**
**गन्धर्वसिद्धा विबुधानुगा ये॥ २१॥**

**पदार्थ–**

**भूतेषु** = सम्पूर्ण भौतिक पदार्थहरूमा
**वीरुद्भ्यः** = वृक्षहरू
**उदुत्तमाः** = अत्यन्त श्रेष्ठ छन्
**तेषु** = तिनीहरूमा पनि
**सरीसृपाः** = जङ्गम प्राणीहरू श्रेष्ठ छन् (तिनीहरूमा पनि)
**ये** = जो
**सबोधनिष्ठाः** = ज्ञानयुक्त पशु आदि प्राणी छन् तिनीहरू श्रेष्ठ छन्
**ततः** = तिनीहरूभन्दा पनि
**मनुष्याः** = मनुष्यहरू श्रेष्ठ छन्
**ततः** = तिनीहरूभन्दा
**ये** = जुन
**प्रमथाः** = प्रमथगण
**गन्धर्वसिद्धाः** = गन्धर्व, सिद्ध र
**विबुधानुगाः** = देवताका अनुयायी किन्नर आदि छन् (तिनीहरू क्रमशः उत्तरोत्तर श्रेष्ठ छन्)

**वाक्यार्थ–** सम्पूर्ण भौतिक पदार्थहरूमा वृक्षहरू अत्यन्त श्रेष्ठ छन्। ती वृक्षहरूभन्दा पनि जङ्गम प्राणीहरू श्रेष्ठ छन्। तिनीहरूभन्दा पनि ज्ञानयुक्त पशु आदि प्राणीहरू, त्यसपछि मनुष्यहरू, प्रमथगण, गन्धर्व, सिद्ध र देवताका अनुयायी किन्नर आदि क्रमशः उत्तरोत्तर श्रेष्ठ छन्।

**देवासुरेभ्यो मघवत्प्रधाना**
**दक्षादयो ब्रह्मसुतास्तु तेषाम्।**
**भवः परः सोऽथ विरिञ्चवीर्यः**
**स मत्परोऽहं द्विजदेवदेवः॥ २२॥**

**पदार्थ–**

(किन्नरभन्दा असुरहरू श्रेष्ठ)
**असुरेभ्यः** = असुरहरूभन्दा
**मघवत्प्रधानाः देवाः** = इन्द्र आदि देवताहरू
**दक्षादयः** = दक्ष आदि
**ब्रह्मसुताः** = ब्रह्माजीका पुत्र श्रेष्ठ छन्
**तेषाम् तु** = तिनीहरूमध्येमा चाहिँ
**भवः** = महादेव
**परः** = श्रेष्ठ हुनुहुन्छ
**सः** = उहाँ
**विरिञ्चवीर्यः** = ब्रह्माजीबाट उत्पन्न हुनुभएको हो
**अथ** = यसैले (महादेवभन्दा) (ब्रह्माजी श्रेष्ठ हुनुहुन्छ)
**सः** = ब्रह्माजीले पनि
**मत्परः** = मलाई नै पूजा गर्नुहुन्छ
**अहं** = म
**द्विजदेवदेवः** = ब्राह्मणलाई देवता मान्ने भएकाले (मभन्दा ब्राह्मणहरू श्रेष्ठ छन्)

**वाक्यार्थ–** यसै गरी किन्नरभन्दा असुरहरू श्रेष्ठ छन्, असुरहरूभन्दा इन्द्र आदि देवताहरू श्रेष्ठ छन्। तिनीहरूभन्दा पनि ब्रह्माजीका पुत्र दक्ष आदि श्रेष्ठ छन्, तिनीहरूमध्येमा चाहिँ महादेव श्रेष्ठ हुनुहुन्छ। उहाँ ब्रह्माजीबाट उत्पन्न हुनुभएकाले महादेवभन्दा ब्रह्माजी श्रेष्ठ हुनुहुन्छ। ब्रह्माजीले पनि मलाई नै पूजा गर्नुहुन्छ। म ब्राह्मणलाई देवता मान्दछु, त्यसकारण ब्राह्मणहरू मभन्दा श्रेष्ठ छन्।

**न ब्राह्मणैस्तुलये भूतमन्यत्**
**पश्यामि विप्राः किमतः परं तु।**
**यस्मिन् नृभिः प्रहुतं श्रद्धयाह–**
**मश्नामि कामं न तथाग्निहोत्रे ॥ २३ ॥**

**पदार्थ–**

**विप्राः** = हे ब्राह्मणहरू
**ब्राह्मणैः** = ब्राह्मणहरूसँग
**अन्यत् भूतम्** = अरू प्राणीको
**न तुलये** = तुलना गर्दिनँ
(किनभने ब्राह्मणहरू श्रेष्ठ छन्)
**अतः** = ती ब्राह्मणहरूभन्दा
**परं तु** = श्रेष्ठ त
**किम् पश्यामि** = के देख्दछु र
(केही पनि देख्दिनँ)
**अहम्** = म
**यस्मिन्** = जुन ब्राह्मणहरूको
मुखमा
**नृभिः** = मानिसहरूद्वारा
**श्रद्धया** = श्रद्धापूर्वक
**प्रहुतं** = हवन गरिएको वस्तुलाई
**कामं** = यथेच्छ
**अश्नामि** = खान्छु
**तथा** = त्यसरी
**अग्निहोत्रे न** = अग्निहोत्रमा
हवन गरिएको कुरा खान्नँ

**वाक्यार्थ–** हे ब्राह्मणहरू! ब्राह्मणहरूसँग म अरू प्राणीको तुलना गर्दिनँ किनभने ब्राह्मणहरूभन्दा श्रेष्ठ अन्य कोही पनि देख्दिनँ। म मानिसहरूद्वारा ब्राह्मणहरूको मुखमा श्रद्धापूर्वक हवन गरिएको वस्तु जसरी यथेच्छ स्वीकार गर्छु त्यसरी अग्निहोत्रमा हवन गरिएको कुरा पनि स्वीकार गर्दिनँ।

**धृता तनूरुशती मे पुराणी**
**येनेह सत्त्वं परमं पवित्रम्।**
**शमो दमः सत्यमनुग्रहश्च**
**तपस्तितिक्षानुभवश्च यत्र ॥ २४ ॥**

**पदार्थ–**

**इह** = यी प्राणीहरूमा
**येन** = जुन ब्राह्मणहरूले
**मे** = मेरो
**पुराणी** = पुरातन
**उशती** = वेदमय अति सुन्दर
**तनूः** = शरीर
**धृता** = धारण गरेका छन्
**यत्र** = जुन ब्राह्मणहरूमा
**परमं** = अत्यन्त
**पवित्रम्** = पवित्र
**सत्त्वं** = सत्त्वगुण
**शमः** = शम (मनोनिग्रह)

**दमः** = दम (बाह्यइन्द्रिय निग्रह)
**सत्यम्** = सत्य बोल्नु
**अनुग्रहः** = अरूको दुःख हटाउने प्रवृत्ति हुनु
**तपः** = तपस्या (आहार आदि नियम)
**तितिक्षा** = सुखदुःख आदि सहन गर्ने सामर्थ्य
**अनुभवः च** = ज्ञान (वेदको अर्थज्ञान) आदि गुण रहेका हुन्छन्

**वाक्यार्थ–** ब्राह्मणहरूले मेरो पुरातन वेदमय अति सुन्दर शरीर धारण गरेका छन्। यस्तै तिनीहरूसँग सत्त्व गुण, शम (मनोनिग्रह), दम (बाह्य इन्द्रिय निग्रह), सत्य, अरूको दुःख हटाउने प्रवृत्ति, तपस्या, सुखदुःख आदि सहन गर्ने सामर्थ्य एवं वेदको अर्थज्ञान आदि गुण रहेका हुन्छन्।

**मत्तोऽप्यनन्तात् परतः परस्मात्**
**स्वर्गापवर्गाधिपतेर्न किञ्चित्।**
**येषां किमु स्यादितरेण तेषा-**
**मकिञ्चनानां मयि भक्तिभाजाम्॥ २५॥**

पदार्थ–
**अनन्तात्** = अपरिमित शक्तिसम्पन्न
**परतः** = ब्रह्मा आदि देवगणभन्दा पनि
**परस्मात्** = श्रेष्ठ
**स्वर्गापवर्गाधिपतेः** = स्वर्ग र अपवर्गका मालिक (भुक्ति र मुक्ति प्रदान गर्न सक्षम)
**मत्तः अपि** = म (भगवान्)बाट पनि (केही नचाहने)
**अकिञ्चनानां** = केही पनि (भोगसाधन) नभएका
**येषां** = जसको
**न किञ्चित्** = प्रार्थनीय वस्तु नै केही छैन
**तेषाम्** = ती
**मयि** = ममा
**भक्तिभाजाम्** = भक्तिमात्र गरिहने भक्तहरूको
**इतरेण** = अरू राज्य आदिद्वारा
**किमु** = के प्रयोजन
**स्यात्** = सिद्ध होला

**वाक्यार्थ–** अपरिमित शक्तिसम्पन्न ब्रह्मा आदि देवगणभन्दा पनि श्रेष्ठ एवं भुक्ति र मुक्ति प्रदान गर्न सक्षम म (भगवान्)बाट पनि केही नचाहेर केवल मेरो भक्तिमात्र गरिहने भक्तहरूका लागि अरू राज्य आदिद्वारा के प्रयोजन सिद्ध होला ?

**सर्वाणि मद्धिष्ण्यतया भवद्भि-**
**श्चराणि भूतानि सुता ध्रुवाणि।**
**सम्भावितव्यानि पदे पदे वो**
**विविक्तदृग्भिस्तदु हार्हणं मे॥ २६॥**

पदार्थ–
**सुताः** = हे पुत्रहरू
**वः** = तिमीहरूले तथा
**विविक्तदृग्भिः** = मद, मात्सर्य

आदि दोषरहित ज्ञानदृष्टि भएका
**भवद्भिः** = उपस्थित सबै सभासद्हरूले
**चराणि** = जङ्गम र
**ध्रुवाणि** = स्थावर
**सर्वाणि** = सम्पूर्ण
**भूतानि** = प्राणीहरूलाई
**मद्धिष्ण्यतया** = मेरो बुद्धि (भगवद्बुद्धि) गरेर
**पदे पदे** = प्रत्येक पाइलामा (प्रत्येक क्षणमा)
**सम्भावितव्यानि** = सम्मान (पूजा) गर्नुपर्दछ
**तदु** = त्यही (सर्वप्राणीको सम्मान) नै
**ह** = निश्चय नै
**मे** = मेरो
**अर्हणं** = पूजा हो

**वाक्यार्थ–** हे पुत्रहरू ! तिमीहरू र यहाँ उपस्थित मद, मात्सर्य आदि दोषरहित ज्ञानदृष्टिसम्पन्न सबै सभासद्हरूले जङ्गम र स्थावर सम्पूर्ण प्राणीहरूलाई मेरो बुद्धि (भगवद्बुद्धि) गरेर प्रत्येक क्षणमा सम्मान गर्नुपर्दछ। त्यही (सबै प्राणीको सम्मान) नै मेरो पूजा हो।

**मनोवचोदृक्करणेहितस्य**
**साक्षात्कृतं मे परिबर्हणं हि ।**
**विना पुमान् येन महाविमोहात्**
**कृतान्तपाशान्न विमोक्तुमीशेत् ॥ २७ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**मनोवचोदृक्करणेहितस्य** = मन, वचन, दृष्टि र चक्षु आदि इन्द्रियद्वारा गरिने चेष्टाहरूको
**साक्षात्कृतं** = प्रत्यक्ष फल
**मे** = मेरो
**परिबर्हणं** = पूजा नै हो (किनभने)
**येन विना** = जुन (मेरो पूजा) विना
**पुमान्** = मानिस
**महाविमोहात्** = महामोहमय
**कृतान्तपाशात्** = कालको पाशबाट
**विमोक्तुम्** = (आफूलाई) मुक्त गर्न
**न ईशेत्** = समर्थ हुन सक्दैन

**वाक्यार्थ–** मन, वचन, दृष्टि र चक्षु आदि इन्द्रियद्वारा गरिने चेष्टाहरूको प्रत्यक्ष फल मेरो पूजा नै हो किनभने मेरो पूजाविना मानिस महामोहमय कालको पाशबाट आफूलाई मुक्त गर्न समर्थ हुन सक्दैन।

**श्रीशुक उवाच** (श्रीशुकजीले भन्नुभयो)

**एवमनुशास्यात्मजान् स्वयमनुशिष्टानपि लोकानुशासनार्थं महानुभावः परमसुहृद् भगवानृषभापदेश उपशमशीलानामुपरत-कर्मणां महामुनीनां भक्तिज्ञानवैराग्यलक्षणं पारमहंस्यधर्ममुपशिक्ष-माणः स्वतनयशतज्येष्ठं परमभागवतं भगवज्जनपरायणं भरतं**

**धरणिपालनायाभिषिच्य स्वयं भवन एवोर्वरितशरीरमात्रपरिग्रह उन्मत्त इव गगनपरिधानः प्रकीर्णकेश आत्मन्यारोपिताहवनीयो ब्रह्मावर्तात् प्रवव्राज ॥ २८ ॥**

**पदार्थ–**

**महानुभावः** = महाप्रभावशाली
**परमसुहृत्** = ज्यादै सहृदयी
**ऋषभापदेशः** = ऋषभ नाम भएका
**भगवान्** = भगवान्ले
**स्वयम्** = आफैं
**अनुशिष्टान् अपि** = शिक्षित भए पनि
**आत्मजान्** = पुत्रहरूलाई
**लोकानुशासनार्थं** = लोकलाई शिक्षा दिन
**एवम्** = यसप्रकार
**अनुशास्य** = उपदेश दिएर
**उपशमशीलानाम्** = शान्त भएका
**उपरतकर्मणां** = कर्मबाट निवृत्त भएका
**महामुनीनां** = महर्षिहरूको
**भक्तिज्ञानवैराग्यलक्षणं** = भक्ति, ज्ञान र वैराग्यरूप
**पारमहंस्यधर्मम्** = परमहंस योगीहरूको धर्म
**उपशिक्षमाणः** = सिकाउँदै
**धरणिपालनाय** = पृथिवीको पालन गर्न
**परमभागवतं** = भगवान्का परम भक्त
**भगवज्जनपरायणं** = भगवान्का भक्तहरूका सेवक
**स्वतनयशतज्येष्ठं** = आफ्ना सयभाइ छोरामध्ये जेठा
**भरतं** = भरतलाई
**अभिषिच्य** = राज्याभिषेक गरिदिएर
**भवने एव** = दरबारमा नै
**उर्वरितशरीरमात्रपरिग्रहः** = सम्पूर्ण वस्तु त्याग गरेका हुनाले शरीर मात्र बाँकी रहेका
**स्वयं** = आफू
**गगनपरिधानः** = दिगम्बर (नग्न) भएर
**प्रकीर्णकेशः** = कपाल यत्रतत्र छरेर
**आत्मनि** = आफैंमा
**आरोपिताहवनीयः** = आहवनीय अग्निलाई लीन गरेर
**उन्मत्तः इव** = पागल जस्तै देखिएर
**ब्रह्मावर्तात्** = ब्रह्मावर्त भूमिबाट
**प्रवव्राज** = निक्लनुभयो

**वाक्यार्थ–** महाप्रभावशाली एवं ज्यादै सहृदयी ऋषभदेवले आफैं शिक्षित भएका पुत्रहरूलाई लोकलाई शिक्षा दिन यसप्रकार उपदेश दिनुभयो। अनि शान्त एवं कर्मबाट निवृत्त भएका महर्षिहरूको भक्ति, ज्ञान र वैराग्यरूप धर्म छोराहरूलाई सिकाउँदै ती आफ्ना सयभाइ छोरामध्ये जेठा छोरा भरतलाई राज्याभिषेक गरिदिनुभयो। यसपछि सम्पूर्ण वस्तु दरबारमा त्याग गरेका हुनाले शरीर मात्र बाँकी रहेका ऋषभदेव दिगम्बर (नग्न) भएर कपाल यत्रतत्र फिँजाई आफैंमा आहवनीय अग्निलाई लीन गरेर पागल जस्तै देखिएर ब्रह्मावर्त भूमिबाट निक्लनुभयो।

**टिप्पणी–** सरस्वती र दृषद्वती नदीको बीचको भूभागलाई ब्रह्मावर्त भनिन्छ (मनुस्मृति २। १७–१९)।

**जडान्धमूकबधिरपिशाचोन्मादकवदवधूतवेषोऽभिभाष्यमाणोऽपि जनानां गृहीतमौनव्रतस्तूष्णीं बभूव ॥ २९ ॥**

पदार्थ–

**अवधूतवेषः** = अवधूत (खरानी माटो आदि लिपिएको) वेष धारण गरेका ऋषभदेव
**जडान्धमूकबधिरपिशाचोन्मादकवत्** = जड, अन्धो, लाटो, पिशाच, पागल आदि शब्दले
**जनानां** = मानिसहरूद्वारा
**अभिभाष्यमाणः अपि** = बोलाइँदा पनि
**गृहीतमौनव्रतः** = मौनव्रत धारण गरी
**तूष्णीं** = मौन भएर नै
**बभूव** = रहनुभयो

**वाक्यार्थ–** अवधूत वेष (खरानी माटो आदि लिपिएको वेष) धारण गरेका ऋषभदेव जड, अन्धो, लाटो, पिशाच, पागल आदि शब्दले मानिसहरूद्वारा बोलाइँदा पनि मौनव्रत धारण गरी मौन भएर नै रहनुभयो।

**तत्र तत्र पुरग्रामाकरखेटवाटखर्वटशिबिरव्रजघोषसार्थगिरिवनाश्रमादिष्वनुपथमवनिचरापसदैः परिभूयमानो मक्षिकाभिरिव वनगजस्तर्जनताडनावमेहनष्ठीवनग्रावशकृद्रजःप्रक्षेपपूतिवातदुरुक्तैस्तदविगणयन्नेवासत्संस्थान एतस्मिन् देहोपलक्षणे सदपदेश उभयानुभवस्वरूपेण स्वमहिमावस्थानेनासमारोपिताहंममाभिमानत्वादविखण्डितमनाः पृथिवीमेकचरः परिबभ्राम ॥ ३० ॥**

पदार्थ–

**तत्र तत्र** = जहाँतहीँ
**पुरग्रामाकरखेटवाटखर्वटशिबिरव्रजघोषसार्थगिरिवनाश्रमादिषु** = नगर, गाउँ, खानी भएको ठाउँ, कृषकबस्ती, बगैँचा, पहाडी बस्ती, सैन्यशिविर, गोठ, गोठालाको बस्ती, यात्रीहरू बस्ने स्थान, पहाड, जङ्गल र ऋषिहरूका आश्रमहरूमा
**अनुपथम्** = बाटोमा हिँड्दा
**अवनिचरापसदैः** = लोकवासी अधम पुरुषहरूद्वारा
**तर्जनताडनावमेहनष्ठीवनग्रावशकृद्रजःप्रक्षेपपूतिवातदुरुक्तैः** = हप्काउने, पिट्ने, पिसाब गरिदिने, थुकिदिने, ढुङ्गा, बिष्ठा र धूलो फ्याँकिदिने, नजिकमा गएर अपान वायु छोडिदिने र गाली गर्ने जस्ता कुकृत्यद्वारा
**परिभूयमानः अपि** = सताइएका भए पनि
**तत् अविगणयन्** = त्यसको वास्ता नगरी
**असत्संस्थाने** = असत्का रूपमा रहेको (मिथ्याकल्पित)
**सदपदेशे** = सत् रूपमा प्रतीयमान
**एतस्मिन्** = यो
**देहोपलक्षणे** = कार्यकारण सङ्घातरूप शरीरमा
**उभयानुभवस्वरूपेण** = स्थूल र सूक्ष्म शरीरको साक्षीरूपले
**स्वमहिमावस्थानेन** = आफ्नै स्वरूपमा रहेका कारण
**असमारोपिताहंममाभिमानत्वात्** = आफूमा अहंममभावको लेशमात्र पनि अभिमान नभएको हुनाले
**अविखण्डितमनाः** = अखण्ड ब्रह्माकार चित्तवृत्ति भएका
**एकचरः** = एक्लै हिँड्ने ऋषभदेव
**मक्षिकाभिः** = झिँगाद्वारा (सताइएका)
**वनगजः इव** = जङ्गली हात्ती जैँ (सांसारिक गतिविधिको मतलब

नगरी) | **पृथिवीम्** = संसारमा | **परिबभ्राम** = घुम्न थाल्नुभयो

**वाक्यार्थ–** नगर, गाउँ, खानी भएको ठाउँ, कृषकबस्ती, बगैँचा, पहाडी बस्ती, सैन्यशिविर, गोठ, गोठालाको बस्ती, यात्रीहरू बस्ने स्थान, पहाड, जङ्गल र ऋषिहरूका आश्रमहरूमा जाने क्रममा बाटोमा हिँडिरहेका ऋषभदेवलाई लोकवासी अधम पुरुषहरूले हप्काउने, पिट्ने, पिसाब गरिदिने, थुकिदिने, ढुङ्गा, विष्ठा र धूलो फ्याँकिदिने, नजिकमा गएर अपान वायु छोडिदिने र गाली गर्ने जस्ता कुकृत्यद्वारा सताए पनि उहाँले त्यसको वास्ता गर्नुभएन। अनि अखण्ड ब्रह्माकार चित्तवृत्ति भएको हुनाले असत् भएपनि सत् रूपमा प्रतीयमान यस शरीरमा अहंममभावको लेशमात्र पनि अभिमान नगरी एक्लै हिँड्ने ऋषभदेव झिँगाद्वारा सताइएका जङ्गली हात्ती झैँ सांसारिक गतिविधिको मतलब नगरी संसारमा घुम्न थाल्नुभयो।

**अतिसुकुमारकरचरणोरःस्थलविपुलबाह्वंसगलवदनाद्यवयवविन्यासः प्रकृतिसुन्दरस्वभावहाससुमुखो नवनलिनदलायमानशिशिरतारा-रुणायतनयनरुचिरः सदृशसुभगकपोलकर्णकण्ठनासो विगूढस्मित-वदनमहोत्सवेन पुरवनितानां मनसि कुसुमशरासनमुपदधानः परागवलम्बमानकुटिलजटिलकपिशकेशभूरिभारोऽवधूतमलिननिज-शरीरेण ग्रहगृहीत इवादृश्यत ॥ ३१ ॥**

**पदार्थ–**

**अतिसुकुमारकरचरणोरःस्थल-विपुलबाह्वंसगलवदनाद्यवयव-विन्यासः** = अत्यन्त सुकुमार हात, पाउ, छाती, ठुला-ठुला पाखुरा, काँध, घाँटी र मुख आदि सुगठित शारीरिक अङ्ग भएका

**सदृशसुभगकपोलकर्णकण्ठ-नासः** = समान रूपमा सुन्दर गाला, कान, घाँटी र नाक भएका

**प्रकृतिसुन्दरस्वभावहाससुमुखः** = सहज सुन्दर एवं स्वाभाविक मुस्कानले युक्त मुखाकृति भएका

**नवनलिनदलायमानशिशिरतारा-रुणायतनयनरुचिरः** = नवीन कमलपुष्पजस्तै लालिमा भएका ठुला-ठुला सुन्दर आँखा भएका तथा

**विगूढस्मितवदनमहोत्सवेन** = मन्द मुस्कानयुक्त मोहक मुखकान्तिका कारण

**पुरवनितानां** = नगरस्त्रीहरूको

**मनसि** = मनमा

**कुसुमशरासनम्** = कामदेवलाई

**उपदधानः** = राख्दै (उद्दीप्त बनाउँदै)

**परागवलम्बमानकुटिलजटिल-कपिशकेशभूरिभारः** = अगाडि झुण्डिएको तथा घुम्रिएको कैलो केशको प्रशस्त भार भएका ऋषभदेव

**अवधूतमलिननिजशरीरेण** = अवधूतको जस्तो अत्यन्त मैलो आफ्नो शरीरका कारण

**ग्रहगृहीतः इव** = ग्रहद्वारा आक्रान्त व्यक्ति झैँ

**अदृश्यत** = देखिनुहुन्थ्यो

**वाक्यार्थ–** अत्यन्त सुकुमार हात, पाउ, छाती, ठुला-ठुला पाखुरा, काँध, घाँटी र मुख आदि

सुगठित शारीरिक अङ्ग भएका, समान रूपमा सुन्दर गाला, कान, घाँटी र नाक भएका, सहज सुन्दर एवं स्वाभाविक मुस्कानले युक्त मुखाकृति भएका, नवीन कमलपुष्पजस्तै लालिमा भएका ठुला-ठुला सुन्दर आँखा भएका तथा मन्द मुस्कानयुक्त मोहक मुखकान्तिका कारण नगरस्त्रीहरूको मनमा कामदेवलाई उद्दीप्त बनाउँदै हिँड्नुभएका ऋषभदेव अगाडि फुण्डिएको तथा घुम्रिएको कैलो केश र अवधूतको जस्तो अत्यन्त मैलो शरीरका कारण ग्रहद्वारा आक्रान्त व्यक्ति झैं देखिनुहुन्थ्यो।

**यर्हि वाव स भगवान् लोकमिमं योगस्याद्धा प्रतीपमिवाचक्षाण-स्तत्प्रतिक्रियाकर्मबीभत्सितमिति व्रतमाजगरमास्थितः शयान एवाश्नाति पिबति खादत्यवमेहति हदति स्म चेष्टमान उच्चरित आदिग्धोद्देशः॥ ३२॥**

**पदार्थ–**

**यर्हि वाव** = जब
**सः** = ती
**भगवान्** = भगवान् ऋषभदेवले
**इमं** = यो
**लोकम्** = जनसमुदायलाई
**योगस्य** = योगसाधनाको
**अद्धा** = साक्षात्
**प्रतीपम् इव** = प्रतिपक्ष झैं
**आचक्षाणः** = बुझेर तथा
**तत्प्रतिक्रियाकर्म** = लोकको योगविरोधी कर्मको निराकरण
**बीभत्सितम्** = (अन्य तरिकाले गर्नाले आफ्नै चित्त उद्विग्न भएकाले) लोकनिन्दित कर्म (गर्नु नै उचित हो)
**इति** = भन्ने बुझेर
**अजगरम् व्रतम्** = अजगरवृत्ति (अजिङ्गरको झैं जीवनशैली)
**आस्थितः** = धारण गरी
**शयानः एव** = सुतेर नै
**अश्नाति स्म** = भोजन गर्नुहुन्थ्यो
**पिबति** = पिउने गर्नुहुन्थ्यो
**खादति** = खाने गर्नुहुन्थ्यो
**अवमेहति** = पिसाब गर्नुहुन्थ्यो
**हदति** = मलत्याग गर्नुहुन्थ्यो (त्यस्तै)
**उच्चरिते** = त्याग गरिएको मलमा
**चेष्टमानः** = लट्पटिएर
**आदिग्धोद्देशः** = देहको सम्पूर्ण भाग लिपिएको बन्नुहुन्थ्यो

**वाक्यार्थ–** जब भगवान् ऋषभदेवले यो जनसमुदायलाई योगसाधनाको साक्षात् प्रतिपक्ष झैं ठानेर लोकको योगविरोधी कर्मको प्रतिरोध अन्य तरिकाले गर्दा आफ्नै चित्त उद्विग्न हुन्छ भन्ने बुझेर लोकनिन्दित कर्म गर्नु नै उचित हो भन्ने बुझेर अजगरवृत्ति (अजिङ्गरको झैं जीवनशैली) धारण गरी सुतेर नै खाने, पिउने, चपाउने, पिसाब र मलत्याग गर्ने गर्नुहुन्थ्यो। त्यस्तै त्याग गरिएको मलमा लट्पटिएर देहको सम्पूर्ण भाग लिपिएको देखिनुहुन्थ्यो।

**तस्य ह यः पुरीषसुरभिसौगन्ध्यवायुस्तं देशं दशयोजनं समन्तात् सुरभिं चकार॥ ३३॥**

पदार्थ–

**ह** = निश्चय नै
**तस्य** = ती ऋषभदेवको
**यः** = जुन
**पुरीषसुरभिसौगन्ध्यवायुः** = विष्ठाको गन्धले सुगन्धमय बनेको हावाले
**समन्तात्** = सबैतिरबाट
**दशयोजनं** = (दश योजन) चालीस कोसको
**तं** = त्यो
**देशं** = ठाउँलाई
**सुरभिं** = सुगन्धित
**चकार** = बनाउँथ्यो

**वाक्यार्थ–** ऋषभदेवको विष्ठाको गन्धले सुगन्धमय बनेको हावाले सबैतिरबाट चालीस कोस ठाउँलाई सुगन्धित बनाउँथ्यो।

**एवं गोमृगकाकचर्यया व्रजंस्तिष्ठन्नासीनः शयानः काकमृगगोचरितः**
**पिबति खादत्यवमेहति स्म ॥ ३४ ॥**

पदार्थ–

**एवं** = यसप्रकार
**काकमृगगोचरितः** = गाई, मृग र काकको जस्तो वृत्ति भएका
**गोमृगकाकचर्यया** = गाई, मृग र कागको जस्तै तरिकाले
**व्रजन्** = हिँड्दै
**तिष्ठन्** = खडा हुँदै
**आसीनः** = बस्दै
**शयानः** = सुत्दै
**पिबति** = पिउनुहन्थ्यो
**खादति** = खानुहुन्थ्यो
**अमेहति स्म** = मूत्रत्याग गर्नुहुन्थ्यो

**वाक्यार्थ–** यसप्रकार गाई, मृग र काकको जस्तो वृत्ति भएका गाई, मृग र कागकै जस्तै तरिकाले हिँड्दै, खडा हुँदै, बस्दै र सुत्दै गर्नुहुन्थ्यो र जुनसुकै समयमा पनि उहाँ पिउनुहन्थ्यो, खानुहुन्थ्यो र मूत्रत्याग गर्नुहुन्थ्यो।

**इति नानायोगचर्याचरणो भगवान् कैवल्यपतिर्ऋषभोऽविरत-**
**परममहानन्दानुभव आत्मनि सर्वेषां भूतानामात्मभूते भगवति**
**वासुदेव आत्मनोऽव्यवधानानन्तरोदरभावेन सिद्धसमस्तार्थपरिपूर्णो**
**योगैश्वर्याणि वैहायसमनोजवान्तर्धानपरकायप्रवेशदूरग्रहणादीनि**
**यदृच्छयोपगतानि नाञ्जसा नृप हृदयेनाभ्यनन्दत् ॥ ३५ ॥**

पदार्थ–

**नृप** = हे राजा परीक्षित्
**इति** = यसप्रकार
**नानायोगचर्याचरणः** = विभिन्न योगचर्याको आचरण गरेका
**कैवल्यपतिः** = मोक्षपति
**अविरतपरममहानन्दानुभवः** = निरन्तर परमानन्दको अनुभूति गरेका तथा
**सर्वेषां** = सम्पूर्ण
**भूतानाम्** = प्राणीहरूको
**आत्मभूते** = आत्मस्वरूप भएका
**आत्मनि** = आफूमा र
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**आत्मनः** = आफ्नो

**अव्यवधानानन्तरोदरभावेन** = देह आदि उपाधिजन्य भेद समाप्त भएको हुनाले
**सिद्धसमस्तार्थपरिपूर्णः** = सम्पूर्ण पुरुषार्थ प्राप्त गरी परिपूर्ण भएका
**भगवान्** = भगवान्
**ऋषभः** = ऋषभदेव
**यदृच्छया** = आफैँ (विना प्रयास)
**अञ्जसा** = अचानक
**उपगतानि** = प्राप्त भएका
**वैहायसमनोजवान्तर्धानपरकाय-प्रवेशदूरग्रहणादीनि** = आकाशगमन गर्ने शक्ति, मनबराबर शरीरलाई हिँडाउन सक्ने शक्ति, अन्तर्धान हुन सक्ने शक्ति, अन्य प्राणीको शरीरमा प्रवेश गर्न सक्ने शक्ति, टाढाको वस्तु देख्न सक्ने शक्ति आदि र
**योगैश्वर्याणि** = योगद्वारा प्राप्त हुने ऐश्वर्यहरूलाई
**हृदयेन** = मनले
**न अभ्यनन्दत्** = ग्रहण गर्नुभएन

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसप्रकार विभिन्न प्रकारको योगचर्याको आचरण गर्दै परमानन्दको अनुभूति गरेका तथा सम्पूर्ण प्राणीको आत्मभूत भगवान् वासुदेवमा र आफूमा पूर्णतया अभेदको अनुभव गरेको हुनाले सम्पूर्ण पुरुषार्थ प्राप्त गरी परिपूर्ण भएका भगवान् ऋषभदेवले आफैँ अचानक प्राप्त भएका आकाशगमन गर्ने शक्ति, मनबराबर शरीरलाई हिँडाउन सक्ने शक्ति, अन्तर्धान हुन सक्ने शक्ति, अन्य प्राणीको शरीरमा प्रवेश गर्न सक्ने शक्ति, टाढाको वस्तु देख्न सक्ने शक्ति आदि र योगद्वारा प्राप्त हुने ऐश्वर्यहरूलाई समेत ग्रहण गर्नुभएन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे ऋषभदेवानुचरिते पञ्चमोऽध्यायः ॥ ५॥**

# अथ षष्ठोऽध्यायः

## ऋषभदेवको देहत्याग

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**न नूनं भगव आत्मारामाणां योगसमीरितज्ञानावभर्जितकर्मबीजाना-मैश्वर्याणि पुनः क्लेशदानि भवितुमर्हन्ति यदृच्छयोपगतानि ॥ १ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भगवः** = हे भगवान् | **आत्मारामाणां** = आफूमैं रमाउने व्यक्तिहरूका लागि | **क्लेशदानि** = (रागद्वेष आदि) क्लेश दिने खालका |
| **योगसमीरितज्ञानावभर्जितकर्म-बीजानाम्** = योगरूपी वायुद्वारा दन्काइएको ज्ञानरूपी अग्निले कर्म र कर्मसंस्कारलाई डढाइसकेका | **यदृच्छया** = आफैं | **भवितुम्** = हुन |
| | **उपगतानि** = प्राप्त भएका | **नूनं** = निश्चय नै |
| | **ऐश्वर्याणि** = विभिन्न सिद्धिहरू | **न अर्हन्ति** = योग्य हुँदैनन् |
| | **पुनः** = फेरि | |

**वाक्यार्थ–** हे भगवान् योगरूपी वायुद्वारा दन्काइएको ज्ञानरूपी अग्निले कर्म र कर्मसंस्कारलाई डढाइसकेका आफूमैं रमाउने व्यक्तिहरूका लागि आफैं प्राप्त भएका विभिन्न सिद्धिहरू राग, द्वेष आदि क्लेश दिने खालका हुँदैनन्। (यदि तिनीहरूले क्लेश दिँदैनन् भने ऋषभदेवले ती ऐश्वर्यलाई किन स्विकार्नुभएन त ?)

**ऋषिरुवाच** (ऋषि शुकजीले भन्नुभयो)

**सत्यमुक्तं किन्त्विह वा एके न मनसोऽद्धा विश्रम्भमनवस्थानस्य शठकिरात इव सङ्गच्छन्ते ॥ २ ॥**

**तथा चोक्तम्-**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सत्यम्** = (तपाईंले) ठीक | **इह** = यस योगमार्गमा | **अद्धा वै** = निश्चय नै |
| **उक्तं** = भन्नुभयो | **एके** = केही (विवेकी) साधकहरू | **विश्रम्भम्** = विश्वास |
| **किन्तु** = तर | **अनवस्थानस्य** = प्रतिक्षण बदलिने | **न सङ्गच्छन्ते** = गर्दैनन् |
| **शठकिरातः इव** = धूर्त व्याधाले आफूले समातेको मृगमाथि विश्वास नगरेझैं | **मनसः** = मनको | **तथा च उक्तम्** = भनिएको पनि छ |

**वाक्यार्थ–** तपाईंले ठीक भन्नुभयो तर धूर्त व्याधाले आफूले समातेको मृगमाथि विश्वास नगरेझैं

यस योगमार्गमा लागेका विवेकी साधकहरू प्रतिक्षण बदलिने मनमाथि विश्वास गर्दैनन्। यस विषयमा भनिएको पनि छ–

**न कुर्यात् कर्हिचित् सख्यं मनसि ह्यनवस्थिते।**
**यद्विश्रम्भाच्चिराच्चीर्णं चस्कन्द तप ऐश्वरम्॥ ३॥**

पदार्थ–

**मनसि** = मन
**अनवस्थिते** = स्थिर छैन (चञ्चल छ) भन्ने बुझिसकेपछि
**कर्हिचित्** = कहिल्यै पनि
**सख्यं** = (मनसँग) मित्रता
**न कुर्यात्** = नगरोस्
**यद्विश्रम्भात्** = मनमाथि विश्वास गर्नाले (मोहिनी रूपमा मोहित हुँदा)
**हि** = नै
**ऐश्वरम्** = भगवान् शङ्करको
**चिरात्** = लामो समयदेखि
**चीर्णं** = सञ्चय गरिएको
**तपः** = तपस्या
**चस्कन्द** = नष्ट भयो

**वाक्यार्थ–** मन स्थिर छैन भन्ने बुझिसकेपछि कहिल्यै पनि मनसँग पनि मित्रता नगरोस्। मनमाथि विश्वास गर्नाले नै मोहिनी रूपमा मोहित हुँदा भगवान् शङ्करको लामो समयदेखि सञ्चय गरिएको तपस्या नष्ट भयो।

**नित्यं ददाति कामस्य छिद्रं तमनु येऽरयः।**
**योगिनः कृतमैत्रस्य पत्युर्जायेव पुंश्चली॥ ४॥**

पदार्थ–

**पुंश्चली** = वेश्या
**जाया** = पत्नीले
**कृतमैत्रस्य** = आफूसँग मित्रता गरेको (आफूमाथि विश्वास राख्ने)
**पत्युः इव** = पतिलाई नाश गरेझैं
**योगिनः** = (मनसँग मित्रता राख्ने) योगीको (मनले पनि)
**नित्यं** = सधैं
**कामस्य** = विषयसम्बन्धी भोगविलासको र
**तमनु** = त्यसका पछि लाग्ने
**ये** = जो अरू
**अरयः** = क्रोध आदि शत्रुहरू छन् (तिनीहरूलाई पनि)
**छिद्रं** = मौका
**ददाति** = दिन्छ (र ती शत्रुहरूको आक्रमणबाट त्यो योगी पनि नष्ट हुन्छ)

**वाक्यार्थ–** वेश्या पत्नीले आफूमाथि विश्वास राख्ने पतिलाई नाश गरेझैं मनसँग मित्रता राख्ने योगीको मनले पनि सधैं विषयसम्बन्धी भोगविलासको र त्यसका पछि लाग्ने अरू क्रोध आदि शत्रुहरूलाई पनि मौका दिन्छ र ती शत्रुहरूको आक्रमणबाट त्यो योगी पनि नष्ट हुन्छ।

**कामो मन्युर्मदो लोभः शोकमोहभयादयः।**
**कर्मबन्धश्च यन्मूलः स्वीकुर्यात् को नु तद् बुधः॥ ५॥**

पदार्थ–

**कामः** = विषयभोगको इच्छा
**मन्युः** = क्रोध
**मदः** = अहङ्कार

**लोभः** = लोभ
**शोकमोहभयादयः** = शोक, मोह, भय आदि तथा
**कर्मबन्धः च** = कर्मको बन्धन पनि
**यन्मूलः** = मनबाटै उत्पन्न हुने किसिमको छ भने
**तत्** = त्यो मनलाई
**कः** = को
**बुधः** = बुद्धिमान् व्यक्तिले
**नु** = निश्चय नै
**स्वीकुर्यात्** = स्वीकार गर्ला

**वाक्यार्थ–** विषयभोगको इच्छा, क्रोध, अहङ्कार, लोभ, शोक, मोह, भय आदि तथा कर्मको बन्धन पनि मनबाटै उत्पन्न हुन्छन् भने त्यस्तो मनलाई कुन चाहिँ बुद्धिमान् व्यक्तिले स्वीकार गर्ला ?

**अथैवमखिललोकपालललामोऽपि विलक्षणैर्जडवदवधूतवेषभाषाचरितैरविलक्षितभगवत्प्रभावो योगिनां साम्परायविधिमनुशिक्षयन् स्वकलेवरं जिहासुरात्मन्यात्मानमसंव्यवहितमनर्थान्तरभावेनान्वीक्षमाण उपरतानुवृत्तिरुपरराम ॥ ६ ॥**

**पदार्थ–**

**अथ एवम्** = यसप्रकार
**अखिललोकपालललामः अपि** = इन्द्र आदि सम्पूर्ण लोकपालको भूषणस्वरूप भएर पनि
**अविलक्षितभगवत्प्रभावः** = भगवान्‌को जस्तो आफ्नो प्रभावलाई प्रकट नगरी
**जडवत्** = पागलजस्तै
**विलक्षणैः** = मानिसहरूलाई अनौठो लाग्ने
**अवधूतवेषभाषाचरितैः** = अवधूतको जस्तो वेष, भाषा र चरित्रद्वारा
**योगिनां** = योगीहरूको
**साम्परायविधिम्** = देहत्यागको विधि
**अनुशिक्षयन्** = सिकाउँदै
**स्वकलेवरं** = आफ्नो शरीर
**जिहासुः** = त्याग्न चाहनुहुने (भगवान् ऋषभदेव)
**आत्मनि** = परमात्मामा
**असंव्यवहितम्** = अभिन्न रूपले रहेको
**आत्मानम्** = आफूलाई
**अनर्थान्तरभावेन** = अभिन्नरूपले
**अन्वीक्षमाणः** = हेर्दै (अनुभव गर्दै)
**उपरतानुवृत्तिः** = देह आदिको अभिमानबाट टाढै रहेर
**उपरराम** = संसारबाट उपरत हुनुभयो

**वाक्यार्थ–** यसप्रकार इन्द्र आदि सम्पूर्ण लोकपालको भूषणस्वरूप भएर पनि भगवान्‌को जस्तो आफ्नो प्रभावलाई पनि प्रकट नगरी पागलजस्तै भएर मानिसहरूलाई अनौठो लाग्ने अवधूतको जस्तो वेष, भाषा र चरित्रद्वारा योगीहरूको देहत्यागको विधि सिकाउँदै आफ्नो शरीर त्याग्न चाहनुहुने भगवान् ऋषभदेव परमात्मामा अभिन्न रूपले रहेको आफूलाई अभिन्नरूपले नै अनुभव गर्दै देह आदिको अभिमानबाट टाढै रहेर संसारबाट उपरत हुनुभयो।

**तस्य ह वा एवं मुक्तलिङ्गस्य भगवत ऋषभस्य योगमायावासनया देह इमां जगतीमभिमानाभासेन सङ्क्रममाणः कोङ्कवेङ्ककुटकान्**

**दक्षिणकर्णाटकान् देशान् यदृच्छयोपगतः कुटकाचलोपवन आस्य कृताश्मकवल उन्माद इव मुक्तमूर्धजोऽसंवीत एव विचचार ॥ ७ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**ह वा** = निश्चय नै
**मुक्तलिङ्गस्य** = सूक्ष्म शरीरको अभिमान त्यागेका
**तस्य** = ती
**भगवतः** = भगवान्
**ऋषभस्य** = ऋषभदेवको
**देहः** = शरीर
**योगमायावासनया** = अविद्यासंस्कारद्वारा
**अभिमानाभासेन** = अभिमानको आभासमात्रले
**इमां** = यो
**जगतीम्** = लोकमा
**सङ्क्रममाणः** = घुम्दै
**कोङ्कवेङ्ककुटकान्** = कोङ्क, वेङ्क, कुटक र
**दक्षिणकर्णाटकान्** = दक्षिणकर्णाटक
**देशान्** = देशमा
**यदृच्छया** = अनायासै
**उपगतः** = पुगेका
**आस्यकृताश्मकवलः** = मुखमा ढुङ्गा आदिका टुक्राहरू हाल्दै
**मुक्तमूर्धजः** = कपाललाई त्यसै खुला राखेर
**असंवीतः एव** = कपडा नलगाईकन नै (नाङ्गै)
**उन्मादः इव** = पागल जस्तै भएर
**कुटकाचलोपवने** = कुटकाचलको वनमा
**विचचार** = घुम्न थाल्नुभयो

**वाक्यार्थ–** यसरी सूक्ष्म शरीरको अभिमान त्यागेका भगवान् ऋषभदेव अविद्यासंस्कारले यस लोकमा अभिमानको आभासमात्रले घुम्दै कोङ्क, वेङ्क, कुटक र दक्षिणकर्णाटक देशमा अनायासै पुगी मुखमा ढुङ्गा आदिका टुक्राहरू हाल्दै कपाललाई त्यसै खुला राखेर कपडा नलगाईकन नै पागल जस्तै भएर कुटकाचलको वनमा घुम्न थाल्नुभयो।

**अथ समीरवेगविधूतवेणुविकर्षणजातोग्रदावानलस्तद्वनमालेलिहानः सह तेन ददाह ॥ ८ ॥**

**पदार्थ–**
**अथ** = यसपछि
**समीरवेगविधूतवेणुविकर्षण-जातोग्रदावानलः** = हावाको झोक्काले हल्लिँदा आपसमा ठोक्किएका बाँसको घर्षणबाट निस्किएको आगोले गर्दा लागेको भयङ्कर डँडेलोले
**तेन सह** = भगवान् ऋषभदेवसहित
**तद्वनम्** = त्यस वनलाई
**आलेलिहानः** = चाटेर निल्न खोज्दै
**ददाह** = डढायो

**वाक्यार्थ–** यसपछि हावाको झोक्काले हल्लिँदा आपसमा ठोक्किएका बाँसको घर्षणबाट निस्किएको आगोले गर्दा लागेको भयङ्कर डँडेलोले चारैतिरबाट घेर्दै भगवान् ऋषभदेवसहित त्यस कुटकाचलको वनलाई डढायो।

**यस्य किलानुचरितमुपाकर्ण्य कोङ्कवेङ्ककुटकानां राजार्हन्नामोपशिक्ष्य**

**कलावधर्म उत्कृष्यमाणे भवितव्येन विमोहितः स्वधर्मपथ-मकुतोभयमपहाय कुपथपाखण्डमसमञ्जसं निजमनीषया मन्दः सम्प्रवर्तयिष्यते ॥ ९॥**

**पदार्थ–**

**किल** = निश्चय नै
**यस्य** = जुन ऋषभदेव भगवान्को
**अनुचरितम्** = चरित्र
**उपाकर्ण्य** = सुनेर
**कोङ्कवेङ्ककुटकानां** = कोङ्क, वेङ्क र कुटक देशका
**अर्हन्नामा** = अर्हत् नामका
**मन्दः** = मन्द बुद्धि भएका
**राजा** = राजाले
**उपशिक्ष्य** = आफूले सिकेर
**कलौ** = कलि युगमा
**अधर्मे** = अधर्म
**उत्कृष्यमाणे** = बढ्दा
**भवितव्येन** = दुर्भाग्यको कारण
**विमोहितः** = विवेकरहित भएर
**अकुतोभयम्** = कतैबाट पनि डर नहुने
**स्वधर्मपथम्** = आफ्नो सनातन धर्ममार्गलाई
**अपहाय** = छोडेर
**निजमनीषया** = आफ्नै बुद्धिको आधारमा (वैदिक मान्यताको विचारै नगरी)
**कुपथपाखण्डम्** = नरक आदि फल दिने वेदविरुद्ध
**असमञ्जसं** = अत्यन्त अनुचित सम्प्रदायको
**सम्प्रवर्तयिष्यते** = प्रवर्तन गर्नेछन्

**वाक्यार्थ–** ऋषभदेव भगवान्को चरित्र सुनेर कोङ्क, वेङ्क र कुटक देशका अर्हत् नामका मन्दबुद्धि भएका राजाले उहाँकै बाह्य व्यवहारको नक्कल गर्दै कलि युगमा अधर्म बढ्दा आफ्नो सनातन धर्ममार्गलाई छोडेर आफ्नै बुद्धिको आधारमा वैदिक मान्यताको विचारै नगरी नरक आदि फल दिने वेदविरुद्ध अत्यन्त अनुचित सम्प्रदाय चलाउनेछन्।

**टिप्पणी–** यहाँ भगवान् ऋषभदेवको चरित्र सुनेर मन्दबुद्धि भएका राजाले सनातन धर्म छोडेर वेदविरुद्ध सम्प्रदाय चलाउनेछन् भनिएकाले यस्तो सम्प्रदायको स्रोत पनि त भगवान् नै हुनुहुँदोरहेछ नि भन्ने भ्रम हुन सक्छ। वास्तवमा भगवान् ऋषभदेवको वेष ज्ञानको पराकाष्ठाको स्थिति हो। आत्मसाक्षात्कार भइसकेका अन्य व्यक्तिले पनि यस्तो वेष स्वीकार्न सक्छन्। तर अज्ञानीले लोकलाई प्रदर्शन गर्नका लागि र विभिन्न लौकिक वस्तु प्राप्त गर्नका लागि गरेको यस्तो किसिमको आचरण ढोँग मात्र हो। जो अज्ञानी छन् उनीहरू भगवान्को यस किसिमको आचरणको रहस्यलाई नबुझी वा स्वार्थवश आफूखुसी अर्थ गर्दछन्। यसर्थ वेदविरुद्ध धर्मको प्रवर्तन वेदको मर्म नजान्ने त्यस्ता अल्पबुद्धि भएका व्यक्तिहरूबाट भएको हो।

**येन ह वाव कलौ मनुजापसदा देवमायामोहिताः स्वविधिनियोग-शौचचारित्रविहीना देवहेलनान्यपव्रतानि निजनिजेच्छया गृह्णाना अस्नानानाचमनाशौचकेशोल्लुञ्चनादीनि कलिनाधर्मबहुलेनोपहत-धियो ब्रह्मब्राह्मणयज्ञपुरुषलोकविदूषकाः प्रायेण भविष्यन्ति ॥ १० ॥**

पदार्थ–

**येन** = जुन पाखण्ड मतका कारण
**ह वाव** = निश्चय नै
**कलौ** = कलियुगमा
**देवमायामोहिताः** = देवमायाले मोहित भएका
**मनुजापसदाः** = अत्यन्त नीच मनुष्यहरू
**स्वविधिनियोगशौचचारित्र-विहीनाः** = आफ्नो शास्त्रविहित नियम पवित्रता र सदाचारबाट रहित भएका
**अस्नानानाचमनाशौच-केशोल्लुञ्चनादीनि** = स्नान र आचमन नगर्नु, अपवित्र रहनु, असमयमै कपाल खौरने गर्नु जस्ता
**देवहेलनानि** = देवताको अवज्ञा हुने खालको
**अपव्रतानि** = पाखण्ड धर्मलाई
**निजनिजेच्छया** = आ-आफ्नै इच्छाअनुसार
**गृह्णानाः** = ग्रहण गर्दै
**अधर्मबहुलेन** = अधर्मबहुल
**कलिना** = कलियुगको प्रभावले
**उपहतधियः** = बुद्धिहीन भएका व्यक्तिहरू (आचारविरुद्ध कर्महरू गर्दै)
**प्रायेण** = धेरैजसो
**ब्रह्मब्राह्मणयज्ञपुरुषलोक-विदूषकाः** = वेद, ब्राह्मण, यज्ञपुरुष भगवान् र लोकलाई विकृत गर्ने खालका
**भविष्यन्ति** = हुनेछन्

**वाक्यार्थ–** जुन पाखण्ड मतका कारण कलियुगमा अज्ञानले विवेकहीन भएका अत्यन्त नीच मनुष्यहरू आफ्नो शास्त्रविहित नियम, पवित्रता र सदाचार आदिबाट रहित भएर स्नान र आचमन नगर्नु, अपवित्र रहनु, असमयमै कपाल खौरनु जस्ता देवताको अवज्ञा हुने खालको पाखण्ड धर्मलाई आ-आफ्नै इच्छाअनुसार ग्रहण गर्दै अधर्मबहुल कलियुगको प्रभावले बुद्धिहीन भएका व्यक्तिहरू आचारविरुद्ध कर्महरू गर्दै वेद, ब्राह्मण, यज्ञपुरुष भगवान् र लोकलाई विकृत गर्ने खालका हुनेछन्।

**ते च ह्यर्वाक्तनया निजलोकयात्रयान्धपरम्परयाश्वस्तास्तमस्यन्धे स्वयमेव प्रपतिष्यन्ति ॥ ११ ॥**

पदार्थ–

**ते च** = ती पाखण्डमत स्वीकार गर्नेहरू
**हि** = निश्चय नै
**अर्वाक्तनया** = नयाँ
**निजलोकयात्रया** = स्वेच्छाले लोकप्रसिद्धिका लागि बनाइएको
**अन्धपरम्परया** = अन्धपरम्पराद्वारा
**आश्वस्ताः** = विश्वस्त भएका
**स्वयम् एव** = आफैँ नै
**अन्धे** = घोर
**तमसि** = अन्धकार (नरक)मा
**प्रपतिष्यन्ति** = खस्नेछन्

**वाक्यार्थ–** ती पाखण्डमत स्वीकार गर्नेहरू नयाँ र स्वेच्छाले लोकप्रसिद्धिको लागि बनाइएको अन्धपरम्परामा विश्वस्त भएर आफैँ नै घोर अन्धकार (नरक)मा खस्नेछन्।

**अयमवतारो रजसोपप्लुतकैवल्योपशिक्षणार्थः ॥ १२ ॥**

**तस्यानुगुणान् श्लोकान् गायन्ति–**

पदार्थ–

**अयम्** = भगवान्को यो
**अवतारः** = अवतार
**रजसोपप्लुतकैवल्योप-शिक्षणार्थः** = रजोगुणी व्यक्तिका लागि मोक्षको शिक्षा दिनका लागि हो
**तस्य** = त्यस मोक्षमार्गको
**अनुगुणान्** = गुणको वर्णन गर्दै (मानिसहरू यी)
**श्लोकान्** = श्लोक
**गायन्ति** = गाउँछन्

**वाक्यार्थ–** भगवान्को यो अवतार रजोगुणी व्यक्तिका लागि मोक्षको शिक्षा दिनका लागि हो। त्यस मोक्षमार्गको गुणको वर्णन गर्दै मानिसहरू यी श्लोक गाउँछन्।

**अहो भुवः सप्तसमुद्रवत्या**
**द्वीपेषु वर्षेष्वधिपुण्यमेतत्।**
**गायन्ति यत्रत्यजना मुरारेः**
**कर्माणि भद्राण्यवतारवन्ति ॥ १३ ॥**

पदार्थ–

**अहो** = आश्चर्य छ
**सप्तसमुद्रवत्याः** = सात समुद्रले युक्त भएकी
**भुवः** = पृथिवीका
**द्वीपेषु** = द्वीपहरूमा र
**वर्षेषु** = महाद्वीपहरूमा
**एतत्** = यो भारतवर्ष
**अधिपुण्यम्** = धेरै पुण्यशाली छ (किनभने)
**यत्रत्यजनाः** = जहाँका मानिसहरू
**मुरारेः** = भगवान् मुरारि (मुर राक्षसको संहार गर्नुहुने भगवान् श्रीकृष्ण)का
**भद्राणि** = मङ्गलमय
**अवतारवन्ति** = अवतारले युक्त
**कर्माणि** = कर्महरू
**गायन्ति** = गाउँदछन्

**वाक्यार्थ–** आश्चर्य छ, सात समुद्रले युक्त भएकी पृथिवीका द्वीप र महाद्वीपहरूमा पनि यो भारतवर्ष धेरै पुण्यशाली छ किनभने यहाँका मानिसहरू भगवान् मुरारिले विभिन्न अवतार लिँदा गर्नुभएका अनेक मङ्गलमय लीला (कर्म)हरूको चर्चा गर्दछन्।

**अहो नु वंशो यशसावदातः**
**प्रैयव्रतो यत्र पुमान् पुराणः।**
**कृतावतारः पुरुषः स आद्य-**
**श्चचार धर्मं यदकर्महेतुम् ॥ १४ ॥**

पदार्थ–

**अहो** = आश्चर्य
**यत्र** = जुन भारत वर्षमा
**प्रैयव्रतः** = प्रियव्रत राजाको
**वंशः** = कुल
**यशसा** = कीर्तिले
**नु** = निश्चय नै
**अवदातः** = अति शुद्ध छ
**यत्** = किनभने
**सः** = ती

**पुराणः पुरुषः** = पुराणपुरुष
**आद्यः पुमान्** = आदिपुरुष नारायणले
**कृतावतारः** = अवतार लिएर
**अकर्महेतुम्** = मोक्षको साधन भएको
**धर्मं** = धर्मको
**चचार** = आचरण गर्नुभयो

**वाक्यार्थ–** अहो ! भारत वर्षमा प्रियव्रत राजाको कुल कीर्तिले अति शुद्ध छ किनभने ती पुराणपुरुष आदिपुरुष नारायणले यही वंशमा अवतार लिएर मोक्षको साधन भएको धर्मको आचरण गर्नुभयो।

**को न्वस्य काष्ठामपरोऽनुगच्छे-**
**न्मनोरथेनाप्यभवस्य योगी।**
**यो योगमायाः स्पृहयत्युदस्ता**
**ह्यसत्तया येन कृतप्रयत्नाः॥ १५॥**

पदार्थ–
**अभवस्य** = जन्मरहित
**अस्य** = यी भगवान् ऋषभदेवको
**काष्ठाम्** = मार्गको (अनुसरण गरेर)
**नु** = निश्चय नै
**परः** = अर्को
**कः** = कुन
**योगी** = योगी
**मनोरथेन अपि** = मनद्वारा पनि
**अनुगच्छेत्** = हिँड्न सक्ला (कोही पनि सक्दैन)
**यः** = जुन योगी (सिद्धिका लागि)
**स्पृहयति** = लालायित हुन्छ
**योगमायाः** = योगका सिद्धिहरू
**कृतप्रयत्नाः** = ठुलो प्रयास गरेर मात्र प्राप्त गर्न सकिने (हुन्छन्)
**येन** = जुन ऋषभदेवले
**असत्तया** = असत् सम्झेर (ती सिद्धिहरूलाई)
**हि** = निश्चय नै
**उदस्ताः** = अस्वीकार गरिदिनुभयो

**वाक्यार्थ–** जन्मरहित भगवान् ऋषभदेवको मार्गको अनुसरण गरेर हिँड्छु भन्ने कल्पनासम्म पनि कुन अर्को सिद्ध योगीले गर्न सक्ला ? कोही पनि सक्दैन। योगीहरू जुन सिद्धिका लागि लालायित हुन्छन्, ती ठुलो प्रयास गरेर मात्र प्राप्त गर्न सकिने किसिमका सिद्धिहरूलाई पनि ऋषभदेवले असत् सम्झेर अस्वीकार गरिदिनुभयो।

**इति ह स्म सकलवेदलोकदेवब्राह्मणगवां परमगुरोर्भगवत ऋषभा-ख्यस्य विशुद्धाचरितमीरितं पुंसां समस्तदुश्चरिताभिहरणं परममहा-मङ्गलायनमिदमनुश्रद्धयोपचितयानुशृणोत्याश्रावयति वावहितो भगवति तस्मिन् वासुदेव एकान्ततो भक्तिरनयोरपि समनुवर्तते॥ १६॥**

पदार्थ–

**इति** = यसप्रकार
**सकलवेदलोकदेवब्राह्मणगवां** = सम्पूर्ण वेद, लोक, देवता, ब्राह्मण र गाईको
**परमगुरोः** = परमगुरु
**भगवतः** = भगवान्
**ऋषभाख्यस्य** = ऋषभदेवको
**विशुद्धाचरितम्** = शुद्ध चरित्र
**ह** = निश्चय नै
**ईरितं स्म** = बताइयो (यो)
**पुंसां** = मानिसहरूको
**समस्तदुश्चरिताभिहरणं** = सम्पूर्ण पाप नाश गर्ने खालको
**परममहामङ्गलायनम्** = परम कल्याणकारक
**इदम्** = यो चरित्रलाई
**अवहितः** = सावधान भएर
**उपचितया श्रद्धया** = अत्यन्त श्रद्धाका साथ
**अनुशृणोति** = सुन्दछ
**आश्रावयति** = सुनाउँछ
**अनयोः** = सुन्ने र सुनाउने दुबैको
**तस्मिन्** = उनै
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**एकान्ततः** = तीव्र
**भक्तिः अपि** = भक्ति पनि
**समनुवर्तते** = लाग्दछ

**वाक्यार्थ–** यसप्रकार सम्पूर्ण वेद, लोक, देवता, ब्राह्मण र गाईका परमगुरु भगवान् ऋषभदेवको शुद्ध चरित्र बताइयो। यो चरित्र मानिसहरूको सम्पूर्ण पाप नाश गर्ने र परम कल्याण गर्नेवाला छ। जसले यस चरित्रलाई सावधान भएर अत्यन्त श्रद्धाका साथ सुन्दछ वा सुनाउँदछ भने सुन्ने र सुनाउने दुबैको भगवान् वासुदेवमा तीव्र भक्ति पनि लाग्दछ।

**यस्यामेव कवय आत्मानमविरतं विविधवृजिनसंसारपरितापोप-
तप्यमानमनुसवनं स्नापयन्तस्तयैव परया निर्वृत्या ह्यपवर्ग-
मात्यन्तिकं परमपुरुषार्थमपि स्वयमासादितं नो एवाद्रियन्ते
भगवदीयत्वेनैव परिसमाप्तसर्वार्थाः ॥ १७ ॥**

पदार्थ–

**यस्याम्** = भगवान्‌को जुन भक्तिरूप नदीमा
**कवयः** = भक्तहरू
**विविधवृजिनसंसारपरितापोप-तप्यमानम्** = विविध पापको कारणले सांसारिक तापद्वारा सन्तप्त भएको
**आत्मानम्** = आफूलाई
**अनुसवनं** = दिनदिनै
**एव** = नै
**अविरतं** = प्रतिक्षण
**स्नापयन्तः** = नुहाइरहन्छन्
**तया एव** = त्यही नै
**परया** = परम
**निर्वृत्या** = आनन्दले गर्दा
**स्वयम्** = आफैँ
**आसादितं** = प्राप्त भएको
**परमपुरुषार्थम्** = परम पुरुषार्थरूप
**आत्यन्तिकं** = आत्यन्तिक
**अपवर्गम् अपि** = मोक्षलाई पनि
**हि** = निश्चय नै
**नो एव आद्रियन्ते** = आदर गर्दैनन्
**भगवदीयत्वेन** = भगवान्‌का प्रिय भएका हुनाले
**परिसमाप्तसर्वार्थाः** = प्राप्त गर्नुपर्ने सबै पदार्थहरू प्राप्त गरिसकेका (हुन्छन्)

**वाक्यार्थ–** विविध पापको कारणले सांसारिक तापद्वारा सन्तप्त भएका र सांसारिक

पदार्थहरूबाट विरक्त भएका भक्तहरू भगवान्‌को यही भक्तिरूप नदीमा प्रतिक्षण नुहाइरहन्छन्। त्यही परम आनन्दले गर्दा उनीहरू आफैँ प्राप्त भएको परमपुरुषार्थरूप आत्यन्तिक मोक्षलाई पनि वास्ता गर्दैनन् किनभने भगवान्‌का प्रिय भएका हुनाले उनीहरूले प्राप्त गर्नुपर्ने सबै पदार्थहरू प्राप्त गरिसकेका हुन्छन्।

**राजन् पतिर्गुरुरलं भवतां यदूनां**
**दैवं प्रियः कुलपतिः क्व च किङ्करो वः।**
**अस्त्वेवमङ्ग भगवान् भजतां मुकुन्दो**
**मुक्तिं ददाति कर्हिचित् स्म न भक्तियोगम्॥ १८॥**

**पदार्थ–**

**राजन्** = हे राजा परीक्षित्
**मुकुन्दः** = भगवान् श्रीकृष्ण
**यदूनां** = यदुहरूको र
**भवतां** = तपाईं (पाण्डवहरू)को पनि
**पतिः** = स्वामी
**गुरुः** = हितोपदेष्टा
**दैवं** = देवता
**प्रियः** = सखा
**कुलपतिः** = मालिक र
**वः** = तपाईंहरूको लागि
**क्व** = कहिलेकाहीँ
**किङ्करः च** = सेवक पनि हुनुहुन्छ
**अङ्ग** = हे प्रिय परीक्षित्
**एवम्** = यस्तो
**अलं अस्तु** = भइरहोस्
**भगवान्** = भगवान् श्रीकृष्ण
**भजतां** = आफ्नो भजन गर्ने भक्तलाई
**कर्हिचित्** = कहिलेकाहीँ
**मुक्तिं** = मोक्ष
**ददाति स्म** = दिनुहुन्थ्यो
**न भक्तियोगम्** = भक्तियोग दिनुहुन्न

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्ण यदुहरू र पाण्डवहरूका स्वामी, हितोपदेष्टा, देवता, सखा, मालिक र तपाईंहरूको लागि कहिलेकाहीँ सेवक पनि हुनुहुन्छ। हे प्रिय परीक्षित्! भगवान् श्रीकृष्ण आफ्नो भजन गर्ने भक्तलाई कहिलेकाहीँ मोक्ष दिनुहन्छ तर भक्तियोग त्यति सजिलै दिनुहुन्न।

**नित्यानुभूतनिजलाभनिवृत्ततृष्णः**
**श्रेयस्यतद्रचनया चिरसुप्तबुद्धेः।**
**लोकस्य यः करुणयाभयमात्मलोकम्**
**आख्यान्नमो भगवते ऋषभाय तस्मै॥ १९॥**

**पदार्थ–**

**नित्यानुभूतनिजलाभनिवृत्ततृष्णः** = नित्य आफ्नो वास्तविक स्वरूपको अनुभव गर्नाले सम्पूर्ण तृष्णाहरूबाट मुक्त भएका
**यः** = जो भगवान् ऋषभदेव

**अतद्वचनया** = अनात्म चिन्तनको कारणले गर्दा
**श्रेयसि** = कल्याणको कुरा (भगवान्को भजन या ज्ञान मार्ग)मा
**चिरसुप्तबुद्धेः** = धेरै अघिदेखि अनभिज्ञ भएर सुतिरहेको
**लोकस्य** = लोकको
**करुणया** = अति करुणाले गर्दा
**अभयम्** = भयरहित
**आत्मलोकम्** = आत्मज्ञान
**आख्यात्** = (जसले) भन्नुभयो (उपदेश दिनुभयो)
**तस्मै** = त्यस्ता
**भगवते** = भगवान्
**ऋषभाय** = ऋषभदेवलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** नित्य आफ्नो वास्तविक स्वरूपको अनुभव गर्नाले सम्पूर्ण तृष्णाहरूबाट मुक्त भएका भगवान् ऋषभदेवले अनात्मचिन्तनको कारणले गर्दा भगवान्को भजन या ज्ञान मार्गमा धेरै अघिदेखि अनभिज्ञ भएर सुतिरहेको लोकप्रति अति करुणाले गर्दा भयरहित बनाउने आत्मज्ञानको उपदेश दिनुभयो। त्यस्ता भक्तवत्सल भगवान् ऋषभदेवलाई नमस्कार छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे ऋषभदेवानुचरिते षष्ठोऽध्यायः॥ ६॥**